# श्रीमद्भागवतस्थविषयानुक्रमाणिका

| अध्याय | विषय | पत्र |
|---|---|---|

## तृतीय स्कन्ध



## चतुर्थ स्कन्ध

## सप्तम स्कन्ध



## अष्टम स्कन्ध

## नवम स्कन्ध



## दशम स्कन्ध ( पूर्वार्ध )

## दशम स्कन्ध ( उत्तरार्द्ध )

| अध्याय | विषय | पत्र |
|---|---|---|

## एकादश स्कन्ध



| अध्याय | विषय | पत्र |
|---|---|---|

## द्वादश स्कन्ध





॥ इति श्रीमद्भागवतस्थ-विषयानुक्रमणिका ॥

अथ 'वासिष्ठी'भाषाटीकासहिते

# श्रीमद्भागवतमाहात्म्यं प्रारभ्यते

हरि : ॐ ॥ श्रीकृष्णचन्द्र सच्चित् आनन्दका स्वरूप छन् । जुन यस ब्रह्माण्डको उत्पत्ति पालन र संहारका कारण छन् । जुन आफ्नो आराधना गर्नेहरूको निम्ति दैहिक, दैविक र भौतिक तीनै थरिका तापहरू हटाइदिन्छन्, हामी तिनको स्मरण गर्दछौं ॥१॥ शुकजीको वन्दना–जसको व्रतबन्ध पनि हुनपाएको थिएन, उसै बखत समस्त सांसारिक कर्महरू त्यागेर घरबाट निस्किए। अनि पुत्र-वियोगले व्याकुल व्यासदेवले 'पुत्र ! पुत्र !!' यस्तो भन्दै डाके र वर-परका वृक्षहरूले बर्ता प्रेमले व्यासजीको कथनको प्रतिध्वनिरूपमा उत्तर दिए, समस्त प्राणिहरूका आत्मास्वरूप शुकदेवलाई म नमस्कार गर्दछु ॥ २ ॥ एक समयको कुरा हो—नैमिषारण्य क्षेत्रमा बुद्धिमान् सूतजीलाई प्रणाम गरेर कथारूपी अमृतको स्वाद लिनमा बाठा शौनकले भने–॥३॥ अज्ञान अन्धकारलाई नष्ट पार्नमा कोटियौं सूर्यजस्ता प्रभावशाली हे सूत ! मलाई तपाईं कुनै यस्तो कथा सुनाउनोस् जसले मेरा श्रवणपुट आनन्दित होउन् ॥ ४ ॥ जसले भक्ति-ज्ञान र वैराग्यपूर्ण विचार बढोस् र विष्णुभक्तहरूको मोह-पाश नाशियोस् ॥५॥ हे प्रभो ! यो घोर कलियुगमा जीव मनुष्यबाट राक्षस भएर अनेक थरिका दुःख भोग्दछन् ।

श्रीहरिः ॥ ॐ नमो भगवते वासुदेवाय ॥ सच्चिदानन्दरूपाय विश्वोत्पत्त्यादिहेतवे ॥ तापत्रयविनाशाय श्रीकृष्णाय वयं नुमः ॥ १ ॥ यं प्रव्रजन्तमनुपेतमपेतकृत्यं द्वैपायनो विरहकातर आजुहाव ॥ पुत्रेति तन्मयतया तरवोऽभिनेदुस्तं सर्वभूतहृदयं मुनिमानतोऽस्मि ॥ २ ॥ नैमिषे सूतमासीनमभिवाद्य महामतिम् ॥ कथामृतरसास्वादकुशलः शौनकोऽब्रवीत् ॥ ३ ॥ शौनक उवाच ॥ अज्ञानध्वान्तविध्वंसकोटिसूर्यसमप्रभ ॥ सूताख्याहि कथासारं मम कर्णरसायनम् ॥ ४ ॥ भक्तिज्ञानविरागाप्तो विवेको वर्धते महान् ॥ मायामोहनिरासश्च वैष्णवैः क्रियते कथम् ॥ ५ ॥ इह घोरे कलौ प्रायो जीवश्चासुरतां गतः ॥ क्लेशाक्रान्तस्य तस्यैव शोधने किं परायणम् ॥ ६ ॥ श्रेयसां यद्भवेच्छ्रेयः पावनानां च पावनम् ॥ कृष्णप्राप्तिकरं शश्वत्साधनं तद्वदाधुना ॥७॥ चिन्तामणिर्लोकसुखं सुरद्रुः स्वर्गसंपदम् ॥ प्रयच्छति गुरुः प्रीतो वैकुण्ठं योगिदुर्लभम् ॥८॥ प्रीतिः शौनक चित्ते ते ह्यतो वच्मि विचार्य च ॥ सर्वसिद्धान्तनिष्पन्नं संसारभयनाशनम् ॥ ९ ॥ भक्त्योघवर्द्धनं यच्च कृष्णसन्तोषहेतुकम् ॥ तदहं तेऽभिधास्यामि सावधानतया शृणु ॥ १० ॥ कालव्यालमुखग्रासत्रासनिर्णाशहेतवे ॥ श्रीमद्भागवतं शास्त्रं कलौ कीरेण भाषितम् ॥ ११ ॥ एतस्मादपरं किञ्चिन्मनः शुद्ध्यै न विद्यते ॥

यस्तो स्थितिमा तिनको कष्ट निवारणको के उपाय छ ? ॥६॥ हजुर मलाई कुनै यस्तो उपाय भन्नुहवस्, जुन सबैभन्दा राम्रो तथा पवित्र होस् र त्यो शीघ्र भगवान् कृष्णचन्द्रलाई प्राप्त गर्नसकोस्, किनकि चिन्तामणि इच्छित अभिलाषा पूर्ण गर्दछ र कल्पवृक्ष स्वर्गको सम्पत्ति हो तर ✽गुरु प्रसन्न भएर योगीहरूलाई पनि दुर्लभ वैकुण्ठधाम प्राप्त गराइदिन्छन् ॥ ७ ॥ ८ ॥ सूतजीमन्दछन्—हे शौनक ! तिम्रो चित्तमा प्रेम छ, अतः म तिमीलाई सबै सिद्धान्तको सार सांसारिक भयनाशक, भक्तिवर्धक र भगवान्को प्रिय उपाय भन्दछु सुन–॥९-१०॥ कलिमा

✽ दृष्टान्त—( सच्चा गुरु ) तिनको भक्त एक दिन दुर्दै आफ्ना गुरुको सत्संगमा गए। बखत त्यहाँका अन्य सत्संगीहरूले तिनको अनुपम भक्तिको प्रशंसा गरे। त्यो कुरा सुनेर गुरुले भने—'तिमीहरू [illegible] यो भन्दा बर्ता कुकर्मी र भगवद्‌द्रोही संसारमा अरू कोही छैनन्। यसलाई मेरो सत्संगबाट अहिल्यै धपाऊ !' चेलाहरूले गुरुको आज्ञा पालन गरे। शिष्यलो त्यहाँबाट हिंडिसकेपछि गुरुले भने—'तिमीहरू यो सज्जन भक्तको प्रशंसा गरेर यसको सर्वनाश गर्न लागिरहेका थौ। तिमीहरूको प्रशंसा उसको निम्ति तरवार थियो' जसले तिमीहरूले प्रहार गरिदिएका थियौ। यदि अलिकति पनि त्यसको असर हुन पाएको भए त्यो अहङ्कारी र पतित बन्ने थियो। उसको रक्षाको निम्ति मैले निन्दा गरे र अनादरले ढालको काम गरिदियो, जसले त्यसको हत्या हुन पाएन।' सच्चा गुरु यस्तै हुन्छन् र ती आफ्ना शिष्यको सदैव कल्याण गर्न खोज्दछन्।

टरलाग्दो सर्पका मुखबाट छिकन शुकदेवले श्रीमद्भागवत नामको यौटा स्वतन्त्र शास्त्रको प्रवचन गरे ॥ ११ ॥ मन पवित्र पार्नको लागि योभन्दा ठूलो अर्को कुनै उपाय छैन । जुन प्राणीको जन्म-जन्मान्तरका पुण्य उदय हुन्छन्, तिनलाई श्रीमद्भागवत सुन्ने इच्छा हुन्छ ॥ १२ ॥ जब राजा परीक्षितलाई यो पवित्र कथा सुनाउनको निम्ति श्रीशुकदेव सभाभूमिमा गएर बसेपछि देवताहरू अमृतको कलश लिएर आइपुगे॥१३॥ आफ्नो इच्छा पूर्तिमा बाठा देवताहरूले शुकदेवलाई प्रणाम गरेर भने—हे भगवन् ! तपाईं यो अमृतले भरिएको कलश लिनु हवस् र साटोमा हामीलाई भागवतको कथारूपी अमृत पिलाउनुस् ॥ १४ ॥ राजा परीक्षितलाई अमृत-पान गराएर अमर तुल्याउनोस् र हामी भागवतरूपी सुधा पिउँछौं ॥१५॥ यो सुनेर महर्षि शुकदेवले विचार गरे—'कहाँ भगवान्को दिव्यकथा र कहाँ यो तुच्छ अमृत ! कहाँ काँचका टुक्रा र कहाँ मणि !' यो सोचेर ती देवताहरूतर्फ हेरी हाँस्न लागे ॥१६॥ अन्यथा उनले देवताहरूलाई अनधिकारी ठानेर यो कथामृत दिएनन् । यसैले मनिन्छ कि श्रीमद्भागवतको पवित्र कथा देवताहरूलाई पनि दुर्लभ छ ॥ १७ ॥ श्रीशुकदेवको मुखबाट

जन्मान्तरे भवेत्पुण्यं तदा भागवतं लभेत् ॥१२॥ परीक्षिते कथां वक्तुं सभायां संस्थिते शुके ॥ सुधाकुम्भं गृहीत्वैव देवास्तत्र समागमन् ॥१३॥ शुकं नत्वाऽवदन्सर्वे स्वकार्यकुशलाः सुराः ॥ कथासुधां प्रयच्छस्व गृहीत्वैव सुधामिमाम् ॥ १४ ॥ एवं विनिमये जाते सुधा राज्ञा प्रपीयताम् ॥ प्रपास्यामो वयं सर्वे श्रीमद्भागवतामृतम् ॥१५॥ क सुधा क कथा लोके क काचः क मणिर्महान् ॥ ब्रह्मरातो विचार्यैवं तदा देवाञ्जहास ह ॥ १६ ॥ अभक्तां-स्तांश्च विज्ञाय न ददौ स कथामृतम् ॥ श्रीमद्भागवती वार्ता सुराणामपि दुर्लभा ॥ १७ ॥ राज्ञो मोक्षं तथा वीक्ष्य पुरा धाताऽपि विस्मितः ॥ सत्य-लोके तुलां बद्ध्वाऽतोलयत्साधनान्यजः ॥१८॥ लघून्यन्यानि जातानि गौरवेण इदं महत् ॥ तदा ऋषिगणाः सर्वे विस्मयं परमं ययुः ॥१९॥ मेनिरे भगवद्रूपं शास्त्रं भागवतं कलौ ॥ पठनाच्छ्रवणात्सद्यो वैकुण्ठफलदायकम् ॥ २० ॥ सप्ताहेन श्रुतं चैतत्सर्वथा मुक्तिदायकम् ॥ सनकाद्यैः पुरा प्रोक्तं नारदाय दयापरैः ॥२१॥ यद्यपि ब्रह्मसम्बन्धाच्छ्रुतमेतत्सुरर्षिणा ॥ सप्ताहश्रवणविधिः कुमारैस्तस्य भाषितः ॥२२॥ शौनक उवाच ॥ लोकविग्रह-मुक्तस्य नारदस्यास्थिरस्य च ॥ विधिश्रवे कुतः प्रीतिः संयोगः कुत्र तैः सह ॥ २३ ॥ सूत उवाच ॥ अत्र ते कीर्तयिष्यामि भक्तियुक्तं कथानकम् ॥

भागवतको कथा सुनेर तथा त्यसैद्वारा महाराज परीक्षितलाई मुक्त भएका देखेर ब्रह्माजीलाई पनि ठूलो आश्चर्य भयो । सत्यलोकमा गएर उनले विज्ञानको तुलामा अन्यान्य साधनहरूलाई एकातिर राखेर अर्कोतिर केवल श्रीमद्भागवतको कथा राखिदिए । त्यस तुलाको निर्णयानुसार त्यस कथाभन्दा अन्य साधन हलुँगो हुन गए र यसको गौरव सबैभन्दा ठूलो भयो । त्यो देखेर सबै ऋषिहरूलाई ठूलो विस्मय भएको थियो । त्यै बेलादेखि मुनिहरूले श्रीमद्भागवत-शास्त्रलाई भगवान्को साक्षात् स्वरूप माने । यसको श्रवण, अध्ययन वैकुण्ठ प्राप्तिको आनन्द दिन्छ । परापूर्वमा दयालु सनकादि मुनिहरूले नारदलाई यसको महिमा वर्णन गर्दै भनेका थिए—'श्रीमद्भागवतको सप्ताह सुन्नाले नै प्राणी मुक्त हुन्छन् ।' यद्यपि ब्रह्माजीको मुखबाट नारद मुनिले यसको माहात्म्य सुनेका थिए, तर सप्ताह-श्रवणविधि उनले सनकादि मुनिहरूबाट नै सुने । शौनकले सूतजीलाई सोधे—'हे भगवन् ! सांसारिक झगडाहरूबाट अलग्ग र एक घडीभन्दा बढी कतै पनि नबस्ने नारद मुनिलाई सप्ताह सुन्ने विधि जान्ने मौका कसरी प्राप्त भयो र सनकादिहरूसित ती कहाँ भेटिए ?' ॥१८-२३॥ सूतजी भन्दछन्—हे प्रिय शौनक !

यस प्रसंगमा म तिमीलाई यो कथा सुनाउँछु, जुन श्रीशुकदेवजीले मलाई आफ्नो शिष्य भनेर सुनाउनु भएको थियो ॥२४॥ कुनै समय सनक, सनन्दन, सनातन र सनत्कुमार यी चारै जनाहरू विशाला नगरीमा सत्संग गर्न जम्मा भए। त्यसै बेला तिनीहरूले देवर्षि नारदलाई पनि त्यहीं उपस्थित देखे ॥२५॥ नारदलाई विचित्र स्थितिमा देखेर सनकादिहरूले भने— हे ब्रह्मन् ! हजुरको मुख किन सुकेको छ ? हजुर किन चिन्ताग्रस्त देखिनु हुन्छ ? हजुर यस्तो बेगले कहाँ गइरहनु भएको छ र कहाँबाट पाल्नु हुँदैछ ? ॥२६॥ यस बखत हजुरको चित्त यस्तो देखिइरहेको छ कि हजुरको सर्वस्व लुटिएको होस्। हजुर जस्ता त्यागीले यसरी व्याकुल हुनु अनुचित लागिरहेको छ। हजुर आफ्नो व्याकुलताको कारण भन्नुहवस् ॥ २७ ॥ नारदजीले भने—म पृथ्वीको सर्वोत्तम लोक ठानेर यहाँ आएँ र यहाँका पुष्कर, प्रयाग, काशी, गोदावरी, हरिक्षेत्र, कुरुक्षेत्र, श्रीरंग, सेतुबन्ध आदि तीर्थ डुलें ॥२८॥२९॥ तर मैले यहाँ

शुकेन मम पुत्रोक्तं रहः शिष्यं विचार्य च ॥२४॥ एकदा तु विशालायां चत्वार ऋषयोऽमलाः ॥ सत्सङ्गार्थं समायाता ददृशुस्तत्र नारदम् ॥२५॥ कुमारा ऊचुः ॥ कथं ब्रह्मन्दीनमुखः कुतश्चिन्तातुरो भवान् ॥ त्वरितं गम्यते कुत्र कुतश्चागमनं तव ॥२६॥ इदानीं शून्यचित्तोऽसि गतवित्तो यथा जनः ॥ तवेदं मुक्तसङ्गस्य नोचितं वद कारणम् ॥ २७ ॥ नारद उवाच ॥ अहं तु पृथिवीं यातो ज्ञात्वा सर्वोत्तमामिति ॥ पुष्करं च प्रयागं च काशीं गोदावरीं तथा ॥२८॥ हरिक्षेत्रं कुरुक्षेत्रं श्रीरङ्गं सेतुबन्धनम् ॥ एवमादिषु तीर्थेषु भ्रममाण इतस्ततः ॥२९॥ नापश्यं कुत्रचिच्छर्म मनःसन्तोषकारकम् ॥ कलिनाऽधर्ममित्रेण धरेयं बाधिताऽधुना ॥३०॥ सत्यं नास्ति तपः शौचं दया दानं न विद्यते ॥ उदरम्भरिणो जीवा वराकाः कूटभाषिणः ॥३१॥ मन्दाः सुमन्दमतयो मन्दभाग्या ह्युपद्रुताः ॥ पाखण्डनिरताः सन्तो विरक्ताः सपरिग्रहाः ॥३२॥ तरुणीप्रभुता गेहे श्यालको बुद्धिदायकः ॥ कन्याविक्रयिणो लोभाद्दम्पतीनां च कल्कनम् ॥३३॥ आश्रमा यवनै रुद्धास्तीर्थानि सरितस्तथा ॥ देवतायतनान्यत्र दुष्टैर्नष्टानि भूरिशः ॥३४॥ न योगी नैव

कहीं पनि त्यो आनन्द पाइन, जसले हृदयमा शान्ति प्राप्त हुन्छ। अधर्मको मित्र कलिले समस्त पृथ्वीमण्डल आफ्नो वशमा पारिसकेको छ र त्यो सबैलाई धेरै कष्ट दिइरहेको छ। यस बखत यहाँ न सत्य छ न तप, न शौच, न दया नै देखिन्छ। सबै प्राणी पेट भर्नका लागि मिथ्या बोल्दछन्। ती आलसी, मूर्ख, अभागी र दुःखी छन्। पाखण्डीहरू आफूलाई सज्जन भन्दछन् र सज्जन लोभी भइहेका छन् ॥ ३०–३२ ॥ गृहस्थीहरूको घरमा नारीनै स्वामिनी छन्। घरका स्वामीको साला नै मन्त्री बनेको छ। लोभले गर्दा मानिस आफ्नी छोरी बेच्दछन्। स्त्री-पुरुषमा सधैं झगडा भइरहन्छ ॥ ३३ ॥ राम्रा-राम्रा आश्रमहरूमा यवनहरूको अधिकार छ। तीर्थ, नदी र देवमन्दिरहरू दुष्टहरूले नष्ट पारिसके। यस बखत यहाँ न

दृष्टान्त—( दुई अल्छी ) दुई जना अल्छी बाटो छेउमा [illegible] सुतिरहेका थिए। त्यहीं बाटो [illegible] आयो। उसलाई देखेर बाटोमै [illegible]—'ए सवार ! यहाँ आऊ !' सवार नजीकै आएपछि [illegible] भन्यो—'ए भाइ ! यो [illegible] मेरो मुखमा [illegible]।' [illegible] अल्छीलाई दुई-तीन कोर्रा [illegible] भन्यो—'[illegible] तर आफूले [illegible] सकिनस् !' [illegible] अर्को अल्छीले भन्यो—'भाइ ! उसलाई कोर्रा ठीकै [illegible]। मेरो मुखमा कुकुरले मुतिरहेको थियो; तर [illegible] !' [illegible] भन्यो—'[illegible] अल्छी नै रहिछन् !'

कुनै सिद्ध छन्, न कोही योगी र न कुनै ज्ञानी नै देखिन्छन् । कुनै क्रियावान् पुरुषको दर्शन पाउनु पनि दुर्लभ छ । कालरूपी दावानिले सबै राम्रा साधनहरूलाई भस्म पारिदिएका छन् । यहाँका प्रजाजन अन्न बेच्तछन्, ब्राह्मण वेद बेच्दछन् र नारीहरू रूप बिक्री गर्दछन् । कलिकालमा अनाचारीहरूको वृद्धि भइरहेको छ । यस प्रकार कलिका अनेक दोषहरू देख्दै र यता उता भ्रमण गर्दै म यमुना नदीको तटवर्ती वृन्दावन पुगें, जहाँ भगवान्ले मनोहर लीला गरेका थिए ॥ ३४-३७ ॥ हे मुनिहो ! मैले त्यहाँ यौटा अनौठो कुरा देखें । यौटी युवती नारी उदास परेर बसेकी थिई ॥३८॥ त्यसको नजीकै दुइ जना वृद्ध मूर्छित भएर लामु-लामु सास फेर्दै लडिरहेका थिए त्यो एक्ली तरुणी ती वृद्धको सेवा गर्दै तिनलाई धैर्य दिन्थी र दुःखी भएर तिनको सामुन्ने रुन्थी र कराउन्थी । छिन-छिनमा त्यो आफ्नो रक्षा गर्ने कुनै सहायकको अपेक्षा गरिरहेकी थिई । त्यस स्त्रीका वरिपरि बसेका अनेक स्त्रीहरू पंखा हम्कँदै त्यसलाई

सिद्धो वा न ज्ञानी सत्क्रियो नरः ॥ कलिदावानलेनाद्य साधनं भस्मतां गतम् ॥३५॥ अट्टशूला जनपदाः शिवशूला द्विजातयः ॥ कामिन्यः केशशूलिन्यः सम्भवन्ति कलाविह ॥३६॥ एवं पश्यन् कलेर्दोषान् पर्यटन्नवनीमहम् ॥ यामुनं तटमापन्नो यत्र लीला हरेरभूत् ॥ ३७ ॥ तत्राश्चर्यं मया दृष्टं श्रूयतां तन्मुनीश्वराः ॥ एका तु तरुणी तत्र निषण्णा खिन्नमानसा ॥३८॥ वृद्धौ द्वौ पतितौ पार्श्वे निःश्वसन्तावचेतनौ ॥ शुश्रूषन्ती प्रबोधन्ती रुदती च तयोः पुरः ॥ ३९ ॥ दशदिक्षु निरीक्षन्ती रक्षितारं निजं वपुः ॥ वीज्यमाना शतस्त्रीभिर्बोध्यमाना मुहुर्मुहुः ॥४०॥ दृष्ट्वा दूरादगतः सोऽहं कौतुकेन तदन्तिकम् ॥ दृष्ट्वा मां चोत्थिता बाला विह्वला चाब्रवीद्वचः ॥४१॥ बालोवाच ॥ भो भोः साधो क्षणं तिष्ठ मच्चिन्तामपि नाशय ॥ दर्शनं तव लोकस्य सर्वथाऽघहरं परम् ॥४२॥ बहुधा तव वाक्येन दुःखशान्तिर्भविष्यति ॥ यदा भाग्यं भवेद्भूरि भवतो दर्शनं तदा ॥ ४३ ॥ नारद उवाच ॥ काऽसि त्वं काविमौ चेमा नार्यः काः पद्मलोचनाः ॥ वद देवि सविस्तारं स्वस्य दुःखस्य कारणम् ॥४४॥ बालोवाच ॥ अहं भक्तिरिति ख्याता इमौ मे तनयौ मतौ ॥ ज्ञानवैराग्यनामानौ कालयोगेन जर्जरौ ॥४५॥ गङ्गाद्याः सरितश्चेमा मत्सेवार्थं समागताः ॥ तथापि न च मे श्रेयः सेवितायाः सुरैरपि ॥४६॥ इदानीं शृणु मद्वार्तां सचित्तस्त्वं तपोधन ॥ वार्ता मे विततास्त्यस्ति तां श्रुत्वा सुखमावह ॥४७॥ उत्पन्ना द्रविडे साऽहं वृद्धिं कर्णाटके गता ॥ क्वचित्क्वचिन्महाराष्ट्रे गुर्जरे जीर्णतां गता ॥४८॥ तत्र घोरकलेर्योगात्पाखंडैः खंडिताङ्गका ॥ दुर्बलाऽहं चिरं जाता पुत्राभ्यां सह मंदताम् ॥४९॥ वृन्दावनं

सम्झाइ बुझाइरहेका थिए । पश्चात् यस्तो स्थिति देखेर कुतूहल भई म त्यहाँ पुगें । त्यो तरुणी मलाई देखेर उठी र विह्वल भई भन्नलागी—हे साधो ! एकैछिन अडिएर मेरो चिन्ता निवारण गरिदिनोस् । हजुरजस्ताको दर्शन सबै पाप नष्ट पार्दछ । हजुरको कुराले मेरो कष्ट निवारण हुनेछ । जब कर्मको सुकृति उदय हुन्छ तब हजुरको दर्शन मिल्दछ ॥३९-४३॥ नारदले सोधे—तिमी को हौ ? यी कमलनयनी नारीहरू को हुन् ? हे देवि ! तिमी आफ्नो दुःखको कारण भन ॥४४॥ स्त्रीले भनिन्—'म भक्ति हुँ र यी दुवै मेरा पुत्र ज्ञान र वैराग्य हुन्, यी बूढा भइसकेका छन् ॥४५॥ यी गङ्गा आदि नदीहरू मेरो सेवाको निम्ति आएका छन् । यी देवीहरूको सेवाले पनि मेरो कल्याण होला भन्ने देखिंदन ॥४६॥ हे मुने ! हजुर आफलाई शान्त पारेर मेरो वृत्तान्त सुन्नोस् । मेरो राम-कथा निकै लामो छ, त्यसलाई सुनेर हजुर सुखी हुनुहोस् ॥४७॥ म भक्ति हुँ, द्रविड देशमा उत्पन्न भएँ, कर्णाटकमा ठूली र महा-

राष्ट्र तथा गुजरातमा बुढी भएँ ॥४८॥ घोर कलिकालले गर्दा पाखण्डीहरूले मेरो टुक्रा-टुक्रा पारिदिए। त्यसैले म र मेरा छोरा निकै समयदेखि दुर्बल हुँदै गइरहेथ्यौं ॥४९॥ फेरि वृन्दावनमा आउनाले म रूपवती तरुणी स्त्री भएकी छु। अब सबै प्रकारले मेरो रूप राम्रो छ ॥५०॥ तापनि मेरा छोरा ज्ञान-वैराग्य थकाईले यहाँ पल्टिरहेका छन्। म यहाँबाट कुनै अर्को देशमा जान खोजिरहेकी छु ॥५१॥ मेरा पुत्रहरू वृद्ध भइसकेका छन्, यो असाधारण कष्टले मलाई व्याकुल तुल्याएको छ। यहाँ आएर म युवती किन भएँ र छोराहरू किन वृद्ध भए बुझ्न सकिरहेकी छैन ॥५२॥ जब हामी तीनै जना संगै आयौं तब यस्तो विषमता किन उपस्थित भयो? यदि आमा बुढी र सन्तान तरुना हुनु त ठीक हो, तर आमा जवान र छोरा बुढा हुनुलाई के भन्ने ॥५३॥ म यस विषयमा बराबर यही विचार गर्दै रहन्छु—यस्तो किन भयो? हे योगनिधे! यसको मुख्य कारण के हो, हजुर आज्ञा हवस् ॥५४॥ नारदले भने म ज्ञानदृष्टिले हेर्दछु कि किन यस्तो भयो? हे निष्पापे! विषाद नगर। नारायणले कल्याण गर्नुहुन्छ ॥५५॥ सूतजी भन्नुहुन्छ—यस घटनाको कारण जानेर नारदले भक्तिलाई भने—

पुनः प्राप्य नवीनेव सुरूपिणी ॥ जाताऽहं युवती सम्यक्श्रेष्ठरूपा तु साम्प्रतम् ॥ ५० ॥ इमौ तु शयितावत्र सुतौ मे क्लिश्यतः श्रमात् ॥ इदं स्थानं परित्यज्य विदेशं गम्यते मया ॥५१॥ जरठत्वं समायातौ तेन दुःखेन दुःखिता ॥ साऽहं तु तरुणी कस्मात्सुतौ वृद्धाविमौ कुतः ॥५२॥ त्रयाणां सहचारित्वा-द्वैपरीत्यं कुतः स्थितम् ॥ घटते जरठा माता तरुणौ तनयाविति ॥५३॥ अतः शोचामि चात्मानं विस्मयाविष्टमानसा ॥ वद योगनिधे धीमन् कारणं चात्र किं भवेत् ॥५४॥ नारद उवाच ॥ ज्ञानेनात्मनि पश्यामि सर्वमेतत्तवानघे ॥ न विषादस्त्वया कार्यो हरिः शं ते करिष्यति ॥५५॥ सूत उवाच ॥ क्षणमात्रेण तज्ज्ञात्वा वाक्यमूचे मुनीश्वरः ॥५६॥ नारद उवाच ॥ शृणुष्वावहिता बाले युगोऽयं दारुणः कलिः ॥ तेन लुप्तसदाचारो योगमार्गस्तपांसि च ॥ जना अघासुरायन्ते शाठ्यदुष्कर्मकारिणः ॥५७॥ इह सन्तो विषीदन्ति प्रहृष्यन्ति ह्यसाधवः ॥धत्ते धैर्यं तु यो धीमान् स धीरः पण्डितोऽथवा ॥५८॥ अस्पृश्याऽनवलोक्येयं शेषभारकरी धरा ॥ वर्षे वर्षे क्रमाज्जाता मङ्गलं नापि दृश्यते ॥ ५९ ॥ न त्वामपि सुतैः साकं कोऽपि पश्यति साम्प्रतम् ॥ उपे-क्षिताऽनुरागान्धैर्जर्जरत्वेन संस्थिता ॥ ६० ॥ वृन्दावनस्य संयोगात्पुनस्त्वं तरुणी नवा ॥ धन्यं वृन्दावनं तेन भक्तिर्नृत्यति यत्र च ॥६१॥ अत्रेमौ ग्राहकाभावात्र जरामपि मुञ्चतः ॥ किञ्चिदात्मसुखेनेह प्रसुप्तिर्मन्यतेऽनयोः ॥ ६२ ॥ भक्तिरुवाच ॥ कथं परीक्षिता राज्ञा स्थापितो ह्यशुचिः कलिः ॥

हे बाले! तिमी सावधान भएर सुन, यो दारुण कलियुग हो ॥५६॥ यस निम्ति संसारबाट सदाचार लुप्त भएको छ! सबै व्यक्तिले योगमार्ग र तपस्या त्यागिदिएका छन्। मानिसहरू अनेक दुष्कर्मले अघासुर बनिसकेका छन् ॥५७॥ कलिको राज्यमा सज्जन दुःख भोग्दछन् र दुष्ट मोज गर्दछन्। यस्तो समयमा पनि जो धैर्य धारण गर्दछ, त्यसैलाई धैर्यशाली वा पण्डित भन्न सकिन्छ ॥५८॥ यो अस्पृश्य र अनवलोकनीय पृथ्वी वर्षै-वर्ष शेष भगवान्को भारी बन्दै गइरहेछ, कतै गएर पनि कल्याण हुने देखिदैन ॥५९॥ यस बखत कोही तिमी र तिम्रा छोराहरूतिर हेर्दा पनि हेर्दैनन्। वासनामा अन्धा संसारीहरूले तिमीलाई त्यागिदिएका थिए, त्यसैले तिमी (बुढी) भएकी थियौ ॥६०॥ तर यस वृन्दावनमा आएर तिमी तरुणी भयौ! यो वृन्दावन धन्य छ, जहाँ भक्ति दिन-रात नाचिरहन्छिन् ॥ ६१ ॥ यहाँ यी (ज्ञान-वैराग्य) का कुनै ग्राहक छैनन्। यसैले यी दुवै आफ्नो वृद्धत्व छाड्न सक्दैनन्। अँ, यहाँ

थिनको आत्मालाई केही सुख अवश्य प्राप्त भएको छ, यसैले यो सुनेका छन् ॥६२॥ भक्तिले भने—यदि यस्तो थियो भने महाराज परीक्षितले यस दुष्ट कलिलाई यहाँ वस्नर्न किन दि.? यो आएपछि सबैको पराक्रम कता गयो ? ती नारायण पनि अधर्म बढेको किन हेरिरहेका छन् ? तपाईं मेरो यो सन्देह हटाइदिनुस् । हजुरको कुराले मलाई ठूलो आनन्द प्राप्त भइरहेको छ ॥ ६३-६४ ॥ नारदजीले भने—हे बाले ! तिमीले मसित सोधिहालेपछि प्रेमपूर्वक सुन । हे भद्रे ! म तिमीलाई सबै रहस्य बताइदिन्छु, यसले तिम्रो सारा संशय नष्ट हुनेछ ॥६५॥ जुन दिन भगवान् यो भूमण्डल त्यागेर आफ्नो गोलोकमा पाल्नुभयो, त्यसै दिन सबै साधनमा बाधा पुऱ्याउने कलि यहाँ आइपुग्यो ॥६६॥ दिग्विजयको प्रसंगमा महाराज परीक्षितले यसलाई नमाएका थिए, तर त्यस वेला यो दीन बनेर उनको शरणागत भयो । महाराजले विचार गरे कि जब यो मेरो समक्ष दीन बनिहाल्यो, यसलाई किन मारौं ॥६७॥ फेरि जुन

प्रवृत्ते तु कलौ सर्वसारः कुत्र गतो महान् ॥६३॥ करुणापरेण हरिणाऽप्यधर्मः कथमीक्ष्यते ॥ इमं मे संशयं छिन्धि त्वद्वाचा सुखिताऽस्म्यहम् ॥६४॥ नारद उवाच ॥ यदि पृष्टस्त्वया बाले प्रेमतः श्रवणं कुरु ॥ सर्वं वक्ष्यामि ते भद्रे कश्मलं ते गमिष्यति ॥ ६५ ॥ यदा मुकुन्दो भगवान् क्ष्मां त्यक्त्वा स्वपदं गतः ॥ तद्दिनात्कलिरायातः सर्वसाधनबाधकः॥६६॥ दृष्टो दिग्विजयो राज्ञा दीनवच्छरणं गतः ॥ न मया मारणीयोऽयं सारङ्ग इव सारभुक् ॥६७॥ यत्फलं नास्ति तपसा न योगेन समाधिना ॥ तत्फलं लभ्यते सम्यक्कलौ केशवकीर्तनात् ॥६८॥ एकाकारं कलिं दृष्ट्वा सारवत्सारनीरसम् ॥ विष्णुरातः स्थापितवान्कलिजानां सुखाय च ॥६९॥ कुकर्माचरणात्सारः सर्वतो निर्गतोऽधुना ॥ पदार्थाः संस्थिता भूमौ बीजहीनास्तुषा यथा ॥७०॥ विप्रैर्भागवती वार्ता गेहे गेहे जने जने ॥ कारिता कणलोभेन कथासारस्ततो गतः ॥ ७१ ॥ अत्युग्रभूरिकर्माणो नास्तिका रौरवा जनाः ॥ तेऽपि तिष्ठन्ति तीर्थेषु तीर्थसारस्ततो गतः ॥७२॥ कामक्रोधमहालोभतृष्णाव्याकुलचेतसः ॥ तेऽपि तिष्ठन्ति तपसि तपःसारस्ततो गतः ॥७३॥ मनसश्चाजया-

तपस्या, योग र समाधिले पनि सुलभ हुन्न त्यो कलियुगमा केवल भगवान्को गुण-गानले प्राप्त हुन्छ ॥६८॥ यस युगमा यदि ज्ञान-वैराग्यका साधन गर्न नसके पनि केवल भक्तिको साधनाले प्राणी मुक्त हुन्छन् । यी लाभहरू देखेर नै राजा परीक्षितले कलिको स्थापना गरिदिएका थिए ॥६९॥ तर प्राणिहरूको कुकर्मले यस बखत मानिसको सबै पराक्रम भागिसकेको छ । संसारका सबै पदार्थ उस्तै निस्सार भएका छन् जस्तै भुस रोपेर अन्न फल्दैन ॥ ७० ॥ ब्राह्मण पेटभरि अन्नको लोभले घरघरै गएर भगवान्को कथा भन्नलागे, यसले कथाको महत्त्व सकियो ॥७१॥ ठूला-ठूला पापी, नास्तिक र नारकी जन तीर्थ पुरोहित बने, त्यसैले तीर्थको महिमा रहेन ॥ ७२ ॥ काम, क्रोध, लोभ र तृष्णाले व्याकुल पाखण्डी पनि तपस्वी भए, त्यसैले तपस्याको महत्त्व नष्ट भयो ॥७३॥ मन जित्न नसकेर दम्भ र पाखण्डको आश्रय लिने र राम्ररि नगर्नाले ध्यान तथा योगको बल क्षीण भयो ॥७४॥ आज पण्डित नाम

---

दृष्टान्त—(कथा) कोटा साहुको नित्य कथा सुन जाने गर्दथे । एक दिन ती कुनै काममा अल्झिए, त्यसै कारण उनले आफ्नो छोरोलाई डाकेर भने—बाबु ! आज अमुक स्थानमा गएर कथा सुन... कथा सुन्न गएको त कथामा सुन्यो गाई माता समान हुन्, यसनिमित्त गाईमाथि सदैव दयाभाव राख्नु । यदि त्यो कसै खान-पिउन खोजेको छ भने त्यसलाई नछेक ।' ... खेतमा पोटी गाई आइपुगी र बोराको चामल खानलागी । ... कथामा भनेको सम्झ्यो—भरा त्यसले गाई धपाएन । त्यसै कारण केही चामल भूमिमा ... बाबु आई ...

हुने भाव राखी ब्रीहरूसित विहार गर्दछन् । ती छोरा जन्माउन अति निपुण छन्, त्यति मुक्ति-साधनमा छैनन् ॥ ७५ ॥ सम्प्रदायको अनुकूल आचरण गर्ने वैष्णवत्व कहीं देखिन्न, यसैले सबै वस्तुको सार नष्ट भएको छ ॥७६॥ जब यो युगधर्म नै छ, तब कसलाई दोष दिने ? यसैले भगवान् समस्त अनर्थ देखेर पनि मौन हुनुहुन्छ । सूतजी भन्दछन्—हे शौनक ! नारदका कुरा सुनेर भक्तिलाई ठूलो विस्मय भयो र उनले जे भनिन् त्यो सुन ॥७७-७८॥ भनिन्—तपाईं धन्य हुनुहुन्छ र मेरै भाग्यले यहाँ आउनुभयो, किनकि सत्पुरुषको दर्शन सबै सिद्धिहरू प्रदान गर्दछ ॥७९॥ फेरि जसले संसारको माया जितिसकेका छन्, जसले शरीरमा प्रभुता प्राप्त गरिसकेका छन् जसको वचन मानेर बालक ध्रुव ध्रुवपदमा प्राप्त भए, सबै प्रकार-का गुणहरूले परिपूर्ण ती नारद मुनिलाई म प्रणाम गर्दछु ॥ ८० ॥ इति श्रीपद्मपुराणे उत्तरखण्डे श्रीमद्भागवत माहात्म्ये भक्ति-नारद-समागमो नाम प्रथमोऽध्यायः ॥ १ ॥

लोभाद्दम्भात्पाखण्डसंश्रयात् ॥ शास्त्रानभ्यसनाच्चैव ध्यानयोगफलं गतम् ॥ ७४ ॥ पण्डितास्तु कलत्रेण रमन्ते महिषा इव ॥ पुत्रस्योत्पादने दक्षा अदक्षा मुक्तिसाधने ॥ ७५ ॥ न हि वैष्णवता कुत्र सम्प्रदायपुरःसरा ॥ एवं प्रलयतां प्राप्तो वस्तुसारः स्थले स्थले ॥ ७६ ॥ अयं तु युगधर्मो हि वर्तते कस्य दूषणम् ॥ अतस्तु पुण्डरीकाक्षः सहते निकटे स्थितः ॥ ७७ ॥ सूत उवाच ॥ इति तद्वचनं श्रुत्वा विस्मयं परमं गता ॥ भक्तिरूचे वचो भूयः श्रूयतां तच्च शौनक ॥ ७८ ॥ भक्तिरुवाच ॥ सुरर्षे त्वं हि धन्योऽसि मद्भाग्येन समागतः ॥ साधूनां दर्शनं लोके सर्वसिद्धिकरं परम ॥ ७९ ॥ जयति जगति माया यस्य कायाधवस्ते वचनरचनमेकं केवलं चाकलय्य ॥ ध्रुवपदमपि यातो यत्कृपातो ध्रुवोऽयं सकलकुशलपात्रं ब्रह्मपुत्रं नताऽस्मि ॥ ८० ॥ इति श्रीपद्मपुराणे उत्तरखण्डे श्रीमद्भागवतमाहात्म्ये भक्तिनारदसमागमो नाम प्रथमोऽध्यायः ॥ १ ॥

नारद उवाच ॥ वृथा खेदयसे बाले अहो चिन्तातुरा कथम् ॥ श्रीकृष्णचरणाम्भोजं स्मर दुःखं गमिष्यति ॥१॥ द्रौपदी च परित्राता येन कौरवकश्मलात् पालिता गोपसुन्दर्यः स कृष्णः क्वापि नो गतः॥२॥ त्वं तु भक्तिः प्रिया तस्य सततं प्राणतोऽधिका। । त्वयाहूतस्तु भगवान् याति नीचगृहेष्वपि ॥३॥ सत्या-दित्रियुगे बोधवैराग्यौ मुक्तिसाधकौ।।कलौ तु केवला भक्तिर्ब्रह्मसायुज्यकारिणी ॥४॥ इति निश्चित्य चिद्रूपः सद्रूपां त्वां ससर्ज ह ।।परमानंदचिन्मूर्तिः सुन्दरीं

नारदजी भन्दछन्—हे बाले ! व्यर्थ दुःखी नहोऊ । तिमी यति धेरै चिन्तित किन छौ ? श्रीकृष्णका चरणको स्मरण गर सबै कष्ट टर्नेछ ॥१॥ जसले कौरवबाट द्रौपदीलाई बचाएथे, जसले गोप-सुन्दरीहरूको रक्षा गरेका थिए, ती भगवान् कतै गए र ? तिमी त उनकी प्राणप्रिया भक्ति हौ । तिमीले डाकेपछि ती नीचहरूको घरमा पनि जान्छन् ॥२॥३॥ सत्ययुग, द्वापर र त्रेतामा ज्ञान र वैराग्य मुक्तिका साधन मानिन्थे, तर कलियुगमा भक्ति नै प्राणीलाई ब्रह्मसित मिलाउँछ ॥४॥ यसैले त चिद्रूपधारी र परमानन्दस्वरूप भगवानले तिमी जस्ती

---

गर्भमा बाले—'ए मूर्ख ! यो चामल किन छरिएको छ !' उसले उत्तर दियो—'हजुरले नै त हिजो मलाई कथा सुन्न पठाउनु भएको थियो । त्यहाँ मैले सुनेको थिएँ—यदि गाईले केही खायो भने नयवाउनू !' पिताले भन्दो—'हे मूढ ! यदि मैले यस्तै कथा सुनेको भए घर सुरक्षित रहने थियो ! सुन—यस कथा सुन्न जाऊ, तब बौधा समालको खेत निकाउनु र हिड्ने बेलामा त्यो त्यहीं छड्काएर भन्नू—'लौ पण्डितजी, आफ्नो कथा लेऊ !'

रूपवती सुन्दरी र कृष्ण-प्रेयसीको सृष्टि गरे ॥५॥ एकपल्ट तिमीले भगवान्‌सित सोध्यौ—म के गरूँ ? प्रभुले भने—मेरा भक्तहरूको रक्षा गर ॥६॥ तिमीले त्यो कुरा मान्यौ, त्यसले प्रसन्न हुनुभयो । अनि उनले मुक्तिलाई तिम्री दासी एवं ज्ञान-वैराग्यलाई छोरा तुल्याएर साथमा दिए ॥७॥ तिमी सत्यस्वरूपले वैकुण्ठमा भक्तहरूको रक्षा गर्दछ्यौ र भूलोकका भक्तहरूको रक्षार्थ तिमीले छायारूप धारण गर्‍यौ ॥८॥ मुक्ति ! ज्ञान र वैराग्यसंग तिमी भूमण्डलमा थियौ तब सत्ययुगदेखि द्वापरसम्म सुखपूर्वक रह्यौ । कलिमा पाखण्डरोगले पीडित मुक्ति यहाँ- वैकुण्ठ फर्कयौ ॥९॥१०॥ अझ पनि ऊ तिमीले सम्झनासाथ यहाँ आउँछिन । यी ज्ञान-वैराग्यलाई तिमीले आफ्ना छोरा तुल्याएर अहिले पनि आफैसित राखेकी छौ ॥११॥ कलियुगमा सबै ज्ञान र वैराग्यको उपेक्षा गर्दछन् । त्यसैले यी विचरा यस प्रकार शिथिल र बूढा भइरहेछन् । तापनि तिमी चिन्ता नगर, म कुनै उपाय विचार गर्दछु ॥१२॥ हे वरानने ! कलि-

कृष्णवल्लभाः॥५॥ बद्ध्वाञ्जलिं त्वया पृष्टं किं करोमीति चैकदा ॥ त्वां तदाज्ञापयत्कृष्णो मद्भक्तान्पोषयेति च॥६॥अङ्गीकृतं त्वया तद्वै प्रसन्नोभूद्धरिस्तदा ॥ मुक्तिं दासीं ददौ तुभ्यं ज्ञानवैराग्यकाविमौ ॥ ७ ॥ पोषणं स्वेन रूपेण वैकुंठे त्वं करोषि च ॥ भूमौ भक्तविपोषाय छायारूपं त्वया कृतम ॥ ८ ॥ मुक्तिं ज्ञानं विरक्तिं च सह कृत्वा गता भुवि ॥ कृतादिद्वापरस्यान्तं महानन्देन संस्थिता ॥९॥ कलौ मुक्तिः क्षयं प्राप्ता पाखण्डामयपीडिता ॥ त्वदाज्ञया गता शीघ्रं वैकुण्ठं पुनरेव सा ॥ १० ॥ स्मृता त्वयाऽपि चात्रैव मुक्तिरायाति याति च ॥ पुत्रीकृत्य त्वयेमौ च पार्श्वे स्वस्यैव रक्षितौ ॥ ११ ॥ उपेक्षातः कलौ मन्दौ वृद्धौ जातौ सुतौ तव ॥ तथापि चिन्तां मुञ्च त्वमुपायं चिन्तयाम्यहम् ॥ १२ ॥ कलिना सदृशः कोऽपि युगो नास्ति वरानने ॥ तस्मिं-स्त्वां स्थापयिष्यामि गेहे गेहे जने जने ॥ १३ ॥ अन्यधर्मांस्तिरस्कृत्य पुरस्कृत्य महोत्सवान् ॥ तदा नाहं हरेर्दासो लोके त्वां न प्रवर्तये ॥१४॥ त्वदन्विताश्च ये जीवा भविष्यन्ति कलाविह ॥ पापिनोऽपि गमिष्यन्ति निर्भयं कृष्णमन्दिरम् ॥१५॥ येषां चित्ते वसेद्भक्तिः सर्वदा प्रेमरूपिणी ॥ न ते पश्यन्ति कीनाशं स्वप्नेऽप्यमलमूर्तयः ॥ १६ ॥ न प्रेतो न पिशाचो वा राक्षसो वाऽसुरोऽपि वा ॥ भक्तियुक्तमनस्कानां स्पर्शने न प्रभुर्भवेत् ॥ १७ ॥ न तपोभिर्न वेदैश्च न ज्ञानेनापि कर्मणा ॥ हरिर्हि साध्यते भक्त्या प्रमाणं तत्र गोपिकाः ॥१८॥ नृणां जन्मसहस्रेण भक्तौ प्रीतिर्हि जायते ॥ कलौ भक्तिः कलौ भक्तिर्भक्त्या कृष्णः पुरः स्थितः ॥१९॥ भक्तिद्रोहकरा ये च ते सीदन्ति जगत्त्रये ॥ दुर्वासा दुःखमापन्नः पुरा भक्तिविनिन्दकः ॥२०॥

युग समान अरु कुनै युग छैन । म यसै कलियुगमा तिमीलाई घर-घर र प्राणी-प्राणीका हृदयमा स्थापित गर्दछु ॥१३॥ अरु सबै कर्महरूको त्याग गरी म उत्साहपूर्वक तिम्रो प्रचार गर्नेछु । म संसारमा फेरि एकपल्ट तिमीलाई विख्यात पार्न नसके म भगवान्‌को भक्त नै होइन ॥१४॥ यस युगमा जो भक्तिमान् हुनन् ती पापी भए पनि वैकुण्ठधाम गर्नेछन् ॥ १५ ॥ जसको हृदयमा सदैव भक्ति विद्यमान रहन्छ, ती पवित्र प्राणी सपनामा पनि यमराजको मुख हेर्दैनन् ॥१६॥ जसको चित्तमा भक्ति रहन्छिन्, ती प्राणीहरूलाई प्रेत, पिशाच, भूत राक्षस देवता कसैले पनि दुःख दिन सक्तैनन् ॥१७॥ तपस्या, वेद, ज्ञान र कर्मकाण्ड—यिनको कसैसित पनि भगवान् प्रसन्न हुँदैनन् उनी एकमात्र भक्तिले प्रसन्न हुन्छन । यस विषयमा प्रमाण व्रजका गोपिनीहरू छन् ॥१८॥ अनेक जन्मको पुण्योदय भएपछि हृदयमा भक्तिको उदय हुन्छ र कलियुगमा भक्तिले भगवान् साम्हुन्ने प्रकट हुन्छन् ॥१९॥ जो मानिस भक्तिसित द्रोह

मर्दछन् ती स्वर्ग, मर्त्य र पाताल तीनै लोकमा दुःखी रहन्छन् । भक्तिका निन्दक दुर्वासाले कस्तो कष्ट भोग्नु परेको थियो ? ॥२०॥ व्रत, तीर्थ, योग, यज्ञ र कथाहरू भन्नू र सुन्नू यो सबै भक्तिको अघिल्तिर तुच्छछन् । केवल भक्ति मुक्ति-साधनाको निम्ति पर्याप्त छ ॥२१॥ सूतजी भन्दछन्–यसरी नारदको मुखबाट आफ्नो महिमा सुनेर भक्तिका अङ्गप्रत्यङ्ग हर्षित भए । तिनले नारदलाई भनिन्—अहो मुने ! तिमी धन्य छौ । मप्रति तिम्रो अटल श्रद्धा छ । म कहिल्यै पनि तिमीलाई छाड्दिन सधैं तिम्रो हृदयमा म रहनेछु ॥२२-२३॥ हे मुने ! तिमीले कृपा गरेर एकछिनमै मेरो कष्ट निवारण गरिदियौ, तर मेरा छोरा अझ अचेत लडिरहेछन् । अब इनलाई पनि कुनै प्रकारले सचेत पार ॥२४॥ भक्तिका कुरा सुनेर नारदको हृदय करुणाले द्रवित भएर आयो र ती आफ्ना हातले ज्ञान-वैराग्यको शरीर थिच्तै तिनलाई सचेत पार्ने चेष्टा गर्नलागे ॥२५॥ ती दुवैको कानैनेर मुख लगेर चर्को स्वरले भन्नलागे–हे ज्ञान ! हे वैराग्य ! होसमा आऊ ॥२६॥ त्यसपछि वेद-वेदान्तका पवित्र मन्त्रहरु उच्चारण गर्दै गीता पाठ गरेर उनले ती दुवैलाई सचेत तुल्याउने चेष्टा गरे अनि कुनै प्रकारले चलमलाउनलागे

अलं व्रतैरलं तीर्थैरलं योगैरलं मखैः ॥ अलं ज्ञानकथालापैर्भक्तिरेकैव मुक्तिदा ॥२१॥ सूत उवाच ॥ इति नारदनिर्णीतं स्वमाहात्म्यं निशम्य सा ॥ सर्वाङ्गपुष्टिसंयुक्ता नारदं वाक्यमब्रवीत् ॥२२॥ श्रीभक्तिरुवाच ॥ अहो नारद धन्योऽसि प्रीतिस्ते मयि निश्चला ॥ न कदाचिद्विमुञ्चामि चित्ते स्थास्यामि सर्वदा ॥ २३ ॥ कृपालुना त्वया साधो मद्बाधा ध्वंसिता क्षणात् ॥ पुत्रयोश्चेतना नास्ति ततो बोधय बोधय ॥२४॥ सूत उवाच ॥ तस्या वचः समाकर्ण्य कारुण्यं नारदो गतः ॥ तयोर्बोधनमारेभे कराग्रेण विमर्दयन् ॥२५॥ मुखं संयोज्य कर्णांते शब्दमुच्चैःसमुच्चरन् ॥ ज्ञान प्रबुद्ध्यतां शीघ्रं रे वैराग्य प्रबुद्ध्यताम् ॥२६॥ वेदवेदान्तघोषैश्च गीतापाठैर्मुहुर्मुहुः ॥ बोद्ध्यमानौ तदा तेन कथं चिन्चोत्थितौ बलात् ॥२७॥ नेत्रैरवलोकंतौ जृम्भंतौ सालसावुभौ ॥ बकवत्पलितौ प्रायःशुष्ककाष्ठसमाङ्गकौ ॥२८॥ क्षुत्क्षामौ तौ निरीक्ष्यैव पुनः स्वापपरायणौ ॥ ऋषिश्चिन्तापरो जातः किं विधेयं मयेति च ॥२९॥ अहो निद्रा कथं याति वृद्धत्वं च महत्तमम् ॥ चिंतयन्निति गोविंदं स्मारयामास भार्गव ॥३०॥ व्योमवाणी तदैवाभून्मा ऋषे खिद्यतामिति ॥ उद्यमः सफलस्ते तु भविष्यति न संशयः ॥३१॥ एतदर्थं तु सत्कर्म सुरर्षे त्वं समाचर ॥ तत्ते कर्माभिधास्यंति साधवः साधुभूषणाः ॥३२॥ सत्कर्मणि कृते तस्मिन्सनिद्रा वृद्धताऽनयोः ॥ गमिष्यति क्षणाद्भक्तिः सर्वत्र प्रसरिष्यति ॥३३॥ इत्याकाशवचः स्पष्टं तत्सर्वैरपि विश्रुतम् ॥ नारदो विस्मयं लेभे नेदं ज्ञातमिति ब्रुवन्

॥२७॥ त्यति गर्दा पनि तिनका नेत्र खुलेनन्, सुती-सुती 'हाई-हाई' गर्नलागे किनकि तिनीमाथि आलस्यको प्रभाव थियो । बकुल्लाको प्वाँखजस्तै सेतो तिनको कपाल थियो र अङ्गप्रत्यङ्ग सुकेर काठजस्तै भएका थिए ॥२८॥ भोकले शक्तिहीन त भएकै थिए, त्यति गरेपछि तिनले अलिकति आँखा उघारे तापनि फेरि निदाए । नारदजी विचार गर्नलागे—अब म के गरौं ? ॥२९॥ कसरी इनको निद्रा हराउला । इनको वृद्धत्व पनि साधारण छैन । हे शौनक ! अनि नारदले तिनलाई भगवान् स्मरण गराउने चेष्टा गरे ॥३०॥ त्यसै बखत आकाशवाणी भयो—हे नारद ! तिमी खेद नगर तिम्रो प्रयत्न सफल हुनेछ ॥३१॥ इनको कल्याणार्थ तिमी राम्रा-राम्रा काम गर । ती राम्रा कर्महरू तिमीलाई सज्जनले भन्नेछन् ॥३२॥ तिम्रा सत्कर्मले यी दुवै जनाको निद्रा र वृद्धत्व दुवै हट्नेछ र भक्तिको सबैतिर प्रसार हुनेछ ॥ ३३ ॥ त्यो आकाशवाणी सबैले सुने । नारदलाई यो विचारेर विस्मय भयो कि मैले सत्कर्महरू गर्न

कुराहरू किन सोचीन ॥३४॥ ती फेरि विचार गर्न थाले—आकाशवाणीले पनि स्पष्ट कुरा भनेन, अनि त्यो कुन सत्कर्म हो, जुन गरेर नियनको काम पूर्ण हुन सक्छ ॥ ३५ ॥ ती सन्त मलाई कहाँ भेटिएलान् र त्यो साधन तिनले मलाई कसरी सुनाउलान् ? अब म के गरूँ र आकाशवाणीको कथन सत्य होस् ॥३६॥ सूतजी भन्दछन्—अनि नारद तिनलाई त्यहाँ अल्याई आफू हिँडे र प्रत्येक तीर्थहरूमा भ्रमण गर्दै एकेक ऋषि-मुनिसित तिनको कल्याण हुने प्रश्न गर्नलागे ॥३७॥ मुनिका कुरा त सबैजना ध्यानपूर्वक सुन्दथे, तर कुनै निश्चयात्मक उत्तर दिन सक्तैनथे। कसैले ज्ञान-वैराग्यको कल्याणको प्रयत्न असाध्य छ भने र कसैले दुःसाध्य भने ॥३८॥ कति त यो वृत्तान्त सुनेर मौन नै रहे र कति त सुनासाथ एकातिर हिँडे। यस घटनाले तीनै लोकमा हाहाकार मच्चियो ॥३९॥ सबै जना परस्पर कुरा गर्दागर्दै भन्दथे—जब वेद-वेदान्तहरूको उद्घोष र गीता-पाठ गर्नाले पनि ज्ञान-वैराग्य उठेनन् भने अब कुन

॥३४॥ नारद उवाच ॥ अनयाऽऽकाशवाण्याऽपि गोप्यत्वेन निरूपितम्॥ किं वा तत्साधनं कार्यं येन कार्यं भवेत्तयोः ॥३५॥ क्व भविष्यंति संतश्च कथं दास्यंति साधनम् ॥ मयाऽत्र किं प्रकर्तव्यं यदुक्तं व्योमभाषया ॥३६॥ सूत उवाच ॥ तत्र तावपि संस्थाप्य निर्गतो नारदो मुनिः ॥ तीर्थं तीर्थं विनिष्क्रम्य पृच्छन्मार्गे मुनीश्वरान् ॥३७॥ वृत्तान्तः श्रूयते सर्वैः किंचिन्निश्चित्य नोच्यते ॥ असाध्यं केचन प्रोचुर्दुर्ज्ञेयमिति चापरे ॥३८॥ मूकीभूतास्तथाऽन्ये तु कियंतस्तु पलायिताः ॥ हाहाकारो महानासीत्त्रैलोक्ये विस्मयावहः ॥३९॥ वेदवेदांतघोषैस्तु गीतापाठैर्विबोधितम् ॥ भक्तिज्ञान-विरागाणां नोदतिष्ठत्त्रिकं यदा ॥४०॥ उपायो नापरोऽस्तीति कर्णे कर्णेऽजपञ्जनाः ॥ योगिना नारदेनापि स्वयं न ज्ञायते तु यत ॥ ४१ ॥ तत्कथं शक्यते वक्तुमितरैरिह मानुषैः ॥ एवं ऋषिगणैः पृष्टैर्निर्णीयोक्तं दुरासदम् ॥ ४२ ॥ ततश्चिन्तातुरः सोऽथ बदरीवनमागतः ॥ तपश्चरामि चात्रेति तदर्थं कृतनिश्चयः ॥ ४३ ॥ तावद्दर्श पुरतः सनकादीन्मुनीश्वरान् ॥ कोटिसूर्यसमाभासानुवाच मुनिसत्तमः ॥ ४४ ॥ नारद उवाच ॥
चात्रेति तदर्थं कृतनिश्चयः ॥४३॥ तावद्दर्श पुरतः सनकादीन्मुनीश्वरान् ॥ कोटिसूर्यसमाभासानुवाच मुनिसत्तमः ॥ ४४ ॥ नारद उवाच ॥
इदानीं भूरिभाग्येन भवद्भिः सङ्गमः स्थितः ॥ कुमारा वदतां शीघ्रं कृपां कृत्वा ममोपरि ॥ ४५ ॥ भवन्तो योगिनः सर्वे बुद्धिमन्तो बहुश्रुताः ॥ पञ्च-हायनसंयुक्ताः पूर्वेषामपि पूर्वजाः ॥४६॥ सदा वैकुण्ठनिलया हरिकीर्तनतत्पराः ॥ लीलामृतरसोन्मत्ताः कथामात्रैकजीविनः ॥ ४७ ॥ हरिः शर-णमेवं हि नित्यं येषां मुखे वचः ॥ अतः कालसमादिष्टा जरा युष्मान्न बाधते ॥ ४८ ॥ येषां भ्रूभङ्गमात्रेण द्वारपालौ हरेः पुरा ॥ भूमौ निपतितौ सद्यो

अर्को उपाय हुन सक्तैन। जब ब्रह्मर्षि नारदले कुनै पक्का निधो गर्न सकेनन् भने अरु कसैले के गर्न सक्छ ॥॥४०-४१॥ नारदले जुन जुन ऋषिहरूसित यस विषयमा सल्लाह गरे ती चित चूप लागिरहे अथवा तिनीहरूले आफ्नो असमर्थता प्रकट गरिदिए ॥४२॥ अनि चिन्ताले व्याकुल नारद बदरीनारायणतिर गए र उनले निश्चय गरे—म ती तीनैको कल्याणार्थ तपस्या गर्नेछु ॥४३॥ त्यसै बेला नारदले कोटियौं सूर्यका समान तेजस्वी सनकादि मुनिहरूलाई आफ्नो अघिल्तिर उपस्थित देखेर भने—॥४४ ॥ हे कुमारगण ! ठूलो भाग्यले हजुर भेटिनुभयो अब ममाथि कृपा गरेर कुनै उपाय बताउनोस् ॥४५॥ हजुरहरू बुद्धिमान्, योगी र बहुश्रुत हुनुहुन्छ। हजुरहरू सधैं पाँच वर्षका नै रहनु हुन्छ र पूर्वजका पनि पूर्वज हुनुहुन्छ ॥४६॥ हजुरहरू सदैव वैकुण्ठमै रहेर भगवानको गुण गाउनु हुन्छ, भगवानका लीलामृत पान गरेर उन्मत्त जस्ता र भगवानका कथा भन्नु-सुन्नु नै हजुरहरूको जीवनचर्या छ ॥४७॥ हजुरका

सधैं 'हरिःशरणम्' निस्किरहन्छ । यसैले कालकी आज्ञाकारिणी 'वृद्धावस्था' पनि हजुरहरूलाई कष्ट दिनसक्दिन ॥४८॥ हजुरहरूको भ्रू-भङ्ग मात्रले भगवान्‌का द्वारपाल जय-विजय वैकुण्ठबाट र फेरि हजुरहरूको कृपा हुनासाथ ती फेरि आफ्नो पदमा पुगेका थिए ॥४९॥ अहो ! आज ठूलै भाग्य हुनाले हजुरहरूको दर्शन भयो । म दीनमाथि दया गर्नुहवस् किनकि दीनजनमा स्वभावैले ... ॥५०॥ त्यस बखत आकाशवाणीले भनेको जे भन्यो, त्यो कुन सत्कर्म हो ? यो विस्तारले आज्ञाहवस् ॥ ५१ ॥ भक्ति, ज्ञान-वैराग्यलाई म कसरी सुखी पार्न सकुला र कसरी संसारका सबै वर्णहरूमा तिनको संचार होला ॥५२॥ यति सुनेर सनकादि कुमारले भने—हे देवर्षे ! तिमी प्रसन्न होऊ । यस विषयमा त एउटा सुख-साध्य उपाय । पहिले देखिनै निश्चित भइसकेको छ ॥५३॥ हे नारद ! तिमी धन्य छौ, यसैले त विरागीहरूका शिरोमणि मानिन्छौ । तिमी सदैव भगवद्भक्तहरूका अग्रणी र योगीहरूमा सूर्य जस्तै छौ ॥ ५४ ॥

यत्कृपातः पदं गतौ ॥ ४९ ॥ अहो भाग्यस्य योगेन दर्शनं भवतामिह ॥ अनुग्रहस्तु कर्तव्यो मयि दीने दयापरैः ॥ ५० ॥ अशरीरगिरोक्तं यत्तत्किं साधनमुच्यताम् ॥ अनुष्ठेयं कथं तावत्प्रब्रुवन्तु सविस्तरम् ॥५१॥ भक्तिज्ञानविरागाणां सुखमुत्पद्यते कथम् ॥ स्थापनं सर्ववर्णेषु प्रेमपूर्वं प्रयत्नतः ॥ ५२ ॥ कुमारा ऊचुः ॥ मा चिन्तां कुरु देवर्षे हर्षं चित्ते समावह ॥ उपायः सुखसाध्योऽत्र वर्तते पूर्व एव हि ॥५३॥ अहो नारद धन्योऽसि विरक्तानां शिरोमणिः ॥ सदा श्रीकृष्णदासानामग्रणीर्योगभास्करः ॥ ५४ ॥ त्वयि चित्रं न मन्तव्यं भक्त्यर्थमनुवर्तिनि ॥ घटते कृष्णदासस्य भक्तेः स्थापनता सदा ॥ ५५ ॥ ऋषिभिर्बहवो लोके पन्थानः प्रकटीकृताः ॥ श्रमसाध्याश्च ते सर्वे प्रायः स्वर्गफलप्रदाः ॥ ५६ ॥ वैकुण्ठसाधकः पन्थाः स तु गोप्यो हि वर्तते ॥ तस्योपदेष्टा पुरुषः प्रायो भाग्येन लभ्यते ॥ ५७ ॥ सत्कर्म तव निर्दिष्टं व्योमवाचा तु यत्पुरा ॥ तदुच्यते शृणुष्वाद्य स्थिरचित्तः प्रसन्नधीः ॥ ५८ ॥ द्रव्ययज्ञास्तपोयज्ञा योगयज्ञास्तथापरे ॥ स्वाध्यायज्ञानयज्ञाश्च ते तु कर्मविसूचकाः ॥५९॥ सत्कर्मसूचको नूनं ज्ञानयज्ञः स्मृतो बुधैः ॥ श्रीमद्भागवतालापः स तु गीतः शुकादिभिः ॥ ६० ॥ भक्तिज्ञानविरागाणां तद्घोषेण बलं महत् ॥ व्रजिष्यति द्वयोः कष्टं सुखं भक्तेर्भविष्यति ॥६१॥ प्रलयं हि गमिष्यन्ति श्रीमद्भागवतध्वनेः ॥ कलेर्दोषा इमे सर्वे सिंहशब्दाद्वृका इव ॥६२॥ ज्ञानवैराग्यसंयुक्ता भक्तिः प्रेमरसा·

भक्तिको यसरी अनुसरण गर्नु तिम्रो निम्ति विस्मयको कुरा छैन । भक्तको त यो कर्तव्य नै हो कि ऊ प्रत्येक प्राणीको हृदयमा भक्तिको स्थापना गर्दैरहोस् ॥५५॥ प्राचीन महर्षिहरूले अनेक बाटो देखाएका छन् तर ती बाटो परिश्रमसाध्य र स्वर्गसुख दिने मात्र हुन्छन् ॥५६॥ वैकुण्ठको साधक मार्ग त गुप्त नै छ, त्यसको उपदेश गर्ने पुरुष ठूलो भाग्यले पाइन्छन् ॥५७॥ आकाशवाणीले जुन सत्कर्मको निर्देश गरेको छ, अब म त्यो भन्दछु । तिमी चित्तस्थिर गरेर, बुद्धिलाई स्वच्छ पार, अनि सुन ॥५८॥ द्रव्ययज्ञ, योगयज्ञ, स्वाध्याय यज्ञ, ज्ञान यज्ञ र तपोयज्ञ आदि कर्मकाण्डका सूचक अनेक यज्ञ छन् ॥५९॥ तर यी सबैमा सत्कर्मको सूचक केवल ज्ञानयज्ञ छ । त्यस ज्ञानयज्ञमा शुकादि मुनिहरूले श्रीमद्भागवत को कथा भनेका छन् ॥६०॥ त्यस कथाको घोषले भक्ति, ज्ञान र वैराग्यलाई ठूलो बल मिल्नेछ र तिनको कष्ट हराउने छ ॥६१॥ श्रीमद्भागवतको ध्वनिले कलिकादोष उसैगरी भाग्दछन्, जसरी सिंहको गर्जन

उदाहरण—श्रीमद्भागवत पठन-पाठन गर्ने बोरा ... कालीमा वेद-वेदांग आदि पढेर अनेक धर्म-ग्रन्थ र श्रीमद्भागवत अध्ययन गरे । 'विद्यावतां भागवते परीक्षा' भागवत गर्नै सामान्य र सबकली ... ।

सुनेर मृगहरू भाग्दछन् ॥६२॥ भागवत श्रवण गर्नाले ज्ञान-वैराग्य मिल प्रेम-रसको धारा बगाउँदै भक्ति संसारका प्रत्येक घर घरमा प्राणीका हृदयमा कल्लोल गर्दै खेल्ने छन् ॥६३॥ नारदले भने-जब वेद-वेदाङ्गका पाठ र गीता सुनाले पनि ती तीनै जना उठेनन् ॥६४॥ तब श्रीमद्भागवतको कथा सुनाउने ती कसरी उठेन हुनन् ? किनकि त्यस कथाका श्लोक-श्लोक र पद-पदमा वेदको अर्थ पसेको छ ॥६५॥ तपाईंहरू कृपा गरेर मेरो संशयको पनि निवारण गरिदिनुहवस्। किनाकि तपाईंहरूको दर्शन कदापि व्यर्थ जाँदैन, तपाईं शरणागत-वत्सल हुनुहुन्छ ॥६६॥ सनकादि मुनिले भने—वेद र उपनिषदहरूको सारअंशले नै भागवत-कथाको उत्पत्ति भएको हो, त्यसले त्यो वेद र उपनिषदहरूको फल जस्तै देदीप्यमान भइरहन्छ ॥६७॥ जस्तै उखुमा फेददेखि टुप्पासम्म रस रहन्छ, तर त्यो त्यहाँ रहेर उति मीठो हुँदैन, जति त्यहाँबाट अलग्ग भएर मीठो लाग्दछ ॥६८॥ जस्तै दूधमा

वहा ॥ प्रतिगेहं प्रतिजनं ततः क्रीडां करिष्यति ॥६३॥ नारद उवाच ॥ वेदवेदान्तघोषैश्च गीतापाठैः प्रबोधितम् ॥ भक्तिज्ञानविरागाणां नोदतिष्ठत्त्रिकं यदा ॥६४॥श्रीमद्भागवतालापात्तत्कथं बोधमेष्यति॥ तत्कथासु तु वेदार्थः श्लोकेश्लोके पदे पदे ॥६५॥ छिन्दंतु संशयं ह्येनं भवन्तोऽमोघदर्शनाः॥विलंबो नात्र कर्तव्यःशरणागतवत्सलाः ॥६६॥ कुमारा ऊचुः॥ वेदोपनिषदां साराज्जाता भागवती कथा ॥ अत्युत्तमा ततो भाति पृथग्भूता फलाकृतिः ॥६७॥ आमू- लाग्रं रसस्तिष्ठन्नास्ते न स्वाद्यते यथा ॥ स भूयः सम्पृथग्भूतः फले विश्वमनोहरः ॥६८॥ यथा दुग्धे स्थितं सर्पिर्न स्वदायोपकल्पते ॥ पृथग्भूतं हि तद्द्रव्यं देवानां रसवर्धनम् ॥६९॥ इक्षूणामपि मध्यान्तं शर्करा व्याप्य तिष्ठति ॥ पृथग्भूता च सामिष्टा तथा भागवती कथा॥७०॥इदं भागवतं नाम पुराणं ब्रह्मस- म्मितम्॥ भक्तिज्ञानविरागाणां स्थापनाय प्रकाशितम् ॥७१॥ वेदान्तवेदसुस्नाते गीताया अपि कर्तरि ॥ परितापवति व्यासे मुह्यत्यज्ञानसागरे ॥७२॥ तदा

रहेका घिउको स्वाद अज्ञात रहन्छ, तर दूधबाट अलग्ग भएर त्यो मानिसको के कुरा देवताहरूको समेत रसवर्धक बन्दछ ॥६९॥ जस्तै उखुभित्र चीनी रहन्छ, तर त्यसबाट अलग्ग भएर नै त्यो आफ्नो स्वाद प्रकट गर्दछ। यही कुरा भागवतको विषयमा पनि बुझ। पहिले वेद र उपनिषदहरूमा श्रीमद्भागवत मिसिएको थियो। तर त्यसको सुस्वाद उसै बेला प्रकट भयो, जब फलरूपले त्यसबाट छिकेर अलग्ग पारे ॥७०॥ श्रीमद्भागवत नामको पुराण वेद-सम्मत छ। भक्ति र ज्ञान-वैराग्यको स्थापना गर्नका लागी नै यसको प्रकाशन गरिएको हो ॥७१॥ वेद-वेदान्तका ज्ञाता एवं गीताका रचयिता महामुनि वेदव्यास जब अज्ञानरूपी सागरमा डुब्न लागेका थिए ॥७२॥ तब उनले त चार श्लोकहरूमा श्रीमद्भागवत

यो भक्ति, ज्ञान र वैराग्यले परिपूर्ण महान् ग्रन्थ हो। ती ब्राह्मण र ग्रन्थ भागवत पढेर सोझा राजाकहाँ गए र भने—महाराज ! हजुरको इच्छा भए म भागवतको समाद भर्नू र सुनुहवस्। ती राजा जनक जस्तै ज्ञानी थिए। उनले भने—'भागवतको अझ अध्ययन गरेर आउनोस्।' ब्राह्मणलाई रिस उठ्यो र भुतभुताउँदै हिँडे—'अब मैले के पढ्न बाँकी रह्यो ! मैले सम्पूर्ण भागवत कण्ठस्थ गरिसकेको छु। भागवतको कुनै पनि श्लोकको अर्थ लाउनु मेरो निम्ति खेलवाड जस्तै छ। राजा कति मूर्ख रहेछ।' त्यसपछि ब्राह्मणले फेरि भागवतको अवलोकन गरे र राजाकहाँ पुगे। राजाले फेरि पहिले जस्तै उत्तर दिए। अब ब्राह्मण राजाप्रति धेरै क्रोधित भए र एकान्तमा बसेर फेरि भागवत पढ्दै मनन गर्न लागे। अनि एक स्थानमा आयो—'लगाउनको निम्ति के बाटोमा फालिएको फाटेको लुगा पाइँदैन र के खानका लागि वृक्षले फल दिँदैनन् ? अनि किन विद्वान् धन मदान्ध राजाको चाकरी गर्दछन् ?' यो श्लोक पढ्दापढ्दै ब्राह्मणका आँखाबाट आँसु बग्न लाग्यो। यसपछि ती भागवत पढ्नमा नै तल्लीन भए। केही दिनपछि राजाले विचार गरे—त्यो ब्राह्मण फर्केर फेरि मकहाँ किन आएन ! राजा ब्राह्मणको घर पुगे। त्यहाँ ब्राह्मणलाई रुँदै भागवत पढ्दै गरेको देखे। अनि राजा दगुर्दै गएर तिनका चरणमा घोप्टिए र भने—'ब्रह्मन् ! अब तिमीले पूर्ण रीतले भागवत पढिसक्यौ। आजदेखि तिमी मेरा गुरु भयौ। हिँड, यो राज्य छाडेर हामी दुवै एकान्तमा ईश्वरको भजन गरौं।'

सुनाएका थिए, त्यो सुनेपछि व्यासजीको सारा अज्ञान नष्ट भएको थियो ॥७३॥ आफैंले बताएको बाटोमा पनि तिमीलाई किन संशय भइरहेको छ—यो कुरा मैले बुझ्न सकिन-मांगन नजाने जस्तै भएर सोद्धछौ। त्यति सुनेर नारदजी भन्दछन्—जसको दर्शन संसाररूपिणी ज्वाला दग्ध प्राणीहरूका सबै अशुभहरू नष्ट पारेर कल्याण गर्दछ, ती शेष-भगवानुको मुखबाट यो कथा प्रकट भएको हो। यस्ती दिव्य कथारूपिणी अमृत पान गरेर संसारमा त्यसको प्रचार गर्ने वेदव्यासको म शरणमा छु। अनेक जन्मका पुण्यले सज्जनहरूको संगति मिल्दछ। अनि अज्ञान जनित मोह र मदरूपी अन्धकार नष्ट भएर ज्ञानरूपी सूर्यको उदय हुन्छ ॥७४-७६॥ इति श्री पद्म पुराणे श्री भागवतमाहात्म्ये भाषाटीकायां कुमार-नारद संवादो नाम द्वितीयोऽध्यायः ॥२॥

नारदमुनि भन्दछन्—हे कुमारगण ! म पूर्ण प्रयत्न गरेर भक्ति, ज्ञान तथा वैराग्यको स्थापना गर्नका लागि श्री शुकमुनिले भनेको शास्त्रको कथारूपी उज्ज्वल ज्ञानयज्ञ गर्दछु।

त्वया पुरा प्रोक्तं चतुःश्लोकसमन्वितम् ॥ तदीयश्रवणात्सद्यो निर्बाधो बादरायणः ॥७३॥ तत्र ते विस्मयः केन यतः प्रश्नकरो भवान् ॥ श्रीमद्भागवतं श्रावे शोकदुःखविनाशनम् ॥७४॥ नारद उवाच ॥ यद्दर्शनं च विनिहन्त्यशुभानि सद्यः श्रेयस्तनोति भवदुःखदवार्दितानाम्॥ निःशेषशेषमुखगीतकथैकपानाः प्रेमप्रकाशकृतये शरणं गतोऽस्मि ॥७५॥ भाग्योदयेन बहुजन्मसमर्जितेन सत्सङ्गमेन लभते पुरुषो यदा वै ॥ अज्ञानहेतुकृतमोहमदांधकारनाशं विधाय हि तदोदयते विवेकः ॥७६॥ इति श्रीपद्मपुराणे उत्तरखण्डे श्रीमद्भागवतमाहात्म्ये कुमारनारदसंवादो नाम द्वितीयोऽध्यायः ॥ २ ॥

नारद उवाच ॥ ज्ञानयज्ञं करिष्यामि शुकशास्त्रकथोज्ज्वलम् ॥ भक्तिज्ञानविरागाणां स्थापनार्थं प्रयत्नतः ॥१॥ कुत्र कार्यो मया यज्ञः स्थलं तद्वाच्यतामिह ॥ महिमा शुकशास्त्रस्य वक्तव्यो वेदपारगैः ॥२॥ कियद्भिर्दिवसैः श्राव्या श्रीमद्भागवती कथा ॥ को विधिस्तत्र कर्तव्यो ममेदं ब्रुवतामितः ॥३॥ कुमारा ऊचुः ॥ शृणु नारद वक्ष्यामो विनम्राय विवेकिने ॥ गङ्गाद्वारसमीपे तु तटमानन्दनामकम् ॥४॥ नानाऋषिगणैर्जुष्टं देवसिद्धनिषेवितम् ॥ नानातरुलताकीर्णं नवकोमलवालुकम् ॥५॥ रम्यमेकान्तदेशस्थं हैमपद्मसुसौरभम् ॥ यत्समीपस्थजीवानां वैरं चेतसि न स्थितम् ॥ ६ ॥ ज्ञानयज्ञस्त्वया तत्र कर्तव्यः सुप्रयत्नतः ॥ अपूर्वरसरूपा च कथा तत्र भविष्यति ॥७॥ पुरःस्थं निर्बलं चैव जराजीर्णकलेवरम् ॥ तद्द्वयं च पुरस्कृत्य भक्तिस्तत्रागमिष्यति ॥ ८ ॥ यत्र भागवती वार्ता तत्र भक्त्यादिकं व्रजेत् ॥ कथाशब्दं समाकर्ण्य तत्त्रिकं तरुणायते ॥ ९ ॥ सूत उवाच ॥ एवमुक्त्वा कुमारास्ते

अब हजुर मलाई यो आज्ञा हवस कि म त्यो यज्ञ कहाँ गरौं, हजुर वेदमा पारंगत महर्षि मलाई शुकशास्त्रको महिमा सुनाउन सक्नुहवस्। श्रीमद्भागवतको कथा कति दिनमा सुन्नु पर्दछ र त्यो सुन्ने के-के विधि-विधान छ। यो सबै कृपा गरेर हजुर मलाई आज्ञा हवस् ॥१-३॥ सनकादि मुनि भन्दछन्—हे नारद ! तिमी जस्ता विनयी र ज्ञानी मुनिलाई म श्रीमद्भागवत सम्बन्धी सबै कुरा भन्दछु—तिमी केवल सावधान मनले सुन—गङ्गाद्वार ( हरिद्वार ) को नजीकै यौटा 'आनन्दतट' छ। त्यहाँ अनेक ऋषि-मुनि, देवता र सिद्धहरू बस्तछन्। त्यहाँ विविध प्रकारका वृक्षहरूको निकुञ्ज जस्तै बनेको छ र नयाँ एवं नरम बालुवा प्रशस्त रहिरहन्छ। त्यो प्रदेश निकै रमणीक र एकान्त पर्दछ। त्यहीं नजीकै फक्रेका कमल-पुष्पको सुगन्ध फैलिई रहन्छ। त्यस स्थानको वर-पर निवास गर्ने जीव-जन्तुको हृदयमा वैरभाव रहन्न ॥४-६॥ तिमी प्रेमपूर्वक त्यहाँ स्थानमा आफ्नो ज्ञानयज्ञ गर। त्यहाँ रसपूर्ण श्रीमद्भागवतको कथा

होओस् ॥७॥ वृद्धावस्थाले गर्दा जीर्ण-शीर्ण शरीर हुने ज्ञान-वैराग्यलाई अघि लगाएर भक्ति स्वयं त्यहाँ उपस्थित हुन आउने छन् ॥८॥ जिनकि नारायणको कथा जहाँ हुन्छ, त्यहाँ भक्ति स्वयं पुग्दछिन् । त्यो कथा सुन्नासाथ ती तीनै जना तरुण हुनेछन् ॥९॥ सूतजी भन्दछन्—हे शौनक ! यसरी सबै विधि-विधान बताई ती चारै कुमार श्रीमद्भागवतको कथारूपी अमृत पान गर्न नारदसित गङ्गातट तर्फ हिंडे ॥१०॥ जुन बेला ती सबै गंगा तटमा पुगे त्यस बेला भूलोक, देवलोक तथा ब्रह्मलोकसम्ममा कोलाहल मच्चियो ॥११॥ श्रीमद्भागवतरूपी अमृत पान गर्न लोभिएका सबै देवता, मनुष्य र ब्रह्मलोकनिवासी सबै दगुरे । विशेष रूपमा ती व्यक्ति त झन बढी उत्सुक भए, जुन परम वैष्णव थिए ॥१२॥ भृगु, वसिष्ठ, च्यवन, देवरात, गौतम, मेधातिथि, परशुराम, विश्वामित्र, शाकल, मार्कण्डेय, अत्रिपुत्र दुर्वासा, पिप्पलाद ॥१३॥ योगेश्वर व्यास, पराशर, छाया-शुक जाजलि र जह्नु आदि सबै मुनिहरू पुत्र तथा पत्नीहरू सहित ठूलो प्रेमले आकर्षित भएर आए ॥१४॥ यी बाहेक समस्त वेद, वेदान्त, वेदहरूका ऋचा, मन्त्र, तन्त्र सत्र पुराण र षट्शास्त्र मूर्तिमान् भइ-भइकन त्यहाँ आए ॥१५॥

नारदेन समं ततः ॥ गङ्गातटं समाजग्मुः कथापानाय सत्वराः ॥१०॥ यदा यातास्तटं ते तु तदा कोलाहलोऽप्यभूत् ॥ भूर्लोके देवलोके च ब्रह्मलोके तथैव च ॥११॥ श्रीभागवतपीयूषपानाय रसलम्पटाः ॥ धावन्तोऽप्याययुः सर्वे प्रथमं ये च वैष्णवाः ॥१२॥ भृगुर्वसिष्ठश्च्यवनश्च गौतमो मेधातिथिर्देवलदेवरातौ ॥ रामस्तथा गाधिसुतश्च शाकलो मृकण्डुपुत्रात्रिजपिप्पलादाः ॥ १३ ॥ योगेश्वरौ व्यासपराशरौ च छायाशुको जाजलिजह्नुमुख्याः ॥ सर्वेऽप्यत्री मुनिगणाः सहपुत्रशिष्याः स्वस्त्रीभिराययुरतिप्रणयेन युक्ताः ॥१४॥ वेदान्तानि च वेदाश्च मन्त्रास्तन्त्राः समूर्तयः ॥ दशसप्तपुराणानि षट् शास्त्राणि तथाऽऽययुः ॥१५॥ गङ्गाद्याः सरितस्तत्र पुष्करादिसरांसि च ॥ क्षेत्राणि च दिशः सर्वा दंडकादि वनानि च ॥१६॥ नगादयो ययुस्तत्र देवगंधर्वदानवाः ॥ गुरुत्वात्तत्र नायातान्भृगुः सम्बोध्य चानयत् ॥१७॥ दीक्षिता नारदेनाथ दत्तमासनमुत्तमम् ॥ कुमारा वन्दिताः सर्वैर्निषेदुः कृष्णतत्पराः ॥ १८ ॥ वैष्णवाश्च विरक्ताश्च न्यासिनो ब्रह्मचारिणः ॥ मुखभागे स्थितास्ते च तदग्रे नारदः स्थितः ॥१९॥ एकभागे ऋषिगणास्तदन्यत्र दिवौकसः ॥ वेदोपनिषदोऽन्यत्र तीर्थान्यत्र स्त्रियोऽन्यतः ॥२०॥ जयशब्दो नमः शब्दः शङ्खशब्दस्तथैव च ॥ चूर्णलाजाप्रसूनानां निक्षेपः सुमहानभूत ॥२१॥ विमानानि समारुह्य कियन्तो देवनायकाः ॥ कल्पवृक्षप्रसूनैस्तान् सर्वास्तत्र समाकिरन् ॥२२॥ सूत उवाच ॥ एवं तेष्वेकचित्तेषु श्रीमद्भा-

गङ्गा नदीहरू, पुष्कर आदि सरोवर, समस्त पुण्यक्षेत्र, दशै दिशाहरू र दण्डक आदि वन ॥१६॥ पर्वत तथा सबै देवता एवं दानव त्यहाँ उपस्थित भए । जो व्यक्ति म ठूलो हुँ भन्ने विचार गरेर त्यहाँ आएनन्, तिनलाई पनि भृगुमुनि गएर सम्झाइ-बुझाइ ल्याए ॥१७॥ त्यहाँ उपस्थित भएका सबै व्यक्ति त्यो यज्ञका यजमान नारदजीले दिएको उत्तम आसनमा गएर बसे । नारदले ती सनकादि कुमारहरूको वन्दना गरे अनि ती सबै कृष्णमा चित्त लगाएर बसे ॥१८॥ वैष्णव, विरक्त, संन्यासी र ब्रह्मचारीहरू अगाडि बसे, सबैभन्दा अगाडि स्वयं नारदजी विराजमान भए ॥१९॥ एकातिर ऋषिहरू, अर्कोतिर देवता, एकातिर वेद र उपनिषद् तथा अर्कोतिर तीर्थ, एकातिर समस्त स्त्रीहरू बसे ॥२०॥ चारैतिरबाट जय-शब्द, नमः शब्द तथा शङ्खनादको घनघोर ध्वनि उच्चरित हुन लाग्यो र अबीर लावा तथा पुष्प दानी परेझैं छर्न लागे ॥२१॥ अनेक ठूला-ठूला देवताहरू विमानहरूमा बसेर आकाश-मण्डलबाट

कल्पवृक्षका फूलहरू वर्षा गर्नथाले ॥२२॥ सूतजी भन्दछन्–हे शौनक ! यसरी जब सबै श्रोता सावधान भइसके, तब सनकादि कुमारहरूले नारदजीलाई स्पष्टरूपले श्रीमद्भागवतको माहात्म्य सुनाउन आरम्भ गरे ॥२३॥ कुमार भन्दछन्–हे नारद ! अब म तिमीलाई श्रीमद्भागवत नामक शुक शास्त्रको महिमा सुनाउँछु । त्यसलाई सुन्नासाथ मुक्ति हत्केलामा आएर उपस्थित हुन्छिन् ॥२४॥ यसैले म बारम्बार भन्दछु–यो कथा सदा सुन्दै र सुनाउँदै रहनु । यसको श्रवण मात्रले पनि भगवान् हृदयमा विराजमान हुन्छन् ॥२५॥ यस श्रीमद्भागवतमा सबै अठार हजार श्लोक र बाह्र स्कन्ध छन् । यसमा राजा परीक्षित र शुकदेवको संवाद छ । अब तिमी यो भागवत सुन ॥२६॥ मनुष्य अज्ञानवश तबसम्म यस संसार चक्रमा घुमिरहन्छ, जबसम्म श्रीमद्भागवत सुन्दैनौ ॥२७॥ भ्रममा पार्ने अनेक शास्त्रहरू र पुराणहरू सुन्नाले के लाभ ? मुक्ति-दान गर्ने सामर्थ्य हुनाले नै एक्लो श्रीमद्भागवत-शास्त्र नै सर्वोपरि भएर गर्जन गरिरहेछ ॥२८॥

गवतस्य च ॥ माहात्म्यमूचिरे स्पष्टं नारदाय महात्मने ॥२३॥ कुमारा ऊचुः ॥ अथ ते संप्रवक्ष्यामि महिमा शुकशास्त्रजः ॥ यस्य श्रवणमात्रेण मुक्तिः करतले स्थिता ॥ २४ ॥ सदा सेव्या सदा सेव्या श्रीमद्भागवती कथा ॥ यस्याः श्रवणमात्रेण हरिश्चित्तं समाश्रयेत् ॥ २५ ॥ ग्रन्थोऽष्टादशसाहस्रो द्वादशस्कन्धसम्मितः ॥ परीक्षिच्छुकसंवादः शृणु भागवतं च तत् ॥ २६ ॥ तावत्संसारचक्रेऽस्मिन् भ्रमतेऽज्ञानतः पुमान् ॥ यावत्कर्णगता नास्ति शुकशास्त्रकथा क्षणम् ॥ २७ ॥ किं श्रुतैर्बहुभिः शास्त्रैः पुराणैश्च भ्रमावहैः ॥ एकं भागवतं शास्त्रं मुक्तिदानेन गर्जति ॥२८॥ कथा भागवतस्यापि नित्यं भवति यद्गृहे ॥ तद्गृहं तीर्थरूपं हि वसतां पापनाशनम् ॥ २९ ॥ अश्वमेधसहस्राणि वाजपेयशतानि च ॥ शुकशास्त्रकथायाश्च कलां नार्हन्ति षोडशीम् ॥ ३० ॥ तावत्पापानि देहेऽस्मिन्निवसन्ति तपोधनाः ॥ यावन्न श्रूयते सम्यक् श्रीमद्भागवतं नरैः ॥ ३१ ॥ न गङ्गा न गया काशी पुष्करं न प्रयागकम् ॥ शुकशास्त्रकथायाश्च फलेन समतां नयेत् ॥ ३२ ॥ श्लोकार्द्धं श्लोकपादं वा नित्यं भागवतोद्भवम् ॥ पठस्व स्वमुखेनैव यदीच्छसि परां गतिम् ॥ ३३ ॥ वेदादिर्वेदमाता च पौरुषं सूक्तमेव च ॥ त्रयी भागवतं चैव द्वादशाक्षर एव च ॥ ३४ ॥ द्वादशात्मा प्रयागश्च कालः संवत्सरात्मकः ॥ ब्राह्मणश्चाग्निहोत्रं च सुरभिर्द्वादशी तथा ॥ ३५ ॥ तुलसी च वसन्तश्च पुरुषोत्तम एव च ॥ एतेषां तत्त्वतः प्राज्ञैर्न पृथग्भाव इष्यते ॥ ३६ ॥ यश्च भागवतं शास्त्रं वाचयेदर्थतोऽनिशम् ॥ जन्मकोटिकृतं पापं नश्यते नात्र संशयः ॥ ३७ ॥ श्लोकार्धं श्लोकपादं वा

जुन घरमा दिनहुँ श्रीमद्भागवतको कथा भइरहन्छ, त्यो घर तीर्थ जस्तै पवित्र मानिन्छ र जो त्यस घरमा बस्तछन् तिनका पाप नष्ट हुन्छन् ॥२९॥ हजारौं अश्वमेध र सयकडौं वाजपेय यज्ञ श्री मद्भागवतका महत्वको सोह्रौं कलालाई पनि प्राप्त गर्न सक्तैनन् ॥३०॥ हे तपस्वीगण हो ! त्यस बेलासम्म मात्र मनुष्यका शरीरमा पाप टिक्छन्, जबसम्म श्रीमद्भागवत सुन्दैनो ॥३१॥ गङ्गा, गया, काशी, पुष्कर तथा प्रयाग यात्राको पुण्य पनि श्रीमद्भागवत श्रवणको पुण्यमा दाँजिन सक्तैन ॥३२॥ यसनिम्ति यदि तपाईंहरू सबभन्दा उत्तम गति प्राप्त गर्न खोज्नु हुन्छ भने श्रीमद्भागवतको आधा वा चौथाई श्लोक भए पनि नित्य आफ्नै मुखले पढ्ने गर्नु ॥३३॥ यो भागवत वेदको आदि, वेदकी माता, पुरुषसूक्त, ऋक्, यजुः र सामवेद तथा 'ॐ नमो भगवते वासुदेवाय' महामन्त्र हो ॥३४॥ यही द्वादशात्मक सूर्य, प्रयाग, संवत्सरात्मक काल, ब्राह्मण, अग्निहोत्र,कामधेनु र द्वादशी तिथि हो ॥३५॥ यही तुलसी,

बसन्त ऋतु र पुरुषोत्तम महीना हो । तत्वज्ञानी विद्वान्‌मा र भागवतमा कुनै फरक मान्दैनन् ॥३६॥ जो मानिस दिनहुँ अर्थसहित भागवत पढ्दछन् तिनका करोडौं जन्मका पाप नष्ट हुन्छन् ॥ ३७ ॥ जो प्राणी नित्य यसको आधा वा चौथाई श्लोक पनि पढ्दछन् तिनलाई राजसूय र अश्वमेध यज्ञको फल प्राप्त हुन्छ ॥३८॥ दिनहुँ भागवतको कथा भन्नु, भगवान्‌को स्मरण, तुलसीको आराधना र गाईको सेवा यी सबैको पुण्य समान छ ॥ ३९ ॥ अन्त्य समयसम्म जो मानिस श्रीमद्भागवतको कथा सुन्दछन्, त्यसलाई स्वयं नारायण ठूलो प्रेमले वैकुण्ठ-धाम प्रदान गर्दछन् ॥ ४० ॥ जुन मनुष्य सुवर्णको सिंहासनमा श्रीमद्भागवतको ग्रन्थ राखेर कुनै वैष्णव भक्तलाई दान दिन्छ, त्यो साक्षात् कृष्ण भगवान्‌को सायुज्य-मुक्ति पाउँछ । जुन मूर्खले जीवनमा एकपल्ट पनि श्रीमद्भागवतरूपी अमृत पान गरेको छैन त्यसले चाण्डाल र गधाके समान आफ्नो अमूल्य जीवन गुमायो र त्यो आफ्नो आमालाई कष्ट दिनको लागि नै संसारमा उत्पन्न भयो ॥४१-४२॥ स्वर्गका ब्रह्मादि देवता भन्दछन्—जुन पापीले कहिल्यै श्रीशुकदेवले भनेको श्रीमद्भागवतको

पठेद्भागवतं च यः ॥ नित्यं पुण्यमवाप्नोति राजसूयाश्वमेधयोः ॥३८॥ उक्तं भागवतं नित्यं कृतं च हरिचिन्तनम् ॥ तुलसीपोषणं चैव धेनूनां सेवनं समम् ॥ ३९ ॥ अन्तकाले तु येनैव श्रूयते शुकशास्त्रवाक् ॥ प्रीत्या तस्यैव वैकुण्ठं गोविन्दोऽपि प्रयच्छति ॥ ४० ॥ हेमसिंहयुतं चैतद्वैष्णवाय ददाति च ॥ कृष्णेन सह सायुज्यं स पुमाँल्लभते ध्रुवम् ॥ ४१ ॥ आजन्ममात्रमपि येन शठेन किञ्चिच्चित्तं विधाय शुकशास्त्रकथा न पीता ॥ चाण्डालवच्च खरवद्बत तेन नीतं मिथ्या स्वजन्म जननीजनिदुःखभाजा ॥४२॥ जीवच्छवो निगदितः स तु पापकर्मा येन श्रुतं शुककथावचनं न किञ्चित् ॥ धिक् तं नरं पशुसमं भुवि भाररूपमेवं वदन्ति दिवि देवसमाजमुख्याः ॥ ४३ ॥ दुर्लभैव कथा लोके श्रीमद्भागवतोद्भवा ॥ कोटिजन्मसमुत्थेन पुण्येनैव तु लभ्यते ॥ ४४ ॥ तेन योगनिधे धीमन् श्रोतव्या सा प्रयत्नतः ॥ दिनानां नियमो नास्ति सर्वदा श्रवणं मतम् ॥ ४५ ॥ सत्येन ब्रह्मचर्येण सर्वदा श्रवणं मतम् ॥ अशक्यत्वात्कलौ बोध्यो विशेषोऽत्र शुकाज्ञया ॥ ४६ ॥ मनोवृत्तिजयश्चैव नियमाचरणं तथा ॥ दीक्षां कर्तुं च शक्यत्वात्सप्ताहश्रवणं मतम् ॥ ४७ ॥ श्रद्धातः श्रवणे नित्यं माघे तावद्धि यत्फलम् ॥ तत्फलं शुकदेवेन सप्ताहश्रवणे कृतम् ॥ ४८ ॥ मनसश्चाजयाद्रोगात्पुंसां

कथा सुनेन त्यो जीवित भए पनि मृतकके समान छ । त्यस्ता पुरुषलाई अनेक धिक्कार छ त्यो पृथ्वीको भारी बनेर आफ्नो जीवन व्यतीत गर्दछ ॥४३॥ त्यसो त श्रीमद्भागवतको कथा दुर्लभ नै छ । जब करोडौं जन्मका उपार्जित पुण्य एकत्र हुन्छन्, तब त्यो कथा सुन्ने मौका पाइन्छ ॥४४॥ अतः हे योगनिधे ! हे धीमन् ! प्रयत्न गरेर पनि यो कथा सुन्नुपर्दछ । यसको श्रवणमा दिनहरूको कुनै नियम छैन । मनु य जतिले पनि त्यो कथा सुन्न सक्तछ ॥४५॥ सत्य र ब्रह्मचर्यव्रत पालनगरेर नै त्यो कथा सुन्नुपर्दछ, सत्य र ब्रह्मचर्य व्रत पालन गर्न आफ्नमा क्षमताको अभाव छ भने शुकदेवले त्यसको विशेष व्यवस्था भन्नुभएको छ । केवल सात दिनको निम्ति मनका वृत्तिहरू रोक्नु, यसका सबै नियमहरूको पालन गर्दै दीक्षा ग्रहण गर्नु आवश्यक छ, त्यसैले सप्ताह-श्रवणको विधान कहिएको छ । पूरा माघ महीना भरि श्रीमद्भागवत सुन्नाले जुन फल पाइन्छ, त्यही फल सप्ताह सुन्नाले पनि मिल्दछ यस्तो शुकदेवले भन्नुभएको छ ॥४६-४७॥ चंचल मनलाई जित्नु असम्भव ठानेर प्राणीहरूको अनेक थरिका रोगले आक्रान्त हुने तथा नित्य आयु क्षीण भइरहने कारणले एवं कलिका अगणित

दोषहरू देखेर नै सप्ताह सुन्नु भनेका छन् ॥४९॥ जुन फल तपस्या, योग तथा सामाधिले पनि पाउन सकिन्न, त्यो फल केवल सप्ताह सुन्नाले नै अनायास प्राप्त हुन्छ ॥५०॥ सप्ताह-यज्ञले बलियो बनेर सिंह झैं गर्जन थाल्दछ, सप्ताह व्रतले गर्जन्छ र सप्ताह समस्त तीर्थहरूमा गर्जन्छ ॥५१॥ सप्ताह योगले गर्जन्छ, यो ज्ञान र ध्यानले पनि गर्जन्छ । अब म कतिसम्म भनौं, संसारका सबै सुकर्महरू भन्दा श्रेष्ठ भएर सप्ताह गर्जिरहन्छ ॥५२॥ यति कथा सुनेर शौनकले सूतजीलाई भने–हे महाबाहो ! हजुरले यो अद्भुत कथा सुनाउनु भयो । यो सप्ताह ज्ञान-ध्यानादि धर्महरूलाई पनि हुत्याएर सर्वोपरि भएर बसेको छ ? उसो भए कल्याणहरूको भण्डार र योगीहरूको पनि बाटो देखाउने यो भागवत हामीलाई अवश्य सुनाउनोस् ॥५३॥ सूतजी भन्दछन्—हे शौनक ! जब श्री कृष्ण यो पृथ्वीलाई त्यागेर आफ्नू गोलोक जानलाग्नु भयो तब एघारौं स्कन्धमा प्रतिपादित ज्ञान सुनेर उद्धवले श्रीकृष्णसित भने ॥५४॥

चैवायुषः क्षयात् ॥ कलेर्दोषबहुत्वाच्च सप्ताहश्रवणं मतम् ॥ ४९ ॥ यत्फलं नास्ति तपसा न योगेन समाधिना ॥ अनायासेन तत्सर्वं सप्ताहश्रवणे लभेत् ॥ ५० ॥ यज्ञाद्गर्जति सप्ताहः सप्ताहो गर्जति व्रतात् ॥ तपसो गर्जति प्रोच्चैस्तीर्थान्नित्यं हि गर्जति ॥ ५१ ॥ योगाद्गर्जति सप्ताहो ध्यानाज्ज्ञानाच्च गर्जति ॥ किं ब्रूमो गर्जनं तस्य रे रे गर्जति गर्जति ॥ ५२ ॥ शौनक उवाच ॥ साश्चर्यमेतत्कथितं कथानकं ज्ञानादिधर्मान्वि-गणय्य सांप्रतम् ॥ निःश्रेयसे भागवतं पुराणं जातं कुतो योग विदादिसूचकम् ॥ ५३ ॥ सूत उवाच ॥ यदा कृष्णो धरां त्यक्त्वा स्वपदं गन्तु-मुद्यतः ॥ एकादशं परिश्रुत्वाऽप्युद्धवो वाक्यमब्रवीत् ॥ ५४ ॥ उद्धव उवाच ॥ त्वं तु यास्यसि गोविन्द भक्तकार्यं विधाय च ॥ मच्चित्ते महती चिन्ता तां श्रुत्वा सुखमावह ॥ ५५ ॥ आगतोऽयं कलिर्घोरो भविष्यन्ति पुनः खलाः ॥ तत्सङ्गेनैव सन्तोऽपि गमिष्यन्त्युग्रतां यदा ॥ ५६ ॥ तदा भारवती भूमिर्गोरूपेयं कमाश्रयेत् ॥ अन्यो न दृश्यते त्राता त्वत्तः कमललोचन ॥ ५७ ॥ अतः सत्सु दयां कृत्वा भक्तवत्सल मा व्रज ॥ भक्तार्थं सगुणो जातो निराकारोऽपि चिन्मयः ॥ ५८ ॥ त्वद्वियोगेन ते भक्ताः कथं स्थास्यन्ति भूतले ॥ निर्गुणोपासने कष्टमतः किञ्चिद्विचारय ॥ ५९ ॥ इत्युद्धववचः

हे गोविन्द ! हजुर त भक्तहरूको इच्छा पूर्ण गरेर गोलोक जानु हुँदैछ, तर मेरो मनमा यौटा चिन्ता पसिरहेछ, त्यो सुनेर हजुर प्रसन्न हुनुहोस ॥ ५५ ॥ त्यो शङ्का यो हो कि अब कलियुग आउने छ, त्यसमा दुष्टहरु बढ्ने छन् । तिनको संगतले* जब सज्जन पनि दुर्जन हुनेछन् ॥ ५६ ॥ तब असह्य भारले थिचिएर गोरूपा पृथ्वी कसको शरणमा जानेछन् हे कमल-लोचन ! हजुरबाहेक यिनको रक्षा गर्ने अरु कोही पनि देखिन्न ॥ ५७ ॥ अतः सज्जनहरूमा दया गरेर हजुर नजानोस् । हे भक्तवत्सल ! हजुर चिन्मय र निराकार भएर पनि साकार बनेर पाल्नुभएको छ ॥ ५८ ॥ हजुरको वियोग जनित कष्ट सहन गर्दै हजुरका भक्त यस संसारमा कसरी रहलान् ? ती बिचरा हजुरको यो सगुण स्वरूपलाई

* उदाहरण ( दुष्टको संगति कष्टकारक हुन्छ )—उज्जयिनी नगरीको नजीकै यौटा पाकरीको वृक्ष थियो । त्यहाँ यौटा हंस र कौवा बस्तथे । एकपल्ट गर्मीको मौसमा थाकेको बटुवा आफ्नो धनुष सिरानमा राखेर त्यहीं सुस्ताउनि निदायो । पछि छिनपछि त्यसको शरीरबाट घाम हट्दै गयो । त्यो निदाएको पथिकलाई घामले पोलेको देखेर हंसलाई दया लाग्यो । त्यसले आफ्ना दुवै पखेटा फैलाएर पथिकलाई छाया गरिदियो । मस्तसँग निदाएपछि त्यसको मुख खुल्यो । त्यसै बेला दुष्ट कागले पथिकको मुखमा बिष्टा गरिदियो र त्यहाँबाट उड्यो । अनि त्यो पथिक सलंग भएर उठ्यो र माथितिर हेर्दा त हंसलाई पखेटा फिंजाएर बसेको देख्यो । अनि उसले ठान्यो—यो बसेको बदमासी हो । तुरुन्त धनुषमा बाण राखेर हान्यो, त्यो बाण लागेर हंस तत्काल पंचत्वमा प्राप्त भयो । यसैले नीतिमा भनेको छ—'न स्थातव्यं न गन्तव्यं दुर्जनेन समं क्वचित् ।'

त्यागेर निर्गुण स्वरूपको आराधना गर्न कष्ट अनुभव गर्नछन्, हजुर यस कुरामा विचार गर्नोस् ॥५९॥ उद्धवका कुरा सुनेर प्रभास क्षेत्रमा बसेका भगवान विचार्न लागे आफ्ना भक्तहरूको सहायतार्थ म के गरूँ ? ॥६०॥ यति विचारेर प्रभुले आफ्नो समस्त तेज श्रीमद्भागवतमा स्थापित गरिदिए र ग्रन्थस्वरूपमा श्रीमद्भागवतरूपी महासमुद्रमा प्रविष्ट भए ॥६१॥ यसैले भागवत साक्षात् भगवानको प्रत्यक्ष विद्यमान वाङ्मयी मूर्ति मानिन्छ । यसको सेवा, श्रवण, यसको पाठ र यसको वर्णन दर्शन सबै पापहरू नष्ट गरिदिन्छ ॥६२॥ अतः कलियुगमा योग-यज्ञादि र अन्यान्य साधनहरूलाई अलग गरेर सप्ताह-श्रवणलाई नै प्रधानता दिइएको छ र यस युगमा यही सर्वश्रेष्ठ धर्म मानिएको छ ॥६३॥ दुःख दरिद्रता, दुर्भाग्य तथा पापहरू पखाल्न र काम-क्रोधलाई जित्न कलियुगमा यौटा यही धर्म कहिएको छ ॥६४॥ भगवानको वैष्णवी मायालाई त देवताहरू पनि त्याग्न सक्दैनन्, भने संसारका पामर व्यक्तिहरू

श्रुत्वा प्रभासेऽचिन्तयद्धरिः ॥ भक्तावलम्बनार्थाय किं विधेयं मयेति च ॥६०॥ स्वकीयं यद्भवेत्तेजस्तच्च भागवतेऽदधात् ॥ तिरोधाय प्रविष्टोऽयं श्रीमद्भागवतार्णवम् ॥ ६१ ॥ तेनेयं वाङ्मयी मूर्तिः प्रत्यक्षा वर्तते हरेः ॥ सेवनाच्छ्रवणात्पाठाद्दर्शनात्पापनाशिनी ॥ ६२ ॥ सप्ताहश्रवणं तेन सर्वेभ्योऽप्यधिकं कृतम् ॥ साधनानि तिरस्कृत्य कलौ धर्मोऽयमीरितः ॥ ६३ ॥ दुःखदारिद्र्यदौर्भाग्यपापप्रक्षालनाय च ॥ कामक्रोधजयार्थं हि कलौ धर्मोऽयमीरितः ॥ ६४ ॥ अन्यथा वैष्णवी माया देवैरपि सुदुस्त्यजा ॥ कथं त्याज्या भवेत्पुम्भिः सप्ताहोऽतः प्रकीर्तितः ॥ ६५ ॥ सूत उवाच ॥ एवं नगाहश्रवणोरुधर्मे प्रकाश्यमाने ऋषिभिः सभायाम् ॥ आश्चर्यमेकं समभूत्तदानीं तदुच्यते संशृणु शौनक त्वम् ॥ ६६ ॥ भक्तिः सुतौ तौ तरुणौ गृहीत्वा प्रेमैकरूपा सहसाविरासीत् ॥ श्रीकृष्ण गोविन्द हरे मुरारे नाथेति नामानि मुहुर्वदन्ती ॥ ६७ ॥ तां चागतां भागवतार्थभूषां सुचारुवेषां ददृशुः

यसबाट मुक्तिपाउन पाउन सक्छन् ? यही विचार गरेर सप्ताह श्रवणको विधान कहिएको छ ॥६५॥ सूतजी भन्दछन्–यसरी ऋषिहरूको त्यो ठूलो सभामा जब शुकदेवजीले भनेको सप्ताह-श्रवणरूपी धर्मको प्रतिपादन गरियो, त्यसै बखत यौटा छक्क पर्ने घटना घट्यो, त्यो तिमी ध्यान दिएर सुन, म भन्दछु ॥६६॥ सप्ताह-यज्ञ समाप्त हुनासाथ त्यो प्रेमरूपिणी भक्ति तरुणावस्था प्राप्त आफ्ना दुवै छोरा ज्ञान र वैराग्यलाई लिएर श्रीकृष्ण, गोविन्द, हरे, मुरारे, हे नाथ आदि नामहरूको बारम्बार उच्चारण गर्दै त्यहीं आइपुगिन् ।

---

* उदाहरण—( माया निकै सशिलसन्नु छ ) एक दिन नारदले विष्णु भगवानलाई भने—'हजुर आफ्नो मायालाई ठूलो भनेर वर्णन गर्नुहुन्छ, तर मलाई त लाग्दैन कि माया जितेको मनुष्यहरूलाई नै अज्ञानत सक्छ र तिनैको निमित्त दुस्तर पनि होली । तर म बताओ निमित्त त हजुरको माया तुच्छ नै छ । म हजुरको मायालाई तुच्छ ठान्दछु, किनकि म पूर्ण सन्यासी र नैष्ठिक हुँ । यस निमित्त अब कहिल्यै मेरो अगाडि आफ्नो मायाको गुण गान नगर्नु होला ।' भगवान् त्यस बखत केही बोलेनन । केही समयपछि नारदलाई साथै लिएर हल्न निस्के । बाटोमा भगवानले भने—'मलाई तिर्खा लाग्यो, कतैबाट पानी ल्याऊ ।' नारद पानी ल्याउन भनेर हिंडे, सामुन्ने यौटा नदी देखियो । नदी किनारमा यौटी षोडशी सुन्दरी बसेकी थिई । त्यसको रूप देख्नासाथ नारदले भगवान् र भगवानलाई पानी लिएर जानुपर्ने कुरा बिर्सिए र त्यही नारीको दासता स्वीकार गरेर मुनिले त्योसित विवाह गरे । विवाह भएपछि दुई-तीन सन्तान पनि भए । दुर्भाग्यले त्यस देशमा अकाल पर्‍यो, अतः तो आफ्ना परिवार सहित परदेश गए । बाटोमा यौटा पुल ( साँघु ) तर्न लाग्दा पुल भाँचियो र नारद बाहेक तिनको सबै परिवार नदीमा डुबेर मरे । स्त्री र पुत्रादिको वियोगमा दुःखी भएर नारद रुन लागे । त्यसै बेला भगवान, तुरुन्तै त्यहीं आइपुग्नुभयो र नारदलाई हात समातेर भन्नुभयो—'पानी, तिमी पानी ल्याइनौ । हिंड अब घर जाऊँ ।' नारद निकै आत्तिए र भने—'हे नाथ ! क्षमा हो, हजुरको माया बडो दुस्तर रहेछ ।'

॥६७॥ राम्रो रूप धारण गरी भागवतका अर्थहरूको भूषणस्वरूपा भक्तिलाई त्यहाँका सदस्यहरूले देखे । तिनलाई देखेर सबै छक परे—यी कसरी हामीहरूका माझमा आइपुगिन् ? ॥६८॥ सनकादि मुनिहरूले भने—'श्रीमद्भागवतको कथा सुनाले नै यी तीनैजनालाई चेत आयो ।' सनकादि कुमारहरूको उक्ति सुनेर आफ्ना छोराहरू समेत आफ्नो भक्तिले नम्र भएर भनिन्— ॥६९॥ यद्यपि यो कलिकालले मलाई नष्ट गरिसकेको थियो, तापनि हजुरको कथा-रसले हामीलाई परिपुष्ट पार्दिदियो । अब तपाईंहरू यो भन्नु हवस् कि म कहाँ बसौं ? यो कुरा सुनेर सनकादिले भने ॥७०॥ भगवान्‌को प्रत्यक्ष मूर्ति र एकमात्र प्रभु-प्रेम धारण गरेर भव-रोग हरण गर्ने हे भक्ति ! तिमी धैर्य धारण गर्ने भगवद्भक्तहरूको हृदयमा सदानिवास गर ॥७१॥ यस्तो गर्नाले कलिका दोषले तिमीलाई दुःख दिन सक्तैनन् । सनकादिको आज्ञा पाउनासाथ भगवत्-प्रिया भक्ति भक्तहरूको पवित्र हृदयमा गएर बसिन् ॥७२॥ समस्त संसारका

सदस्याः ॥ कथं प्रविष्टा कथमागतेयं मध्ये मुनीनामिति तर्कयन्तः ॥६८॥ ऊचुः कुमारा वचनं तदानीं कथार्पतो निष्पतिताऽधुनेयम् ॥ एवं गिरः सा ससुता निशम्य सनत्कुमारं निजगाद नम्रा ॥ ६९ ॥ भक्तिरुवाच ॥ भवद्भिरद्यैव कृताऽस्मि पुष्टा कलिप्रणष्टाऽपि कथारसेन ॥ काहं तु तिष्ठाम्यधुना ब्रुवन्तु ब्राह्मया इदं तां गिरमूचिरे ते ॥ ७० ॥ भक्तेषु गोविन्दस्वरूपकर्त्री प्रेमैकधर्त्री भवरोगहन्त्री ॥ सा त्वं च तिष्ठस्व सुधैर्यसंश्रया निरन्तरं वैष्णव-मानसानि ॥ ७१ ॥ ततोऽपि दोषाः कलिजा इमे त्वां द्रष्टुं न शक्ताः प्रभवोऽपि लोके ॥ एवं तदाज्ञावसरेऽपि भक्तिस्तदा निषण्णा हरिदासचित्ते ॥७२॥ सकलभुवनमध्ये निर्धनास्तेऽपि धन्या निवसति हृदि येषां श्रीहरेर्भक्तिरेषा ॥ हरिरपि निजलोकं सर्वथातो विहाय प्रविशति हृदि तेषां भक्ति-सूत्रोपनद्धः ॥ ७३ ॥ ब्रूमोऽद्य ते किमधिकं महिमानमेवं ब्रह्मात्मकस्य भुवि भागवताभिधस्य ॥ यत्संश्रयान्निगदिते लभते सुवक्ता श्रोताऽपि कृष्ण-समतामलमन्यधर्मैः ॥ ७४ ॥ इति श्रीपद्मपुराणे उत्तरखण्डे श्रीमद्भागवतमाहात्म्ये भक्तिकष्टनिवर्तनं नाम तृतीयोऽध्यायः ॥ ३ ॥

सूत उवाच ॥ अथ वैष्णवचित्तेषु दृष्ट्वा भक्तिमलौकिकीम् ॥ निजलोकं परित्यज्य भगवान् भक्तवत्सलः ॥ १ ॥ वनमाली घनश्यामः पीतवासा मनोहरः ॥ काञ्चीकलापरुचिरोल्लसन्मुकुटकुण्डलः ॥२॥ त्रिभङ्गललितश्चारुकौस्तुभेन विराजितः ॥ कोटिमन्मथलावण्यो हरिचंदनचर्चितः ॥३॥ परमा-

नी भए पनि धन्य हुन्, जसको हृदयमा नारायणको भक्ति विराजमान रहन्छ, किनकि भगवान् पनि आफ्ना भक्तहरूको प्रेमरूपी डोरीमा बाँधिन्छन् र गोलोक त्यागेर तिनको हृदयमा आएर बस्तछन् ॥७३॥ यस परब्रह्मस्वरूप श्रीमद्भागवतको महिमा म कहाँसम्म भनौं ! यस दिव्यकथा भन्ने वक्ता र श्रोता दुवैथरि श्रीकृष्णचन्द्रकै समान दिव्यरूप हुन्छन् । यसको सामुन्ने अन्य सबै धर्म तुच्छ छन् ॥७४॥ श्रीपद्मपुराण उत्तरखण्डको श्रीमद्भागवत माहात्म्यको भाषा-टीका तृतीयोऽध्यायः ॥३॥

सूतजी भन्दछन्—आफ्ना भक्तहरूको हृदयमा अलौकिक भक्ति देखेर आफ्नो लोक त्यागी ती वनमाली, घनश्याम, पीताम्बरधारी भगवान् मनोहर वेषमा सुसज्जित भई कम्मरमा क्षुद्र-

उदाहरण—( कलियुगको एक घुर्देल ) महात्मा कबीर आफ्ना चेलाहरूसित बस्ने गर्दथे—'दिनहु रिहने कलियुग आएर सोधिन थाल्यो—'आज तैं के गर्दछस् ?' म उत्तर दिन्छु—'मुर्दा खान्छु ।' फेरि सोध्छ के लगाउँछस् ?' म उत्तर दिन्छु—'कुर्ताको लुगा ।' फेरि सोध्छ—'कहाँ बस्छस ?' म भन्दछु—'श्मशानमा !' मेरा यस्ता उत्तरहरू सुनेर कलियुग मलाई अभागी भनेर फर्कन्छ, किनकि म तो सबै वस्तुसित अनिच्छा प्रकट गर्दछु, जसमा त्यो प्राणिहरूलाई अहंकार र मनुष्यलाई राजस बनाउँछ। यस्तै समाधि त्यसको प्रभाव पर्दैन ।

पण्टिका बाँधेर, राम्रो मुकुट र कुण्डल धारण गरी, मनोहर कौस्तुभले सुशोभित भई, करोडौं कामदेवहरूको शोभलाई परास्त गर्दै, सम्पूर्ण शरीरमा श्रीखण्ड-चन्दन लगाई, परमानन्द चिन्मूर्ति, मुरलीधर श्रीकृष्ण पनि भक्तहरूको निर्मल हृदयहरूमा आएर विराजमान भए ॥१-४॥ वैकुण्ठ धाममा निवास गर्ने उद्धव आदि भक्तपनि प्रच्छन्न रूपमा भागवतको दिव्य कथा सुनको निम्ति त्यहाँ उपस्थित भए ॥५॥ त्यस वेला बारम्बार चारैतिरबाट भक्तिरसलाई पुष्ट पार्ने गम्भीर ध्वनि सुनिइ रहेथ्यो । आकाशबाट कुङ्कुम र फूलहरूको वर्षा भइरहेको थियो । शङ्ख र भेरीको शब्द सुनिइ रहेथ्यो ॥६॥ त्यस सभामा बसेका सबै जनाले आफ्नो देह र गेहको सुद्धि बिर्सिसकेका थिए । त्यस्तो तन्मयावस्था देखेर नारदजी भन्नलागे–॥७॥ हे मुनिवर हो ! आज मैले यो सप्ताह महायज्ञको महिमा देखें । जो मूढ तथा शठ प्राणी थिए, तीर अरु कहाँसम्म भनौं–यहाँका पशु-पक्षी पनि मलाई परम पवित्र देखिमलागेका छन् ॥८॥

नंदचिन्मूर्तिर्मधुरो मुरलीधरः ॥ आविवेश स्वभक्तानां हृदयान्यमलानि च ॥ ४ ॥ वैकुण्ठवासिनो ये च वैष्णवा उद्धवादयः ॥ तत्कथाश्रवणार्थं ते गूढ़रूपेण संस्थिताः ॥ ५ ॥ तदा जयजयारावो रसपुष्टिरलौकिकी ॥ चूर्णप्रसूनवृष्टिश्च मुहुः शङ्खरवोऽप्यभूत् ॥ ६ ॥ तत्सभासंस्थितानां च देहगेहात्मविस्मृतिः ॥ दृष्ट्वा च तन्मयावस्थां नारदो वाक्यमब्रवीत् ॥ ७ ॥ अलौकिकोऽयं महिमा मुनिश्वराः सप्ताहजन्योऽद्य विलोकितो मया ॥ मूढाः शठा ये पशुपक्षिणोऽत्र सर्वेऽपि निष्पापतमा भवन्ति ॥८॥ अतो नृलोके ननु नास्ति किञ्चिच्चित्तस्य शोधाय कलौ पवित्रम् ॥ अघौघविध्वंसकरं तथैव कथासमानं भुवि नास्ति चान्यत् ॥६॥ के के विशुद्ध्यन्ति वदन्तु मह्यं सप्ताहयज्ञेन कथामयेन ॥ कृपालुभिर्लोकहितं विचार्य प्रकाशितः कोऽपि नवीनमार्गः ॥१०॥ कुमारा ऊचुः ॥ ये मानवाः पापकृतस्तु सर्वदा सदा दुराचाररता विमार्गगाः ॥ क्रोधाग्निदग्धाः कुटिलाश्च कामिनः सप्ताहयज्ञेन कलौ पुनन्ति ते॥११॥ सत्येन हीनाः पितृमातृदूषकास्तृष्णाकुलाश्चाश्रमधर्मवर्जिताः ॥ ये दाम्भिका मत्सरिणोऽपि हिंसकाः सप्ताहयज्ञेन कलौ पुनन्ति ते ॥१२॥ पञ्चोग्रतापञ्छलछद्मकारिणः क्रूराः पिशाचा इव निर्दयाश्च ये ॥ ब्रह्मस्वपुष्टा व्यभिचारकारिणः सप्ताहयज्ञेन कलौ पुनन्ति ते ॥ १३ ॥ कायेन वाचा मनसापि

अतः मनः शुद्धिका लागि कलियुगमा यो भन्दा पवित्र अरु कुनै पनि कार्य छैन । पापहरूलाई नष्ट पार्नका निम्ति यो कथा समान अन्य कुनै कथा छैन ॥९॥ अब यहाँहरू कृपा गरेर मलाई यो भन्नुहवस् कि यस कथामय सप्ताह-यज्ञमा कुन-कुन प्राणी शुद्ध हुन्छन् ? यहाँहरू कृपालु हुनुहुन्छ, अतएव लोकोपकारको भावना हृदयमा राखेर तपाईं महात्माहरूले अरु कुनै नयाँ बाटो पनि निर्धारित गर्नुभएको छ ? ॥१०॥ सनकादि मुनिहरूले भने—पापी दुराचारी, कुमार्गगामी* टर्रोरिसाहा, कुटिल र कामी मनुष्य पनि सप्ताह यज्ञले पवित्र हुन्छन् ॥११॥ मिथ्या भाषी, पितामातालाई दुःख दिने, लोभी, धर्मबाट विमुख, पाखण्डी, र हिंसक जीव पनि यस यज्ञले पवित्र हुन्छन् ॥१२॥ जुन कपटी-संसारलाई देखाउनको पंचाग्नि तापछन्,

* उदाहरण ( टर्रो रिसाहा ) कुनै रिसाहा मालिक कहाँ बोटा नोकर थियो । मालिकको व्यर्थ रिस जब सहन सकेन, तब एक दिन उसले आफ्नो मालिकलाई भन्यो—'मालिक ! मेरो हिसाब गरिदिनुहोस् !' मालिकले सोध्यो—'होइन' किन मेरो नोकरी किन छाडिरहेका छौ ?' नोकरले उत्तर दियो—'सत्य कुरो यो हो मालिक ! हजुरको रिस अब म सहन सक्दिन ।' मालिकले भन्यो—'यो त साधारण कुरा हो । मेरो रिस त एक छिनमै हराएर जान्छ !' नोकरले भन्यो—'त्यो त सत्य हो, तर त्यो जति छिटो हराउँछ, उत्तिनै छिटो फेरि आइपुग्छ ।

विशाल झैं निर्दयी प्राणी, ब्राह्मणहरूको धन खाइदिने लोभी, पापी र व्यभिचारी पनि यस सप्ताह-यज्ञले पवित्र हुन्छन् ॥१३॥ जुन मूर्ख शरीर, मन र वचन द्वारा दिनहुँ पाप मात्र गरिरहन्छन्, यस्ता अर्काको धनले निर्वाह गर्ने र मनमा अनेक थरिका दूषित भावनाहरू धारण गर्ने अधम व्यक्ति पनि यस सप्ताह-यज्ञले पवित्र हुन्छन् ॥ १४ ॥ यस विषयमा म तिमीलाई यौटा प्राचीन इतिहास सुनाउँछु, जुन सुन्नाले नै प्राणिहरूका पाप नष्ट हुन्छन् ॥१५॥ तुङ्गभद्रा नदीको तटमा यौटा उत्तम नगर थियो, त्यहाँ बस्ने सबै प्राणी वर्णाश्रम धर्मको पालन गर्ने र सदाचारी थिए ॥१६॥ वेदहरूका ज्ञाता, श्रौत-स्मार्त कर्ममा निपुण, अर्को सूर्यजस्तै तेजस्वी आत्मदेव नामका यौटा ब्राह्मण पनि त्यसै नगरमा निवास गर्दथे ॥१७॥ ती विचरा भिक्षावृत्तिले जीविका चलाउँथे। तिनकी पत्नीको नाम धुन्धुली थियो। ती राम्रो कुलमा उत्पन्न, निकै राम्री तर बर्ता हठी एवं सबै प्रकारले आफ्नो

पातकं नित्यं प्रकुर्वन्ति शठा हठेन ये ॥ परस्वपुष्टा मलिनाः दुराशयाः सप्ताहयज्ञेन कलौ पुनंति ते ॥१४॥ अत्र ते कीर्तयिष्यामि इतिहासं पुरातनम् ॥ यस्य श्रवणमात्रेण पापहानिः प्रजायते ॥ १५ ॥ तुंगभद्रातटे पूर्वमभूत्पत्तनमुत्तमम् ॥ यत्र वर्णाः स्वधर्मेण सत्यसत्कर्मतत्पराः ॥ १६ ॥ आत्मदेवः पुरे तस्मिन्सर्ववेदविशारदः ॥ श्रौतस्मार्तेषु निष्णातो द्वितीय इव भास्करः ॥ १७ ॥ भिक्षुको वित्तवाँल्लोके तत्प्रिया धुंधुली स्मृता ॥ स्ववाक्यस्थापिका नित्यं सुन्दरी सुकुलोद्भवा ॥ १८ ॥ लोकवार्तारता क्रूरा प्रायशो बहुजल्पिका ॥ शूरा च गृहकृत्येषु कृपणा कलहप्रिया ॥ १९ ॥ एवं निवसतोः प्रेम्णा दंपत्यो रममाणयोः ॥ अर्थाः कामास्तयो राजन्न सुखाय गृहादिकम् ॥ २० ॥ पश्चाद्धर्माः समारब्धास्ताभ्यां संतानहेतवे ॥ गोभूहिरण्यवासांसि दीनेभ्यो यच्छतः सदा ॥ २१ ॥ धनार्धं धर्ममार्गेण ताभ्यां नीतं तथापि च ॥ न पुत्रो नापि वा पुत्री ततश्चिन्तातुरो भृशम् ॥ २२ ॥ एकदा स द्विजो दुःखाद् गृहं त्यक्त्वा वनं गतः ॥ मध्याह्ने तृषितो जातस्तडागं समुपेयिवान् ॥ २३ ॥ पीत्वा जलं निषण्णस्तु प्रजादुःखेन कर्शितः ॥

कुरा राख्न खोज्ने थिइन् ॥१८॥ ती सदैव व्यर्थका संसारी विवादमा लागिरहने कर्कशा नारी थिइन्। तिनलाई बर्ता कुरा गर्नुपर्दथ्यो र घर-गृहस्थीको संचालन पनि राम्ररी गर्दथिन्। तापनि लडाई-झगडा तिनलाई बर्ता मनपर्दथ्यो ॥१९॥ धेरै कालसम्म ती दुवै प्रेमपूर्वक जीवन-यापन गर्दै रहे। तिनीसित अति धन थियो र तिनका अति कामनाहरू थिए, ती उन-लाई सुख नदिएर दुःख नै दिइरहेका थिए ती सन्तान-हीन थिए ॥२०॥ केही दिनपछि तिनले धर्म-कर्म गर्न आरम्भ गरे। अब पृथ्वी, गाई र सुन र वस्त्र दरिद्रलाई दिन थाले ॥२१॥ यसरी तिनले घरको आधा अति सम्पत्ति बाँडिसके। तैपनि धेरै दिनसम्म तिनको न कुनै छोरो भयो, न कुनै छोरी नै जन्मिई। त्यसले तिनलाई बर्ता चिन्ता हुन लाग्यो ॥२२॥ अन्त्यमा

○ उदाहरण—( लोभको सर्वनाश ) यौटा सेठसित प्रशस्त धन थियो, तर उसको लोभको कुनै सीमा थिएन। 'म समान धनी संसारमा अरू कोही नहोऊन्' भन्ने उसको सदैव इच्छा रहन्थ्यो। एक दिन यौटा योगी सेठको घर आइपुगे। तिनलाई चाकरी गरेर सेठले प्रसन्न तुल्यायो, अनि योगीले कुनै वरदान माग्न भने। सेठले भन्यो—'तिमी जे छोए, पनि सुन होओस्।' योगीले भने—'जाऊ, त्यसै हुनेछ।' मोतिपल्ट सेठले दतिवन छोयो, त्यो सुनको भयो। तर सेठले त्यो दतिवन चपाउन सकेन। नदीमा स्नान गर्न गयो र जल छुनासाथ सुन भयो। त्यसैले [illegible] पर्‍यो। पर आएर [illegible] छुनासाथ भोजन सामग्री सबै सुन भयो। अतः भोकै बस्नु पर्‍यो। बालकलाई लिएर खेलाउन लागेको त त्यो पनि सुनको भयो। अब ती कराई-कराई रुन थाले। त्यसै बखत उनै योगी आइपुगे र सोधे—'तिमी किन रोइरहेछौ?' सेठले उत्तर दियो—'मलाई यो वरदान चाहिएन। कृपया मेरो उद्धार गर्नुहोस्।' अनि योगीले त्यो वरदान फिर्ता लिए, अनि बल्ल सेठको संकट निवारण भयो।

ती आत्मदेव दुःखी भएर वनमा गए । मध्याह्नको बेला भइसकेको हुनाले तिर्खा लागेर पानी पिउन ती यताउता सरोवरमा पुगे ॥ २३ ॥ पानी पिएर ती सन्तानको अभाव-जनित कष्टको विचार गर्दै यताउता हुलो डुल्नाल बसे । एक्कैछिनपछि यताउता संन्यासी डुल्दै त्यहीं आइपुगे ॥२४॥ संन्यासी जब पानी पिएर यताउता स्थानमा बसे तब ब्राह्मण आत्मदेव बिस्तार उठेर तिनको नजीक गए र तिनका चरण-स्पर्श गरेर रुँदै साम्हुन्ने बसे ॥२५॥ * दयालु संन्यासीले सोधे–हे प्रियदेव ! तिमी किन रोइरहेका छौ ? तिमीलाई कुन चिन्ताले दुःख दिइरहेको छ ? तिमी तत्काल आफ्नो कष्टको कारण मलाई सुनाऊ ॥२६॥ आत्मदेवले भने—के भनौं भगवन् । यो आफ्नो पूर्वजन्मका पापहरूको फल हो । मेरा पितृहरू तातो सास फेरेर नाना आँसुको जल पिउँदछन् ॥२७॥ देवता र ब्राह्मण मैले दिएका दानहरू प्रेमपूर्वक ग्रहण गर्दैनन् । हे महाराज ! म सन्तानको अभावजनित दुःखको विचार गरेर संसारबाट उदासीन भएको छु र प्राण त्यागनको निम्ति यहाँ आएको हुँ ॥२८॥ किनकि सन्तानहीन भएर बाँच्नु व्यर्थ छ । सन्तानहीन मनुष्यलाई र सन्तानहीन कुललाई पनि अनेकौं धिक्कार छ ॥ २९ ॥

मुहूर्तादपि तत्रैव संन्यासी कश्चिदागतः ॥ २४ ॥ दृष्ट्वा पीतजलं तं तु विप्रो यातस्तदंतिकम् ॥ नत्वा च पादयोस्तस्य निःश्वसन्संस्थितः पुरः ॥२५॥ यतिरुवाच ॥ कथं रोदिषि विप्र त्वं का ते चिन्ता बलीयसी ॥ वद त्वं सत्वरं मह्यं स्वस्य दुःखस्य कारणम् ॥२६॥ ब्राह्मण उवाच ॥ किं ब्रवीमि ऋषे दुःखं पूर्वपापेन संचितम् ॥ मदीयाः पूर्वजास्तोयं कवोष्णमुपभुंजते ॥ २७ ॥ मद्दत्तं नैव गृह्णन्ति प्रीत्या देवा द्विजातयः ॥ प्रजादुःखेन शून्योऽहं प्राणाँस्त्यक्तुमिहागतः ॥ २८ ॥ धिग्जीवितं प्रजाहीनं धिग्गृहं च प्रजां विना ॥ धिग्जनं चानपत्यस्य धिक्कुलं संततिं विना ॥ २९ ॥ पाल्यते या मया धेनुः सा वंध्या सर्वथा भवेत् ॥ यो मया रोपितो वृक्षः सोऽपि वंध्यत्वमाश्रयेत् ॥३०॥ यत्फलं मद्गृहायातं तच्च शीघ्रं विनश्यति ॥ निर्भाग्यस्यानपत्यस्य किमतो जीवितेन मे ॥३१॥ इत्युक्त्वा स रुरोदोच्चैस्तत्पार्श्वे दुःखपीडितः ॥ तदा तस्य यतेश्चित्ते करुणाऽभूद्गरीयसी ॥३२॥ तद्भालाक्षरमालां च वाचयामास योगवान् ॥ सर्वं ज्ञात्वा यतिः पश्चाद्विप्रमूचे सविस्तरम् ॥ ३३ ॥ यतिरुवाच ॥ मुंचाज्ञानं प्रजारूपं बलिष्ठा कर्मणो गतिः ॥

मेरा त यो स्थिति छ कि यदि मैले गाई पाल्छु भने त्यो मेरो घरमा आएर बाँझी हुन्छे । म आफ्नो हातले जुन वृक्षारोपण गर्दछु त्यसमा फल-फूल लाग्दैन ॥३०॥ म जुन फल आफ्नो घर ल्याउँदछु, त्यो चाँडै नै कुहुन्छ । यसरी म अभागी र सन्तानहीनले बाँच्नु व्यर्थ छ ॥३१॥ यति भनेर ती ब्राह्मण दुःखले बेसरी कराई रुन लागे । ती आत्मदेव ब्राह्मणको त्यस्तो करुणाजनक अवस्था देखेर संन्यासीलाई निकै दया लागेर आयो ॥३२॥ तिनले आफ्नो योग दृष्टिले ब्राह्मणको भाग्य-लेख पढेर सबै वृत्तान्त जानेर विस्तारले भन्नलागे ।

* उदाहरण ( दयालु हृदय —थोटा पण्डित राजाको छोरालाई पढाउन गइरहेका थिए । बाटोमा चोर भेटिए । चोरले भने—'तिमीसित जे छ, सबै झिक ।' पण्डितजीले जाने—यी गरीबहरू रहेछन्—यसो तिनि आफ्नो ओढ्ने र भोटो फुकालेर दिए । त्यो लिएर चोर हिंडेपछि पण्डितलाई दया लाग्यो—यी विचरा भोकै मर्दैछ रहेछन्, नभए यो मध्य रातमा किन यहाँ निस्कन्थे । अतः तिनले चोरहरूलाई डाकेर खल्तीबाट चार रुपियाँ झिकेर दिंदै भने—'भोलि तिमी फेरि आउ, म तिमीलाई राजाकहाँ लगेर धेरै रुपियाँ दिन लगाउने छु ।' राजाको नाम सुनेर चोरहरूले भने—'हे भाइ ! राजासित यो कुरा नभन्नु होला । नभए राजाले हामीलाई अवश्य मार्नेछन्, हामी चोर हौं ।' यति भनेर तिनले पण्डितको दुशाला र पैसा फर्काइदिए र हिंडे । पण्डितजीले तिनीहरूसित भोलिपल्ट आउनको निम्ति धेरै आग्रह गरेर तब चोरले भने—'अब हामी त्यस्तो काम गर्दैनौं, परिश्रमको कमाई खानेछौं ।' दयालु हृदयले गर्न नसक्ने केही छैन ।

साधुले भने–हे ब्राह्मण देवता ! तिमी यो अज्ञान त्याग । कर्मको गति सार्है बलवती हुन्छ । आफ्नो चित्तमा विवेकलाई ठाउँ दिएर तिमी संसारको वासना त्याग ॥३३–३४॥ सुन विप्रदेव ! अहिले मैले तिम्रो भाग्यरेखा देखिसकें । सात जन्मसम्म तिमीले छोरोको सुख देख्न पाउन्नौ ॥३५॥ अतः सन्तानको निम्ति दुःख गर्न आवश्यकता नै के छ ? सन्तानले गर्दा महाराज सगरले कति कष्ट भोगेका थिए । अवएव अब तिमी कुटुम्बको आशा छाडेर त्याग-वृत्ति धारण गर । त्यागमा सबै प्रकारले सुख नै सुख छ ॥३६॥ अनि ब्राह्मणले फेरि भने—मलाई विवेकको आवश्यकता छैन । तपाईं जे जति गरेर भए पनि मलाई यौटा छोरो दिनु हवस् । नभए शोकले बौलाहा भएर म हजुरको साम्न्ने नै आफ्नू प्राण त्यागिदिन्छु ॥३७॥ पुत्रादिको सुखले हीन यो संन्यास (त्याग) को बाटो पनि रमिलो रहन्न र पुत्र-पौत्रादिले परिपूर्ण गृहस्थी सबै प्रकारले सरस हुन्छ ॥३८॥ ब्राह्मणको त्यस्तो आग्रह देखेर संन्यासीले

विवेकं तु समासाद्य त्यज संसारवासनाम् ॥ ३४ ॥ शृणु विप्र मया तेऽद्य प्रारब्धं तु विलोकितम् ॥ सप्त जन्मावधि तव पुत्रो नैव च नैव च ॥ ३५ ॥ सन्ततेः सगरो दुःखमवापाङ्ग पुरा तथा ॥ रे मुञ्चाद्य कुटुम्बाशां संन्यासे सर्वथा सुखम् ॥ ३६ ॥ ब्राह्मण उवाच ॥ विवेकेन भवेत्किं मे पुत्रं देहि बलादपि ॥ नोचेत्त्यजाम्यहं प्राणांस्त्वदग्रे शोकमूर्छितः ॥ ३७ ॥ पुत्रादिसुखहीनोऽयं संन्यासः शुष्क एव हि ॥ गृहस्थः सरसो लोके पुत्रपौत्रसमन्वितः ॥ ३८ ॥ इति विप्राग्रहं दृष्ट्वा ह्यब्रवीत्स तपोधनः ॥ चित्रकेतुर्गतः कष्टं विधिलेखविमार्जनात् ॥३९॥ न यास्यसि सुखं पुत्राद्यथा दैवहतोद्यमः ॥ अतो हठेन युक्तोऽसि ह्यर्थिनः किं वदाम्यहम् ॥ ४० ॥ तस्याग्रहं समालोक्य फलमेकं स दत्तवान् ॥ इदं भक्षय पत्न्या त्वं ततः पुत्रो भविष्यति ॥ ४१ ॥

भने–विधिको विधान मेट्नाले चित्रकेतुले धेरै कष्ट सहनु परेथ्यो ॥ ३९ ॥ विधाताले उल्टो छ भने तिमी छोरो पाएर पनि सुखी हुन सक्नेछैनौ । तर यस बखत तिमी स्वार्थले हठ गरिरहेका छौ भने म के भन्न सक्छु ॥ ४० ॥ ब्राह्मणको अतिशय आग्रह देखेर संन्यासी महापुरुषले तिनलाई यौटा फल दिंदै भने–यो लगेर आफ्नी पत्नी

---

उदाहरण ( त्याग-महिमा ) यूनान देशमा मलिक दीनार नामक यौटा ठूलो त्यागी र भगवद्भक्त भएका थिए । मलिक दीनार निकै वर्षदेखि सुकेको रोटी मात्र खान्थे । साँझमा रोटी किनेर ल्याउँथे र त्यही खाएर पानी पिउँथे । यसले तिनको स्वास्थ्य ठीक रहन्थ्यो । दैवसंयोग एकपल्ट बिरामी परे । बिमारीको अवस्थामा तिनलाई मिठाई खान मन लाग्यो । निकै रोक्दा पनि मन मानेन र ती पसलबाट मिठाई किनेर ल्याए । दिनहुँ सुखा-रोटी किन्ने दीनार आज यो मिठाई के गर्छ भन्ने जान्नको लागि पसलेले पछाडा मानिस पछि लगाइदियो । अलि पर गएपछि मलिक दीनारले मिठाईतिर हेरेर मनमनै भन्यो—'हे मन ! तेरो निमित्त यति लोभ नै प्रशस्त छ, अब बर्ता चाहिन्न ।' तत्काल मिठाई यौटा गरीबलाई दिएर तिनले फेरि भने—'ए मेरो दुर्बल मन ! नियममा बाँधेर म तँलाई कष्ट अवश्य दिइरहेछु, तर शत्रुताले होइन—मित्रभावले धैर्य राख, एक दिन तिम्रो यो दुःखको अन्त्य अवश्य आउने छ र तिमीलाई यस्तो सुख प्राप्त हुनेछ—जसको कहिल्यै अन्त्य हुनेछैन ।' एकै छिनपछि फेरि भने—'कोही मनुष्य लगातार चालीस दिनसम्म पौष्टिक आहार पाएन भने बुद्धि भ्रष्ट हुन्छ । तर मैले तीस वर्षसम्म त्यस्तो कुनै नाम पाइन, तैपनि मेरो बुद्धि बढ्दै गएको अनुभव गर्दैछु ।' मलिक दीनार चालीस वर्षसम्म बसरामा बसे, तर एकपल्ट पनि तिनले खजूर खाएनन् । खजूरको मौसम आएपछि ती अर्जलिन भन्थे—'हेर खजूर नखानाले मेरो शरीरलाई कुनै हानि भएको छैन र बराबर खजूर खाइरहनाले तिम्रो शरीरमा कुनै लाभ भएको देखिन्न ।' चालीस वर्षपछि एक दिन तिनलाई खजूर खाने प्रबल इच्छा भयो तब तिनले भने—'ए लोभी मन ! यो कुरा निश्चय जान—म तेरो वासना कहिल्यै पूर्ण गर्ने छैन ।'

+ उदाहरण ( महात्माको महिमा )—कुनै समय नारदजी कुनै मर्त्यलोकमा आए । त्यहाँ यौटा गृहस्थले अनेक यत्न गरेको थियो, तर छोरो हुनसकेको थिएन । त्यसले नारदजीसित बिन्ती गर्दै भन्यो—'भगवन् ! मलाई छोरो हुने आशिर्वाद दिनुहवस ।' नारदजीले भने—'राम्रो कुरा हो, तिम्रो छोरो हुनेछ, तर म विष्णु भगवान्सित सोधेर उत्तर दिनेछु ।' विष्णु भगवान्कहाँ गएर नारदजीले भने—'म त्यो गरीबलाई ।

र तिमीले खान् । यसले तिमीलाई यौटा छोरो हुनेछ ॥ ४१ ॥ अँ, आफ्नी पत्नीलाई बुझाउनू—एक वर्षसम्म सत्य बोल्नू, पवित्र रहनू, दरिद्रहरूमा दया र केही दान पनि गर्दै गर्नू, एक छाक मात्र खाएर बसे तिनलाई यौटा पुत्ररत्न प्राप्त हुनेछ ॥ ४२ ॥ यति भनेर ती योगी एकातिर हिंडे र आत्मदेव ब्राह्मण घरतिर फर्के । त्यो फल तिनले पत्नीलाई दिएर आफू कतैतिर गए ॥ ४३ ॥ तिनकी [1]कुटिल पत्नी त्यो फल लिएर आफ्नी यौटी छिमेकीसँग रुँदै भन्न लागिन्—'बैनी ! मलाई ठूलो चिन्ता लागिरहेछ ।

सत्यं शौचं दया दानमेकभक्तं तु भोजनम् ॥ वर्षावधि क्रिया कार्यं तेन पुत्रोऽतिनिर्मलः ॥४२॥ एवमुक्त्वा ययौ योगी विप्रस्तु गृहमागतः ॥ पत्न्याः पाणौ फलं दत्वा स्वयं यातस्तु कुत्रचित् ॥ ४३ ॥ तरुणी कुटिला तस्य सख्यग्रे च रुरोद ह ॥ अहो चिन्ता ममोत्पन्ना फलं चाहं न भक्षये ॥ ४४ ॥ फलभक्षेण गर्भः स्याद्गर्भेणोदरवृद्धिता ॥ स्वल्पभक्षं ततोऽशक्तिर्गृहकार्यं कथं भवेत् ॥४५॥ दैवद्धाटी व्रजेद्ग्रामे पलायेद्गर्भिणी कथम् ॥ शुकवन्नि-

म त यो फल खान्न ॥ ४४ ॥ यो फल खानाले गर्भ रहन्छ । गर्भ रहेपछि जठराग्नि मन्द हुनेछ, त्यसले गर्दा खान सक्ने छैन । खान नसकेपछि शरीर दुर्बल हुनेछ । अनि म घरका काम कसरी गर्नेछु ? ॥ ४५ ॥ संयोगले यदि गाउँमा आगो लाग्यो भने त्यो गर्भको भारीले थिचिएकी म भागेर कसरी आफ्नो प्राणरक्षा गर्नेछु ? गर्भ पनि सुगा जस्तै मेरो पेटमा

---

वचन दिएर आएको छु । यसनिम्ति उसको छोरो हुनैपर्छ ।' भगवान्ले भन्नुभयो—'उसलाई त सात जन्मसम्म पनि पुत्र हुँदैन भनी लेखिएको छ, भने उसलाई यसै जन्ममा छोरो कसरी दिन सकिन्छ ?' नारदले भएर त्यो गृहस्थलाई भगवान्को कुरा सुनाए । त्यो सुनेर निराश भयो । त्यही बखत उस गाउँमा यौटा ठूला ज्ञानी, राग-द्वेषहीन र वनवासी महात्मा आइपुगे । महात्माले घरै पिच्छे भिक्षा मागेका थिएनन् । अनि ती मार्गमा उनले भनिरहेका थिए—'जो मनुष्य मलाई जति रोटी ख्वाउँछ, उसलाई त्यति नै छोरा हुनेछन् ।' त्यो गृहस्थले महात्मालाई तीन रोटी दियो र महात्मा आशिर्वाद दिएर जानलागे । केही दिनपछि नारदजी पनि त्यो गृहस्थको घर पुगे—त्यहाँ उनका तीन छोराहरू खेलिरहेका देखे । गृहस्थले भन्यो—'तिमी कति मिथ्यावादी रहेछौ ! हेर, यौटा महात्माको कृपाले मेरा तीन भाइ छोरा खेलिरहेका छन् ।' त्यो सुनेर नारदजीलाई निकै रिस उठ्यो र त्यहाँ आवेशमा भगवान् विष्णुकहाँ र यसको कारण सोध्न पुगे । नारदलाई देखेर विष्णुले स्वाङ पार्दै भन्नुभयो—'हरे, म पेटको दर्दले मरेँ ! कुनै औषधि देऔ ।' नारदले भने—'तपाईं औषधिको नाउँ भन्नुहवस् म [illegible] ल्याउँछु ।' विष्णुले भन्नुभयो—'यदि कुनै भक्तको कलेजा काटेर ल्याउन सक्यौ भने त्यसैको रगत मलेर म यो व्यथाट मुक्त हुनेछु ।' अब नारद भक्तको कलेजा खोज्न हिंडे । ब्रह्मा, इन्द्र आदि देवताहरूमा कसैले पनि आफ्नो कलेजा दिएनन् । उल्टै भने—'तिमी नै आफ्नो कलेजा काटेर किन दिँदैनौ ? भक्त भएर पनि आकांक्षित किन भई हिंडिरहेका छौ ?' अन्त्यमा तिनलाई उनै महात्मा भेटिए । नारदले तिनलाई भगवान् विष्णुको कष्ट सुनाएपछि ती तयार भए, अनि नारदकै साथ आएर विष्णु भगवानकहाँ पुगेर भने—'हे प्रभो ! यदि मेरो कलेजा तपाईंको काम लाग्दछ भने यसलाई तुरुन्त काटेर लिनुहोस् ।' त्यो तत्परता देखेर भगवान् विष्णुले नारदलाई भन्नुभयो—'हेर्‍यौ नारदजी ! यस्ता महात्मा नै भाग्यलाई छोरो दिन सक्छन् । तिमी जस्ता ज्ञानी भएर पनि आफ्नो कलेजा आफूलाई [illegible] दिन सकेनौ, तिनी मेरा निमित्त आफ्नो कलेजा माग्न गएका थिए ।' यति सुनेर नारदलाई लाज लाग्यो । यस्तो हुन्छ महात्माको महिमा ।

[1] ककरसा (पतिलाई दुःख दिने कुटिल पत्नी)—संसारमा अनेक विदुषी पत्नीहरूलाई दुःख पनि र [illegible] बिहा गर्नेहरूलाई कर्कशा पत्नीहरू प्राप्त हुन्छन् । तैपनि विचारशील यस्ता पुरुष आफ्नो बुद्धिले आफ्नो घर स्वर्ग बनाउँथे । भक्त तुकारामलाई पनि कर्कशा पत्नी मिलेकी थिइन् । तुकारामको काम प्रभु-सेवा र त्यागपूर्ण जीवन बिताउनु थियो र तिनकी कर्कशा स्त्रीलाई यो कुरा मनपर्दैनथ्यो, किनकि ती स्वार्थी र झगडालु थिइन् । स्त्रीसँग तुकाराम कसैको भारी लिएर घर आइरहेका थिए । बाटोमा केही गरीब मानिस र तिनका छोराछोरी उभिएका देखिए । तिनीहरूप्रति तुकारामलाई निकै दया लाग्यो र कपडा बाँड्न थाले । बाँड्दा बाँड्दै यौटा कपडा मात्र रह्यो । त्यो लिएर उनले आफ्नी पत्नीलाई दिए । पत्नीले बाटोमा कपडा बाँडेको कुरा थाहा पाइसकेकी थिइन् । अतः ती रिसले आगो भएकी थिइन् । त्यो कपडाको लाठा हातमा आउनासाथ तुकारामको थिचोमिचो गरिन्, जसले कपडाको टुक्रा टुक्रा भयो । तुकारामले हाँसी भने—'भगवान्, तिमी कति बाठी छौ—तिमी मजस्तै कति बर्बाद भएर छौ, यो आधा कपडा पनि तिमीले एक्लै चुनेर मनपराइनौ । यसै कारण टुक्रा टुक्रा पारिदियौ ।' यो कुरा सुनेर तिनलाई लाज लाग्यो र पतिको खुट्टा समातेर क्षमा माग्न लागिन् ।

बसिरहने छ, त्यो कसरी बाहिर निस्कला, म भन्न सक्दिन ॥४६॥ पेटबाट निस्कँदा तेर्सो पर्‍यो भने त म अवश्य मर्नेछु। यस्तो पनि सुनेकी छु–बालक जन्मने बेलामा स्त्रीलाई असाध्य दुःख हुन्छ। अतः म जस्ती सुकुमारी स्त्री त्यस्तो कष्ट कसरी सहन सक्नेछु ॥४७॥ म सुतकेरी भएर थन्किएपछि मेरी नन्दले मेरो सर्वस्व लिई पचाउने छन्। फेरि ती संन्यासीले भनेको नियम पनि त ठूलो कष्टले पालन हुनेछ ॥४८॥ फेरि कुनै प्रकारले छोरो भयो भने पनि त्यसको लालन-पालन गर्नु पनि त असाधारण क्लेशको काम छ। मेरो त यस्तो विश्वास छ कि विधवा स्त्री नै सबै प्रकारले सुखी रहन्छन् ॥४९॥ यस्तै अनेक थरिका तर्क-वितर्क गरी-गरीकन तिनले त्यो फल खाइनन् र पतिले सोधेपछि भनिन्—'अँ, मैले फल खाएँ' ॥५०॥ केही दिनपछि तिनकी बहिनी दिदीलाई भेट्न आइन्। बहिनीलाई तिनले आफ्नो चिन्ताको सबै कुरा सुनाइन्दकी भनिन्—॥५१॥ 'बैनी! म यो कष्टले साह्रै दुःखी भएकी छु—अघिले त तेरो भिनाजुलाई भनिदिएकी छु—मैले फल खाएँ र गर्भ धारण भइसकेको छ। तर अब समय पूर्ण हुनेछ, तब के उत्तर दिने? यही कष्टले म प्रतिदिन दुब्ली हुँदै गइरहेकी छु। अब

चरेद्गर्भस्तं कुक्षेः कथमुत्सृजेत् ॥ ४६ ॥ तिर्यक्चेदागतो गर्भस्तदा मे मरणं भवेत् ॥ प्रसूतौ दारुणं दुःखं सुकुमारी कथं सहे ॥ ४७ ॥ मंदायां मयि सर्वस्वं ननान्दा संहरेत्तदा ॥ सत्यशौचादिनियमो दुराराध्यः स दृश्यते ॥ ४८ ॥ लालने पालने दुःखं प्रसूतायाश्च वर्तते ॥ वंध्या वा विधवा नारी सुखिनी चेति मे मतिः ॥ ४९ ॥ एवं कुतर्कयोगेन तत्फलं नैव भक्षितम् ॥ पत्या पृष्टं फलं भुक्तं भुक्तं चेति तयेरितम् ॥५०॥ एकदा भगिनी तस्याः स्तद्गृहं स्वेच्छयाऽऽगता ॥ तदग्रे कथितं सर्वं चिंतेयं महती हि मे ॥ ५१ ॥ दुर्बला तेन दुःखेन ह्यनुजे करवाणि किम् ॥ साऽब्रवीन्मम गर्भोऽस्ति तं दास्यामि प्रसूतितः ॥ ५२ ॥ तावत्कालं सगर्भेव गुप्ता तिष्ठ गृहे सुखम् ॥ वित्तं त्वं मत्पतेर्यच्छ स ते दास्यति बालकम् ॥५३॥ षाण्मासिको मृतो बाल इति लोको वदिष्यति ॥ तं बालं पोषयिष्यामि नित्यमागत्य ते गृहे ॥ ५४ ॥ फलमर्पय धेन्वै त्वं परीक्षार्थं तु सांप्रतम् ॥ तत्तदाचरितं सर्वं तथैव स्त्रीस्वभावतः ॥ ५५ ॥ अथ कालेन सा नारी प्रसूता बालकं तदा ॥ आनीय जनको बालं रहस्ये धुंधुल्यै ददौ ॥५६॥ तया च कथितं भर्त्रे प्रसूतः सुखमर्भकः ॥ लोकस्य सुखमुत्पन्नमात्मदेवप्रजोदयात् ॥५७॥ ददौ दानं द्विजातिभ्यो जातकर्म विधाय च ॥ गीतवादित्रघोषोऽभूत्तद्द्वारे

तिमी नै भन—म के गरूँ? बहिनीले भनिन्–'तिमी नआत्तिय, म पनि गर्भवती भएकी छु। मेरो जुन छोरो हुनेछ, त्यो म तिमीलाई दिनेछु ॥५२॥ त्यतिञ्जेलसम्म तिमी गर्भवती बनेर आनन्दले आफ्नो घरमा बसिरहू। यसको निम्ति अरू केही धन मेरो पतिलाई दिनू। ती तिमीलाई आफ्नो छोरो दिनेछन् ॥५३॥ ती अरूलाई यो भन्ने छन् कि छ महीनाको गर्भ तुहियो! जुन बच्चा म तिमीलाई दिनेछु, दिनहुँ तिम्रो घर आएर त्यसको लालन-पालन पनि गरिदिनेछु ॥५४॥ अब तिमी त्यो फल गाईलाई खुवाइदेऊ, हेरौं त्यो गर्भिणी हुन्छे कि हुन्न। धुन्धुलीले त्यो फल गाईलाई खान दिइन्। त्यसपछि ती बहिनीले जे-जसो भन्दथिन्, ती उसै माफिक गर्दथिन् ॥५५॥ बेला पुगेपछि धुन्धुलीकी बहिनीलाई छोरो भयो पतिले चुपचाप त्यो बालक धुन्धुलीलाई दिएर गयो ॥५६॥ एकैछिन पछि धुन्धुलीले पतिलाई डाकेर भनिन्—आनन्द र सुखपूर्वक मलाई पुत्र उत्पन्न भयो। जुन व्यक्तिले पनि आत्मदेवको घर पुत्रोत्पत्तिको कुरा सुन्यो, त्यो गद्गद भयो ॥५७॥ आत्मदेवले ठूलो उत्साहपूर्वक बालकको जात-कर्म संस्कार गरे र ब्राह्मणहरूलाई प्रशस्त धन दान दिए। तिनको घर-अगाडि थरि-थरिका

बाजा बज्न लागे र घर-परका छिमेकीहरू आएर मङ्गल-गान गर्नलागे ॥ ५८ ॥ *एकैछिनपछि धुन्धुलीले आफ्नो पतिसित भनिन्—मेरो स्तनमा दूध आएन । अर्काको दूधले कसरी बालकको रक्षा होला ? ॥५९॥ नभए यौटा यत्न गर, मेरी बहिनीको मर्न्यै छोरो भएर मन्यो । तिमी गएर त्यसलाई डाकेर ल्याऊ । त्यसले हाम्रो बालकलाई राम्ररी पालन गर्न सक्ले ॥६०॥ छोरोको रक्षार्थ तिनले त्यस्तै गरे । धुन्धुलीले आफ्नो छोरोको नाउँ 'धुन्धुकारी' राखिन् ॥६१॥ त्यसको तीन महीनापछि गाईले पनि छोरो पाइन् । त्यो बालक सर्वाङ्ग राम्रो, दिव्य, निर्मल र सुवर्ण जस्तै तेजस्वी थियो ॥६२॥ त्यस बालकलाई देखेर आत्मदेव निकै प्रसन्न भए र आफ्नै हातले त्यसको संस्कार गरे । नगर निवासीहरूले गाईको गर्भबाट मनुष्य-बालक जन्मेको समचार सुनेर त्यसलाई हेर्न दगुरे ॥६३॥ तिनीहरू बालकलाई देखेर भन्दथे—यस बखत आत्मदेवको भाग्योदय भएको छ । हेर, गाईको गर्भबाट कति राम्रो

मंगलं बहु ॥ ५८ ॥ भर्तुरग्रेऽब्रवीद्वाक्यं स्तन्यं नास्ति कुचे मम ॥ अन्यस्तन्येन निर्दुग्धा कथं पुष्णामि बालकम् ॥ ५९ ॥ मत्स्वसायाः प्रसूताया मृतो बालः प्रवर्तते ॥ तामाकार्य गृहे रक्ष सा तेऽर्भं पोषयिष्यति ॥६०॥ पतिना तत्कृतं सर्वं पुत्ररक्षणहेतवे ॥ पुत्रस्य धुंधुकारीति नाम मात्रा प्रतिष्ठितम् ॥ ६१ ॥ त्रिमासे निर्गते चाथ सा धेनुः सुषुवेऽर्भकम् ॥ सर्वाङ्गसुन्दरं दिव्यं निर्मलं कनकप्रभम् ॥६२॥ दृष्ट्वा प्रसन्नो विप्रस्तु संस्कारान्स्वयमादधे ॥ मत्वाश्चर्यं जनाः सर्वे दिदृक्षार्थं समागताः ॥६३॥ भाग्योदयोऽधुना जात आत्मदेवस्य पश्यत ॥ धेन्वा बालः प्रसूतस्तु देवरूपीति कौतुकम् ॥६४॥ न ज्ञातं तद्रहस्यं तु केनापि विधियोगतः ॥ गोकर्णं तं सुतं दृष्ट्वा गोकर्णं नाम चाकरोत् ॥ ६५ ॥ कियत्कालेन तौ जातौ तरुणौ तनयावुभौ ॥ गोकर्णः पंडितो ज्ञानी धुंधुकारी महाखलः ॥६६॥ स्नानशौचक्रियाहीनो दुर्भक्षी क्रोधवर्धितः ॥ दुष्परिग्रहहर्ता च शवहस्तेन भोजनम् ॥६७॥ चौरः सर्वजनद्वेषी

बालक भेडाए । ईश्वरको लीला हेर—यो बालक साक्षात् देवता झैं राम्रो छ ॥६४॥ संयोगले कसैलाई पनि गाईको गर्भबाट छोरो भएको रहस्य थाहा भएन । त्यस बालकको सबै अंग मानिसको जस्तै थियो, तर कान गाईको जस्तो थियो । गाईको जस्तै कान देखेर आत्मदेवले त्यसको नाउँ 'गोकर्ण' राखे ॥६५॥ केही समयपछि धुन्धुकारी र गोकर्ण दुवै तन्नेरी भए । तिनमा गोकर्ण ठूलो पण्डित र ज्ञानी थिए, तर धुन्धुकारी‡ सान्है दुष्ट निस्क्यो ॥६६॥ त्यो न कहिले स्नान गर्दथ्यो, न छात-छतको विचार राख्दथ्यो । जे जहाँ पायो खाइदिन्थ्यो । त्यसको रिसको न ठेगानै थिएन । त्यो निषिद्ध दान थाप्दथ्यो र मृतकको हातमा दिएको पिण्ड पनि खाइदिन्थ्यो ॥ ६७ ॥ त्यो चोर र सबै त्यक्तिसित द्रोह गर्दथ्यो

* उदाहरण ( अवस्थानुसार व्यवस्था )—एक दिन यौटा म्वाउरीमुसोले यौटा चमेरो समात्यो । चमेरोले मलाई छाडिदेऊ भनी प्रार्थना गन्यो । म्वाउरीले भन्यो—'पक्षीहरूसित मेरो शत्रुता छ । म कदै पनि तँलाई छाड्दिन ।' चमेरोले भन्यो—'तिमी बिर्सिरहेका छौ, म पक्षी होइन । म त मुसाको जातिको जीव हुँ ।' यति सुनेपछि म्वाउरीले छाडिदियो । फेरि अर्को दिन कुनै बिरालाले त्यसलाई च्यापियो । तब चमेरोले बिरालोसित 'मलाई छाडिदेऊ' भन्यो । बिरालोले भन्यो—'म पक्षीहरूको मासु मनपराउँछु । यसै कारण तँलाई छाड्दिन ।' चमेरोले फेरि भन्यो—'पक्षी होइन, म त मुसाको जातको जीव हुँ ।' त्यो सुने र बिरालाले भन्यो—'त्यो त झन् असल, मुसाको मासु त मलाई झन स्वादिष्ट लाग्दछ ।' चमेरोले फेरि भन्यो—'होइन, म मुसो पनि होइन, म त चमेरो हुँ ।' यति सुनेपछि बिरालोले त्यसलाई छाडिदियो । यदि देश काल परिस्थिति अनुसार व्यवस्था गर्न सके ठूला-ठूला विपत्तीहरूबाट पनि मुक्ति मिल्न सक्छ ।

‡ उदाहरण ( दुष्ट छोराले बाबुलाई मार्‍यो )—यौटा सेठको चार छोरा थिए । तिनमा तीन भाइ पिताका आज्ञाकारी र चौथो चाहिं उद्दत स्वभावको थियो । त्यो उद्दत छोरो जिस्केर कुरा गर्दथ्यो र गाली गर्नेको साथै कहिलेकाहिं हात पनि उठाइदिन्थ्यो । सेठ त्यो छोरोसित सधैं रुष्ट रहन्थ्यो । पुत्रको त्यस व्यवहारले अप्रसन्न सेठको विचार थियो—त्यसलाई मेरो सम्पत्तिबाट केही पनि प्राप्त नहोस । तर सेठ छोरोको लाग्ने अंश [illegible]

र अर्काको घर पोल्दै हिंड्दथ्यो। त्यो खेल्न भनेर छिमेकीका बालकहरूलाई डाकेर लैजान्थ्यो र कुवामा घुसेटिदिन्थ्यो। हिंसा गर्नुनै त्यसको नित्य-नियम थियो। जुन बेला पनि हतियार लिएर यता-उता डुलिरहन्थ्यो। निर्धन र अन्धालाई त्यो विशेष कष्ट दिने गर्दथ्यो। हातमा पासो र कुकुर-स्यार चाण्डाल तथा कुकुरहरूसित हिंडेका प्रायः मानिसहरू त्यसलाई देख्दथे ॥६८॥६९॥ अन्तमा त्यो यौटी वेश्याको चक्रमा अल्झियो र घरमा भएको सर्वस्व लगेर उसैलाई दियो। एक दिन त्यसले माता-पितालाई कुट-पीट गरेर घरमा भएका लुगा-भाँडा पनि त्यही वेश्यालाई

परवेशमप्रदीपकः ॥ लालनायार्भकान्धृत्वा मग्नः कूपे न्यपातयत् ॥६८॥ हिंसकः शस्त्रधारी च दीनान्धानां प्रपीडकः ॥ चांडालाभिरतो नित्यं पाशहस्तः श्वसंगतः ॥६९॥ तेन वेश्याकुसंगेन पैत्र्यं वित्तं तु नाशितम् ॥ एकदा पितरौ ताड्य पात्राणि स्वयमाहरत् ॥ ७० ॥ तत्पिता कृपणः प्रोच्चैर्धनहीनो रुरोद ह ॥ वन्ध्यत्वं तु समीचीनं कुपुत्रो दुःखदायकः ॥ ७१ ॥ क्व तिष्ठामि क्व गच्छामि को मे दुःखं व्यपोहयेत् ॥ प्राणाँस्त्यजामि दुःखेन हा कष्टं मम संस्थितम् ॥ ७२ ॥ तदानीं तु समागत्य गोकर्णो ज्ञानसंयुतः ॥ बोधयामास जनकं वैराग्यं परिदर्शयन् ॥ ७३ ॥ असारः खलु संसारो दुःखरूपी

सुम्पिदियो ॥७०॥ धन-हीन भएर आत्मदेव दुःखी भई रुनलागे र भन्न उनलाई थाहा भयो—कुपुत्र हुनु भन्दा बरू अपुत्र नै रहनु उत्तम थियो ॥७१॥ अब म कहाँ जाऊँ, के गरूँ? कसले मेरो यो महान् कष्ट निवारण गरिदेला? यही दुःखले म आफ्नो प्राण त्यागिदिन्छु। ममाथि सार्है ठूलो विपत्ति आइलाग्यो ॥७२॥ *त्यसै बखत ज्ञानी गोकर्ण आएर आफ्ना

---

कुरा गर्दथ्यो, तब त्यो आफ्नो पितालाई हिर्काउँथ्यो। यसै कारण मर्ने बेलामा पिताले आफ्नो दोपछिको कागजमा लेखाओ—'तीन भाइ छोरा मेरो धनमा अंश पाउन्—चौथोले नपाओस्।' बाबु मरेपछि छोराहरूले त्यो कागज पढेर थाहा पाए। त्यो नालायक छोरो सार्है दुःखी भयो। आपसमा निर्णय हुन नसकेर मुद्दा राजाकहाँ पुग्यो। राजा पनि अप्ठेरोमा परे। त्यस बखत कवि कालिदास त्यहीं गएका थिए। यस विवादको निर्णय गर्ने राजाले आदरपूर्वक कवि कालिदासलाई डाकेर निर्णय सुनाउने आज्ञा दिए। कालिदासले यौटा कोठामा त्यस सेठको तस्वीर राखे र चारैजना सेठका छोराहरूलाई डाकेर भने— 'जो यो चित्रलिखित पिताको छातीमा छुरा हानी हिर्काउँछ, उसैलाई अंश दिइन्छ।' सेठका तीनभाइ बुद्धिमान छोराहरूले भने—'म आफ्ना पिताको चित्रमा छुरा हान्न सक्तिन। अंश नपाए पनि दुःख मान्दिन।' तर चौथो छोरो—जुन वर्णसंकर थियो—उसले तत्काल छुरा उठायो र प्रहार गर्न तयार भयो। यसै आधारमा कालिदासले निर्णय दिए—'यो पुत्र वर्णसंकर हो यसले अंश पाउन्न।' सबै कालिदासको युक्तिको प्रशंसा गर्नलागे र राजाले त्यो दुष्ट पुत्रको पनि दण्ड गरेन।

* उदाहरण (पितालाई अन्धो पुत्रको उपदेश) —देवशर्मा नामका यौटा ब्राह्मण थिए। तिनकी स्वास्नीको नाम सुधर्मा थियो। सन्तान नहुनाले पति पत्नी दुवै दुःखी थिए। अब दुवैले तपस्या गर्न अठोट गरे र तत्काल घोर तपस्या गर्नलागे। पछि शिवलाई प्रसन्न पारेर तिनले यौटा छोरो मागे। वरदान अनुसार तिनलाई यौटा छोरो भयो, तर त्यो अन्धो थियो। जब आमा-बाबुको उमेर साठी वर्षको भयो, तब छोरो बाह्र वर्षको भयो। तब छोरोको व्रतबन्ध गरेर तिनले पढ्नको निमित्त आश्रममा पठाए। छोरो पढेर चार वर्षपछि घर आयो। एक दिन त्यो अन्धो छोरो पिताको नजीकै बसेको थियो। छोरोले व्याकुलित सोध्यो—'बाबा! कुन पापले मनुष्य अन्धो हुन्छ?' पिताले उत्तर दियो—'जुन मनुष्यले पूर्वजन्ममा सन्तको चोरी गर्दछ, त्यो अर्को जन्ममा अन्धो हुन्छ।' छोरोले भन्यो—'तपाईंको कुरा सत्य हुन सक्दछ, तर मेरो त यस्तो विश्वास छ—पिताको गुण पुत्रमा आउँछ। अतः म ठानिरहेको छु कि तपाई अन्धो हुनुहुन्छ। त्यसैले म पनि अन्धो भएको हुँ।' पिताले भन्यो 'म त आँखा देख्दछु।' छोरोले भन्यो—'तपाईंले मुक्तिदाता शिवको आराधना गरेर पनि मोक्ष नमागेर छोरो माग्नुभयो र आफ्नो सारा तपस्या गुमाउनु भयो। यस्तो गरेर के तपाईं अन्धो हुनु भएन? हे पिता! तपाईंले ब्रह्मास्त्र समान अमोघ अस्त्र धारण गरेर बाँझो मृग मार्नुभयो। यसनिमित्त तपाई अन्धोकै श्रेणीमा गनिनु हुन्छ।' अन्धो छोरोको यस्ता कुरा सुनेर माता पिता झूठो माया-मोह त्यागेर विष्णु भगवान्का भक्त बने।

दुःखी पितालाई सान्त्वना दिँदै वैराग्यको बाटो देखाए ॥ ७३ ॥ गोकर्णले भने—'हे पिता ! यो निःसार संसार, दुःखको मूर्तिमान स्वरूप र अज्ञानमा पार्ने छ । कुन कसको छोरो छ, कुन कसको धन छ र को कसको स्नेह गर्दछ ? संसारको यो मरती अग्निज्वालामा सबै स्वतः डढिरहन्छन् ॥ ७४ ॥ यहाँ न इन्द्रलाई सुख मिल्दछ, न कुनै चक्रवर्ती राजालाई । वास्तवमा यदि *सुख-सन्तोष कसैलाई प्राप्त हुन्छ भने ती हुन् विरक्त, एकान्तसेवी साधु ॥ ७५ ॥ अब तिमी पुत्र-स्नेहको अज्ञान त्याग । यदि यस अज्ञानको चक्रमा परिरह्यौ भने त तिमी अन्त्यमा नरकगामी पनि हुन सक्छौ । एक दिन यो देह अवश्य नाश हुन्छ, यस कारण तिमी यो सबै त्यागेर वनमा जाऊ ॥ ७६ ॥ गोकर्णका कुरा सुनेर आत्मदेव त्यसको निम्ति जान

विमोहकः ॥ सुतः कस्य धनं कस्य स्नेहवाञ्ज्वलतेऽनिशम् ॥ ७४ ॥ न चेन्द्रस्य सुखं किंचिन्न सुखं चक्रवर्तिनः ॥ सुखमस्ति विरक्तस्य मुनेरेकांतजीविनः ॥ ७५ ॥ मुंचाज्ञानं प्रजारूपं मोहतो नरके गतिः ॥ निपतिष्यति देहोऽयं सर्वं त्यक्त्वा वनं व्रज ॥ ७६ ॥ तद्वाक्यं तु समाकर्ण्य गंतुकामः पिताऽब्रवीत् ॥ किं कर्तव्यं वने तात तत्त्वं वद सविस्तरम् ॥ ७७ ॥ अन्धकूपे स्नेहपाशे बद्धः पंगुरहं शठः ॥ कर्मणा पतितो नूनं मामुद्धर दयानिधे ॥ ७८ ॥ गोकर्ण उवाच ॥ देहेऽस्थिमांसरुधिरेऽभिमतिं त्यज त्वं जायासुतादिषु सदा ममतां विमुंच ॥ पश्यानिशं जगदिदं क्षणभंगनिष्ठं वैराग्यरागरसिको भव भक्तिनिष्ठः ॥ ७९ ॥ धर्मं भजस्व सततं त्यज लोकधर्मान्सेवस्व साधुपुरुषाञ्जहि कामतृष्णाम् ॥ अन्यस्य दोषगुणचिंतनमाशु मुक्त्वा

भए र भने—'बाबु ! वनमा गएर मैले के गर्नुपर्दछ, त्यो विस्तारले बुझाइदेऊ ॥७७॥ हे दयानिधे ! म अज्ञानरूपी अन्धो कुवामा परेको छु । स्नेहरूपी डोरीले मेरा हात-खुट्टा बाँधिएका छन् । यसै निम्ति म आफूलाई कहीं गर्न पनि असमर्थ र पंगु ठानिरहेको छु । यो सबै मेरो कर्मका फल हुन् भन्ने पनि बुझिरहेको छु । अब तिमी जसरी हुन्छ उसै गरी मेरो उद्धार गर ॥७८॥ गोकर्णले भने—'हे पिता ! तपाईं अस्थि, मज्जा मासु र रक्तले व्याप्त यो शरीरको अभिमान छाडेर स्त्री-पुत्रको माया त्यागिदिनु हवस् । यस संसारलाई क्षणभङ्गुर ठान्नु हवस् र भगवद्भक्तिमा निष्ठा गरेर वैराग्यभाव धारण गर्नुहवस् ॥७९॥ सदैव सत्य र धर्मको पालन गर्नुहवस् । संसारिक धर्म र रूढीहरूलाई हुत्याउनोस् सज्जनको आदर र कामनाजनित भोगहरूबाट

* उदाहरण ( सुख सन्तोष )—एक दिन एउटा साधुसित बादशाह इब्राहीमले सोध्यो—'साधुका लक्षण के हुन् ?' साधुले उत्तर दिए—'यदि पाए खान्छौं, नपाए पनि सन्तोष गर्छौं ।' बादशाह इब्राहीमले भनि सोधे— यो लक्षण त कुकुरको हो ।' साधुले उत्तर दिए—'त्यो भए तपाईं नै भन्नोस् ।' इब्राहीमले भन्यो —'सच्चा त्यागी त्यो हो जो पाएको पनि ईश्वरको बाटोमा छुटाइदिन्छ ।' नपाए पनि ईश्वरलाई धन्यवाद दिन्छ ।' तात्पर्य हो—ईश्वरले जे जति खानो-पानी दिन्छ, त्यो खानोस् र प्रभु जुन स्थितिमा राख्दछ, त्यसैमा प्रभुको धन्यवाद भनेर प्रसन्न रहोस् । आफ्नो चित्तवृत्ति नबदलोस् र त्यसको विशेष भोग र सुखको इच्छा नगरोस् ।

इच्छा, चिन्ता त्यागी, गर प्रभुको भक्ति र ध्यान । त्यागी साधु भन्दछौं, पाई उत्तम ज्ञान ॥

* उदाहरण ( विषय-भोग र दृष्टान्त )—दुइ जना मित्र कहीं गइरहेका थिए । तिनमा एउटा अन्धो थियो र अर्को आँखा देख्ने । ती दुवै अलि पर पुग्नासाथ ठूलो आँधी आयो, त्यसले देख्न सक्दो भयो । आँखामा धूलो भरियो, त्यसले आँखा नखुल्ने भयो । आँखा देख्ने चाहिं हैरान भयो । जब हुरी थामियो तब दुवैले आँखा र शरीरमा परेको धूलो पानीले सफा पारे । अब आँखा हुने त देख्न थाल्यो, तर अन्धोले हुरी समाप्त भएपनि पनि देखेन । यस दृष्टान्तले यो बुझ्नु पर्दछ भक्त र अभक्त दुवै संसार-पथमा गइरहेका छन् । यसमा विषय-भोगरूपी आँधी आउँछ । त्यसले दुवैमाथि समान प्रहार गर्दछ । विचारवान् भक्त पुरुषलाई हुरी शान्त भएपछि देखिन्छ तर अभक्तलाई विषय-भोग शान्त भएपछि पनि आत्मज्ञान हुँदैन । अतः अज्ञानी व्यक्ति विषय-भोग द्वारा नै आसक्त रहन्छ ।

मूर्ख फकाउनुहोस् र अरूको गुण-दोषको विवेचना गर्नतिर नलाग्नोस् । प्राणिमात्रको सेवा गर्न पवित्र व्रत धारण गरेर भगवत्कथारूपी अमृतमय रसपान गर्नोस् ॥८०॥ यसरी आफ्ना छोराको राम्रो उपदेश सुनेर आत्मदेवलाई ज्ञान प्राप्त भयो । तिनको बुद्धि स्थिर भयो र साठी वर्षको उमेरमा घर-बार त्यागी वनमा गए । त्यहाँ ती प्रतिदिन भगवान्को आराधना गर्दै श्रीमद्भागवत दशमस्कन्धको पाठ गर्ने गर्दथे । अन्त्य समयमा आत्मदेव भगवान्को दिव्य-लोक वैकुण्ठधाम गए ॥८१॥ इति श्री पद्मपुराणको उत्तर खण्डमा श्रीमद्भागवत माहात्म्यको चौथो । अध्याय समाप्त भयो ॥४॥

सूतजी भन्नुहुन्छ—हे शौनक ! घरबाट पिता हिंडेपछि एक दिन धुन्धुकारीले आमालाई बेसरी कुट्यो र भन्यो–खोइ, घरको सबै सम्पत्ति कहाँ छ, भन ? यदि भन्दीनौ भने म लात्तले हानेर तिम्रो प्राण लिनेछु ॥१॥ घरको सम्पत्ति त्यो दुष्टले पहिल्यै उडाइसकेको थियो, अब के शेष थियो र आमाले दिने ! तर ती धन छैन भन्न पनि असमर्थ थिइन् । किनकि धन छैन भने पनि त्यो पापिष्टलाई पत्यार पर्ने थिएन । अतः त्यो यसै गरी रात-दिन बड दिक्क गरिरहन्थ्यो । एक रात त्यसकी माता धुन्धुली उठेर कुवामा हाम्फाली मरिन् । यसरी मरेर ती सर्पको

मेवाकथारसमहो नितरां पिब त्वम् ॥८०॥ एवं सुतोक्तिवशतोऽपि गृहं विहाय यातो वनं स्थिरमतिर्गतषष्टिवर्षः ॥ युक्तो हरेरनुदिनं परिचर्ययाऽसौ श्रीकृष्णमाप नियतं दशमस्य पाठात् ॥ ८१ ॥ इति श्रीपद्मपुराणे उत्तरखण्डे श्रीमद्भागवतमाहात्म्ये विप्रमोक्षो नाम चतुर्थोऽध्यायः ॥ ४ ॥

सूत उवाच ॥ पितर्युपरते तेन जननी ताडिता भृशम् ॥ क्व वित्तं तिष्ठते ब्रूहि हनिष्ये लत्तया न चेत् ॥ १ ॥ इति तद्वाक्यसंत्रासाज्जनन्या पुत्रदुःखतः ॥ कूपे पातः कृतो रात्रौ तेन सा निधनं गता ॥ २ ॥ गोकर्णस्तीर्थयात्रार्थं निर्गतो योगसंस्थितः ॥ न दुःखं न सुखं तस्य न वैरी नापि बांधवः ॥ ३ ॥ धुन्धुकारी गृहेऽतिष्ठत्पञ्चपण्यवधूवृतः ॥ अत्युग्रकर्मकर्ता च तत्पोषणविमूढधीः ॥४॥ एकदा कुलटास्तास्तु भूषणान्यभिलिप्सवः ॥ तदर्थं

निम्ति पुत्रको यातनाबाट मुक्त भइन् ॥२॥ त्यसै वखत योगी गोकर्ण तीर्थयात्रा गर्न घरबाट हिंडिदिए । तिनलाई न कुनै दुःख थियो, न कुनै सुख । तिनको न कोही शत्रु थियो न मित्र ॥३॥ यता धुन्धुकारी पाँचोटी वेश्याहरूलाई घरमा ल्याएर बस्न लाग्यो । ठूला-ठूला पाप गर्नु नै उसको व्यवसाय थियो । वेश्यालाई खान-लाउन दिनेमा नै उसको बुद्धि बिग्रन्थ्यो । ॥४॥ एक दिन बजारिया वेश्याहरूले *केही गर-गहनाको आग्रह गरे । अनि त्यो कामान्ध मृत्युको पनि डर नमानी रातमा चोरी गर्नको निम्ति घरबाट निस्क्यो ॥५॥ जहाँ, जे र जसरी

उदाहरण (त्रियाचरित्र)—कानपुरमा मोटा सेठ बस्थ्यो, त्यसकी स्त्रीको नाम रत्नप्रभा थियो । युवती रत्नप्रभा आचारहीन थिई, सेठ अति वृद्ध थियो । अतः त्यो दिनहुँ घरको नोकरसित आनन्द भोग्दथी । एक दिन सेठले रत्नप्रभालाई घरको सेवकलाई म्याईं खान दिएको देख्यो । अब रत्नप्रभा कुरा बिग्रन लाग्यो भन्ने देखेर तत्काल त्यो सेवकलाई अति पर हटाई सेठसंग रोई दिंदै भन्न लागि—'हे स्वामी ! यो नोकर निकै बदमाश भएको छ । [illegible] दिनका दिन [illegible] कपट चोरेर खान्छ । [illegible] म भन्दाई पतिव्रता नै थियो, [illegible] यसको [illegible] निश्चय गरें ।' यति सुनेर नोकर [illegible] देखाउँदै भन्न लाग्यो—सेठजी ! यसको घरमा [illegible] प्रकारले मस्त मुखले [illegible] छन्, जहाँ नोकर कहाँ टिक्न सक्छ ! यस निम्ति हजुर आजै मेरो हिसाब चुक्ता गरिदिनोस् । मलाई यस्तो नोकरी चाहिएन ।' यति भनेर त्यो [illegible] गर्दै [illegible] हिंडिदियो । अब सेठजी भुईं मुसाईं उठेर पैरै खुशामद गरेर नोकरलाई फर्काएर ल्याए । यसैले नीतिशास्त्रमा भनेको छ— '[illegible] वेद [illegible] शास्त्र बृहस्पतिः । [illegible] च [illegible] स्त्रीबुद्धी सुप्रतिष्ठिता ॥' । अर्थात् जुन नीति शुक्राचार्य, देवगुरु बृहस्पति र [illegible] चाणक्य जान्दछन्, त्यही नीति स्त्रीको बुद्धिमा सदैव स्वाभाविक रीतिले विद्यमान रहन्छ । स्त्रीको चरित्र मानिसको त के कुरा देवताले पनि जान्न सक्तैनन् ।

धन पायो, सबै ल्याएर त्यसले ती कुलटा नारीहरूलाई सुम्पियो, तिनमा अनेक थरिका रत्न-आभूषणहरू थिए ॥६॥ ती वेश्याहरूले धेरै धन-चाँदी ल्याएको देखेर एक रात उनमा यस्तो विचार गर्नलागे–यो दुष्ट दिनहुँ चोर्दछ । कुनै दिन राजाद्वारा अवश्य समातिन्छ ॥७॥ अनि राजाले यसको समस्त धन-सम्पत्ति खोसेर ज्यान लिन पनि बेर छैन । यदि यो धन लिन हामी नै यसलाई मारौं भने त्यसमा के बाधा पर्ला र ॥ ८ ॥ यसलाई समाप्त पारेर जो भएको सबै धन लिई कतै अन्तै भागेर जाऊँ । ती वेश्याहरूले यस्तो निश्चय

निर्गतो गेहात्कामांधो मृत्युमस्मरन् ॥५॥ यतस्ततश्च संहृत्य वित्तं वेश्म पुनर्गतः ॥ ताभ्योऽयच्छत्सुवस्त्राणि भूषणानि कियंति च ॥६॥ बहुवित्तचयं दृष्ट्वा रात्रौ नार्योऽविचारयन् ॥ चौर्यं करोत्यसौ नित्यमतो राजा गृहीष्यति ॥ ७ ॥ वित्तं हृत्वा पुनश्चैनं मारयिष्यति निश्चितम् ॥ अतोऽर्थगुप्तं गूढमस्माभिः किं न हन्यते ॥ ८ ॥ निहत्यैनं गृहीत्वाऽर्थं यास्यामो यत्रकुत्रचित् ॥ इति ता निश्चयं कृत्वा सुप्तं तं बद्ध्वा रश्मिभिः ॥९॥ पाशं कंठे निधायास्य तन्मृत्युमुपचक्रमुः ॥ त्वरितं न ममारासौ चिंतायुक्तास्तदाऽभवन् ॥ १० ॥ तप्तांगारसमूहांश्च तन्मुखे हि व्यचिक्षिपुः ॥ अग्निज्वालाति-दुःखेन व्याकुलो निधनं गतः ॥ ११ ॥ तं देहं मुमुचुर्गर्ते प्रायः साहसिकाः स्त्रियः ॥ न ज्ञातं तद्रहस्यं तु केनापीदं तथैव च ॥ १२ ॥ लोकैः एष

गरेर त्यसलाई पहिले बलियो डोरीले टन्काए अनि घाँटीमा डोरी कसेर प्राण लिने प्रयत्न गर्नलागे ॥ ९ ॥ तर त्यो छिन हो कुन्नि, छिट्टै मर्न सकेन, अतः ती वेश्याहरू आत्तिए ॥ १० ॥ तत्काल अरू कुनै उपाय नदेखेर ती आगोको बल्दो अगुल्टो लिएर धुन्धुकारीको मुखमा बारम्बार कोच्नलागे । त्यो आगोको ज्वालाले जब धुन्धुकारीलाई धेरै बर्ता कष्ट भयो, तब चिच्याउने प्रयत्न गर्‍यो तर मुख थुनिदिनाले व्याकुल भएर त्यसले प्राण त्यागिदियो ॥ ११ ॥ त्यसपछि ती वेश्याहरूले त्यसको मृतदेह खाडलमा हाली

---

जस्तो गर्छौ कर्म आएर बाहौं, भोग्नै पर्ने भोग त्यसको छ बाहा । मिथ्या हुन् यी देखिने वस्तु सारा, मज्जन् वास्ने त्याग दुष्कर्म सारा ॥

* उदाहरण—यौटै गृहस्थकी पत्नीलाई केही वर्षसम्म सन्तान भएनन् । अतः त्यो मूर्ख र धूर्त मानिसहरूकहाँ गएर मन्त्र-तन्त्र गराउन थाली । एकादिन यौटा पाखण्डीले त्यो मूर्ख स्त्रीसित भन्यो—'कमलाल राती यदि तँ त्यस व्यक्तिको घरमा आगो लगा, तब पुत्रको कथनानुसार तँलाई अवश्य छोरो हुनेछ ।' त्यो मूर्ख स्त्रीले त्यसै गरी । त्यस घरमा आगोमा परेर धन र गाईभैंसी, गाडाघोडा आदि सबै सिध्याएर आठ जीव जलेर मरे । केही दिनपछि त्यस स्त्रीले छोरो पाई र समय बितेपछि त्यो आठ छोराकी आमा बनी । त्यसको बूढा ससुरो बुढारीको आगो लगाउने कुकृत्य राम्ररी जानेथ्यो । एकदिन त्यसले विचार गर्‍यो 'मलाई भगवान्‌को दरबारमा पनि अन्याय हुन्छ जस्तो लागिरहेछ ।' बलि-जति छोराहरू ठूला हुदै गए, त्यो स्त्रीले पालैसित सबैको विवाह गर्दै गई । तर ती छोराको भयो, त्यो मर्दथ्यो । यसरी त्यसका सबै छोरा मरे । अनि त्यो अत्याय-विलाप गरेर कन थाली । अनि बूढो ससुरोले भन्यो—'भगवान्‌कहाँ अन्याय हुँदैन, त्यहाँ न्याय नै हुन्छ, त्यो कुरा सुनेर बुढारीलाई आगो पाउमा झन् जलिदिए झैं भयो । उसले चाहेर ससुरालाई भनी—आठ-आठ भाइ बाप जस्ता मेरा छोराहरू मरेकोले तिमीलाई खुसी भइरहेको छ । घर-घरका छिमेकीहरू पनि आएर बूढोलाई भन्न-भन्न भने । बूढोले भन्यो—मलाई मेरा परिवार प्रिय छन् । तर तो असाविन्दीले कुनै मूर्खको कुरा मानेर यौटा गृहस्थको घरमा आगो लगाइदिएकी थिई । त्यसमा आठ निर्दोष पशुहरू कराई कराई मरेका थिए । तिनै आठ पशु यो मूर्खका छोरा भएर जन्मे र अब तिनै यसलाई सन्तापको आगोमा जलिरहन भनी छाडेर गए । यो बृद्धको यो कुरा गाउँवालीलाई उचित लाग्यो र त्यस मूर्खाले पनि राम्ररी बुझी—यो मेरो कुकर्मको सजाय पाएको हो । त्यसपछि उसले आफ्ना ससुरालाई आफ्नो ठानेर सेवा-चाकरी गर्न लागी । केही समय बितेपछि फेरि त्यसको यौटा छोरो भयो, अनि त्यो खुसी भई ।

त्यसमाथि बाटो हालेर छाडिदिए। त्यस गुप्त रहस्यलाई कसैले पनि जान्न सकेन ॥१२॥ वरपरका छिमेकीहरूले जब धुन्धुकारीलाई नदेखेर सोधे तब ती कुलटाहरूले भनिदिए—मेरा प्राणपति परदेश गएका छन्। धनको बर्ता खाँचो परेर नै उनी परदेश गएका हुन्। ती यसै वर्ष कुनै महिनामा घर फर्कन्छन्। त्यस्ता कुलटा स्त्रीका कुरामा जान्ने व्यक्तिले कदापि विश्वास गर्न हुँदैन। जो मूर्ख त्यस्ताका कुरामा विश्वास गर्दछन्, तिनले अनेक कष्ट भोग्नु पर्दछ ॥१३॥१४॥ किनकि स्त्रीहरूको कुरा अमृत झैं मीठा हुन्छन्। त्यसले कामीहरूको हृदयमा काउकुती उत्पन्न गरिदिन्छ। तर नारीहरूको हृदय चाहिं लाग्ने कर्दको धार जस्तै तीक्ष्ण हुन्छ—जसले मौका पाउनासाथ प्रहार गरिदिन्छ ॥१५॥ अन्त्यमा ती कुलटाहरू धुन्धुकारीको सबै धन लिएर अन्य प्रेमीहरूकहाँ गए। यता धुन्धुकारी आफूले गरेका कुकर्महरूले गर्दा डरलाग्दो प्रेत भयो ॥१६॥ अब त्यो हुरीको रूप धारण गरेर दसै दिशाहरूमा यता-उता नाक [illegible] घुम्न लाग्यो। त्यसलाई चीसो, घाम, भोक-प्यास आदिको भयंकर यन्त्रणा सहनुपर्दथ्यो ॥१७॥ त्यसलाई कहीं पनि कुनै आश्रय स्थल मिल्दैनथ्यो। त्यो बारम्बार 'हा दैव !' भन्न

वदंति स्म दूरं यातः प्रियो हि नः ॥ आगमिष्यति वर्षेऽस्मिन्वित्तलोभविकर्षितः ॥ १३ ॥ स्त्रीणां नैव तु विश्वासंऽनृतानां कारयेद्बुधः ॥ विश्वासे यः स्थितो मूढः स दुःखैः परिभूयते ॥ १४ ॥ सुधामयं वचो यासां कामिनां रसवर्द्धनम् ॥ हृदयं क्षुरधाराभं प्रियः को नाम योषिताम् ॥ १५ ॥ संहृत्य वित्तं तास्तस्य कुलटा बहुभर्तृकाः ॥ धुन्धुकारी बभूवाथ महान्प्रेतः कुकर्मतः ॥ १६ ॥ वात्यारूपधरो नित्यं धावन्दशदिशोऽन्तरम् ॥ शीतातपपरिक्लिष्टो निराहारः पिपासितः ॥ १७ ॥ न लेभे शरणं कुत्र हा दैवेति मुहुर्वदन् ॥ कियत्कालेन गोकर्णो मृतं लोकादबुध्यत ॥ १८ ॥ अनाथं तं विदित्वैव गयाश्राद्धमचीकरत् ॥ यस्मिंस्तीर्थे तु संयाति तत्र श्राद्धं प्रवर्तयन् ॥ १९ ॥ एवं भ्रमन्स गोकर्णः स्वपुरं समुपेयिवान् ॥ रात्रौ गृहाङ्गणे स्वप्तुमागतोऽलक्षितः परैः ॥ २० ॥ तत्र सुप्तं स विज्ञाय धुन्धुकारी स्वबांधवम् ॥ निशीथे दर्शयामास महारौद्रतरं वपुः ॥२१॥ सकृन्मेषः सकृद्धस्ती सकृच्च महिषोऽभवत् ॥ सकृदिंद्रः सकृच्चाग्निः पुनश्च पुरुषोऽभवत् ॥२२॥ वैपरीत्यमिदं दृष्ट्वा गोकर्णो धैर्यसंयुतः ॥ अयं दुर्गतिकः कोऽपि निश्चित्याथ तमब्रवीत् ॥ २३ ॥ गोकर्ण उवाच ॥ कस्त्वमुग्रतरो रात्रौ कुतो यातो दशामिमाम् ॥ किं वा प्रेतः पिशाचो वा राक्षसोऽसीति शंस नः ॥ २४ ॥ सूत उवाच ॥ एवं पृष्टस्तदा तेन रुरोदोच्चैः पुनः पुनः ॥ अशक्तो वचनोच्चारे संज्ञामात्रं चकार ह ॥ २५ ॥ ततोऽञ्जलौ जल

रहन्थ्यो। केही दिनपछि गोकर्णले धुन्धुकारी मरेको समाचार सुने ॥१८॥ त्यसलाई अनाथ ठानेर गोकर्णले गया गएर त्यसको मुक्तिको निम्ति श्राद्ध गरिदिए। त्यसै बखतदेखि ती जुन-जुन तीर्थमा जान्थे, त्यसको मुक्तिका लागि श्राद्ध-तर्पण आदि गर्दै रहन्थे ॥१९॥ निकै दिनपछि डुल्दा-डुल्दा एक दिन आफ्नो नगरमा आइपुगे। ती आएको कसैले पनि थाहा पाउन सकेनन्। ती सरासर गएर आफ्नो घरको आँगनमा सुते ॥२०॥ आफ्नो भाइ गोकर्णलाई सुतेको देखेर प्रेतरूपी धुन्धुकारी आधारातमा त्यहाँ आयो र आफ्नो डरलाग्दो रूप देखाएर तिनलाई डराउन लाग्यो ॥२१॥ त्यो छिनमा भेडा, तुरुन्त हात्ती, तत्काल राँगो, फेरि इन्द्र, अग्नि र एकैछिनमा साधारण मनुष्य भई देखा पर्दथ्यो ॥२२॥ त्यस्तो विचित्र प्रकारको परिस्थिति देखेर ज्ञानी गोकर्णले विचार गरे—यो अवश्य कुनै दुर्दशामा परेको जीव हो। उनले सोधे—॥२३॥ यसरी अतिशय भयंकर रूप धारण गर्ने तिमी को हौ ? यो अन्धकारपूर्ण रातको [illegible]मा

किन तिम्रो यस्तो दशा छ ? तिमी कुनै प्रेत हौ अथवा राक्षस, पिशाच हौ ? तिमी जो भए पनि मलाई सफा र सत्य बताऊ ॥२४॥ सूतजी भन्दछन्—भाइको यस्तो प्रश्न सुनेर त्यो प्रेत कराई-कराई रुनलाग्यो । त्यो केही भन्न खोज्दथ्यो तर वाणी अवरुद्ध थियो । अतः संकेतद्वारा उनि भन्नसक्थ्यो भन्यो ॥२५॥ अनि गोकर्णले अंजलिमा जल लिएर त्यसमाथि छर्किदिए । त्यतिले नै त्यसका अनेक पाप नष्ट भए र त्यो बोल्न लाग्यो ॥२६॥ प्रेतले भन्यो—म धुन्धुकारी नामको तिम्रो दाजु हुँ । मैले आफ्नै कुकर्मद्वारा आफ्नो ब्राह्मणत्व बिगारें ॥२७॥ अज्ञानमा परेर मैले कति कुकर्म गरेको थिएँ, त्यो गनेर पनि सम्भव छैन । मैले अगणित जीवहरूको हिंसा गरेको थिएँ । अन्त्यमा कुलटानारीहरूले दारुण दुःख दिएर मलाई मारे॥२८॥ त्यसै कारण म यस दुर्दशामा प्राप्त भएर प्रेत-योनि भोगिरहेको छु । कुनै बखत भाग्य बलियो भएको बेला अलिकति हावा खान पाउँदछु ॥२९॥ हे कृपाका सिन्धु ! हे मेरा उपकारी बन्धु ! तिमी मलाई शीघ्र यस विपत्तिबाट मुक्ति दिलाऊ । प्रेतका कुरा सुनेर महर्षि गोकर्णले भने-॥३०॥ मैले तिम्रो उद्धारका लागि विधिपूर्वक गया-श्राद्ध गरिदिएँ,किन तिमी मुक्त भएनौ ?

कृत्वा गोकर्णस्तमुदीरयत् ॥ तत्सेकहतपापोऽसौ प्रवक्तुमुपचक्रमे ॥ २६ ॥ प्रेत उवाच ॥ अहं भ्राता त्वदीयोऽस्मि धुन्धुकारीति नामतः ॥ स्वकीयेनैव दोषेण ब्रह्मत्वं नाशितं मया ॥२७॥ कर्मणो नास्ति संख्या मे महाऽज्ञाने विवर्तिनः ॥ लोकानां हिंसकः सोऽहं स्त्रीभिर्दुःखेन मारितः ॥२८॥ अतः प्रेतत्वमापन्नो दुर्दशां च वहाम्यहम् ॥ वाताहारेण जीवामि दैवाधीनफलोदयात् ॥२९॥ अहो बंधो कृपासिंधो भ्रातर्मामाशु मोचय ॥ गोकर्णो वचनं श्रुत्वा तस्मै वाक्यमथाब्रवीत् ॥ ३० ॥ गोकर्ण उवाच ॥ त्वदर्थं तु गयापिण्डो मया दत्तो विधानतः ॥ तत्कथं नैव मुक्तोऽसि ममाश्चर्यमिदं महत् ॥ ३१ ॥ गयाश्राद्धान्न मुक्तिश्चेदुपायो नापरस्त्विह ॥ किं विधेयं मया प्रेत तत्त्वं वद सविस्तरम् ॥ ३२ ॥ प्रेत उवाच ॥ गयाश्राद्धशतेनापि मुक्तिर्मे न भविष्यति ॥ उपायमपरं किञ्चित्तद्विचारय सांप्रतम् ॥ ३३ ॥ इति तद्वाक्यमाकर्ण्य गोकर्णो विस्मयं गतः ॥ शतश्राद्धैर्न मुक्तिश्चेदसाध्यं मोचनं तव ॥ ३४ ॥ इदानीं तु निजं स्थानमातिष्ठ प्रेत निर्भयः ॥ त्वन्मुक्तिसाधकं किञ्चिदाचरिष्ये विचार्य च ॥ ३५ ॥ धुन्धुकारी निजस्थानं तेनादिष्टस्ततो गतः ॥ गोकर्णश्चिंतयामास तां रात्रिं न तदध्यगात् ॥ ३६ ॥ प्रातस्तमागतं दृष्ट्वा लोकाः प्रीत्या समागताः ॥ तत्सर्वं कथितं तेन तज्जातं च यथा निशि ॥ ३७ ॥ विद्वांसो योगनिष्ठाश्च ज्ञानिनो ब्रह्मवादिनः ॥ तन्मुक्तिं नैव पश्यन्ति पश्यंतः शास्त्रसंचयान् ॥ ३८ ॥ ततः सर्वैः

यो ठूलो आश्चर्यको कुरा छ ॥३१॥ गया श्राद्धले पनि तिम्रो मुक्ति भएन भने, अब अरु कुनै उपाय छैन । अतः हे प्रेत ! तिमी नै भन मैले के गरूँ ? तिमी आफ्नो यस योनिबाट मुक्तिको उपाय विस्तारपूर्वक आफैं भन ॥३२॥ प्रेतले उत्तर दियो—सयौं गया-श्राद्ध गरे पनि मेरो मुक्ति हुन सक्तैन । यो बाहेक तपाई अरु कुनै उपाय विचार गर्नुहवस् ॥३३॥ धुन्धुकारीको त्यस्ता कुरा सुनेर गोकर्ण ठूलो विस्मयमा परे र उनले भने—जब सयौं गया-श्राद्धले पनि तिमी मुक्त हुन सक्तैनौ भने तिम्रो मुक्ति मलाई असम्भव लाग्यो ॥३४॥ अहिले त तिमी निर्भय भएर आफ्नो स्थानमा गएर बस । तिम्रो मुक्तिका लागि म कुनै अर्को उपाय विचार गर्नेछु ॥३५॥ यति सुनेर धुन्धुकारी त्यहाँबाट आफ्नो स्थानमा गयो र गोकर्ण रातभरि त्यसको निस्तार हुने उपाय विचार गर्दै रहे ॥३६॥ प्रातःकाल सबैलाई गोकर्ण आएको थाहा भयो, अनि अनेक हितैषीहरू आइपुगे । राती घटेको सारा घटना गोकर्णले सबैलाई सुनाए

॥३७॥ तर ठूला-ठूला विद्वान् ज्ञानी, योगी र ब्रह्मज्ञानी पनि शास्त्रहरूको मन्थन गरेर त्यसको मुक्तिको कुनै उपाय भन्न समर्थ भएनन् ॥३८॥ अनि सबैले सल्लाह दिए–अब तपाईं श्रीसूर्यनारायणसित यस विषयमा सोध-पूछ गर्नुहवस् । सम्भव छ सूर्यनारायणले कुनै यत्न बताउनुहोस् ! त्यसै बखत गोकर्णले आफ्नो योगबलद्वारा सूर्यको रथ रोकिदिए र उनको स्तुति गर्दै भने—॥३९॥ हे जगत्का साक्षी सूर्यदेव ! म हजुरलाई प्रणाम गर्दछु । हजुर कृपा गरेर मेरो दाजु धुन्धुकारीको प्रेतयोनिबाट उद्धार हुने उपाय आज्ञा हवस् । यति सुनेर स्पष्ट बुझिने वाणीमा सूर्यले आज्ञा भयो-॥४०॥ श्रीमद्भागवतले त्यसको मुक्ति हुनसक्छ–तिमी सप्ताह भन. सूर्यनारायणको वचन सुनेर सबै मानिसले श्रीमद्भागवतलाई साक्षात् धर्मको रूप ठाने॥४१॥ तिनले गोकर्णसित भने—तिमी प्रयत्न गरेर यही काम गर । अरू धर्माचरणको अपेक्षामा यो उपाय सजिलो पनि छ । गोकर्ण यस कार्यलाई गर्न पक्का अठोट गरेर सप्ताह भन्न उद्यत भए ॥४२॥ तिनको सप्ताह पारायण सुन्नका लागि त्यस प्रदेशका र वर-पर गाउँका पनि एकत्र भए । तिनमा पंगु, मूर्ख र विद्वान् सबै प्रकारका व्यक्ति थिए । ती सबै आफ्नापना पाप नष्ट

सूर्यवाक्यं तन्मुक्तौ स्थापितं परम् ॥ गोकर्णः स्तंभनं चक्रे सूर्यवेगस्य वै तदा ॥ ३९ ॥ तुभ्यं नमो जगत्साक्षिन् ब्रूहि मे मुक्तिहेतुकम् ॥ तच्छ्रुत्वा दूरतः सूर्यः स्फुटमित्यभ्यभाषत ॥ ४० ॥ श्रीमद्भागवतान्मुक्तिः सप्ताहवाचनं कुरु ॥ इति सूर्यवचः सर्वैर्धर्मरूपं तु विश्रुतम् ॥ ४१ ॥ सर्वेऽब्रुवन्प्रयत्नेन कर्तव्यं सुकरं त्विदम् ॥ गोकर्णो निश्चयं कृत्वा वाचनार्थं प्रवर्तितः ॥ ४२ ॥ तत्र संश्रवणार्थाय देशग्रामाज्जना ययुः ॥ पङ्ग्वन्धवृद्धमन्दाश्च तेऽपि पापक्षयाय वै ॥ ४३ ॥ समाजस्तु महाञ्जातो देवविस्मयकारकः ॥ यदैवासनमास्थाय गोकर्णोऽकथयत्कथाम् ॥ ४४ ॥ स प्रेतोऽपि तदायातः स्थानं पश्यन्नितस्ततः ॥ सप्तग्रन्थियुतं तत्रापश्यत्कीचकमुच्छ्रितम् ॥ ४५ ॥ तन्मूलच्छिद्रमाविश्य श्रवणार्थं स्थितो ह्यसौ ॥ वातरूपी स्थितिं कर्तुमशक्तो वंशमाविशत् ॥ ४६ ॥ वैष्णवं ब्राह्मणं मुख्यं श्रोतारं परिकल्प्य सः ॥ प्रथमस्कन्धतः स्पष्टमाख्यानं धेनुजोऽकरोत् ॥ ४७ ॥ दिनान्ते रक्षिता गाथा तदा चित्रं बभूव ह ॥ वंशैकग्रन्थिभेदोऽभूत्सशब्दं पश्यतां सताम् ॥ ४८ ॥ द्वितीयेऽह्नि तथा सायं द्वितीयग्रन्थिभेदनम् ॥ तृतीयेऽह्नि तथा सायं तृतीयग्रन्थिभेदनम् ॥ ४९ ॥ एवं सप्तदिनेनैव सप्तग्रन्थिविभेदनम् ॥ कृत्वाऽपि द्वादशस्कन्धं श्रवणात्प्रेततां जहौ ॥ ५० ॥ दिव्य-

पार्नको लागि त्यस ज्ञान यज्ञमा उपस्थित भएका थिए ॥४३॥ त्यस बखत यति ठूलो हुल एकत्र भएको थियो–जसलाई देखेर देवताहरूलाई पनि विस्मय भयो । जब गोकर्ण आसनमा बसेर कथा भन्न लागे तब त्यो प्रेत पनि यता-उता बस्ने स्थान खोज्दै त्यहाँ आयो । त्यसले त्यहाँ सात गाँठा भएको बाँस गाडिएको देख्यो ॥४४॥४५॥ त्यही बाँसको तलको गाँठमा पसेर त्यो पनि कथा सुन्न बस्यो, किनकि त्यो सशरीर नभएर वायुरूप थियो । अतएव त्यो बाँसभित्र पसिसकेको थियो ॥४६॥ गोकर्णले एउटा वैष्णव ब्राह्मणलाई मुख्य श्रोता बनाएर प्रथम स्कन्ध बाट भागवतको सप्ताह थालेर ॥४७॥ सायंकालमा जब गोकर्णले प्रथम दिनको कथा समाप्त पारे तब एक विचित्र घटना घट्यो । त्यहाँ उपस्थित जनसमुदायले देख्दा-देख्दै त्यस बाँसको एउटा गाँठा पड्क्यो ॥४८॥ त्यसै गरी अर्को दिनको सायंकालमा दोस्रो र तेस्रो दिनको साँझ तेस्रो गाँठा पड्कियो ॥४९॥ त्यसैक्रमले सातौं दिन साँझ अन्तिम गाँठो पनि पड्कियो र बाह्रौं स्कन्ध श्रीमद्भागवतको कथा सुनेर त्यस प्रेतले आफ्नू प्रेत योनि त्यागिदियो ॥५०॥ अब त्यो दिव्यरूप धारण गरी, तुलसीको माला र पहेंलो वस्त्र लगाई, श्याम

स्वरूप धारण गरेर, मुकुट र कुण्डलले सुशोभित भई गोकर्णको सामुन्ने आयो ॥५१॥ त्यसले दाजूलाई दण्डवत् प्रणाम गरेर भन्यो—'तिमीले कृपा गरेर म यो सारो प्रेत-देहबाट आज मुक्त भएँ ॥५२॥ यो भागवतको कथा धन्य छ, जसले प्रेतको पीडा पनि नष्ट भएर जान्छ। यो सप्ताह पनि धन्य छ जुन सुन्नाले प्राणीलाई कृष्ण-लोक प्राप्त हुन्छ ॥५३॥ जुन बखत प्राणी सप्ताह सुन्न बस्तछ त्यस बखत संसारका सबै पाप यस निम्ति थर-थर काम्न थाल्छन्—कि यो कथा अहिल्यै हामीहरूको नाश गरिदिन्छ ॥५४॥ यसलाई सुन्नेहरूका आर्द्र, शुष्क, लघु, स्थूल एवं मन, वचन तथा कर्मले गरेका सबै प्रकारका पाप उसै गरी नष्ट हुन्छन् जसरी आगोले काठलाई जलाएर भस्म पारिदिन्छ ॥५५॥ यस भारत वर्षलाई देवसभामा ठूला-ठूला विद्वानहरूले भनिसकेका छन्—जो श्रीमद्भागवतको कथा सुन्दैनन् तिनको जन्म व्यर्थ छ ॥५६॥ जसले अज्ञानवश श्रीमद्भागवतको कथा सुनेन भने यो परिपुष्ट, बलवान तथा विनाशशील शरीरको रक्षा गरिरहनु व्यर्थ छ ॥५७॥ यस देहमा हाडहरूको खाँबो र नसाले बन्धन छन्। यसमाथि मासु र रगत लेपिएको छ। त्यसमाथि छालाले ढाकिएको

रूपधरो जातस्तुलसीदाममंडितः ॥ पीतवासा घनश्यामो मुकुटी कुंडलान्वितः ॥ ५१ ॥ ननाम भ्रातरं सद्यो गोकर्णमिति चाब्रवीत ॥ त्वयाऽहं मोचितो बंधो कृपया प्रेतकश्मलात् ॥५२॥ धन्या भागवती वार्ता प्रेतपीडाविनाशिनी ॥ सप्ताहोऽपि तथा धन्यः कृष्णलोकफलप्रदः ॥५३॥ कंपन्ते सर्वपापानि सप्ताहश्रवणे स्थिते ॥ अस्माकं प्रलयं सद्यः कथा चेयं करिष्यति ॥ ५४ ॥ आर्द्रं शुष्कं लघु स्थूलं वाङ्मनःकर्मभिः कृतम् ॥ श्रवणं विदहत्पापं पावकः समिधो यथा ॥ ५५ ॥ अस्मिन्वै भारते वर्षे सूरिभिर्देवसंसदि ॥ अकथाश्राविणां पुंसां निष्फलं जन्म कीर्तितम् ॥ ५६ ॥ किं मोहतो रक्षितेन सुपुष्टेन बलीयसा ॥ अध्रुवेण शरीरेण शुकशास्त्रकथां विना ॥ ५७ ॥ अस्थिस्तम्भं स्नायुबद्धं मांसशोणितलेपितम् ॥ चर्मावनद्धं दुर्गन्धपात्रं मूत्रपुरीषयोः ॥ ५८ ॥ जराशोकविपाकार्तं रोगमंदिरमातुरम् ॥ दुष्पूरं दुर्धरं दुष्टं सदोषं क्षणभंगुरम् ॥ ५९ ॥ कृमिविड्भस्मसंज्ञातं शरीरमिति वर्णितम् ॥ अस्थिरेण स्थिरं कर्म कुतोऽयं साधयेन्न हि ॥ ६० ॥ यत्प्रातः संस्कृतं चान्नं सायं तच्च विनश्यति ॥ तदीयरससंपुष्टे काये का नाम नित्यता ॥६१॥ सप्ताहश्रवणाल्लोके प्राप्यते निकटे हरिः ॥ अतो दोषनिवृत्यर्थमेतदेव हि साधनम् ॥६२॥ बुद्बुदा इव तोयेषु मशका इव जंतुषु ॥ जायन्ते मरणायैव कथाश्रवणवर्जिताः ॥६३॥ जडस्य शुष्कवंशस्य यत्र ग्रंथिविभेदनम् ॥ चित्रं किमु तदा चित्तग्रन्थिभेदः कथाश्रवात् ॥६४॥ भिद्यते

छ र यो मल-मूत्रको दुर्गन्ध-युक्त पात्र हो ॥५८॥ यो शरीर वृद्धावस्था र शोकले सदैव दुःखी रहन्छ। रोगहरूको त मन्दिर नै छ। यसमा सधैं अत्यास भरिइरहन्छ। यो कहिल्यै पूर्ण हुन सक्दैन। यसको ठूलो कष्टले सुरक्षा गरिन्छ। यो सदैव दूषित नै रहन्छ। यो दोषहरूले पूर्ण रहन्छ र क्षणमा नै नष्ट भएर जान्छ ॥५९॥ अन्त्यमा यो कीराफट्याङ्ग्राका पेटको आहारा बन्दछ अथवा डढेर खरानी हुन्छ। यो हो यस शरीरको स्थिति, दशा। यस अवस्थामा यस अनित्य शरीरले नित्य मुक्तिको निम्ति कर्म किन नगर्ने ॥६०॥ प्रातः जुन अन्न खाइन्छ, त्यो साँझमा नष्ट भइसक्दछ। अनि त्यही अन्नको रसले पुष्ट हुने यस अनित्य शरीरको स्थिरता कसरी हुन सक्दछ? ॥६१॥ सप्ताह श्रवण गर्नाले यस लोकमा नै भगवान् श्रोताको नजीकै आउनु हुन्छ। अतः दोषहरूको निवृत्तिका लागि यही सर्वोत्तम साधन छ ॥६२॥ जस्तै पानीहरूका बुदबुदा र फोका। जन्तुमा लामखुट्टे आदि मर्नको निम्ति नै उत्पन्न

भएका हुन् । त्यसैगरी भगवान्‌को कथा नसुन्ने नरि केवल मर्नकै निम्ति जन्म लिन्छन ॥६३॥ जब यो टाठा जड़ र सुकेको बाँसको गाँठो पड्कन सक्छ, तब सुधाले चित्तमा परेको संशयको गाँठोहरू पड्केर भाँचिनु के असम्भव छ ? ॥६४॥ सप्ताह सुधाले हृदयमा परेका गाँठाहरू आफैं खुल्दछन्, सबै प्रकारका शंका निवृत्त हुन्छन् र मनुष्यका सबै (अमत) कर्मद्वारा गरिएका पापहरू नष्ट भएर जान्छन् ॥६५॥ संसाररूपी हिलो पखाल्न यो यस कथारूपी तीर्थमा चित्त जसै बर्लन्छ, तसै मुक्ति प्राप्त भयो भन्ने जान्नु । यो पण्डितहरूको कथन हो ॥६६॥ त्यो यसरी भन्दै थियो कि एउटा दिव्य विमान त्यहाँ आएर उपस्थित भयो । त्यसमा वैकुण्ठधामका निवासी भक्तगण विराजमान थिए र त्यस विमानमा एक विशेष प्रकारको दीप्तिमण्डल उद्दीप्त भइरहेको थियो ॥६७॥ त्यहाँ उपस्थित सबैले हेर्दाहेर्दै धुन्धुकारी त्यस विमानमा गएर बस्यो । त्यसपछि गोकर्णले ती विमान वाहक भक्तहरूलाई भने—॥६८॥ हे भगवान्‌का भक्त हो ! यस स्थानमा पवित्र हृदयमा मेरा धेरै श्रोताहरू छन् । अनि के कारणले यस्तो भेद-भाव गरिएको हो अर्थात् यी सबैलाई त्यागेर तपाईंहरू केवल धुन्धुकारीलाई

हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः ॥ क्षीयन्ते चास्य कर्माणि सप्ताहश्रवणे कृते ॥ ६५ ॥ संसारकर्दमालेपप्रक्षालनपटीयसि ॥ कथातीर्थे स्थिते चित्ते मुक्तिरेव बुधैः स्मृता ॥ ६६ ॥ एवं ब्रुवति वै तस्मिन्विमानमगमत्तदा ॥ वैकुण्ठवासिभिर्युक्तं प्रस्फुरद्दीप्तिमंडलम् ॥ ६७ ॥ सर्वेषां पश्यतां भेजे विमानं धुन्धुलीसुतः ॥ विमाने वैष्णवान्वीक्ष्य गोकर्णो वाक्यमब्रवीत् ॥ ६८ ॥ गोकर्ण उवाच ॥ अत्रैव बहवः संति श्रोतारो मम निर्मलाः ॥ फलभेदः कुतो जातः प्रब्रुवन्तु हरिप्रियाः ॥ ६९ ॥ श्रवणं समभावेन सर्वेषामिह दृश्यते ॥ फलभेदः कुतो जातः प्रब्रुवन्तु हरिप्रियाः ॥ ७० ॥ हरिदासा ऊचुः ॥ श्रवणस्य विभेदेन फलभेदोऽपि संस्थितः ॥ श्रवणं तु कृतं सर्वैर्न तथा मननं कृतम् ॥ ७१ ॥ फलभेदस्ततो जातो भजनादपि मानद ॥ सप्तरात्रमुपोष्यैव प्रेतेन श्रवणं कृतम् ॥ ७२ ॥ मननादि तथा तेन स्थिरचित्ते कृतं भृशम् ॥ अदृढं च हतं ज्ञानं प्रमादेन हतं श्रुतम् ॥ ७३ ॥ संदिग्धो हि हतो मन्त्रो व्यग्रचित्तो हतो जपः ॥ अवैष्णवो हतो देशो हतं श्राद्धमपात्रकम् ॥७४॥ हतमश्रोत्रिये दानमनाचारहतं कुलम् ॥ विश्वासो गुरुवाक्येषु स्वस्मिन्दीनत्वभावना ॥ ७५ ॥ मनोदोषजयश्चैव कथायां निश्चला मतिः ॥ एवमादि कृतं चेत्स्यात्तदा वै श्रवणे फलम् ॥ ७६ ॥ पुनः श्रवांते सर्वेषां

नै किन विमानमा बसालेर लैजान खोज्नुहुन्छ ? कृपा गरेर तपाईंहरू मलाई यसको कारण भन्नुहवस् ॥६९॥ यहाँ बसेका सबैले समान भावले कथा सुने, तर फल-भेद किन गरिँदै छ ? तपाईंहरू मलाई यसको पनि कारण भन्नुहवस् ॥७०॥ ती भगवद्‌भक्तहरूले उत्तर दिए—कथा सबै श्रोताले सुने यसमा कुरामा शंका छैन, तर यी धुन्धुकारीको समान मनन कसैले गरेनन् ॥७१॥ यसैले यो फल-भेद गरिएको हो । हे मानद ! अर्को कुरा यसले भजन पनि असाधारण गरेको छ । सात दिनसम्म निराहार बसेर यस प्रेमले कथा सुन्यो ॥७२॥ चित्तस्थिर पारेर यसले त्यो सुनेको कथाको मनन पनि गरेको छ, शास्त्रको यस्तो कथन छ कि दृढ नपारेको ज्ञान, प्रमादले सुनेको कथा ॥७३॥ सन्दिग्ध मन्त्र, व्यग्र चित्तले गरिएको जप तथा वैष्णव-विहीन देशमा अपात्र द्वारा गरिएको श्राद्ध व्यर्थ हुन्छ । वेदाभ्यासले हीन विप्रलाई दिएको दान र अनाचारले युक्त वंश नष्ट भएर जान्छ । गुरुको वचनमा विश्वास, आफ्नो मनमा दीनताको भावना, मानसिक दोषहरूमा विजय र कथा सुनिरहेको वेलामा मनलाई एकाग्र राख्नु आदि नियम यदि ठीक छन् भने कथा सुन्नाले लाभ हुन्छ,

यदि चित्त चंचल छ भने कथा सुन्नाले केही लाभ हुँदैन* ॥ ७३–७६ ॥ स्थिर मनले कथा सुन्यौ भने अवश्य वैकुण्ठलोक प्राप्त गर्दछ । हे गोकर्ण ! तिमीलाई भगवान्‌ले अवश्य गोलोक प्रदान गर्नुहुनेछ ॥७७॥ यति भनेर ती सबै पार्षद वैकुण्ठधाम गए । श्रावण महीनामा गोकर्णले फेरि उसै गरी श्रीमद्भागवतको सप्ताह-पारायण गरे ॥७८॥ अनि सात दिनसम्म फेरि श्रोताहरूले सुने । हे नारद ! कथा समाप्त भएपछि के भयो, त्यो पनि सुन ॥७९॥ अनेक विमान र आफ्ना भक्तहरूका साथ भगवान् स्वयं त्यहाँ प्रकट हुनुभयो । उनी प्रकट हुनासाथ चारैतिरबाट जय-शब्द र नमः शब्द उच्चरित हुनलाग्यो ॥८०॥ भगवान्‌ले स्वयं हर्ष भएर आफ्नो पाञ्चजन्य शङ्ख बजाउनु भयो र गोकर्णलाई अंकमाल गरेर आफू समान तुल्याउनु भयो ॥८१॥ त्यहाँ उपस्थित सबै श्रोताहरूलाई भगवान्‌ले एकक्षणमै श्याम-स्वरूप, पीत कौशेय-वसन र किरीट-कुण्डलधारी तुल्याई आफू समान नै पार्नुभयो ॥८२॥ त्यस

वैकुण्ठे वसतिर्भुवम् ॥ गोकर्ण तव गोविन्दो गोलोकं दास्यति स्वयम् ॥ ७७ ॥ एवमुक्त्वा ययुः सर्वे वैकुंठं हरिकीर्तनाः ॥ श्रावणे मासि गोकर्णः कथामूचे तथा पुनः ॥ ७८ ॥ सप्तरात्रवतीं भूयः श्रवणं तैः कृतं पुनः ॥ कथासमाप्तौ यज्जातं श्रूयतां तच्च नारद ॥ ७९ ॥ विमानैः सह भक्तैश्च हरिराविर्बभूव ह ॥ जयशब्दो नमःशब्दस्तत्रासन्बहवस्तदा ॥८०॥ पाञ्चजन्यध्वनिं चक्रे हर्षात्तत्र स्वयं हरिः ॥ गोकर्णं तु समालिङ्ग्याकरोत्स्वसदृशं हरिः ॥८१॥ श्रोतृनन्यान्घनश्यामान्पीतकौशेयवाससः ॥ किरीटिनः कुंडलिनस्तथा चक्रे हरिः ॥ क्षणात् ॥८२॥ तद्ग्रामे ये स्थिता जीवा आश्वचांडालजातयः ॥ विमाने स्थापितास्तेऽपि गोकर्णकृपया तदा ॥ प्रेषिता हरिलोके ते यत्र गच्छन्ति योगिनः ॥ ८३ ॥ गोकर्णेन स गोपालो गोलोकं गोपवल्लभम् ॥ कथाश्रवणतः प्रीतो निर्ययौ भक्तवत्सलः ॥८४॥ अयोध्यावासिनः पूर्वं यथा रामेण संगताः ॥ तथा कृष्णेन ते नीता गोलोकं योगिदुर्लभम् ॥८५॥ यत्र सूर्यस्य सोमस्य सिद्धानां न गतिः कदा ॥ तं लोकं हि गतास्ते तु श्रीमद्भागवतश्रवात् ॥ ८६ ॥ ब्रूमोऽत्र ते किं फलवृन्दमुज्ज्वलं सप्ताहयज्ञेन कथासु संचितम् ॥ कर्णेन गोकर्णकथाक्षरो यैः पीतश्च ते गर्भगता न भूयः ॥८७॥ वाताम्बुपर्णाशनदेहशोषणैस्तपोभिरुग्रैश्चिर-

गाउँमा जो कुकुर तथा चाण्डाल आदि नीच प्रकृतिका जीव थिए, तिनलाई पनि भगवान्‌ले गोकर्णको द्वारा विमानमा चढाउनु भयो र प्रभुले आफ्नो त्यस दिव्यलोकमा पठाउनु भयो, जहाँ योगीजन जान्छन्, कथा सुन्नाले प्रसन्न गोपाल स्वयं नै गोकर्णलाई आफ्नो साथमा लिएर गोपहरूका प्रिय गोलोक गए ॥८३॥ जसरी त्रेतामा सबै अयोध्यावासी श्रीरामचन्द्रसित साकेतलोक गएका थिए, त्यसै गरी त्यस समय पनि त्यस गाउँका सबै व्यक्ति श्रीकृष्ण भगवान्‌सित योगीहरूको निम्ति पनि दुर्लभ गोलोकमा गए ॥८४॥८५॥ जुन लोकसम्म सूर्य-चन्द्रमा र सिद्ध-ज्ञानीजनको पनि गति पुग्दैन । भगवान्‌को कथा सुन्नाले ती सबै उसै दिव्यलोकमा प्राप्त भए ॥ ८६ ॥ यस सप्ताह यज्ञको दिव्य कथा सुन्नाले प्राप्त हुने फलहरूको म कहाँसम्म वर्णन गरूँ ! जसले आफ्नै कानले गोकर्णको कथा सुने, ती सबै व्यक्ति फेरि फर्कर गर्भमा आएनन् अर्थात् मुक्त भएर गए ॥८७॥ केवल

* उदाहरण—थोटा थियो पुत्र र त्यसकी स्त्री सुनिती । दुवैमा अनन्य स्नेह थियो । एक दिन पत्नी आफ्नो पतिलाई कथा सुनाउन लागी । उसले 'हाँ, हूँ' गर्दै सबै कथा आफ्नो कामसँग लाग्दै थियो । एक दिन पत्नीले सोधिन् भनी—'म कति प्रेमले गाथा भनिरहेकी छु, तिमिचाहिँ सुनिरहेका छैनौ !' पतिले भन्यो—'तिमी भन्दै गर । म काम पनि गर्दै रहन्छु र कथा पनि सुन्दछु !' अनि पत्नीले भनी—'हुइन गर्दा न सुनी तिमी ! मन चित्त तिमीसित बोरेरै छ । त्यसले काम गर वा मेरो कथा सुन । दुवै संगसँगै हुन सक्तैन !' यही कुरा यहाँ पनि छ, कि त भगवान्‌को कथा सुन वा विषयहरूको चिन्तन गर । दुवै कसरी हुन सक्छ !

पालमात्र खाएर देह सुकाउँदै कठोर तपस्या गरेर पुण्य संचय गर्ने तपस्वीहरू र योगीहरूलाई पनि जुन गति प्राप्त हुन्न, त्यो शुभगति केवल श्रीमद्भागवतको कथा सुन्नाले प्राप्त हुन्छ ॥८८॥ चित्रकूटमा शाण्डिल्य मुनीश्वर पनि ब्रह्मानन्दमा लीन भएर सदैव यस पवित्र इतिहासलाई पढिरहन्थे ॥८९॥ यो कथा अत्यन्त पवित्र छ। एकपल्ट पनि यसको श्रवण गर्नाले प्राणी आफ्ना पाप-समूहलाई भस्म पारिदिन्छ। यसको पाठ श्राद्धमा गरेदेखि पितृहरू तृप्त हुन्छन् र नित्य शास्त्रोसित पाठ गर्नेलाई सायुज्य मुक्ति मिल्दछ ॥९०॥

इति श्रीपद्मपुराणको उत्तरखण्डको श्रीमद्भागवत माहात्म्य भाषाटीकामा गोकर्णको उपाख्यान वर्णननामक पाँचौं अध्याय ॥ ५ ॥

सनकादि कुमार भन्दछन्—हे नारद ! अब म तिमीलाई सप्ताह श्रवण-विधि भन्दछु। यदि केही व्यक्ति श्रोताका सहायक हुन् र धन पनि छ भने सान्है राम्रो छ ॥१॥ श्रोताले ज्योतिषी डाकेर यत्नपूर्वक उत्तीचित सप्ताहको निश्चित मुहूर्त सोध्नु। विवाहमा जति धन खर्च हुन्छ, त्यतिको प्रबन्ध गर्नु ॥२॥ भाद्रपद, आश्विन, कार्तिक मार्गशीर्ष आषाढ र श्रावण यी ६ महीना

कालसंचितैः ॥ योगैश्च संयाति न तां गतिं वै सप्ताहगाथाश्रवणेन यांति ते ॥ ८८ ॥ इतिहासमिमं पुण्यं शाण्डिल्योऽपि मुनीश्वरः ॥ पठते चित्रकूटस्थो ब्रह्मानंदपरिप्लुतः ॥ ८९ ॥ आख्यानमेतत्परमं पवित्रं श्रुतं सकृद्वै विदहेदघौघम् ॥ श्राद्धे प्रयुक्तं पितृतृप्तिमावहेन्नित्यं सुपाठादपुनर्भवं च ॥ ९० ॥ इति श्रीपद्मपुराणे उत्तरखंडे भागवतमाहात्म्ये गोकर्णवर्णनं नाम पंचमोऽध्यायः ॥ ५ ॥

कुमारा ऊचुः ॥ अथ ते संप्रवक्ष्यामः सप्ताहश्रवणे विधिम् ॥ सहायैर्वसुभिश्चैव प्रायः साध्यो विधिः स्मृतः ॥१॥ दैवज्ञं तु समाहूय मुहूर्तं पृच्छ्य यत्नतः ॥ विवाहे यादृशं वित्तं तादृशं परिकल्पयेत् ॥२॥ नभस्य आश्विनोर्जौ च मार्गशीर्षः शुचिर्नभः ॥ एते मासाः कथारम्भे श्रोतॄणां मोक्षसूचकाः ॥३॥ मासानां विप्र हेयानि तानि त्याज्यानि सर्वथा ॥ सहायाश्चेतरे तत्र कर्तव्याः सोद्यमाश्च ये ॥ ४ ॥ देशे देशे तथा चेयं वार्ता प्रेष्या प्रयत्नतः ॥ भविष्यति कथा चात्र आगंतव्यं कुटुम्बिभिः ॥ ५ ॥ दूरे हरिकथाः केचिद्दूरे चाच्युतकीर्तनाः ॥ स्त्रियः शूद्रादयो ये च तेषां बोधो यतो भवेत् ॥६॥ देशे देशे विरक्ता ये वैष्णवाः कीर्तनोत्सुकाः ॥ तेष्वेव पत्रं प्रेष्यं च तल्लेखनमितीरितम् ॥७॥ सतां समाजो भविता सप्तरात्रं सुदुर्लभः ॥ अपूर्वरसरूपैव कथा चात्र भविष्यति ॥८॥ श्रीभागवतपीयूषपानाय रसलंपटाः ॥ भवंतश्च तथा शीघ्रमायान्तु प्रेमतत्पराः ॥९॥ नावकाशः कदाचिच्चेद्दिनमात्रं तथापि तु ॥ सर्वथाऽऽगमनं कार्यं क्षणोऽत्रैव सुदुर्लभः ॥ १० ॥ एवमाकारणं तेषां कर्तव्यं विनयेन च ॥ आगंतुकानां सर्वेषां वासस्थानानि कल्पयेत् ॥११॥ तीर्थे

कथा सुन्नेहरूलाई मोक्ष दिने सूचना दिन्छन्। भद्रा, व्यतीपात, दग्ध आदि योग यदि आइपर्दछ भने तिनलाई त्याग्नुपर्छ। यस कामको निम्ति सबै प्रकारले उत्तम दिन छान्नुपर्दछ। सप्ताह पाठको सूचना सर्वत्र पठाएर भन्न लाउनुपर्छ—अमुक स्थानमा श्रीमद्भागवतको कथा हुनेछ। तपाईं आफ्ना कुटुम्बसमेत आउनु होला। जो मानिस भगवान्‌को कथा र नारायणका गुणगानबाट टाढा बस्तछन्, त्यस्ता सबै व्यक्तिलाई र शूद्रादिलाई पनि सुनाउन्, जसले तिनलाई पनि ज्ञान प्राप्त होस्। देश-विदेशमा जो विरक्त र वैष्णव भगवत्कीर्तनका प्रेमी हुन् तिनलाई यस्तो चिठी पठाउन्—॥३–७॥ अमुक स्थानमा सज्जनहरूको दुर्लभ समूह एकत्र हुनेछ र अपूर्व रसमयी भगवत्कथा हुन्छ ॥८॥ श्रीमद्भागवतरूपी अमृतपान का लोभी सज्जन पनि शीघ्र त्यहाँ पाल्नु होला।

॥९॥ यदि तपाईंलाई सातै दिनसम्म सुन्ने अवकाश छैनभने केवल एक दिनको निम्ति पनि पाल्नुहवस्, तर आउनुहवस् अवश्य, किनकि यस्तो मौका कष्टले नै प्राप्त हुन्छ ॥१०॥ नम्र विनयपूर्वक ती सज्जनहरूलाई निम्ता दिनू । आफूकहाँ आएका पाहुनाहरूलाई बस्ने स्थान ठिक पारिदिनू ॥११॥ कुनै तीर्थस्थान होस् अथवा घर होस् जहाँ प्रशस्त स्थान पाइयोस्, त्यहाँ विस्तृत स्थानलाई कथाको निम्ति निश्चय गर्नू ॥१२॥ त्यस ठाउँलाई पवित्र पारी, कुचो आदिले बढारेर सफा पारी, गोबर वा माटोले लिपनलगाई गेरू-चून आदिले अलंकृत पार्नू । घरका अन्य सामान कथास्थलबाट हटाएर घरको यौटा कुनामा राखिदिनू ॥१३॥ पाँच दिन अगावै कथास्थानको निम्ति आसन, बसान ठिक्क पार्नू । जहाँ कथा हुने हो, त्यहाँ यौटा अग्लो मण्डप तयार पार्न लगाउनू र त्यसलाई केराको थाम आदिले अलंकृत पार्नू ॥१४॥ त्यसलाई फल-फूल र पातले सजाई चारैतिरबाट तम्बू-कनातले बार्नू ॥१५॥ वेदीको माथिल्लो भागमा सातओटा विस्तृत मंच बनाएर तिनमा ब्राह्मणहरूलाई र साधुहरूलाई सादर बसाल्नू ॥१६॥ पहिले आउने साधु ब्राह्मणहरूका लागि आसनको प्रबन्ध गरेर कथावाचक व्यासका

यापि वने वापि गृहे वा श्रवणं मतम् ॥ विशाला वसुधा यत्र कर्तव्यं तत्कथास्थलम् ॥ १२ ॥ शोधनं मार्जनं भूमेर्लेपनं धातुमंडलम् ॥ गृहोपस्कर-मुद्धृत्य गृहकोणे निवेशयेत् ॥१३॥ अर्वाक्पंचाहतो यत्नादास्तीर्णानि प्रमेलयेत् ॥ कर्तव्यो मंडपः प्रोच्चैः कदलीखंडमंडितः ॥ १४ ॥ फलपुष्पदलै-र्विष्वग्वितानेन विराजितः ॥ चतुर्दिक्षु ध्वजारोपो बहुसंपद्विराजितः ॥ १५ ॥ ऊर्ध्वं सप्तैव लोकाश्च कल्पनीयाः सविस्तरम् ॥ तेषु विप्रा विरक्ताश्च स्थापनीयाः प्रबोध्य च ॥ १६ ॥ पूर्वं तेषामासनानि कर्तव्यानि यथोत्तरम् ॥ वक्तुश्चापि तदा दिव्यमासनं परिकल्पयेत् ॥ १७ ॥ उदङ्मुखो भवेद्वक्ता श्रोता वै प्राङ्मुखस्तदा ॥ प्राङ्मुखश्चेद्भवेद्वक्ता श्रोता चोदङ्मुखस्तदा ॥ १८ ॥ अथवा पूर्वदिग्ज्ञेया पूज्यपूजकमध्यतः ॥ श्रोतॄणामागमे प्रोक्ता देश-कालादिकोविदैः ॥ १९ ॥ विरक्तो वैष्णवो विप्रो वेदशास्त्रविशुद्धिकृत् । दृष्टांतकुशलो धीरो वक्ता कार्योऽतिनिस्पृहः ॥ २० ॥ अनेकधर्मविभ्रांताः स्त्रैणाः पाखंडवादिनः ॥ शुकशास्त्रकथोच्चारे त्याज्यास्ते यदि पंडिताः ॥ २१ ॥ वक्तुः पार्श्वे सहायार्थमन्यः स्थाप्यस्तथाविधः ॥ पण्डितः संशयच्छेत्ता लोकबोधनतत्परः ॥ २२ ॥ वक्त्रा क्षौरं प्रकर्तव्यं दिनादर्वाग्व्रताप्तये ॥ अरुणोदयेऽसौ निर्वर्त्य शौचं स्नानं समाचरेत् ॥ २३ ॥ नित्यं संक्षेपतः कृत्वा संध्याद्यं स्वं प्रयत्नतः ॥ कथाविघ्नविघाताय गणनाथं प्रपूजयेत् ॥ २४ ॥ पितॄन्संतर्प्य शुद्ध्यर्थं प्रायश्चित्तं समाचरेत् ॥ मंडपं च प्रकर्तव्यं तत्र स्थाप्यो

निम्ति दिव्य आसनको निर्माण गरोस् ॥१७॥ वक्ता उत्तर-मुख र श्रोता पूर्वमुख गरेर बसुन अथवा वक्ता पूर्वमुख र श्रोता उत्तर-मुख बसुन ॥१८॥ यी दुवै पूज्य-पूजकको माझमा पूर्व दिशा मान्नु पनि कालका अभिज्ञ पण्डितहरूले शास्त्रमा बताएका छन् ॥१९॥ वक्ता यस्तो हुनुपर्दछ—जो त्यागी, वैष्णव, ब्राह्मण, वेदशास्त्रको ज्ञाता, दृष्टान्त दिनमा पाटो, धैर्यशाली र निस्पृह होस् ॥२०॥ जो अनेक धर्महरूमा भ्रान्तबुद्धि भएका हुन, जो परस्त्रीगामी र पाखण्डी हुन, यदि ती विद्वान् भए पनि शुक-शास्त्रको कथा भन्ने अधिकारी हुन सक्दैनन् ॥२१॥ वक्ताको नजीक सहायकको निम्ति वक्ताजस्तै यौटा विद्वान् अर्को बसाल्नु, जो संशय-निवारण गर्न योग्य हुन र सबैलाई राम्ररी बुझाउन सकुन् ॥ २२ ॥ वक्ता कथा प्रारम्भ गर्ने दिन भन्दा एक दिन अगाडि नै कपाल खौराउन र प्रतिदिन अरुणोदय भन्दा पहिले नै शौचादिबाट निवृत्त भएर स्नान गरुन् ॥२३॥ प्रतिदिन संक्षिप्त संध्या र नित्यकर्म गरिसकेर

कथाका विघ्नबाधाहरू हटाउनका लागि गणेशजीको पूजा गरून् ॥२४॥ प्रतिदिन पितृहरूको तर्पण गरेर शुद्धिका लागि प्रायश्चित्त गरोस् । कथा-स्थानमा नै राम्रो मण्डप बनाउन्, त्यसको माझमा भगवान् श्रीकृष्णको मूर्ति थाप्नू ॥२५॥ वैदिक र पौराणिक मन्त्रहरूले भगवानको पूजा र प्रदक्षिणा, एवं स्तुति गरोस् ॥२६॥ अनि प्रार्थना गरून्—हे करुणानिधे ! यस संसार-सागरमा डुबेको म दुःखीको हजुर उद्धार गर्नुहवस् । कर्मरूपी ग्राहले मेरो सारा शरीर आबद्ध गरेको छ, मलाई यस संसाररूपी सागरबाट निकाल्नोस् ॥२७॥ त्यसपछि प्रयत्नपूर्वक श्रीमद्भागवतको पनि पूजा गरोस् र विधिविधानले धूप-दीप प्रदान गरोस् ॥२८॥ अनि सामुन्ने श्रीफल राखेर नमस्कार गरी प्रसन्न चित्तले स्तुति गरोस् ॥२९॥ यो श्रीमद्भागवत प्रत्यक्ष श्रीकृष्ण नै हो । हे नाथ ! मैले भवसागरबाट मुक्ति पाउनका लागि नै हजुरको शरण परेको हुँ ॥३०॥ हे केशव ! मेरो यो मनोरथ हजुर निर्विघ्नभावले सर्वथा सफल पार्नुहोला, किनकि म हजुरको दास हुँ ॥३१॥ यसरी दीनतापूर्ण विनय गरी वक्तालाई वस्त्र र आभूषणादिले अलंकृत गरेर पूजन र स्तुति गर्दै भनोस्– ॥३२॥ हे शुकरूप ! ज्ञानदाता ! तथा

हरिस्तथा ॥ २५ ॥ कृष्णमुद्दिश्य मंत्रेण चरेत्पूजाविधिं क्रमात् ॥ प्रदक्षिणनमस्कारान्पूजांते स्तुतिमाचरेत् ॥ २६ ॥ संसारसागरे मग्नं दीनं मां करुणानिधे ॥ कर्ममोहगृहीतांगं मामुद्धर भवार्णवात् ॥ २७ ॥ श्रीमद्भागवतस्यापि ततः पूजा प्रयत्नतः ॥ कर्तव्या विधिना प्रीत्या धूपदीपसमन्विता ॥२८॥ ततस्तु श्रीफलं धृत्वा नमस्कारं समाचरेत् ॥ स्तुतिः प्रसन्नचित्तेन कर्तव्या केवलं तदा ॥२९॥ श्रीमद्भागवताख्योऽयं प्रत्यक्षः कृष्ण एव हि ॥ स्वीकृतोऽसि मया नाथ मुक्त्यर्थं भवसागरे ॥३०॥ मनोरथो मदीयोऽयं सफलः सर्वथा त्वया ॥ निर्विघ्नेनैव कर्तव्यो दासोऽहं तव केशव ॥३१॥ एवं दीनवचः प्रोक्त्वा वक्तारं चाथ पूजयेत् ॥ संभूष्य वस्त्रभूषाभिः पूजांते तं च संस्तवेत् ॥३२॥ शुकरूप प्रबोधज्ञ सर्वशास्त्रविशारद ॥ एतत्कथाप्रकाशेन मदज्ञानं विनाशय ॥ ३३ ॥ तदग्रे नियमः पश्चात्कर्तव्यः श्रेयसे मुदा ॥ सप्तरात्रं यथाशक्त्या धारणीयः स एव हि ॥ ३४ ॥ वरणं पंचविप्राणां कथाभंगनिवृत्तये ॥ कर्तव्यस्तैर्हरेर्जापो द्वादशाक्षरविद्यया ॥ ३५ ॥ ब्राह्मणान्वैष्णवांश्चान्यांस्तथा कीर्तनकारिणः ॥ नत्वा संपूज्य दत्ताशः स्वयमासनमाविशेत् ॥ ३६ ॥ लोकवित्तधनागारपुत्रचिन्तां व्युदस्य च ॥ कथाचित्तः शुद्धमतिः स लभेत्फलमुत्तमम् ॥ ३७ ॥ आसूर्योदयमारभ्य सार्धत्रिप्रहरांतकम् ॥ वाचनीया कथा सम्यग्धीरकंठं सुधीमता ॥ ३८ ॥ कथाविरामः कर्तव्यो मध्याह्ने घटिकाद्वयम् ॥ तत्कथामनुकार्यं वै कीर्तनं वैष्णवैस्तदा

सबै शास्त्रमा विशारद ! यो कथा भनेर हजुर मेरो अज्ञान नाश गर्नुहवस् ॥३३॥ यसपछि आफ्नो कल्याणार्थ वक्ताको सामुन्ने सप्ताहयज्ञको व्रत लेओस् र सात दिनसम्म यथाशक्ति त्यस व्रतको पालन गरोस् ॥३४॥ कथामा कुनै प्रकारको विघ्न-बाधा आउन नपाओस्, यसको निम्ति ब्राह्मण-वरण गरोस् । ती ब्राह्मण 'ॐ नमो भगवते वासुदेवाय' यस द्वादशाक्षर मन्त्रको जप गरून् ॥३५॥ ब्राह्मण, वैष्णवहरू तथा भगवन्नाम-कीर्तन गर्नेहरूलाई नमस्कार र पूजन गरोस् अनि उनले आज्ञा दिएपछि आसनमा बसोस् ॥३६॥ जो मनुष्य कथा सुन्दा स्त्री, पुत्र, धन र गृहस्थी सम्बन्धी कुनै पनि कुराविर चिन्ता, हटिदँ केवल कथामा मात्र मन लगाई शुद्ध मनले कथा सुन्दछ, त्यसलाई उत्तम फल मिल्दछ ॥३७॥ सूर्योदयदेखी साढे तीन प्रहरसम्म बुद्धिमान वक्ता मन्द स्वरले राम्रोसित कथा भनुन ॥३८॥ मध्याह्नमा केवल दुइ घडी विश्राम गरोस् र वक्ताले जुन कथा भने—कीर्तन गर्ने वैष्णवजन त्यसैको अनुसरण

गर्दै कीर्तन गरून् ॥३९॥ श्रोताले मल-मूत्रमा काबु राखेर अल्प आहार गरोस्। दिन-रातमा केवल एक छाक खाओस् ॥४०॥ यदि सामर्थ्य छ भने सात दिनसम्म फलाहार [illegible] गरेर अथवा दूध-दही-घिउ मात्र खाएर आनन्दपूर्वक कथा सुनोस् ॥४१॥ यस्तो हुन सक्तैन भने फलाहार गरेर अथवा एक छाक हविष्य खाएर कथा सुनून्। तात्पर्य जे गर्दा कुनै प्रकारको कष्ट हुँदैन, त्यही नियम बनाउन् ॥ ४२ ॥ उत्तम त यो नै हुन्छ कि भोजन गरेर कथा सुनोस्। यदि उपवासले कथामा विघ्न पर्ने सम्भावना छ भने उपवास गर्नु ठीक छैन ॥ ४३ ॥ हे नारद ! अब तिमी कथा सुन्नेहरूको नियम सुन—जसले वैष्णव दीक्षा लिएको छैन, त्यस्ता व्यक्तिलाई कथा सुन्ने अधिकार छैन ॥ ४४ ॥ आफ्ना समाप्तिका बेलामा ब्रह्मचर्यले रहोस्, खाटमा नसुतोस्, पत्तलमा भोजन गरेर प्रतिदिन जब कथा समाप्त हुन्छ, अनिमात्र भोजन गरोस् ॥ ४५ ॥ कथा-व्रतीले दाल, मधु, तेल तथा [illegible] अन्न

॥ ३९ ॥ मलमूत्रजयार्थं हि लघ्वाहारः सुखावहः ॥ हविष्यान्नेन कर्तव्यो ह्येकवारं कथार्थिना ॥ ४० ॥ उपोष्य सप्तरात्रं वै शक्तिश्चेच्छृणुयात्तदा ॥ घृतपानं पयःपानं कृत्वा वै शृणुयात्सुखम् ॥ ४१ ॥ फलाहारेण वा श्राव्यमेकभक्तेन वा पुनः ॥ सुखसाध्यं भवेद्यत्तु कर्तव्यं श्रवणाय तत् ॥ ४२ ॥ भोजनं तु वरं मन्ये कथाश्रवणकारकम् ॥ नोपवासो वरः प्रोक्तः कथाविघ्नकरो यदि ॥ ४३ ॥ सप्ताहव्रतिनां पुंसां नियमाञ्छृणु नारद ॥ विष्णुदीक्षाविहीनानां नाधिकारः कथाश्रवे ॥ ४४ ॥ ब्रह्मचर्यमधःसुप्तिः पत्रावल्यां च भोजनम् ॥ कथासमाप्तौ भुक्तिं च कुर्यान्नित्यं कथाव्रती ॥ ४५ ॥ द्विदलं मधु तैलं च गरिष्ठान्नं तथैव च ॥ भावदुष्टं पर्युषितं जह्यान्नित्यं कथाव्रती ॥ ४६ ॥ कामं क्रोधं मदं मानं मत्सरं लोभमेव च ॥ दंभं मोहं तथा द्वेषं दूरयेच्च कथाव्रती ॥ ४७ ॥ वेदवैष्णवविप्राणां गुरुगोव्रतिनां तथा ॥ स्त्रीराजमहतां निंदां वर्जयेद्यः कथाव्रती ॥ ४८ ॥ पलांडुं गृञ्जनं क्षौद्रं मसूरान्नं च नालिकाम् ॥ हरेरनर्पितं चान्यन्निषिद्धं वर्जयेद्व्रती ॥ ४९ ॥ रजस्वलाऽन्त्यजम्लेच्छपतितव्रात्यकैस्तथा ॥ द्विजद्विड्वेदबाह्यैश्च न वदेद्यः कथाव्रती ॥ ५० ॥ सत्यं शौचं दयां मौनमार्जवं विनयं तथा ॥ उदारमानसं तद्वदेवं कुर्यात्कथाव्रती ॥ ५१ ॥ दरिद्रश्च क्षयी रोगी निर्भाग्यः पापकर्मवान् ॥ अनपत्यो मोक्षकामः शृणुयाच्च कथामिमाम् ॥ ५२ ॥ अपुष्पा काकवन्ध्या च वन्ध्या या च मृतार्भका ॥ स्रवद्गर्भा च या नारी तया श्राव्या प्रयत्नतः ॥ ५३ ॥ एतेषु विधिना श्रावे तदक्षय्यतरं भवेत् ॥ अत्युत्तमा कथा दिव्या कोटियज्ञफलप्रदा ॥ ५४ ॥ एवं कृत्वा व्रतविधिम्-

नखान् र यस्तो वस्तु पनि खान हुँदैन जो भावदूषित र जूठो होस्। कथाको व्रतीले काम, क्रोध, मद, मान, मत्सर, लोभ, दम्भ, मोह तथा द्वेषबाट आफूलाई पर राखोस् ॥४६॥४७॥ कथामा व्रतीले वेद, वैष्णव, गुरु, स्त्री, राजा, गो-सेवक र महात्माहरूको निन्दा नगरून् ॥४८॥ लसुन, प्याज, गाजर, शलगम, मसुरो आदि निषिद्ध अन्न तथा यस्तो कुनै वस्तु—जुन भगवान्लाई अर्पण गरिएको छैन, नखान्, ॥४९॥ रजस्वला नारी, म्लेच्छ, पतित, अधम, ब्राह्मण-द्रोही र वेद विहित नियमहरू नमान्ने यस्तासित नबोल्न् ॥५०॥ व्रती—सत्य, शुचिता, दया, मौन, कोमलता आदि असल गुणहरूको पालन गरी आफ्नो हृदयलाई उदार खुल्याई राखोस् ॥५१॥ कामी, रोगी, दरिद्र, अभागी, पापी, अपुतो र मोक्ष [illegible] अभिलाषा राख्ने प्राणी यो कथा अवश्य सुनुन् ॥ ५२ ॥ अपुष्पा र मासिक स्राव नहुने स्त्री, वन्ध्या, काकवन्ध्या ( एउटै सन्तान हुने ), जसका बालक जन्मदै मर्दै गर्छन् ( मृतवत्सा )

तथा जसको महरहन्छ गर्भपात ( स्रवद्गर्भा ) यस्ता स्त्री यस कथालाई अवश्य सुनुन् ॥५३॥ जो यस कथालाई सुन्दछन् भने तिनलाई अवश्य फल प्राप्त हुन्छ, किनभने यो कथा अत्यन्त उत्तम, दिव्य र कोटियौं यज्ञको फल दिने मानिएको छ ॥ ५४ ॥ उच्चकोटिको फलाभिलाषी-यस कथाको त्यसै गरी उद्यापन गरोस् जसरी श्रीकृष्ण जन्माष्टमी व्रतको उद्यापन गरिन्छ ॥५५॥ दरिद्र र भगवद्भक्तका लागि उद्यापन गर्ने आवश्यकता छैन, किनभने भगवान्‌का भक्त त कथा सुन्दाले नै पवित्र होइजान्छन् र तिनलाई अरु कुनै प्रकारका फलको अभिलाषा रहन्न ॥ ५६ ॥ यसरी जब त्यो सप्ताह-यज्ञ समाप्त हुन्छ, तब सबै श्रोता भक्तिपूर्वक श्रीमद्भागवतको पुस्तक तथा वक्ता दुबैको पूजा गरुन् ॥ ५७ ॥ पूजा सकेपछि वक्ताले सबै श्रोतालाई प्रसाद र तुलसीको माला प्रदान गरुन् । त्यसपछि कीर्तन गर्नेहरू सबै मृदङ्ग आदि बजाउँदै कीर्तन गरुन् ॥ ५८ ॥ सबै जना एक स्वरले जय-शब्द तथा नमः-शब्द उच्चारण गरुन् र शङ्ख बजाउन् । त्यहाँ आएका ब्राह्मणहरू र याचकहरूलाई यजमान धन र वस्त्र बाँडुन् । श्रोता यदि विरक्त छ भने

द्यापनमथाचरेत् ॥ जन्माष्टमीव्रतमिव कर्तव्यं फलकांक्षिभिः ॥५५॥ अकिंचनेषु भक्तेषु प्रायो नोद्यापनग्रहः ॥ श्रवणेनैव पूतास्ते निष्कामा वैष्णवा यतः ॥ ५६ ॥ एवं नगाहयज्ञेऽस्मिन् समाप्ते श्रोतृभिस्तदा ॥ पुस्तकस्य च वक्तुश्च पूजा कार्याऽतिभक्तितः ॥५७॥ प्रसादतुलसीमाला श्रोतृभ्यश्चाथ दीयताम् ॥ मृदंगतालललितं कर्तव्यं कीर्तनं ततः ॥५८॥ जयशब्दं नमःशब्दं शङ्खशब्दं च कारयेत् ॥ विप्रेभ्यो याचकेभ्यश्च वित्तमन्नं च दीयताम् ॥५९॥ विरक्तश्चेद्भवेच्छ्रोता गीता वाच्याऽपरेऽहनि ॥ गृहस्थश्चेत्तदा होमः कर्तव्यः कर्मशान्तये ॥६०॥ प्रतिश्लोकं तु जुहुयाद्विधिना दशमस्य च ॥ पायसं मधु सर्पिश्च तिलान्नादिकसंयुतम् ॥ ६१ ॥ अथवा हवनं कुर्याद्गायत्र्या सुसमाहितः ॥ तन्मयत्वात्पुराणस्य परमस्य च तत्त्वतः ॥ ६२ ॥ होमाशक्तौ बुधो होम्यं दद्यात्तत्फलसिद्धये ॥ नानाच्छिद्रनिरोधार्थं न्यूनताधिकताऽन्ययोः ॥ ६३ ॥ दोषयोः प्रशमार्थं च पठेन्नामसहस्रकम् ॥ तेन स्यात्सफलं सर्वं नास्त्यस्मादधिकं यतः ॥ ६४ ॥ द्वादश ब्राह्मणान्पश्चाद्भोजयेन्मधुपायसैः ॥ दद्यात्सुवर्णं धेनुं च व्रतपूर्णत्वहेतवे ॥ ६५ ॥ शक्तौ पलत्रयमितं स्वर्णसिंहं विधाय च ॥ तत्रास्य पुस्तकं स्थाप्यं लिखितं ललिताक्षरम् ॥ ६६ ॥ संपूज्यावाहनाद्यैस्तदुपचारैः सदक्षिणम् ॥ वस्त्रभूषण-

कथा सकिएको भोलिपल्ट गीता पाठ गरुन्, गृहस्थ भए कर्मको शान्तिका लागि हवन गरुन् ॥५९॥६०॥ दशमस्कन्धको प्रत्येक श्लोकको उच्चारण गर्दै विधिवत् हवन गरुन् । मह, पायस, घिउ र तिल-जौ आदि अन्न हवन-सामग्रीमा हुनुपर्दछ ॥ ६१ ॥ यदि दशमस्कन्धका श्लोकले गर्न असमर्थ छ भने मनलाई राम्ररी सावधान पारेर गायत्री मन्त्रले नै हवन गरोस् किन भने भागवत गायत्री-मन्त्रमय छ ॥६२॥ श्रोता यदि हवन गर्न समर्थ छैन भने हवन सामग्री कुनै ब्राह्मणलाई दान गरेर देओस् । यस यज्ञमा अज्ञानवश भएका गरिएका त्रुटिहरूलाई निवारण गर्न र न्यूनातिरिक्त पूर्ति एवं दोषहरू शान्त पार्नका लागि विष्णुसहस्रनामको पाठ गरोस् । यसकै यज्ञसम्बन्धी सबै कार्य सफल हुन्छन् किनकि विष्णुसहस्रनाम भन्दा उत्तम कुनै वस्तु छैन ॥६३॥६४॥ यति गरिसके पछि बाह्र जना ब्राह्मणहरूलाई मह र पायस खुवाउनु र व्रत-पूर्तिको निमित्त सुन र गाई दान दिनू ॥६५॥ यदि शक्ति छ भने तीन पल सुनको सिंहासन बनाउन लगाई त्यसमा राम्रा अक्षरमा लेखिएको वा छापिएको भागवतको पुस्तक राखोस् ॥६६॥ आवाहन आदिको विधान गरेर अनेक उपचारले पूजन गरोस् । अनि संपत-

चित्तले आचार्यलाई वस्त्र, आभूषण र चन्दन आदिले पूजा गरी तिनलाई त्यो पुस्तक र सुनको सिंहासन दान गरेर देओस् । यस्तो गर्ने प्राणी संसारका सबै बन्धनबाट मुक्त हुन्छ । यस्तो गरेर सुन्नाले नै श्रीमद्भागवत फलदायक हुन्छ र श्रोतालाई धर्म, अर्थ, काम र मोक्ष यी चारै पदार्थ प्राप्त हुन्छन् । यसमा कुनै प्रकारको पनि शंका छैन ॥ ६७–६९ ॥ सनकादि कुमारहरूले भने—यसरी मैले तिमीलाई श्रीमद्भागवतको श्रवणविधि सुनाएँ । एक्लो भागवत द्वारा नै भुक्ति र मुक्ति दुवै प्राप्त हुन्छन् ॥ ७० ॥ सूतजी भन्दछन्—ती महात्माहरूले यस प्रकार महात्म्यको वर्णन गरेपछि श्रीमद्भागवतको त्यो कथा भन्न प्रारम्भ गरे, जुन सप्ताह सुन्नेहरूको सबै पाप हरण गर्ने, पवित्र तथा भुक्ति-मुक्ति प्रदान गर्नेवाला छ । त्यसपछि ती सबै व्यक्तिले पुरुषोत्तम श्रीकृष्ण भगवान्‌को स्तुति गरे ॥ ७१ ॥ ७२ ॥ कथा समाप्त भएपछि, भक्ति, ज्ञान तथा वैराग्य वृद्धावस्था त्यागेर युवा भए । ती शरीरले पनि हृष्ट-पुष्ट भएका थिए, त्यसैले ती तीनै जना सबैलाई राम्रा लाग्नथाले ॥ ७३ ॥ नारदजी पनि आफ्नो मनोरथ सिद्ध भएको देखेर प्रसन्न भए । तिनका अङ्ग-प्रत्यङ्ग

गंधाद्यैः पूजिताय यतात्मने ॥ ६७ ॥ आचार्याय सुधीर्दत्त्वा मुक्तः स्याद्भवबन्धनैः ॥ एवं कृते विधाने च सर्वपापनिवारणे ॥ ६८ ॥ फलदं स्यात्पुराणं तु श्रीमद्भागवतं शुभम् ॥ धर्मकामार्थमोक्षाणां साधनं स्यान्न संशयः ॥ ६९ ॥ कुमारा ऊचुः ॥ इति ते कथितं सर्वं किं भूयः श्रोतुमिच्छसि ॥ श्रीमद्भागवतेनैव भुक्तिमुक्ति करे स्थिते ॥७०॥ सूत उवाच ॥ इत्युक्त्वा ते महात्मानः प्रोचुर्भागवतीं कथाम् ॥ सर्वपापहरां पुण्यां भुक्तिमुक्तिप्रदायिनीम् ॥ ७१ ॥ शृण्वतां सर्वभूतानां सप्ताहं नियतात्मनाम् ॥ यथाविधि ततो देवं तुष्टुवुः पुरुषोत्तमम् ॥ ७२ ॥ तदंते ज्ञानवैराग्यभक्तीनां पुष्टता परा ॥ तारुण्यं परमं चाभूत्सर्वभूतमनोहरम् ॥७३॥ नारदश्च कृतार्थोऽभूत्सिद्धे स्वीये मनोरथे ॥ पुलकीकृतसर्वाङ्गः परमानंदसम्भृतः ॥७४॥ एवं कथां समाकर्ण्य नारदो भगवत्प्रियः ॥ प्रेमगद्गदया वाचा तानुवाच कृताञ्जलिः ॥ ७५ ॥ नारद उवाच ॥ धन्योऽस्म्यनुगृहीतोस्मि भवद्भिः करुणापरैः ॥ अद्य मे भगवाँल्लब्धः सर्वपापहरो हरिः ॥ ७६ ॥ श्रवणं सर्वधर्मेभ्यो वरं मन्ये तपोधनाः ॥ वैकुंठस्थो यतः कृष्णः श्रवणाद्यस्य लभ्यते ॥ ७७ ॥ सूत उवाच ॥ एवं ब्रुवति वै तत्र नारदे वैष्णवोत्तमे ॥ परिभ्रमन्समायातः शुको योगेश्वरस्तदा ॥७८॥ तत्रायर्यो षोडशवार्षिकस्तदा व्यासात्मजो ज्ञानमहाब्धिचंद्रमाः ॥ कथावसाने निजलाभपूर्णः प्रेम्णा पठन् भागवतं शनैः शनैः ॥७९॥ दृष्ट्वा सदस्याः परमोरुतेजसं सद्यः समुत्थाय ददुर्महासनम् ॥ प्रीत्या

पुलकित भए र तिनलाई अपार आनन्द प्राप्त भयो । भगवान्‌का अद्वितीय भक्त नारद त्यो कथा सुनेर परम आनन्दित भए र प्रेमले गद्गद् वाणीमा हात जोरेर यसरी स्तुति गर्नथाले-'म धन्य छु ! दयालु महानुभावहरूले मप्रति ठूलो कृपा गर्नुभयो । आज सबै पाप हरण गर्ने साक्षात् विष्णु भगवान् नै मलाई प्राप्त हुनुभयो ॥७४–७६॥ तपोधन हो ! म त कथा-श्रवणलाई सबै धर्महरूभन्दा ठूलो मान्न लागिसकें, किन भने कथा-श्रवणले वैकुण्ठ निवासी श्रीकृष्ण भगवान् प्राप्त हुनुहुन्छ ॥७७॥ सूतजीले भने—वैष्णव-श्रेष्ठ नारद जब यस्तो स्तुति गर्दै थिए त्यसै बखत योगेश्वर शुकदेव यता-उता डुल्दै त्यहाँ आइपुगे॥७८॥ शुक-मुनि सोह्रवर्षको अवस्थाका बालक र ज्ञानरूपीमहासमुद्रका चन्द्रमाझैं थिए । ती कथा-समाप्तिलाई आफ्नो ठूलो लाभ ठानेर मन्दस्वरले बिस्तार-बिस्तार भागवत पाठ गरिरहेका थिए ॥ ७९ ॥ ती परम तेजस्वी मुनिलाई देख्नासाथ सबै सदस्य जुरुक्क उठेर तिनले मुनिलाई ठूलो उच्च

आसन प्रदान गरे । नारदजीले आनन्दपूर्वक उनको पूजा गरे । आसनमा बसेपछि शुकदेवले भन्नुभयो—हे सज्जन हो ! यहाँहरू मेरो पवित्र वाणी सुन्नुहवस् । हे रसिक साधुजन हो ! वेदरूपी कल्पवृक्षबाट चुहेको, शुकको मुखबाट निस्केको, अमृत-रसले मुछिएको र रसको भण्डारस्वरूप यो श्रीमद्भागवतरूपी फलको रस यहाँहरू बारम्बार पान गर्नुहोस् ॥८०॥ राग-द्वेष-विहीन सज्जनहरूको निम्ति भागवत प्रपञ्च-शून्य उत्तम धर्म छ । यसका सबै कुरा कल्याणकारिणी तथा दैहिक, दैविक र भौतिक यी तीनै थरिका तापको उन्मूलन गर्ने छ । महामुनि व्यासले बनाएको श्रीमद्भागवत सुन्ने इच्छा भएका सज्जनहरूको हृदयमा भगवान् आएर बस्नुहुन्छ । संसारमा यो बाहेक के अरु कुनै यस्तो बाटो छ—जसद्वारा स्वयं भगवान् यति शीघ्र प्राप्त हुन सक्नु ॥ ८२ ॥ यो श्रीमद्भागवत पुराणहरूको शिरोमणि र वैष्णवहरूको सर्वोत्तम धन हो । यसमा परमहंस-तत्त्वको प्रतिपादन गर्ने उज्ज्वल ज्ञानको वर्णन छ । यसमा भक्ति, ज्ञान, वैराग्यका साथै निष्काम कर्मको आविष्कार गरिएको छ । यसलाई प्रेमले सुन्ने, पढ्ने र विचार गर्नाले मनुष्य सहजै भवसागरबाट पारी तर्दछ ॥ ८३ ॥ स्वर्गलोक,

सुरर्षिस्तमपूजयत्सुखं स्थितोऽवदत्संशृणुतामलां गिरम् ॥ ८० ॥ श्रीशुक उवाच ॥ निगमकल्पतरोर्गलितं फलं शुकमुखादमृतद्रवसंयुतम् ॥ पिबत भवगतं रसमालयं मुहुरहो रसिका भुवि भावुकाः ॥ ८१ ॥ धर्मः प्रोज्झितकैतवोऽत्र परमो निर्मत्सराणां सतां वेद्यं वास्तवमत्र वस्तु शिवदं तापत्रयोन्मूलनम् ॥ श्रीमद्भागवते महामुनिकृते किं वा परैरीश्वरः सद्यो हृद्यवरुद्ध्यतेऽत्र कृतिभिः शुश्रूषुभिस्तत्क्षणात् ॥८२॥ श्रीमद्भागवतं पुराणतिलकं यद्वैष्णवानां धनं यस्मिन् पारमहंस्यमेवममलं ज्ञानं परं गीयते ॥ यत्र ज्ञानविरागभक्तिसहितं नैष्कर्म्यमाविष्कृतं तच्छृण्वन्प्रपठन्विचारणपरो भक्त्या विमुच्येन्नरः ॥ ८३ ॥ स्वर्गे सत्ये च कैलासे वैकुंठे नास्त्ययं रसः ॥ अतः पिबन्तु सद्भाग्या मा मा मुञ्चत कर्हिचित् ॥ ८४ ॥ सूत उवाच ॥ एवं ब्रुवाणे सति बादरायणौ मध्ये सभायां हरिराविरासीत् ॥ प्रह्लादबल्युद्धवफाल्गुनादिभिर्वृतः सुरर्षिस्तमपूजयच्च तान् ॥ ८५ ॥ दृष्ट्वा प्रसन्नं महदासने हरिं ते चक्रिरे कीर्तनमग्रतस्तदा ॥ भवो भवान्या कमलासनस्तु तत्रागमत्कीर्तनदर्शनाय ॥८६॥ प्रह्लादस्तालधारी तरलगतितया चोद्धवः कांस्यधारी वीणाधारी सुरर्षिः स्वरकुशलतया रागकर्ताऽर्जुनोऽभूत् ॥ इन्द्रोऽवादीन्मृदङ्गं जयजयसुकराः कीर्तने ते कुमारा यत्राग्रे भाववक्ता सरसरचनया व्यासपुत्रो बभूव ॥ ८७ ॥ ननर्त मध्ये त्रिकमेव तत्र भक्त्यादिकानां नटवत्सुतेजसाम् ॥ अलौकिकं कीर्तनमेतदीक्ष्य हरिः प्रसन्नोऽपि वचोऽब्रवीत्तत्

सत्यलोक, कैलास तथा वैकुण्ठ, कहीं पनि यो रस पाइन्न । यसैनिम्ति हे भाग्यवान् हो ! तिमीहरू मन लगाएर यो रस-पान गर । त्यसलाई कहिल्यै नत्याग ॥८४॥ सूतजी भन्दछन्—शुकमुनि सभामा यस्तो भनिरहेकै थिए, त्यसै बखत प्रह्लाद, बलि, उद्धव र अर्जुनादि भक्तहरू लिएर भगवान् श्रीकृष्ण प्रकट हुनुभयो । अनि नारदले प्रभुको राम्ररी पूजा गरे ॥८५॥ अनि प्रसन्न भएर भगवान् यौटा उत्तम आसनमा आसीन हुनुभयो र अति भक्तहरू त्यहाँ एकत्र भएका थिए, ती सबै उनको सामुन्ने कीर्तन गर्नलागे । त्यो कीर्तन हेर्नका लागि पार्वतीका साथै शंकरजी र ब्रह्माजी पनि पाल्नुभयो ॥८६॥ प्रह्लादले करताल हातमा लिए, उद्धवले झ्याल र नारदले वीणा लिए र ज्ञान-विद्यामा निपुण अर्जुन गाउनलागे । देवराज इन्द्र मृदङ्ग बजाउन र सनकादि चारै भाइ भगवान्को जय जयकार गर्नलागे । सबैकाअगाडि व्यास-पुत्र शुकमुनि आफ्नो सरस रचनाद्वारा भाव बताउन लागे ॥८७॥ त्यस महामारोहमा भक्ति,ज्ञान र

वैराग्य यी तीनैथरि मावोन्मत्त भएर नाचिरहेथे । त्यो अलौकिक कीर्तन देखेर भगवान् प्रसन्न भई भन्दछन्—॥८८॥ हे भक्त हो ! यहाँहरूले मलाई आफ्नो प्रेमरूपी बन्धनमा बाँधिदिनु भयो । यस बखत यहाँको कथा कीर्तनले म धेरै प्रसन्न भएँ । भगवान्को यस्तो वाणी सुनेर ती सबै भक्त गद्गद् भए र प्रेम-विह्वल भई भगवान्सित भन्न लागे—॥८९॥ हे हाम्रा हृदय-सम्राट् ! हामी हजुरसित यही वर माग्दछौं—भक्तजन जुनसुकै स्थानमा पनि शुकमुनिको यस उत्तम आख्यानलाई सुन्दै रहन्छन् हजुर त्यहाँ अवश्य उपस्थित रहनेगर्नोस । हजुर हाम्रो यो मनोरथ पूर्ण गरिदिनोस् । भगवान् 'तथास्तु' भनेर अन्तर्धान हुनुभयो ॥९०॥ त्यसपछि नारदले त्यहाँ आएका शुकादि तपस्वीहरूको चरण-स्पर्श गरे र सबै जना प्रसन्न भए तथा आफ्नो अज्ञान गुमाई यस कथारूपी अमृतलाई बारम्बार पिउँदै आश्रममा फर्किए ॥९१॥ त्यस बखत शुकमुनिले आफूले भनेको शास्त्रद्वारा भक्ति, ज्ञान तथा वैराग्य तीनै थरिको रक्षा गरेका थिए, यसैले भागवतको आराधना गर्ने वैष्णव भक्तहरूको हृदयमा भगवान् शीघ्र आएर बस्नुहुन्छ ॥ ९२ ॥ दरिद्रता र विविध दुःखरूपी ज्वरले

॥ ८८ ॥ मत्तो वरं भावबृताद्वृणुध्वं प्रीतः कथाकीर्तनतोस्मि सांप्रतम् ॥ श्रुत्वेति तद्वाक्यमतिप्रसन्नाः प्रेमार्द्रचित्ता हरिमूचिरे ते ॥ ८९ ॥ नगाहगाथासु च सर्वभक्तैरेभिस्त्वया भाव्यमिति प्रयत्नात् ॥ मनोरथोऽयं परिपूरणीयस्तथेति चोक्त्वांतरधीयताच्युतः ॥ ९० ॥ ततोऽनमत्तच्चरणेषु नारदस्तथा शुकादीनपि तापसांश्च ॥ अथ प्रहृष्टाः परिनष्टमोहाः सर्वे ययुः पीतकथामृतास्ते ॥ ९१ ॥ भक्तिः सुताभ्यां सह रक्षिता सा शास्त्रे स्वकीयेऽपि तदा शुकेन ॥ अतो हरिर्भागवतस्य सेवनाच्चित्ते समायाति हि वैष्णवानाम् ॥ ९२ ॥ दारिद्र्यदुःखज्वरदाहितानां मायापिशाचीपरिमर्दितानाम् ॥ संसारसिंधौ परिपातितानां क्षेमाय वै भागवतं प्रगर्जति ॥ ९३ ॥ शौनक उवाच ॥ शुकेनोक्तं कदा राज्ञे गोकर्णेन कदा पुनः ॥ सुरर्षये कदा ब्राह्मैश्छिंधि मे संशयं त्विमम् ॥ ९४ ॥ सूत उवाच ॥ आकृष्णनिर्गमात्त्रिंशद्वर्षाधिकगते कलौ ॥ नवमीतो नभस्ये च कथारम्भं शुकोऽकरोत् ॥ ९५ ॥ परीक्षिच्छ्रवणांते च कलौ वर्षशतद्वये ॥ शुद्धे शुचौ नवम्यां च धेनुजोऽकथयत्कथाम् ॥ ९६ ॥ तस्मादपि कलौ प्राप्ते त्रिंशद्वर्षगते सति ॥ ऊचुरूर्जे सिते पक्षे नवम्यां ब्रह्मणः सुताः ॥ ९७ ॥ इत्येतत्ते समाख्यातं यत्पृष्टोऽहं त्वयाऽनघ ॥ कलौ भागवती वार्ता भवरोगविनाशिनी ॥ ९८ ॥ कृष्णप्रियं सकलकल्मषनाशनं च मुक्त्यैकहेतुमिह भक्तिविलासकारि ॥ संतः कथानकमिदं पिबतादरेण लोके हि तीर्थपरिशी·

पीडित, मायारूपिणी पिशाचिनी द्वारा दलित-मलित र बारम्बार संसाररूपी समुद्रमा गाडिने मानिसहरूको कल्याणार्थ श्रीमद्भागवत सिंह झैं गर्जिरहन्छ ॥९३॥ शौनकले सूतजीलाई सोधे—हे महाराज ! यो कथा शुकदेवले राजा परीक्षितलाई, गोकर्णले धुन्धुकारीको निम्ति तथा सनकादि कुमारहरूले नारदजीसित कहिले भने ? कृपया हजुर मेरो यो प्रश्नको समाधान गरिदिनोस् ॥९४॥ सूतजी भन्दछन्—हे शौनक ! भगवान् जब पृथ्वी त्यागेर गोलोक पाल्नुभयो र कलि आएर तीस वर्षसम्म राज्य भोगिसक्यो, अनि शुकदेवले भाद्रपदको नवमी तिथिमा यो कथा महाराज परीक्षितलाई सुनाउन आरम्भ गरेका थिए ॥९५॥ कथा सुनेर परीक्षित परमधाम गएको दुइ सय वर्षपछि गोकर्णले आश्विन शुक्ल नवमीमा यो कथा भने ॥९६॥ त्यसको तीस वर्षपछि कार्तिक शुक्ल नवमीमा सनकादि मुनिले नारलाई यो कथा सुनाए ॥९७॥ हे अनघ ! हजुरले मसित जुन जुन प्रश्न सोध्नुभयो,त्यसको उत्तर मैले सुनाएँ ।

कलियुगमा श्रीमद्भागवतको कथा संसाररूपी रोग नष्ट गरिदिने यौटा संजीवनी हो॥९८॥ हे सज्जन हो ! तीर्थहरूमा व्यर्थ डुलिरहनाले के लाभ ? तपाईंहरू श्रीकृष्णलाई प्रिय, सबै पाप हरण गर्न, मुक्तिको निश्चित कारण र भक्तिको विलासभूमिस्वरूप भागवतको कथा-रसलाई सादर पान गर्नुहवस्, किनकि सांसारिक स्वार्थको घेरामा बाँधिई रहनाले कुनै पनि लाभ छैन ॥९९॥ साक्षात् यमराज हातमा पाश लिएर उभिएका दूतलाई हेर्दै तिनका कानमा भन्दछन्–हेर, भागवतको कथा सुनेर मस्त रहने भक्तहरूको नजीक कहिल्यै नजाउ, किनकि म यस संसारका अन्य-अन्य जीवहरूमाथि मात्र शासन गर्न सक्तछु–भगवान्‌का भक्तहरूमाथि होइन ॥१००॥ हे विषयरूपी विष पान गरेर व्याकुल चित्त भएका व्यक्ति हो ! आत्म-कल्याणको निम्ति तिमी वर्ता होइन, केवल आधा क्षण शुकमुनिले दिएको यस अनुपम सुधा नित्य पान गर्न गर । हे बन्धो ! किन असत् मार्गमा भड्केका छौ ? यस भागवतले उद्धार हुने साक्षीस्वरूप त

व्रजनसेवया किम् ॥ ९९ ॥ स्वपुरुषमपि वीक्ष्य पाशहस्तं वदति यमः किल तस्य कर्णमूले ॥ परिहर भगवत्कथासु मत्तान्प्रभुरहमन्यनृणां न वैष्णवानाम् ॥ १०० ॥ असारे संसारे विषयविषसंगाकुलधियः क्षणार्धं क्षेमार्थं पिबत शुकगाथातुलसुधाम् ॥ किमर्थं व्यर्थं भो व्रजत कुपथे कुत्सितपथे परीक्षित्साक्षी यच्छ्रवणगतमुक्त्युक्तिकथने ॥ १०१ ॥ रसप्रवाहसंस्थेन श्रीशुकेनेरिता कथा ॥ कंठे संबध्यते येन स वैकुंठप्रभुर्भवेत् ॥ १०२ ॥ इति च परमगुह्यं सर्वसिद्धांतसिद्धं सपदि निगदितं ते शास्त्रपुंजं विलोक्य ॥ जगति शुककथातो निर्मलं नास्ति किंचित् पिब परसुखहेतोर्द्वादशस्कंधसारम् ॥ १०३ ॥ एतां यो नियततया शृणोति यश्चैनां कथयति शुद्धवैष्णवाग्रे ॥ तौ सम्यग्विधिकरणात्फलं लभेते याथार्थ्यान्न हि भुवने किमप्यसाध्यम् ॥ १०४ ॥ इति श्रीपद्मपुराणे उत्तरखण्डे श्रीमद्भागवतमाहात्म्ये श्रवणविधिकथनं नाम षष्ठोऽध्यायः ॥ ६ ॥

स्वयं महाराज परीक्षित छन्, जसले केवल सात दिन मात्र सुनेर मुक्ति पाएका थिए ॥१०१॥ रसको धारामा विराजमान श्रीशुकमुनिले भनेको यस कथालाई जुन मनुष्य कण्ठस्थ पार्दछ, त्यो वैकुण्ठ लोकको अधिकारी बन्दछ ॥१०२॥ यसनिम्ति परम गुप्त, सबै सिद्धान्तहरूले सिद्ध एवं शास्त्र हरूको सारस्वरूप भनिएको द्वादशस्कन्धात्मक कथा-रसको पान गर, किनकि शुकभगवान्‌को कथा समान निर्मल वस्तु संसारमा कुनै पनि छैन ॥१०३॥ जो प्राणी नियमले यो कथा सुन्दछ वा वैष्णवहरूको सामुन्ने भन्दछ–त्यो वक्ता र श्रोता दुवैथरि यो उत्तम विधानको पालन गर्नाले उत्तम फल प्राप्त गर्दछ । तिनको निम्ति फेरि असार संसारमा कुनै पनि कार्य असाध्य रहन सक्दैन ॥१०४॥

इति श्रीपद्मपुराणको उत्तरखण्डमा श्रीमद्भागवत माहात्म्य नेपाली भाषा-टीकामा श्रवणविधि कथन नामक छैठौं अध्याय सकियो ॥६॥

इति 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवतमाहात्म्यं समाप्तम् ।

अथ 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते प्रथमः स्कन्धः प्रारभ्यते।

श्रीगणेशाय नमः ॥ ॐ नमो भगवते वासुदेवाय ॥ अगजाननपद्मार्कं गजाननमहर्निशम् ॥ अनेकदं तं भक्तानामेकदन्तमुपास्महे ॥ १ ॥ या कुन्देन्दुतुषारहारधवला या शुभ्रवस्त्रावृता या वीणावरदण्डमण्डितकरा या श्वेतपद्मासना ॥ या ब्रह्माच्युतशंकरप्रभृतिभिर्देवैः सदा वन्दिता सा मां पातुसरस्वतीभगवती निःशेषजाड्यापहा॥२॥ अज्ञानतिमिरान्धस्य ज्ञानाञ्जनशलाकया चक्षुरुन्मीलितं येन तस्मै श्रीगुरवे नमः ॥३॥ ॐ नमः श्रीपरमहंसास्वादितचरणकमलचिन्मकरन्दाय भक्तजनमानसनिवासाय नमः पुराणपुरुषोत्तमाय नमो हरिहरहिरण्यगर्भेभ्यो नमो व्यासवाल्मीकिशुकपराशरेभ्यः ॥ नारायणं नमस्कृत्य नरं चैव नरोत्तमम् ॥ देवीं सरस्वतीं व्यासं ततो जयमुदीरयेत् ॥४॥ वागीशा यस्य वदने लक्ष्मीर्यस्य च वक्षसि ॥ यस्यास्ते हृदये संवित्तं नृसिंहमहं भजे ॥ ५ ॥

हे कृष्ण ! लौ पतितका तिमि एक नाथ । पर्दोछु पाउ तलमा निहुराइ माथ ॥ १ ॥ जानेर दास निजराउ दिनोस् बढाई । पक्रेर लछु भव-सिन्धु प्रभो ! रमाई ॥२॥
जस्तो भए पनि म हुँ प्रभु-दास खास । तान् हुनेछ प्रभुले भनि राख्छु आश ॥ ३ ॥ छाडी मलाई कतै अब नत्तु ढाला । पक्री उतारि लिनुहोस् अब भो अबेला ॥४॥
ढाँलान कती अरु मर्दौं प्रभुका अनेक । आफ्नु म ठान्दु मनले प्रभु मात्र एक ॥ ५ ॥ पारी भए कति अघो जपि नाम नाथ । यौटा म छु अब तुल्याउनुहोस् सनाथ ॥६॥

श्रीगणेशाय नमः ॥ जन्माद्यस्य यतोऽन्वयादितरतश्चार्थेष्वभिज्ञः स्वराट् तेने ब्रह्म हृदा य आदिकवये मुह्यन्ति यत्सूरयः ॥ तेजोवारिमृदां यथा विनिमयो यत्र त्रिसर्गोऽमृषा धाम्ना स्वेन सदा निरस्तकुहकं सत्यं परं धीमहि ॥ १ ॥ धर्मः प्रोज्झितकैतवोऽत्र परमो निर्मत्सराणां सतां

। महामुनि वेदव्यासले अनेक पुराण र शास्त्रहरूको रचना गरे तापनि चित्त शान्त हुन सकेन । एक दिन तीं खिन्न मनले सरस्वती नदीको तटमा बसेका थिए । त्यसै बखत नारदजी आइपुगे । मुनिले तिनको व्याकुलताको कारण बुझेर *श्रीमद्भागवतको रचना गर्ने उपदेश दिए । श्रीमद्भागवत लेख्न थाल्ने बेलामा आइपर्ने विघ्न-बाधा हरूको निवारण गर्नका लागि भगवान्को स्मरण गर्दै व्यासजी मङ्गलाचरण गर्दछन्—जुन भगवान्द्वारा यस संसारको सृष्टि-स्थिति संहार हुन्छ, जो आकाशादि कार्यहरू तथा [illegible] रहेको [illegible] आकाश-कुसुममा पनि रहन्छन्, जो माटो र सुन आदिमा कारणरूप र घट-कुण्डलादिमा कार्यरूपले रहन्छन्, जो सर्वज्ञ र ज्ञानस्वरूप छन्, जसमा ठूला-ठूला ज्ञानी पनि अल-मल्लिन्छन्, त्यो वेद उसले आफ्नो इच्छामात्रले ब्रह्मालाई दिएका थिए, जसरी मृग सूर्यलाई जल ठान्दछ र भ्रमवश अनेक प्राणी जललाई काँच आदि ठानेर त्यसलाई सत्य मान्दछन्, त्यसै गरी अनेक प्राणीहरू देह, इन्द्रिय र देवतारूप तथा सत्व, रज एवं तमोगुणको योगले बनेको यस सृष्टिलाई अज्ञानवश सत्य मानेर फँसेका लिप्त हुन्छन्,

* श्री मद्भागवतका अनेक टीकाहरू लेखिएका छन् । तिनमा श्रीधर स्वामीको 'श्रीधरी' टीका सर्वोत्तम छ । श्रीधर स्वामीले भागवतको टीका गरेपछि त्यो देखेर फेरि अनेक मत्य [illegible] । कसैले भागवतलाई [illegible] प्रधान भने, कसैले भक्ति प्रधान, कसैले केवल शास्त्रको खानी भने, तर श्रीधर स्वामीले कर्म, उपासना र ज्ञान यी तीन विषय पारेर चुन ठाउँमा जुन विषय थियो, त्यसको यथार्थ वर्णन गरे । अब सबै टीकाहरू [illegible] काशीका पण्डितहरूको सामुन्ने आए । काशीका पण्डित आफ्नाआफ्ना मिलका टीकाको गुणगान गर्नलागे किन्तु यो निर्णय हुन सकेन कि कसको टीका उत्तम छ । ईश्वरमा विश्वास हुने श्रीधर स्वामीले सबै टीकाहरू [illegible] मन्दिरमा राखिदिनु । भगवान् जुन टीकालाई स्वीकार गर्दछन् त्यही उत्तम मानिनेछ ।' यो कुरा सबैले स्वीकार गरे । त्यसै अनुसार सबै टीकाहरू मन्दिरमा राखेर ढोका बन्द गरिदिए । प्रातः मन्दिर खोलिँदा [illegible] अन्य सबै टीकाहरू मुनामा पर्दोथिएका छन्, केवल श्रीधर स्वामीको टीका भगवान्को नजीकै छ । त्यसै बेलादेखि 'श्रीधरी टीका' सर्वोत्तम मानिन थाल्यो । श्रीमद्भागवतको यो 'श्रीधरी' टीका पनि [illegible] लेखिएको छ।

त्यस अज्ञानान्धकारलाई जो आफ्नो तेजले नष्ट गरिदिन्छन्, ती नारायणलाई शिष्यहरू सहित हामी प्रणाम गर्दछौं ॥१॥ यो श्रीमद्भागवतमा द्वेष-शून्य सन्तहरूले जान्ने योग्य र आडम्बर हीन एवं निष्कामरूपले ईश्वरको आराधनास्वरूप धर्मको निरूपण गरिएको छ। यस धर्मले सर्वथा सबैको कल्याण हुनेछ। दैहिक, दैविक र भौतिक—यी तीनै थरिका ताप समूल नष्ट हुनेछन् र परमानन्द प्राप्त हुनेछ। महामुनि शुकदेवले भनेका छन्–श्रीमद्भागवत रहेसम्म आत्मोद्धारको लागि अरु शास्त्र खोज्ने आवश्यकता छैन। अन्य शास्त्रहरूद्वारा यदि ईश्वर प्राप्त हुन्छन् तापनि धेरै विलम्ब लाग्दछ, तर यस शास्त्रलाई जो पुण्यात्मा सज्जन प्रेमपूर्वक सुन्ने इच्छा गर्दछन् भने तत्काल भगवान् तिनको हृदयमा विराजमान हुन्छन् ॥ २ ॥ हे भक्तिवान् रसिक हो ! वेदरूपी कल्पवृक्षबाट चुहेको, शुकमुनिको मुखबाट निस्केको एवं अमृत-रसले मुछिएको यो भागवतरूपी रस तिमी तबसम्म पिउँदै रहू जबसम्म मुक्ति प्राप्त हुँदैन ॥३॥ कुनै बेला सनकादि ऋषिहरूले ○नैमिषारण्य क्षेत्रमा हजार वर्षमा समाप्त हुने महायज्ञ प्रारम्भ गरे ॥ ४ ॥ एक दिन ती मुनि प्रातःकालीन अग्निहोत्र समाप्त पारेर

वेद्यं वास्तवमत्र वस्तु शिवदं तापत्रयोन्मूलनम् ॥ श्रीमद्भागवते महामुनिकृते किं वा परैरीश्वरः सद्यो हृद्यवरुध्यतेऽत्र कृतिभिः शुश्रूषुभिस्तत्क्षणात् ॥ २ ॥ निगमकल्पतरोर्गलितं फलं शुकमुखादमृतद्रवसंयुतम् ॥ पिबत भागवतं रसमालयं मुहुरहो रसिका भुवि भावुकाः ॥ ३ ॥ नैमिषेऽनिमिषक्षेत्रे ऋषयः शौनकादयः ॥ सत्रं स्वर्गाय लोकाय सहस्रसममासत ॥ ४ ॥ त एकदा तु मुनयः प्रातर्हुतहुताग्नयः ॥ सत्कृतं सूतमासीनं पप्रच्छुरिदमादरात् ॥ ५ ॥ ऋषयः ऊचुः ॥ त्वया खलु पुराणानि सेतिहासानि चानघ ॥ आख्यातान्यप्यधीतानि धर्मशास्त्राणि यान्युत ॥ ६ ॥ यानि वेदविदां श्रेष्ठो भगवान्बादरायणः ॥ अन्ये च मुनयः सूत परावरविदो विदुः ॥ ७ ॥ वेत्थ त्वं सौम्य तत्सर्वं तत्त्वतस्तदनुग्रहात् ॥ ब्रूयुः स्निग्धस्य शिष्यस्य गुरवो गुह्यमप्युत ॥ ८ ॥ तत्र तत्रांजसाऽऽयुष्मन्भवता यद्विनिश्चितम् ॥ पुंसामेकांततः श्रेयस्तन्नः शंसितुमर्हसि ॥ ९ ॥ प्रायेणाल्पायुषः सभ्य कलावस्मिन्युगे जनाः ॥ मंदाः सुमंदमतयो मंदभाग्या ह्युपद्रुताः ॥ १० ॥ भूरीणि भूरिकर्माणि श्रोत-

बसिरहेका सूतको नजीकै गए र आदरपूर्वक सोध्नलागे—॥५॥ पहिलो प्रश्न—हे पुण्यात्मन् ! हजुरले समस्त इतिहास, पुराण र शास्त्रहरू पढ्नु भयो र अरुलाई सुनाउनु पनि भयो ॥ ६ ॥ ती इतिहास, पुराण र शास्त्रहरूलाई जान्नेहरूमा श्रेष्ठ ज्ञाता वेदव्यास तथा कतिपय सर्वज्ञ ऋषि नै थिए ॥ ७ ॥ भगवान् वेदव्यासको कृपाले हजुर ती इतिहासहरू सबै राम्ररी जान्नुहुन्छ। प्रेमी शिष्यबाट गुरुजन गुप्त कुरा पनि लुकाउँदैनन् ॥ ८ ॥ अतएव हे आयुष्मन् ! हजुरले ती शास्त्रहरूबाट मनुष्यहरूको कल्याणार्थ जुन कुरा सुन्नु र बुझ्नु भएको छ, त्यो हामीहरूलाई सुनाउनोस् ॥९॥ किनकि कलिकालमा मानिस धेरै अल्छी, अल्पायु, मन्दबुद्धि र अनेक थरिका रोग-शोकले पीडित रहन्छन् ॥१०॥ तिनको उद्धारको निम्ति धेरै शास्त्र

---

○ एक दिन शौनकादि ऋषिहरूले ब्रह्माजीसंग सोधे—'हे ब्रह्मन् ! हामीलाई तपस्या गर्नयोग्य कुनै स्थान आज्ञा हवस् ।' यति सुनेर ब्रह्माजीले मौरा चक्र उत्पन्न गरेर भन्नुभयो र ऋषिहरूसित भन्नुभयो - यो चक्र जहाँ पतिन्छ, तिमीहरू त्यही स्थानलाई तपस्या योग्य ठान । ब्रह्माजीलाई प्रणाम गरेर ती ऋषिहरू चक्रको पछि-पछि हिँडे र जहाँ यो अडियो, त्यहीं तप गर्नलागे । यसैले त्यस स्थानको चक्रतीर्थ वा नैमिषारण्य नाम रह्यो ।

जो भनेर सुन्नयोग्य छ, तर हजुर हामीलाई ती शास्त्रहरूको त्यो अंश सुनाउनोस्—जुन हजुरको आफ्नो बुद्धिको होस् र जसलाई सुनेर हामी श्रद्धालुहरूको आत्मा प्रसन्न हुनसकोस् । हजुरको कल्याण होस् । हे सूत ! हजुरलाई त्यो सबै गुप्त कुरा पनि ज्ञात छ—जगत्पति भगवान्ले कुन काम गर्नका लागि वसुदेव र देवकीको घरमा जन्म लिएका थिए । दोस्रो प्रश्न—हे अङ्ग ! सुन्नाका लागि उत्सुक हामी श्रोताहरूलाई हजुर श्रीहरिको पवित्र चरित्र सुनाउनुहवस् किनकि ती महाप्रभुको अवतार प्राणिहरूको कल्याण र समृद्धिका लागि नै भएको थियो ॥११-१३॥ विवशभावले पनि मनुष्य जसको नाम लिएर घोर संसार-सागर पारी तरेर जान्छ, जसको नामले पनि भयलाई पनि भय लाग्दछ ॥१४॥ जुन भगवान्को चरण-शरण लिनाले जान्न चिन मुनिजन आफ्नो दर्शन मात्रले प्राणिहरूलाई पवित्र पारिदिन्छन् । त्यो त पवित्र गङ्गाजीले पनि पार्दछिन्, तर जब तिनको जल स्पर्श हुन्छ, तर ऋषिहरूको त दर्शनले नै पूर्ण हुन्छ ॥ १५ ॥ पवित्र आत्मा हुने योग्य पनि जुन भगवान्का उत्तम कार्यहरूको सन्तनी गर्दछन्, आत्म-शुद्धिको अभिलाषा भएका यस्ता कुन प्राणी होलान् जो भगवान्को कलिमय

श्यानि विभागशः ॥ अतः साधोऽत्र यत्सारं समुद्धृत्य मनीषया ॥ ब्रूहि नः श्रद्दधानानां येनात्मा संप्रसीदति ॥ ११ ॥ सूत जानासि भद्रं ते भगवान्सात्वतां पतिः ॥ देवक्यां वसुदेवस्य जातो यस्य चिकीर्षया ॥ १२ ॥ तन्नः शुश्रूषमाणानामर्हस्यङ्गानुवर्णितुम् ॥ यस्यावतारो भूतानां क्षेमाय च भवाय च ॥ १३ ॥ आपन्नः संसृतिं घोरां यन्नाम विवशो गृणन् ततः सद्यो विमुच्येत यद्बिभेति स्वयं भयम् ॥ १४ ॥ यत्पादसंश्रयाः सूत मुनयः प्रशमायनाः ॥ सद्यः पुनन्त्युपस्पृष्टाः स्वर्धुन्यापोऽनुसेवया ॥ १५ ॥ को वा भगवतस्तस्य पुण्यश्लोकेड्यकर्मणः ॥ शुद्धिकामो न शृणुयाद्यशः कलिमलापहम् ॥ १६ ॥ तस्य कर्माण्युदाराणि परिगीतानि सूरिभिः ॥ ब्रूहि नः श्रद्दधानानां लीलया दधतः कलाः ॥ १७ ॥ अथाख्याहि हरेर्धीमन्नवतारकथाः शुभाः ॥ लीला विदधतः स्वैरमीश्वरस्यात्ममायया ॥ १८ ॥ वयं तु न वितृप्याम उत्तमश्लोकविक्रमे ॥ यच्छृण्वतां रसज्ञानां स्वादु स्वादु पदे पदे ॥ १९ ॥ कृतवान्किल वीर्याणि सह रामेण केशवः ॥ अतिमर्त्यानि भगवान्गूढः कपटमानुषः ॥ २० ॥ कलिमागतमाज्ञाय क्षेत्रेऽस्मिन्वैष्णवे वयम् ॥ आसीना दीर्घसत्रेण कथायां सक्षणा हरेः ॥२१॥ त्वं नः संदर्शितो धात्रा

नाशक यश नसुन्ला—सबैले सुन्नेछन् र प्रेमपूर्वक सुन्दछन् ॥ १६॥ तेस्रो प्रश्न—अतएव जुन कौतूहलवश आफ्नो कलाहरूले ब्रह्मा, विष्णु र महेश आदिको रूप धारण गर्दछन् र नारदादि ठूला-ठूला योगीहरूले जसको विश्वसृष्टि आदि गाथा गाएका छन् ती नारायण' उदार कर्महरूले हजुर हामी श्रद्धालुहरूलाई अवश्य सुनाउनोस् ॥१७॥ चौथो प्रश्न—हे बुद्धिमान सूत ! जुन परमेश्वर जगत्को पालन गर्नका लागि आफ्नो मायाले मत्स्य-कूर्म आदि रूप धारण गर्दछन्, तिनको अवतार सम्बन्धी कथाहरू हामीलाई अवश्य सुनाउनोस् ॥१८॥ जग-दीश्वरको महिमाको कथा बारम्बार सुनेर पनि हामी तृप्त भएनौं छैनौं किनकि प्रभुको चरित्र रसिक श्रोताहरूलाई उत्तरोत्तर क्षन-क्षन बढ्तो आनन्ददायक लाग्दै जान्छ ॥१९॥ पाँचौं प्रश्न माया-मनुष्यरूप धारण गर्ने ती जनार्दनले बलराम सँगै धरातलमा आएर मानव शक्तिभन्दा ठूलो गोवर्धन धारण आदि जुन ठूला-ठूला कार्यहरू गरे, त्यो सबै हजुर हामीलाई सुना-उनोस् ॥२०॥ यदि हजुर भन्नुहुन्छ कि हजुर जस्ता कर्मयोगी मुनिहरूलाई लामो कथा सुनाउने अवकाश कसरी मिल्दछ—त्यसविषयमा सुन्नुहोस्—दुष्ट कलिको आगमन सुनेर नै हामीले

[illegible] क्षेत्रमा [illegible] यज्ञ आरम्भ गरेको छ । यसै निमित्त भगवान्को कथा सुन्ने हामीलाई धेरै बर्ता अवकाश छ ॥ २१ ॥ जसरी समुद्र नाघ्नको लागि बाटा नाविकहरूको आवश्यकता पर्दछ, त्यसै गरी [illegible] समुद्र तर्न पनि हामीलाई हजुर जस्ता योग्य विद्वान र तत्त्वदर्शी नाविकको आवश्यकता थियो । सौभाग्यले हजुर भेटिनु भयो ॥२२॥ छैटौं प्रश्न—हे सूत ! [illegible], ब्राह्मण-भक्त, धर्मात्मा एवं योगेश्वर श्रीकृष्णचन्द्र आफ्नो वास्तविक रूपमा प्राप्त भएर धरातलबाट जानुभयो तब बिचरा धर्म कसको शरणमा छ ? ॥२३॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे भाषा-टीकायां प्रथमोऽध्यायः ॥१॥ अब दोस्रो अध्यायमा सूतजीले शौनकादि मुनिहरूको प्रश्न सुनेर उसलाई भगवान्को महत्व बताएका छन् । व्यासजी भन्नुहुन्छ—ती ब्राह्मणहरूको प्रश्न सुनेर रोमहर्षणका छोरा ( उग्रश्रवा ) नामका सूत निकै प्रसन्न भए । तिनले प्रश्नहरूको कदरी गरे अनि उत्तर दिन आरम्भ गरे ॥ १ ॥ सूतजी आफ्ना गुरुदेव शुकमुनिको वन्दना गर्दछन्—'उपनयन संस्कार हुनुभन्दा पहिले नै संसारलाई असार मानेर र संन्यास-व्रत लिई वनमा जाँदाजाँदै जुन शुकमुनिलाई

दुस्तरं निस्तितीर्षताम् ॥ कलिं सत्त्वहरं पुंसां कर्णधार इवार्णवम् ॥ २२ ॥ ब्रूहि योगेश्वरे कृष्णे ब्रह्मण्ये धर्मवर्मणि ॥ स्वां काष्ठामधुनोपेते धर्मः कं शरणं गतः ॥२३॥ इति श्रीमद्भागवते पारमहंस्यां संहितायां प्रथमस्कन्धे नैमिषोपाख्याने प्रथमोऽध्यायः ॥ १ ॥ व्यास उवाच ॥ इति संप्रश्नसंहृष्टो विप्राणां रौमहर्षणिः ॥ प्रतिपूज्य वचस्तेषां प्रवक्तुमुपचक्रमे ॥१॥ सूत उवाच ॥ यं प्रव्रजंतमनुपेतमपेतकृत्यं द्वैपायनो विरहकातर आजुहाव ॥ पुत्रेति तन्मयतया तरवोऽभिनेदुस्तं सर्वभूतहृदयं मुनिमानतोऽस्मि ॥ २ ॥ यः स्वानुभावमखिलश्रुतिसारमेकमध्यात्मदीपमतितितीर्षतां तमोऽन्धम् ॥ संसारिणां करुणयाऽऽह पुराणगुह्यं तं व्याससूनुमुपयामि गुरुं मुनीनाम् ॥३॥ नारायणं नमस्कृत्य नरं चैव नरोत्तमम् ॥ देवीं सरस्वतीं व्यासं ततो जयमुदीरयेत् ॥४॥ मुनयःसाधु पृष्टोऽहं भवद्भिर्लोकमंगलम् ॥ यत्कृतः कृष्णसंप्रश्नो येनात्मा सुप्रसीदति ॥५॥ स वै पुंसां परो धर्मो यतो भक्तिरधोक्षजे ॥ अहैतुक्यप्रतिहता ययाऽऽत्मा संप्रसीदति ॥६॥ वासुदेवे भगवति भक्तियोगः प्रयोजितः ॥ जनयत्याशु वैराग्यं ज्ञानं यत्तदहैतुकम् ॥७॥ धर्मः स्वनुष्ठितः पुंसां विष्वक्सेनकथासु यः ॥ नोत्पादयेद्यदि रतिं श्रम एव हि केवलम् ॥८॥ धर्मस्य ह्यापवर्ग्यस्य नार्थोऽर्थायोपकल्पते ॥ नार्थस्य धर्मैकांतस्य कामो लाभाय हि स्मृतः

पुत्र वियोग जनित क्लेश सहन असमर्थ व्यासले पुत्र ! पुत्र !! पुत्र !!! भनेर पुकार्दा शुकलाई आफ्नै आत्मा ठान्ने वृक्षहरूले प्रतिध्वनिस्वरूप उत्तर दिए । योगबलले सबै प्राणिहरूको हृदयमा प्रवेश गर्ने ती गुरुवर शुकमुनिलाई प्रणाम गर्दछु ॥२॥ जसले दुस्तर संसाररूपी सागरलाई तर्ने इच्छा राख्नेहरूको निमित्त आत्मस्वरूप वेदहरूको सार एवं गोपनीय श्रीमद्भागवत नामको पुराण सुनाए, मुनिहरूका गुरु ती व्यासपुत्र शुकदेवको म शरणमा छु ॥३॥ नारायण (कृष्ण), मनुष्य-श्रेष्ठ नर ( अर्जुन ) र देवी सरस्वतीलाई प्रणाम गरेपछि नै ग्रन्थको कथा भन्नुपर्दछ ॥४॥ हे ऋषि हो ! तपाईंहरूले उत्तम प्रश्न गर्नुभयो । यसको उत्तरले सारा संसारको कल्याण हुनेछ, किनकि तपाईंहरूले चित्तलाई प्रसन्नता प्रदान गर्ने श्रीकृष्ण विषयक प्रश्न गरेका छौ ॥५॥ मनुष्यहरूको निमित्त सर्वश्रेष्ठ धर्म त्यही हो, जसले भगवानमा अहैतुकी भक्ति जागृत होस् र आत्मा भित्रैबाट प्रसन्न होओस् ॥ ६ ॥ भगवान् श्रीकृष्ण चन्द्रको भक्ति गर्नासाथ वैराग्य र [illegible] सार्थ फलको इच्छारहित ज्ञान उत्पन्न भएर आउँछ ॥ ७ ॥ जुन धर्मको राम्रोसित पालन गरेर पनि भगवान् श्रीकृष्णचन्द्रको पवित्र

कथाहरूमा श्रद्धा उत्पन्न भएन भने त्यो धर्मको पालन गर्नु व्यर्थ छ । किनकि त्यसको निमित्त गरिएको परिश्रम पूर्णरूपेण रहने छ ॥८॥ जुन धर्म मोक्षसाधनको निमित्त गरिन्छ, त्यसले धर्मको प्राप्ति हुन सक्तैन, यदि प्राप्त भयो भने त्यसबाट धर्मको फल प्राप्त हुन सक्तैन । त्यसैगरी धर्मको फल काम होइन । कामको फल इन्द्रियको प्रसन्नता होइन, बरू कामको वास्तविक फल जीवन हो । सबै सार यही निस्कियो कि जतिले जीवन चल्न सक्छ, त्यति नै ( विषय वासनास्वरूप ) कामको उपभोग गर्नुपर्दछ—बढी होइन । जीवनको फल तत्त्वज्ञानको जिज्ञासा हुने हो—स्वर्गादिको प्राप्तिका लागि कर्म गर्नु होइन ॥९॥१०॥ तत्त्वज्ञानी जन यसैलाई तत्त्व भन्दछन् । त्यसै गरी उपनिषद्हरूको अर्थ विचार गर्ने ज्ञानी ब्रह्म, वैष्णव, परमात्मा र भक्त भगवान् कहिन्छन् ॥११॥ त्यसमाथि श्रद्धा राख्ने ऋषि वेदान्त आदि सुन्नाले प्राप्त ज्ञान-वैराग्ययुक्त भक्ति द्वारा त्यस तत्त्वलाई आफूमा नै देखिलिन्छन्—तिनले यता-उता भौतारिनु पर्दैन ॥१२॥ अतः हे ब्राह्मण श्रेष्ठ ! वर्णाश्रम विभागको नियम अनुसार राम्ररी आचरित धर्मको फल एकमात्र भगवान्लाई सन्तुष्ट पार्नु हो ॥१३॥ यसैले आत्म-कल्याण खोज्ने प्राणीको यो कर्तव्य हुन्छ—कि त्यो आफ्नो मनलाई एकाग्र पारेर भक्तहरूको पालन-पोषण गर्ने भगवान्को यश नित्य सुनोस्, उनको गुण-गान

॥ ९ ॥ कामस्य नेन्द्रियप्रीतिर्लाभो जीवेत यावता ॥ जीवस्य तत्त्वजिज्ञासा नार्थो यश्चेह कर्मभिः ॥ १० ॥ वदंति तत्तत्त्वविदस्तत्त्वं यज्ज्ञानमद्वयम् ॥ ब्रह्मेति परमात्मेति भगवानिति शब्द्यते ॥ ११ ॥ तच्छ्रद्दधाना मुनयो ज्ञानवैराग्ययुक्तया ॥ पश्यंत्यात्मनि चात्मानं भक्त्या श्रुतगृहीतया ॥ १२ ॥ अतः पुंभिर्द्विजश्रेष्ठा वर्णाश्रमविभागशः ॥ स्वनुष्ठितस्य धर्मस्य संसिद्धिर्हरितोषणम् ॥१३॥ तस्मादेकेन मनसा भगवान्सात्वतां पतिः ॥ श्रोतव्यः कीर्तितव्यश्च ध्येयः पूज्यश्च नित्यदा ॥१४॥ यदनुध्यासिना युक्तः कर्मग्रंथिनिबन्धनम् ॥ छिन्दन्ति कोविदास्तस्य को न कुर्यात्कथारतिम् ॥१५॥ शुश्रूषोः श्रद्दधानस्य वासुदेवकथारुचिः ॥ स्यान्महत्सेवया विप्राः पुण्यतीर्थनिषेवणात् ॥१६॥ शृण्वतां स्वकथां कृष्णः पुण्यश्रवणकीर्तनः ॥ हृद्यन्तःस्थो ह्यभद्राणि विधुनोति सुहृत्सताम् ॥ १७ ॥ नष्टप्रायेष्वभद्रेषु नित्यं भागवतसेवया ॥ भगवत्युत्तमश्लोके भक्तिर्भवति नैष्ठिकी ॥ १८ ॥ तदा रजस्तमोभावाः कामलोभादयश्च ये ॥ चेत एतैरनाविद्धं स्थितं सत्त्वे प्रसीदति ॥१९॥ एवं प्रसन्नमनसो भगवद्भक्तियोगतः ॥ भगवत्तत्त्वज्ञानं च मुक्तसङ्गस्य जायते ॥२०॥

गरोस्, उनको स्वरूपको ध्यान धरोस् र उनैको उपासना गरोस् ॥ १४ ॥ अब विद्वान् र ज्ञानी भक्त भगवान्को ध्यानरूपी खड्गले अहङ्कारका ग्रन्थिस्वरूप कर्मलाई काटेर फाल्दछन अनि ती भगवान्को कथामा विश्वास कसले गर्दैन—सबैले गर्दछन् ॥१५॥ हे विप्र हो ! पवित्र तीर्थहरू र सन्तजनको सेवा गर्नाले श्रद्धावान् श्रोताको हृदयमा भगवान्को कथा सुन्ने रुचि उत्पन्न हुन्छ ॥१६॥ पवित्र श्रवण, कीर्तन र सज्जनहरूका मित्र भगवान् पनि आफ्नो कथा सुन्ने भक्तजनको हृदयमा विराजमान भएर तिनको सबै विषय-वासनाहरू नष्ट गरिदिन्छन ॥१७॥ अब तिनमा वासनाहरू नष्ट भइसक्छन् तब नित्य भगवद्भक्तहरूको सेवा गर्नाले पवित्र चरित्र भगवान्मा कहिल्यै नष्ट नहुने भक्ति उत्पन्न हुन्छ ॥१८॥ उस समय त्यस प्राणीको हृदयमा बसेको रजोगुण, तमोगुण तथा काम क्रोध आदि शत्रु थिचिन्छन् र ती दुष्टहरूबाट मुक्त भएको मन सत्त्वगुणमा स्थित भएर सुखी हुँदै जान्छ ॥ १९ ॥ यस प्रकार भक्तियोग द्वारा जसको मन प्रसन्न भएर आउँछ, त्यही मुक्त-सङ्ग भक्तलाई भगवान्को तत्त्वज्ञान प्राप्त हुन सक्छ ॥ २० ॥ यसरी स्वयं आफूमै अव्यक्त ईश्वरको साक्षात्कार

महत्त्वकेपछि चित्त र जडात्मक हृदय-ग्रन्थि खुल्दछन् त्यसका असंभव-सम्भव र मोह नष्ट भएर जान्छन् र संचित, प्रारब्ध तथा क्रियमाण कर्म पनि स्वतः क्षीण भएर जान्छन् ॥२१॥ अतएव विद्वान् जन चित्तलाई प्रसन्न पार्ने विष्णुको भक्ति प्रेमपूर्वक स्वीकार्दछन् ॥२२॥ सत्व, रज र तम यी तीन प्रकृतिका गुणहरू। यी गुणहरूले युक्त भएर यिनै परमात्मा यस संसारको पालन, सृष्टि र संहार कार्यमा विष्णु, ब्रह्मा तथा रुद्र यी तीन नाम धारण गर्दछन्। तर सत्वगुणी विष्णुद्वारा नै मनुष्यहरूको कल्याण हुन्छ ॥२३॥ जस्तै पृथ्वीबाट उत्पन्न काठद्वारा धूम र त्यस धूमद्वारा कर्ममार्ग अग्नि उत्पन्न हुन्छन्, त्यसै गरी तमोगुण र रजोगुण र रजोगुण द्वारा सत्वगुण प्रकट हुन्छ र त्यहां ब्रह्मको प्रकाश

भिद्यते हृदयग्रंथिश्छिद्यन्ते सर्वसंशयाः ॥ क्षीयन्ते चास्य कर्माणि दृष्ट एवात्मनीश्वरे ॥ २१ ॥ अतो वै कवयो नित्यं भक्तिं परमया मुदा ॥ वासुदेवे भगवति कुर्वन्त्यात्मप्रसादिनीम् ॥ २२ ॥ सत्त्वं रजस्तम इति प्रकृतेर्गुणास्तैर्युक्तः परः पुरुष एक इहास्य धत्ते ॥ स्थित्यादये हरिविरिञ्चिहरेतिसंज्ञाः श्रेयांसि तत्र खलु सत्त्वतनोर्नृणां स्युः ॥ २३ ॥ पार्थिवाद्दारुणो धूमस्तस्मादग्निस्त्रयीमयः ॥ तमसस्तु रजस्तस्मात्सत्त्वं यद्ब्रह्मदर्शनम् ॥ २४ ॥ भेजिरे मुनयोऽथाग्रे भगवन्तमधोक्षजम् ॥ सत्त्वं विशुद्धं क्षेमाय कल्पन्ते येऽनु तानिह ॥ २५ ॥ मुमुक्षवो घोररूपान् हित्वा भूतपतीनथ ॥ नारायणकलाः शान्ता भजन्ति ह्यनसूयवः ॥ २६ ॥ रजस्तमःप्रकृतयः समशीला भजन्ति वै ॥ पितृभूतप्रजेशादीञ्छ्रियैश्वर्यप्रजेप्सवः ॥ २७ ॥ वासुदेवपरा वेदा वासुदेवपरा मखाः ॥ वासुदेवपरा योगा ॥ वासुदेवपराः क्रियाः ॥ २८ ॥ वासुदेवपरं ज्ञानं वासुदेवपरं तपः ॥ वासुदेवपरो धर्मो वासुदेवपरा गतिः ॥ २९ ॥ स एवेदं ससर्जाग्रे भगवानात्ममायया ॥ सदसद्रूपया चासौ गुणमय्याऽगुणो विभुः ॥ ३० ॥ तया विलसितेष्वेषु

हो ॥२४॥ यसैले मुनिहरूले पहिले शुद्ध र सत्वगुण संयुक्त विष्णुको नै सेवा गरेका छन्। अब पनि जो विष्णुभगवान्‌का भक्तजनको अनुगामी हुन्छन्, ती सबै आनन्दित रहन्छन् ॥२५॥ मुक्तिका इच्छुक व्यक्ति अरू देवताहरूको निन्दा नगरेर रुद्र आदि डरलाग्दा देवताहरूलाई छाडेर शान्त-स्वरूप विष्णुको नै भजन गर्दछन् ॥२६॥ लक्ष्मी (ऐश्वर्य) तथा सन्तान-का इच्छुक र रुद्रादिक देवताहरूको समान स्वभाव भएका रजोगुणी र तमोगुणी मनुष्य पितृ, भूत तथा शिवादिक देवताहरूको आराधना गर्दछन् ॥२७॥ वेद विष्णुको आराधनाको समर्थक छन्। यज्ञहरूबाट विष्णुकै आराधना हुन्छ। योग तथा कर्मकाण्ड पनि विष्णुकै आराधना गर्न आदि दिन्छन् ॥२८॥ ज्ञान, तप, धर्मशास्त्र र गति ( स्वर्गादि प्राप्तिकोक्षीण हुने फल

⊙ उदाहरण ( मोह-महिमा )—थोरा बनियाँ बूढो भए तापनि त्यसका छोराहरूले कुहनी र गरेर बसार निकालिदिए। बूढो लाग्यो साथ फेरि, छोराहरूलाई गाली गर्दै ढोका बाहिर थरि उठाइएको पियो। त्यसै बेला थोरा सन्त आइपुगेका थिए। तिनले बूढोसित सोधे—'तिम्रो हाल यस्तो किन छ? किन रोइरहेर र कसलाई गाली गर्दैछौ?' बूढाले आफ्नो हालतसम्म भन्यो विस्तार लाएर भन्यो— मैले जीवनभरि धन कमाएँ। अब कमाउने शक्ति छैन। यसै निमित्त छोराहरू मेरो अपमान गर्दछन्। यो घर मैले ठूलो परिश्रमले बनाउन लगाएको हुँ। छोराहरूको विवाह मैले नै गरिदिएको हुँ। तिनका छोराहरूलाई पनि मैले नै लालन-पालन र शिक्षा-दीक्षाको प्रबन्ध गरिदिएर मानिस तुल्याएँ। यो सबै मेरो नै प्रताप हो। मैले केही नगरेको भए यी सबै आज भेड बनेर बस्ने थिएनन्। तर छोरा हरूले मेरो यो उपकार बिर्सिदिए। यसैले म यस्तो महाक्लेशमा डुबिरहेको छु।' महात्माले भने—'सेठजी! यदि यस्तो हो भने मलिन छिड। अब यो संसारको मोह छाड र शेष जीवन ईश्वर-भजनमा बिताऊ।' बूढाले भने—'तिमीलाई यसैले कसले बनायो? के दिन मेरो छोराहरूसित मलाई छुट्याउन खोज्दैछौ। मेरो अपमान गरून् वा चुटून्, ती सब पनि मेरै छोरा हुन्। मसंग कोही हुन्नन्, तिनलाई कसले छुट्ला!' महात्माले मनमनै भने—'मोह-महिमा धन्य हो!'

पनि विष्णुको आराधनाका नै बोतक हुन् ।।२९।। उनै विष्णु भगवान्ले प्राचीन कालमा कार्यकारणरूपिणी आफ्नो गुणमयी मायाद्वारा यस संसारको रचना गरे, तर विष्णु भगवान् निर्गुण छन् ।।३०।। आफ्नो चैतन्य शक्तिले वृद्धिमा प्राप्त विष्णु भगवान् मायाबाट उत्पन्न गुणहरूको भित्र प्रवेश गरेर सगुणजस्ता ज्ञात हुन्छन् ।।३१।। जस्तै यदि आगो अनेक काठहरूमा रहनाले अनेक थरिको देखिन्छ, त्यस्तै ईश्वर विभिन्न प्राणीहरूमा रहनाले अनेक प्रकारका जानिन्छन् ।। ३२ ।। ती भगवान् विष्णु आफैले रचेका प्राणीहरूमा प्रवेश गरेर भूत-सूक्ष्म इन्द्रिय र मन आदि गुणमय भावहरूद्वारा उनका गुण अर्थात् शब्द, रस, रूप तथा गन्ध आदि उपभोग गर्दछन् ।।३३।। लीलावतारहरूमा अनुरक्त लोककर्ता विष्णु नै आफ्नो सत्वगुणले लोकहरूको रक्षा गर्दछन् र बेला-बेलामा देवता, पशु-पक्षी र मनुष्य आदिको रूपमा अवतार धारण गर्दछन् ।।३४।। इति श्रीमद्भागवते महापुराणे प्रथम स्कन्धे पं० गौरीशंकर वसिष्ठकृत वासिष्ठी भाषा-टीकायां द्वितीयोऽध्यायः ।।२।। अब तेस्रो अध्यायमा भगवान्‌का अवतारहरू र गुण आदिको वर्णन गरिन्छ । सूतजी भन्दछन्–विष्णु भगवानले लोकहरूको रचना

गुणेषु गुणवानिव ॥ अन्तःप्रविष्ट आभाति विज्ञानेन विजृम्भितः ॥ ३१ ॥ यथा ह्यवहितो वह्निर्दारुष्वेकः स्वयोनिषु ॥ नानेव भाति विश्वात्मा भूतेषु च तथा पुमान् ॥ ३२ ॥ असौ गुणमयैर्भावैर्भूतसूक्ष्मेन्द्रियात्मभिः ॥ स्वनिर्मितेषु निर्विष्टो भुंक्ते भूतेषु तद्गुणान् ॥३३॥ भावयत्येष सत्त्वेन लोकान् वै लोकभावनः ॥ लीलावतारानुरतो देवतिर्यङ्नरादिषु ॥ ३४ ॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे द्वितीयोऽध्यायः ॥ २ ॥ सूत उवाच ॥ जगृहे पौरुषं रूपं भगवान्महदादिभिः ॥ संभूतं षोडशकलमादौ लोकसिसृक्षया ॥१॥ यस्याम्भसि शयानस्य योगनिद्रां वितन्वतः ॥ नाभिह्रदाम्बुजादासीद्ब्रह्मा विश्वसृजां पतिः ॥ २ ॥ यस्यावयवसंस्थानैः कल्पितो लोकविस्तरः ॥ तद्वै भगवतो रूपं विशुद्धं सत्त्वमूर्जितम् ॥३॥ पश्यंत्यदो रूपमदभ्रचक्षुषा सहस्रपादोरुभुजाननाद्भुतम् ॥ सहस्रमूर्द्धश्रवणाक्षिनासिकं सहस्रमौल्यम्बरकुंडलोल्लसत् ॥ ४ ॥ एतन्नानावताराणां निधानं बीजमव्ययम् ॥ यस्यांशांशेन सृज्यन्ते देवतिर्यङ्नरादयः ॥ ५ ॥ स एव प्रथमो देवः कौमारं सर्गमाश्रितः ॥ चचार दुश्चरं ब्रह्मा ब्रह्मचर्यमखण्डितम् ॥ ६ ॥ द्वितीयं तु भवायास्य रसातलगतां महीम् ॥ उद्धरिष्यन्नुपादत्त यज्ञेशः सौकरं वपुः ॥ ७ ॥ तृतीयमृषिसर्गं वै देवर्षित्वमुपेत्य सः ॥ तन्त्रं सात्वतमा-

गन इच्छाले पहिले महत्तत्व र अहङ्कारादिबाट उत्पन्न सोह कलाका पुरुषरूप धारण गरे ।।१।। योगनिद्राको विस्तार गरेर जलमा शयन गर्ने विष्णुको नाभिबाट निस्केको कमलद्वारा प्रजापति ब्रह्मा उत्पन्न भए ।।२।। तिनै विष्णुको अङ्गहरूबाट तिनले संसारको विस्तार कल्पना गरे । तिनै भगवान्‌का सत्वगुणमय शुद्धस्वरूप हो ।।३।। हजारौं चरण, तिघ्रा, हात, मुखहरूले अद्भुत, हजारौं मस्तक, श्रवण, नयन तथा नासिकाले युक्त तथा हजारौं मुकुट, वस्त्र र कुण्डलहरूले शोभित त्यस रूपलाई योगीजन आफ्ना ज्ञानदृष्टिले देख्तछन् ।।४।। तिनै विविध अवतारहरूका प्रवेशस्थान र विकार रहित बीज हो । जुनैको अंश ब्रह्मा र अंशांश मरीचि आदि द्वारा देवता, पशु-पक्षी र मनुष्य आदिको सृष्टि हुन्छ ।।५।। तिनै 'विष्णु' देवताले पहिले सनत्कुमार अवतारमा ब्राह्मण भएर अत्यन्त कठिन एवं अखण्ड ब्रह्मचर्य-व्रत पालन गरेका थिए ।।६।। यज्ञेश विष्णुले नै संसारको सृष्टिका निम्ति रसातलमा गइसकेकी पृथ्वीलाई फर्काएर ल्याउन

उनै भगवान्ले तेस्रो नारद अवतार धारण गरेर पञ्चरात्र-शास्त्र भनेका थिए, जसले प्राणिहरू कर्मबन्धनहरूबाट मुक्त भएका थिए ॥८॥ चौथो अवतारमा ती ईश्वरले धर्मको 'मूर्ति' नामकी स्त्रीबाट नर-नारायण ऋषि भएर बुद्धिलाई शान्त पार्ने कठोर तप गरे ॥९॥ तिनले नै पाँचौं अवतारमा कपिलमुनि भएर आसुरी नामका ब्राह्मण द्वारा कालले नष्ट तत्त्व समूहको निर्णय गर्न सक्ने सांख्य-शास्त्र भने ॥१०॥ छैठौं अवतारमा अत्रिका छोरा दत्तात्रेय भएर उनले आफ्नी आमा अनसूया र अलर्क, प्रह्लाद तथा यदु आदिलाई आत्मज्ञानको उपदेश दिए ॥११॥ सातौं अवतारमा ती रुचिकी पत्नी आकूतिद्वारा यज्ञावतार रूपमा उत्पन्न भए। उनले नै याम आदि देवताहरू समेत स्वायंभुव मन्वन्तरको पालन गरे ॥१२॥ आठौं अवतारमा ती विद्वान्हरूलाई सबै आश्रमहरूमा श्रेष्ठ परमहंस-मार्ग देखाउनकोलागि नाभिकी पत्नी मेरुदेवीद्वारा ऋषभदेव नामले उत्पन्न भए ॥१३॥ हे विप्र हो! ऋषिहरूले प्रार्थना गरेर भगवान्को नवौं पृथु अवतार भयो। ती पृथुले यस पृथ्वीबाट ओषधि र अन्नादि दुहे। त्यसैले पृथु अवतार उत्तम मानिन्छ ॥१४॥ चाक्षुष मन्वन्तरको समयमा उनले प्रलय-समुद्रमा मत्स्यावतार

चक्रे नैष्कर्म्यं कर्मणां यतः ॥ ८ ॥ तुर्ये धर्मकलासर्गे नरनारायणावृषी ॥ भूत्वाऽऽत्मोपशमोपेतमकरोद्दुश्चरं तपः ॥ ९ ॥ पञ्चमः कपिलो नाम सिद्धेशः कालविप्लुतम् ॥ प्रोवाचासुरये सांख्यं तत्त्वग्रामविनिर्णयम् ॥ १० ॥ षष्ठे अत्रेरपत्यत्वं वृतः प्राप्तोऽनसूयया ॥ आन्वीक्षिकीमलर्काय प्रह्लादादिभ्य ऊचिवान् ॥ ११ ॥ ततः सप्तम आकूत्यां रुचेर्यज्ञोऽभ्यजायत ॥ स यामाद्यैः सुरगणैरपात्स्वायंभुवान्तरम् ॥ १२ ॥ अष्टमे मेरुदेव्यां तु नाभेर्जात उरुक्रमः ॥ दर्शयन्वर्त्म धीराणां सर्वाश्रमनमस्कृतम् ॥ १३ ॥ ऋषिभिर्याचितो भेजे नवमं पार्थिवं वपुः ॥ दुग्धे नानौषधीर्विप्रास्तेनायं स उशत्तमः ॥ १४ ॥ रूपं स जगृहे मात्स्यं चाक्षुषोदधिसंप्लवे ॥ नाव्यारोप्य महीमय्यामपाद्वैवस्वतं मनुम् ॥ १५ ॥ सुरासुराणामुदधिं मथ्नतां मन्दराचलम् ॥ दध्रे कमठरूपेण पृष्ठ एकादशे विभुः ॥ १६ ॥ धान्वन्तरं द्वादशमं त्रयोदशममेव च ॥ अपाययत् सुरानन्यान्मोहिन्या मोहयन्स्त्रिया ॥ १७ ॥ चतुर्दशं नारसिंहं बिभ्रद्दैत्येन्द्रमूर्जितम् ॥ ददार करजैर्वक्षस्येरकां कटकृद्यथा ॥ १८ ॥ पञ्चदशं वामनकं कृत्वाऽगादध्वरं बलेः ॥ पदत्रयं याचमानः प्रत्यादित्सुस्त्रिविष्टपम् ॥ १९ ॥ अवतारे षोडशमे पश्यन्ब्रह्मद्रुहो नृपान् ॥ त्रिःसप्तकृत्वः कुपितो निःक्षत्रामकरोन्महीम् ॥२०॥ ततः सप्तदशे जातः सत्यवत्यां पराशरात् ॥ चक्रे वेदतरोः शाखा दृष्ट्वा पुंसोऽल्पमेधसः ॥ २१ ॥ नरदेवत्वमापन्नः सुरकार्यचिकीर्षया ॥ समुद्रनिग्रहा-

धारण गरे, जसमा पृथ्वीरूपिणी डुङ्गामा सबै वस्तुहरू राखेर उनले वैवस्वत मनुको रक्षा गरे ॥ १५ ॥ जब देवता र दानव समुद्र मन्थन गर्न लागे, तब विष्णुभगवान्ले एघारौं कच्छप रूप लिई आफ्नो पीठमा मन्दराचल पर्वत धारण गरे ॥१६॥ उनको बाह्रौं अवतार धन्वन्तरीको रूपमा भयो। तेह्रौं अवतारमा उनले मोहनीरूप द्वारा दैत्यगणलाई मोहित पारेर देवताहरूलाई अमृत पान गराए ॥ १७ ॥ चौधौं नृसिंहरूप धारण गरेर भगवान्ले नङ द्वारा दैत्यहरूका राजा हिरण्यकशिपुको पेट त्यसै गरी फोरे जसरी चटाई बनाउने व्यक्ति 'एरका' घाँस चिर्दछ ॥ १८॥ पन्ध्रौं वामन अवतार धारण गरेर बलिको यज्ञमा गएर स्वर्गको अधिकार खोस्ने इच्छा गरी उनले बलिसित तीन पाउ भूमि मागे ॥१९॥ सोह्रौं परशुराम अवतारमा ब्राह्मणहरूको वैरभाव गर्ने राजाहरूलाई देखेर उनले रिसाई पृथ्वीलाई एक्काइस पल्ट क्षत्रियविहीन पारे ॥२०॥ सत्रौं अवतारमा ती सत्यवतीको उदरबाट

पराशर बाट व्यासरूपमा अवतीर्ण भएर मनुष्यहरूको अल्प-बुद्धि देखेर उनले वेद-वृक्षको शाखा स्वरूप पुराणहरूको रचना गरे ॥२१॥ त्यसपछि देवकार्य साधन गर्न उनको अठारौं रामको अवतार भयो । ती श्रीरामले सेतुबन्ध आदि अनेक अद्भुत काम गरे ॥२२॥ उन्नाइसौं र बीसौं अवतारमा यदुवंशीहरूमा जन्म लिएर उनले बलभद्र र श्रीकृष्ण रूपले पृथ्वीको भार उतारे ॥२३॥ कलियुग प्रबल भएपछि दैत्यहरूलाई मोहमा पार्ने निमित्त ती जिनराजका छोरा भएर बुद्ध रूपले कीकट देशमा उत्पन्न हुनेछन् ॥२४॥ कलिको अन्त्यमा राजाहरू चोर झैं दुराचारी भएपछि ती विष्णुयश नामका ब्राह्मणको घरमा कल्कि रूपमा उत्पन्न हुनेछन् ॥२५॥ हे विप्र हो ! जस्तै कहिले पनि नसुक्ने जलाशयबाट हजारौं मुहानहरू निस्किरहन्छन्, त्यस्तै सत्त्वगुण-स्वरूपका विष्णुबाट असंख्य अवतार हुँदै रहन्छन् ॥२६॥ ऋषि, मनु, देवता र प्रजापति सहित पराक्रमी मनु-पुत्र यी सब विष्णुकै अंश हुन् ॥२७॥ यी सबै अवतार परमेश्वरका अंश र कला हुन्, किन्तु श्रीकृष्ण त साक्षात् नारायण नै हुन् । प्रत्येक युगमा ती दैत्यहरूबाट आत्तिएको संसारलाई सुखी पार्दछन् ॥२८॥ जो मनुष्य पवित्र मनले

तानि चक्रे वीर्याण्यतः परम् ॥ २२ ॥ एकोनविंशे विंशतिमे वृष्णिषु प्राप्य जन्मनी ॥ रामकृष्णाविति भुवो भगवानहरद्भरम् ॥२३॥ ततः कलौ संप्रवृत्ते संमोहाय सुरद्विषाम् ॥ बुद्धो नाम्ना जिनसुतः कीकटेषु भविष्यति ॥२४॥ अथासौ युगसंध्यायां दस्युप्रायेषु राजसु ॥ जनिता विष्णुयशसो नाम्ना कल्किर्जगत्पतिः ॥२५॥ अवतारा ह्यसंख्येया हरेः सत्त्वनिधेर्द्विजाः ॥ यथाऽविदासिनः कुल्याः सरसः स्युः सहस्रशः ॥२६॥ ऋषयो मनवो देवा मनुपुत्रा महौजसः ॥ कलाः सर्वे हरेरेव सप्रजापतयस्तथा ॥ २७ ॥ एते चांशकलाः पुंसः कृष्णस्तु भगवान्स्वयम् ॥ इन्द्रारिव्याकुलं लोकं मृडयन्ति युगे युगे ॥२८॥ जन्म गुह्यं भगवतो य एतत्प्रयतो नरः ॥ सायं प्रातर्गृणन्भक्त्या दुःखग्रामाद्विमुच्यते ॥ २९ ॥ एतद्रूपं भगवतो ह्यरूपस्य चिदात्मनः ॥ मायागुणैर्विरचितं महदादिभिरात्मनि ॥३०॥ यथा नभसि मेघौघो रेणुर्वा पार्थिवोऽनिले ॥ एवं द्रष्टरि दृश्यत्वमारोपितमबुद्धिभिः ॥३१॥ अतः परं यदव्यक्तमव्यूढगुणव्यूहितम् ॥ अदृष्टाश्रुतवस्तुत्वात्स जीवो यत्पुनर्भवः ॥३२॥ यत्रेमे सदसद्रूपे प्रतिषिद्धे स्वसंविदा ॥ अविद्ययाऽऽत्मनि कृते इति तद्ब्रह्मदर्शनम् ॥३३॥ यद्येषोपरता देवी माया वैशारदी मतिः ॥ सम्पन्न एवेति विदुर्महिम्नि स्वे महीयते ॥ ३४ ॥ एवं जन्मानि कर्माणि ह्यक-

भगवान्‌को यस जन्म-चरित्रलाई प्रातः र सायंकालमा नित्य पाठ गर्छ, त्यो सबै दुःखबाट मुक्त हुनेछ ॥२९॥ चैतन्यात्मक तथा अरूप ( निर्गुण ) भगवान्‌को यो रूप महदहंकारादि माया का गुणहरूबाट आत्माको स्थानमा रचिन्छ ॥३०॥ जस्तै आकाशमा मेघ समूह र हावामा पृथ्वीको धूलो निर्बुद्धि प्राणीहरूलाई आकाश र पवनरूप ज्ञान हुन्छ, त्यसै गरी निर्बुद्धि-हरूको आत्मामा शरीर भासमान हुन्छ ॥३१॥ यस स्थूल शरीर बाहेक सूक्ष्म शरीर छ, त्यो प्रकट हुँदैन किनकि त्यो हात-पाउ आदिले रहित रहन्छ ॥३२॥ माया द्वारा आत्मामा कल्पित स्थूल-सूक्ष्म दुवै स्वरूप जब श्रवण, मननादि उपायहरू द्वारा ज्ञानले प्रतिषिद्ध हुन्छ तब जीव नै ज्ञानस्वरूप ब्रह्म भइजान्छ ॥३३॥ जब ईश्वरको माया शान्त भएर जान्छ अर्थात् ज्ञान भइजान्छ, तब जीव ब्रह्मस्वरूप परमानन्द स्वरूप आफ्नो महिमामा नै पूजित हुन्छ—यस्तो तत्त्वज्ञानीहरूको कथन छ ॥ ३४ ॥ यस प्रकार ती अन्तर्यामी एवं अकर्ताको वेदहरूमा

गुप्त कर्म तथा ती जन्मरहित प्रभुको अन्यका विद्वान्जन वर्णन गर्दछन् ॥३५॥ ती सफल लीलाधारी ईश्वर यस संसारको रचना, पालन र संहार गर्दछ, तापनि यसमा आसक्त हुँदैन। प्राणीहरूमा लुकेको, स्वाधीन र षड् गुणहरूको स्वामी त्यो ईश्वर परैबाट इन्द्रियहरूको विषय सोंग्दै रहन्छ कुनै पनि आत्मज्ञानहीन प्राणी संसारका विधाता तथा मन, रूप र वचनले नामहरूको विस्तार गर्न ईश्वरका लीला तर्क आदिको निपुणताले जान्न सक्तैन, जस्तै-कुनै नाटकीका लीला मनुष्य बुझ्न सक्तैनन्। फेरि त्यही मनुष्य ती चक्रपाणि परमात्माको स्वरूप जान्न सक्छ, जो निरन्तर सोझो स्वभावले तिनका चरण-कमलको गन्ध सुँघिरहन्छ ॥३६-३८॥ तपाईहरू धन्य हुनुहुन्छ, किन भने सबै लोकहरूका स्वामी विष्णुमा सर्व प्रकारले आफ्नो चित्त लगाएकै भएको छ। यस्तो गर्ने प्राणीको भयंकर जन्म-मरण हुँदैन ॥३९॥ जसमा विष्णुको चरित्र वर्णित छ, त्यस्तो वेद समान मान्य भागवत पुराण भगवान् वेदव्यासले बनाउनु भएको हो ॥४०॥ धनदायक र कल्याणकारक यो पुराण आत्म ज्ञानीहरूमा श्रेष्ठ आफना छोरा शुकदेवलाई वेदव्यासले संसारको कल्याणार्थ पढाए ॥४१॥ ती शुकदेवले सबै वेद र

तुरजनस्य च ॥ वर्णयन्ति स्म कवयो वेदगुह्यानि हृत्पतेः ॥३५॥ स वा इदं विश्वममोघलीलः सृजत्यवत्यत्ति न सज्जतेऽस्मिन् ॥ भूतेषु चान्तर्हित आत्मतन्त्रः षाड्वर्गिकं जिघ्रति षड्गुणेशः ॥३६॥ न चास्य कश्चिन्निपुणेन धातुरवैति जन्तुः कुमनीष ऊतीः ॥ नामानि रूपाणि मनोवचोभिः संतन्वतो नटचर्यामिवाज्ञः ॥ ३७ ॥ स वेद धातुः पदवीं परस्य दुरन्तवीर्यस्य रथाङ्गपाणेः ॥ योऽमायया संततयाऽनुवृत्त्या भजेत तत्पादसरोजगन्धम् ॥ ३८ ॥ अथेह धन्या भगवन्त इत्थं यद्वासुदेवेऽखिललोकनाथे ॥ कुर्वन्ति सर्वात्मकमात्मभावं न यत्र भूयः परिवर्त उग्रः ॥ ३९ ॥ इदं भागवतं नाम पुराणं ब्रह्मसंमितम् ॥ उत्तमश्लोकचरितं चकार भगवानृषिः ॥ ४० ॥ निःश्रेयसाय लोकस्य धन्यं स्वस्त्ययनं महत् ॥ तदिदं ग्राहयामास सुतमात्मवतां वरम् ॥ ४१ ॥ सर्ववेदेतिहासानां सारं सारं समुद्धृतम् ॥ स तु संश्रावयामास महाराजं परीक्षितम् ॥ ४२ ॥ प्रायोपविष्टं गङ्गायां परीतं परमर्षिभिः ॥ कृष्णे स्वधामोपगते धर्मज्ञानादिभिः सह ॥४३॥ कलौ नष्टदृशामेष पुराणार्कोऽधुनोदितः ॥ तत्र कीर्तयतो विप्रा विप्रर्षेर्भूरितेजसः ॥४४॥ अहं चाध्यगमं तत्र निविष्टस्तदनुग्रहात् ॥ सोऽहं वः श्रावयिष्यामि यथाऽधीतं यथामति ॥४५॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे तृतीयोऽध्यायः ॥३॥ व्यास उवाच ॥ इति ब्रुवाणं संस्तूय मुनीनां दीर्घसत्रिणाम् ॥ वृद्धः कुलपतिः सूतं बह्वृचः शौनकोऽब्रवीत् ॥१॥

इतिहासहरूबाट झिकेको यस सारांशलाई अन्न-जल छाडेर गङ्गाको किनारमा बसेका र महर्षिहरूले घेरिएका राजा परीक्षित्लाई सुनाएका थिए। धर्म तथा ज्ञानादि समेत श्रीकृष्ण आफ्ना धाम (वैकुण्ठ) पाल्नु भएपछि कलिका नयन हीन जनहरूका लागी यो भागवत पुराणरूपी सूर्य उदाएको छ। हे विप्र हो! अब तेजस्वी शुकदेवजी भागवत भनिरहेका थिए ॥४२-४४॥ तब म म पनि त्यहाँ थिएँ र उनको अनुग्रहले त्यहीं बसेर मैले जति सुनें, त्यही आफ्नो बुद्धि अनुसार तपाईहरूलाई सुनाउँछु ॥४५॥ इति श्रीमद्भागवते महापुराणे पं० गौरीशंकर 'बम्हिष्ठ' कृत नेपाली भाषा-टीकायां तृतीयोऽध्यायः ॥ अब चौथो अध्यायमा भागवत रचनाको कारण बताइन्छ—व्यासजी भन्नुहुन्छ, धेरै दिनसम्म यज्ञ गर्न मुनिहरूका मात्र कथा भन्ने सूतजीको प्रशंसा गर्दै वृद्ध तथा मुनिहरूमा प्रधान ऋग्वेदी शौनक भन्दछन् ॥१॥ शौनकले भने—हे वक्ताहरूमा श्रेष्ठ एवं महाभाग सूत! शुकदेवजी गुन पवित्र कथा भन्नुभयो तपाई

तपाईं त्यही भन्नुहवस् ॥२॥ कुन युगमा कुन स्थानमा र किन त्यो कथा प्रकट भयो ? कसद्वारा प्रेरित भएर व्यासजीले श्रीमद्भागवत-संहिता बनाए ? व्यासजीका छोरा शुकदेव ठूला योगी र समदर्शी थिए, त्यसैले तिनमा भेदभाव थिएन । तीन एकमात्र विष्णुमा नै आफ्नो बुद्धि लगाइराख्दथे र मायाको निद्राबाट जागा रहेर महान् ज्ञानी भएर पनि मूढ समान ज्ञात हुन्थे ॥३-४॥ एक पल्ट भागेर जाँदा नाङ्गा शुकदेवलाई देखेर जलक्रीडा गर्न लागेका देवीहरूले लुगा लगाएनन् र तिनकै पछि-पछि जान लागेका लुगा लगाएका व्यासजीलाई देखेर लाज मान्दै तिनले आफ्ना लुगा लगाए । त्यो देखेर जब व्यासजीले तिनीहरूसित कारण सोधे, तब देवीहरूले भने—तिम्रो मनमा स्त्री-पुरुषको भेदभाव छ र तिम्रा छोरा पवित्र दृष्टि शुकदेवको मनमा स्त्री-पुरुषको भेद छैन ॥५॥ त्यस्ता उन्मत्त, बौलाहा जस्ता र मूर्ख जस्ता कुरुजाङ्गल आदि देशहरूमा डुल्दै हिंड्ने शुकदेवलाई हस्तिनापुर-निवासीहरूले कसरी चिन्न सके ? ॥६॥ हे तात ! पाण्डव वंशमा उत्पन्न राजर्षि परीक्षितसित शुकदेवको कसरी वार्तालाप भयो, जसले यो भागवतकथा प्रवृत्त भयो ? ॥ ७ ॥ किन भने गृहस्थीहरूको घरमा तिनका

उवाच ॥ सूत सूत महाभाग वद नो वदतां वर ॥ कथां भागवतीं पुण्यां यदाह भगवाञ्छुकः ॥२॥ कस्मिन् युगे प्रवृत्तेयं स्थाने वा केन हेतुना ॥ कुतः संचोदितः कृष्णः कृतवान्संहितां मुनिः ॥ ३ ॥ तस्य पुत्रो महायोगी समदृङ्निर्विकल्पकः ॥ एकान्तमतिरुन्निद्रो गूढो मूढ इवेयते ॥ ४ ॥ दृष्ट्वाऽनुयान्तमृषिमात्मजमप्यनग्नं देव्यो ह्रिया परिदधुर्न सुतस्य चित्रम् ॥ तद्वीक्ष्य पृच्छति मुनौ जगदुस्तवास्ति स्त्रीपुंभिदा न तु सुतस्य विविक्तदृष्टेः ॥ ५ ॥ कथमालक्षितः पौरैः संप्राप्तः कुरुजाङ्गलान् ॥ उन्मत्तमूकजडवद्विचरन्गजसाह्वये ॥ ६ ॥ कथं वा पाण्डवेयस्य राजर्षेर्मुनिना सह ॥ संवादः समभूत्तात यत्रैषा सात्वती श्रुतिः ॥ ७ ॥ स गोदोहनमात्रं हि गृहेषु गृहमेधिनाम् ॥ अवेक्षते महाभागस्तीर्थीकुर्वंस्तदाश्रमम् ॥ ८ ॥ अभिमन्युसुतं सूत प्राहुर्भागवतोत्तमम् ॥ तस्य जन्म महाश्चर्यं कर्माणि च गृणीहि नः ॥ ९ ॥ स सम्राट् कस्य वा हेतोः पाण्डूनां मानवर्द्धनः ॥ प्रायोपविष्टो गङ्गायामनादृत्याधिराट् श्रियम् ॥१०॥ नमन्ति यत्पादनिकेतमात्मनः शिवाय हानीय धनानि शत्रवः ॥ कथं स वीरः श्रियमङ्ग दुस्त्यजां युवैषतोत्स्रष्टुमहो सहासुभिः ॥ ११ ॥ शिवाय लोकस्य भवाय भूतये य उत्तमश्लोकपरायणा जनाः ॥ जीवन्ति नात्मार्थमसौ पराश्रयं मुमोच निर्विद्य कुतः कलेवरम् ॥ १२ ॥ तत्सर्वं नः समाचक्ष्व पृष्टो यदिह किंचन ॥ मन्ये त्वां विषये वाचां स्नातमन्यत्र छान्दसात् ॥ १३ ॥ सूत उवाच ॥ द्वापरे

आश्रमहरू पवित्र पार्दै महामुनि शुकदेव गाई दुहुने समय जति मात्र अडिन्थे ॥ ८ ॥ हे महाभाग सूत ! अभिमन्यु-पुत्र परीक्षितलाई मुनिहरूले उत्तम विष्णुभक्त भनेका छन् । अतः तिनको आश्चर्यपूर्ण जन्म-कर्म भन्नुहवस् ॥ पाण्डुवंशका गौरव बढाउने चक्रवर्ती परीक्षित किन राज्यलक्ष्मी त्यागेर अन्न जल छाडी गङ्गाको तटमा मर्न भनेर बसेका थिए ? ॥९॥१०॥ हे सूतजी ! आफ्नो कल्याणको निम्ति वैरी पनि धन दिएर जुन परीक्षितले पाउ राख्ने पीर्कालाई प्रणाम गर्न गर्दथे, ती युवा वीर राजाले किन कष्टपूर्वक त्याग गर्न योग्य प्राणसहित लक्ष्मीलाई छाड्ने इच्छा किन गरे ? ॥११॥ विष्णुभक्त संसारको कल्याण र सबैको भलो गर्न बाँच्दछन्—आफ्नो निम्ति बाँच्दैनन् । अनि राजा परीक्षितले संसारबाट नाता तोडेर अरू-को उपकार गर्ने व्यक्तिले शरीर किन छाडे ? ॥१२॥ मैले जे जति हजुरसित सोधें, त्यो आज्ञा हवस् । म हजुरलाई वैदिक विषय छाडेर अन्य वाणीको विषयमा मात्रै बडो मान्दछु

॥१३॥ सूतजी भन्दछन्—तेस्रो चतुर्युगीको द्वापरयुगमा वसुकी तनया सत्यवतीबाट पराशर मुनिको वंशद्वारा विष्णुको अंशले योगी व्यासदेव उत्पन्न भएका थिए। एक दिन सरस्वती नदीमा स्नान गरेर पवित्र व्यासजी सूर्योदयको वेला एक्लै एकान्तमा बसे ॥ १४-१५॥ भूत र भविष्यका ज्ञाता व्यासदेवले गुप्त वेग हुने कालद्वारा गरिएको युगधर्ममा परिवर्तन देखे र पृथ्वीमा युग-युगमा कालद्वारा गरिएको प्राणिहरूको शक्ति-न्यूनता र श्रद्धा तथा धैर्यरहित, दुर्बुद्धि, अल्पायु र अभागी मनुष्यहरूलाई दिव्य दृष्टिले देखेर वेदव्यासले सबै वर्ण तथा आश्रमहरूको हित हुने विचार गरे ॥१६-१८॥ तदनुसार ब्रह्मा, होता, अध्वर्यु र आग्नीध्र यी चारैले गर्ने योग्य वैदिक कर्म तथा प्रजाहरूलाई पवित्र पार्न यज्ञ निरन्तर हुँदै रहनको निम्ति उनले यौटा वेदको चार भाग गरिदिए ॥१९॥ तिनको नाम हो–ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेद । यिनै तिनका चारै विभाग थिए। इतिहास र पुराण पाँचौं वेद कहिन्छ

समनुप्राप्ते तृतीये युगपर्यये ॥ जातः पराशराद्योगी वासव्यां कलया हरेः ॥ १४ ॥ स कदाचित्सरस्वत्या उपस्पृश्य जलं शुचि ॥ विविक्तदेश आसीन उदिते रविमंडले ॥१५॥ परावरज्ञः स ऋषिः कालेनाव्यक्तरंहसा ॥ युगधर्मव्यतिकरं प्राप्तं भुवि युगे युगे ॥१६॥ भौतिकानां च भावानां शक्तिह्रासं च तत्कृतम् ॥ अश्रद्दधानान्निःसत्त्वान्दुर्मेधान्ह्रसितायुषः ॥ १७ ॥ दुर्भगांश्च जनान्वीक्ष्य मुनिर्दिव्येन चक्षुषा ॥ सर्ववर्णाश्रमाणां यद्दध्यौ हितममोघदृक् ॥ १८ ॥ चातुर्होत्रं कर्म शुद्धं प्रजानां वीक्ष्य वैदिकम् ॥ व्यदधाद्यज्ञसन्तत्यै वेदमेकं चतुर्विधम् ॥ १९ ॥ ऋग्यजुःसामाथर्वाख्या वेदाश्चत्वार उद्धृताः ॥ इतिहासपुराणं च पञ्चमो वेद उच्यते ॥ २० ॥ तत्रर्ग्वेदधरः पैलः सामगो जैमिनिः कविः ॥ वैशम्पायन एवैको निष्णातो यजुषामुत ॥ २१ ॥ अथर्वाङ्गिरसामासीत्सुमन्तुर्दारुणो मुनिः ॥ इतिहासपुराणानां पिता मे रोमहर्षणः ॥ २२ ॥ त एत ऋषयो वेदं स्वं स्वं व्यस्यन्ननेकधा ॥ शिष्यैः प्रशिष्यैः तच्छिष्यैर्वेदास्ते शाखिनोऽभवन् ॥ २३ ॥ त एव वेदा दुर्मेधैर्धार्यन्ते पुरुषैर्यथा ॥ एवं चकार भगवान्व्यासः कृपणवत्सल ॥२४॥ स्त्रीशूद्रद्विजबन्धूनां त्रयी न श्रुतिगोचरा ॥ कर्मश्रेयसि मूढानां श्रेय एवं भवेदिह ॥ २५ ॥ इति भारतमाख्यानं कृपया मुनिना कृतम् ॥ वेदार्थं च समुद्धृत्य भारते प्रोक्तवान्मुनिः ॥२६॥ एवं प्रवृत्तस्य सदा भूतानां श्रेयसि द्विजाः ॥ सर्वात्मकेनापि यदा नातुष्यद्धृदयं ततः ॥२७॥ नातिप्रसीदद्धृदयः सरस्वत्यास्तटे शुचौ ॥ वितर्कयन्विविक्तस्थ इदं प्रोवाच धर्मवित् ॥ २८ ॥ धृतव्रतेन हि मया

॥२०॥ महर्षि पैल ऋग्वेदी, जैमिनी सामवेदी र वैशम्पायन यजुर्वेदमा निपुण भए ॥२१॥ अथर्ववेदका ज्ञाता सुमन्तु मुनि भए। इतिहास-पुराणका ज्ञाता मेरा पिता रोमहर्षण थिए ॥२२॥ ती ऋषिहरूले पनि आफ्ना आफ्ना वेदको अनेक विभाग पारे। केही समयपछि ती वेद शिष्य प्रशिष्यहरूद्वारा अनेक शाखाहरूमा विभक्त भए ॥२३॥ अनि उसरी वेदहरूलाई स्वल्पबुद्धि मनुष्य पनि पढ्न सकून् भन्ने सरल ग्रन्थ व्यासजीले बनाए ॥२४॥ स्त्री, शूद्र र द्विजहरू अर्थात् ब्राह्मण, क्षत्रिय तथा वैश्यहरूमा अधम मनुष्यहरूलाई वेद सुन्ने अधिकार छैन। तिनको स्वार्थ साधन तथा ज्ञानरहित जनहरूको कल्याण गर्नका लागि व्यासदेवले दया गरेर महाभारत इतिहास रचे, जसमा सबै वेदहरूको तात्पर्य ती महामुनिले भनिदिए ॥२५-२६॥ हे द्विज ! यो सबै गरेर पनि प्राणिहरूको हितमा सबै प्रकारले तत्पर रहने व्यासजीको हृदय सन्तुष्ट हुन सकेन। एक दिन सरस्वती नदीको पवित्र तटमा बसेर धर्मज्ञ व्यासदेव

मनमनै भन्नलागे—॥२७॥२८॥ मैले वेद, गुरुजन र अग्निको निष्कपट बुद्धिले राम्रो सेवा गरेको छु र तिनको आज्ञा मानेको छु ॥२९॥ महाभारतको निहुँले मैले वेदहरूको अर्थ पनि बताएँ, जसमा स्त्रीहरू र शूद्रादिलाई पनि धर्म आदिको निदन छ ॥३०॥ तथापि ब्रह्मवर्चस्वले अत्यन्त उत्तम मेरो दैहिक आत्मा असन्तुष्टजस्तो किन छ ? ॥३१॥ विष्णु-भक्तहरूको धर्म मैले जति बर्ता राम्रा निरूपित गरिन । यद्यपि वैष्णव-धर्म परमहंसलाई प्रिय छ र परमहंस विष्णुलाई प्रिय छन् ॥३२॥ त्यसरी आफूलाई हीन मानेर खिन्न मनले व्यासजीको आश्रममा अकस्मात् नारद मुनि आए, जसको वर्णन मैले पहिल्यै गरिसकेको छु ॥३३॥ देववन्द्य नारदलाई उपस्थित देखेर व्यासजी चुरुक्क उठेर तिनको विधिपूर्वक पूजन गरे ॥३४॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे पं० गौरीशंकर वशिष्ठकृत नेपाली भाषाटीकायां चतुर्थोऽध्यायः ॥४॥ अब पाँचौं अध्यायमा व्यास-नारद संवाद वर्णन गरिन्छ । सूतजी भन्दछन्—अनि नर्मीचैं बसेका

छन्दांसि गुरवोऽग्नयः ॥ मानिता निर्व्यलीकेन गृहीतं चानुशासनम् ॥ २९ ॥ भारतव्यपदेशेन ह्याम्नायार्थश्च दर्शितः ॥ दृश्यते तत्र धर्मादि स्त्रीशूद्रादिभिरप्युत ॥ ३० ॥ तथापि बत मे दैह्यो ह्यात्मा चैवात्मना विभुः ॥ असंपन्न इवाभाति ब्रह्मवर्चस्यसत्तमः ॥ ३१ ॥ किं वा भागवता धर्मा न प्रायेण निरूपिताः ॥ प्रियाः परमहंसानां त एव ह्यच्युतप्रियाः ॥ ३२ ॥ तस्यैवं खिलमात्मानं मन्यमानस्य खिद्यतः ॥ कृष्णस्य नारदोऽभ्यागादाश्रमं प्रागुदाहृतम् ॥३३॥ तमभिज्ञाय सहसा प्रत्युत्थायासनान्मुनिः ॥ पूजयामास विधिवन्नारदं सुरपूजितम् ॥३४॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे चतुर्थोऽध्यायः ॥ ४ ॥ सूत उवाच ॥ अथ तं सुखमासीन उपासीनं बृहच्छ्रवाः ॥ देवर्षिः प्राह विप्रर्षिं वीणापाणिः स्मयन्निव ॥ १ ॥ नारद उवाच ॥ पाराशर्य महाभाग भवतः कच्चिदात्मना ॥ परितुष्यति शारीर आत्मा मानस एव वा ॥ २ ॥ जिज्ञासितं सुसंपन्नमपि ते महदद्भुतम् ॥ कृतवान्भारतं यस्त्वं सर्वार्थपरिबृंहितम् ॥ ३ ॥ जिज्ञासितमधीतं च यत्तद्ब्रह्म सनातनम् ॥ अथापि शोचस्यात्मानमकृतार्थ इव प्रभो ॥ ४ ॥ व्यास उवाच ॥ अस्त्येव मे सर्वमिदं त्वयोक्तं तथापि नात्मा परितुष्यते मे ॥ तन्मूलमव्यक्तमगाधबोधं पृच्छामहे त्वाऽऽत्मभवात्मभूतम् ॥ ५ ॥ स वै भवान्वेद समस्तगुह्यमुपासितो यत्पुरुषः पुराणः ॥ परावरेशो मनसैव विश्वं सृजत्यवत्यत्ति गुणैरसङ्गः ॥ ६ ॥ त्वं पर्यटन्नर्क इव त्रिलोकीमन्तश्चरो

ब्रह्मर्षि व्यासप्रति हातमा वीणा लिएका यशस्वी देवर्षि नारद मुसु-मुसु हाँसी भन्नलागे ॥१॥ नारदजी भन्दछन्—हे पराशरात्मज ! तपाईंको शारीरिक चित्त र आत्मा राम्ररी प्रसन्न त छ ? ॥२॥ तपाईंले जान्न पर्ने जति सबै कुरा जानिसक्नु भएको छ, किनकि तपाईंले धर्मादि सबै पुरुषार्थहरूले परिपूर्ण महाभारतको रचना गर्नुभयो ॥३॥ तपाईंले सनातन परब्रह्मको विचार गर्नुभयो र त्यसलाई प्राप्त गर्नुभयो तापनि हे प्रभो ! तपाईं आफूलाई असफल किन ठान्नुहुन्छ ॥४॥ व्यासले भने-हजुरले आज्ञा भएको सबै सत्य हो, तापनि मेरो चित्त प्रसन्न छैन । त्यसको कारण ब्रह्मादि उत्पन्न गम्भीर, ज्ञानवान् तथा अव्यक्त स्वरूप हजुरसित म सोध्छु ॥५॥ किनकि हजुर गुप्त कुरा पनि जान्नुहुन्छ । हजुरले पुराण-पुरुषको उपासना गर्नुभएको छ, जुन कारणले स्वामी छन् र मनले नै गुणद्वारा संसारको रचना, पालन र संहार गर्दछन्-तैपनि आसक्त हुँदैनन् ॥६॥ हजुर तीनै लोकमा सूर्य झैं घुम्दै सबै कुरा देखिसक्नु भएको छ र प्राणवायु जस्तै

सबै कुरा जान्नुहुन्छ । यस कारण परब्रह्मको ध्यानमा तत्पर रहने तथा वेद ब्रह्मकोस्वाध्याय गर्नाले विशुद्ध बुद्धि हजुर समा अति न्यूनता छ, त्यो भन्नुहवस् ॥७॥ नारदजीले भने—हजुरले महाभारत आदि ग्रन्थमा सबै भन्नुभयो, तर भगवान्‌को निर्मल यश-गान गर्नुभएन, जुन धर्मादिको ज्ञानबाट प्रसन्न हुँदैनन्, म त्यो ज्ञानलाई तुच्छ मान्दछु ॥ ८ ॥ हे मुनिवर ! जसरी धर्मादि सम्बन्धी कुराहरू तपाईंले विस्तारपूर्वक भन्नुभएको छ, त्यसरी विष्णुको महिमा गाउनु भएन । जुन विचित्र पद भएको वचन संसारलाई पवित्र पार्ने विष्णुको यश गाउँदैन त्यसलाई विद्वानहरू काकतीर्थ भन्दछन्, किनकि ब्रह्मस्थानमा पुगेका हंसरूपी योगी त्योसित प्रेम गर्दैनन् । त्यही वचन मनुष्यहरूका पाप पखाल्दछ, जसमा अशुद्धिहरू भए पनि प्रत्येक श्लोकमा विष्णुको यशयुक्त नाम हुन् र जसलाई सज्जन सुनुन-भनुन र गान गरून् ॥११॥ विष्णु-भक्तिबाट रहित आत्मसम्बन्धी ज्ञान पनि शोभित हुँदैन फेरि ईश्वरलाई अर्पण

वायुरिवात्मसाक्षी ॥ परावरे ब्रह्मणि धर्मतो व्रतैः स्नातस्य मे न्यूनमलं विचक्ष्व ॥ ७ ॥ नारद उवाच ॥ भवताऽनुदितप्रायं यशो भगवतोऽमलम् ॥ येनैवासौ न तुष्येत मन्ये तद्दर्शनं खिलम् ॥ ८ ॥ यथा धर्मादयश्चार्था मुनिवर्यानुकीर्तिताः ॥ न तथा वासुदेवस्य महिमा ह्यनुवर्णितः ॥ ९ ॥ न यद्वचश्चित्रपदं हरेर्यशो जगत्पवित्रं प्रगृणीत कर्हिचित् ॥ तद्वायसं तीर्थमुशन्ति मानसा न यत्र हंसा निरमन्त्युशिक्क्षयाः ॥ १० ॥ तद्वाग्विसर्गो जनताऽघविप्लवो यस्मिन्प्रतिश्लोकमबद्धवत्यपि ॥ नामान्यनन्तस्य यशोऽङ्कितानि यच्छृण्वन्ति गायन्ति गृणन्ति साधवः ॥११॥ नैष्कर्म्यमप्यच्युतभाववर्जितं न शोभते ज्ञानमलं निरञ्जनम् ॥ कुतः पुनः शश्वदभद्रमीश्वरे न चार्पितं कर्म यदप्यकारणम् ॥१२॥ अथो महाभाग भवानमोघदृक्शुचिश्रवाः सत्यरतो धृतव्रतः ॥ उरुक्रमस्याखिलबन्धमुक्तये समाधिनाऽनुस्मर तद्विचेष्टितम् ॥१३॥ ततोऽन्यथा किंचन यद्विवक्षतः पृथग्दृशस्तत्कृतरूपनामभिः ॥ न कुत्रचित्क्वापि च दुःस्थिता मतिर्लभेत वाताहतनौरिवास्पदम् ॥ १४ ॥ जुगुप्सितं धर्मकृतेऽनुशासतः स्वभावरक्तस्य महान्व्यतिक्रमः ॥ यद्वाक्यतो धर्म इतीतरः स्थितो न मन्यते तस्य निवारणं जनः ॥ १५ ॥ विचक्षणोऽस्यार्हति वेदितुं विभोरनन्तपारस्य निवृत्तितः सुखम् ॥ प्रवर्तमानस्य

नगरिएका कर्मको के भन्नु ॥१२॥ अतः हे महाभाग ! यथार्थ बुद्धि, पवित्र यश, सत्यपरायण र विविध व्रतहरू धारण गर्ने हजुर समस्त बन्धनहरूबाट मुक्तिको लागि समाधिद्वारा विष्णुको चरित्र स्मरण गरेर भन्नुहवस् ॥१३॥ यो बाहेक प्राणी जे अति भन्ने इच्छा गर्दछ त्यो देखि कल्पित नाम-रूपद्वारा भेदयुक्त दृष्टि भएका मनुष्यको बुद्धि वायुले प्रताडित डुङ्गा झैं कहीं पनि अडिन सक्दैन ॥१४॥ स्वभावैले प्रवृत्ति मार्गमा निरत पुरुषहरू धर्मको निमित्त निन्दित प्रवृत्ति मार्गको शिक्षा दिनु ठूलो व्यतिक्रमको काम हो । जुन वाक्यले साधारण जन बुद्धि मनुष्य निवृत्तिमार्गको उपदेश ग्रहण गरून्, त्यही मुख्य धर्म हो । प्रवृत्तिमार्ग मुख्य हो, योग मान्दिन ॥१५॥ ठाठा पुरुषहरूको कर्तव्य हो—ती सबै काम छाडेर अनन्त प्रभाव भएका

○ उदाहरण—बौटा नपढेका महात्मा थिए । कहिल्यै तिनले विष्णु महिमाका केही श्लोक गाए र प्रेमपूर्वक गान गर्दै आफ्ना भगवान्‌लाई रिझाउने गर्दथे । तिनको आश्रममा एक दिन विद्वान् सन्त आए । तिनले उनको अशुद्ध श्लोक सुनेर रोके । नपढेका सन्तको केही ध्यान दिएनन् तर भगवान्‌लाई त्यो कुरा मन परेन र स्वप्नमा विद्वान् सन्तलाई भगवान् भन्नुभयो—मेरा भक्तको यस्तो नगर्नु । म मायाको भोको हुँ—शुद्ध श्लोकको होइन । ○ भाव-कुभाव अनख आलस हूँ, नाम जपत मंगल दिसि दस हूँ ।—तुलसीदास ।

विष्णु भगवान्को आनन्दमय स्वरूपलाई जान्नें । अतएव हजुर सगुण विष्णु भगवान्को चरित्र भन्नु हवस् ॥१६॥ आफ्नो धर्म छाडेर भक्तिपूर्वक विष्णुको चरणकमलको भजन गर्दै अपक्व-बुद्धि प्राणि भक्तिबाट कुनै प्रकार चुक्छिए पनि, जुन जातिमा जन्मे पनि, त्यसको अवश्य कल्याण हुन्छ । भक्ति नगर्ने मनुष्यलाई आफ्नो धर्मबाट पनि केही फल प्राप्त हुन्न ॥ १७ ॥ विद्वान् पुरुषले त्यस परमानन्दको निमित्त प्रयत्न गर्नुपर्दछ—जुन भ्रमवश यता-उता डुलिरहने प्राणिहरूलाई प्राप्त हुँदैन किनकि विषय-सुख त अनि वेगवान् कालद्वारा सुख-दुःख जस्तै सर्वत्र यत्न नगरे पनि प्राप्त भइरहन्छ ॥१८॥ विष्णुसेवी प्राणी प्रकृति मार्गमा स्थित पुरुष झैं कहिल्यै जन्म-मरणादि बन्धनमा प्राप्त हुँदैन । विष्णुका चरणको प्राप्ति हुने उपाय गर्दै ऊ फेरि उसलाई छोड्न चाहन्न, किनकि त्यो विष्णु-चरणको प्राप्तिको अनुपम रसमा रमाइरहन्छ ॥ १९ ॥ यो समस्त संसार विष्णुमै छ, तथापि विष्णु संसारबाट पृथक् छन् । उनै द्वारा

गुणैरनात्मनस्ततो भवान्दर्शय चेष्टितं विभोः ॥१६॥ त्यक्त्वा स्वधर्मं चरणांबुजं हरेर्भजन्नपक्वोऽथ पतेत्ततो यदि ॥ यत्र क्व वा भद्रमभूदमुष्य किं को वाऽर्थ आप्तोऽभजतां स्वधर्मतः ॥१७॥ तस्यैव हेतोः प्रयतेत कोविदो न लभ्यते यद्भ्रमतामुपर्यधः ॥ तल्लभ्यते दुःखवदन्यतः सुखं कालेन सर्वत्र गभीररंहसा ॥१८॥ न वै जनो जातुकथंचनाव्रजेन्मुकुन्दसेव्यन्यवदङ्ग संसृतिम् ॥ स्मरन्मुकुन्दाङ्घ्र्युपगूहनं पुनर्विहातुमिच्छेन्नरसग्रहो यतः ॥ १९ ॥ इदं हि विश्वं भगवानिवेतरो यतो जगत्स्थाननिरोधसंभवाः ॥ तद्धि स्वयं वेद भवाँस्तथापि वै प्रादेशमात्रं भवतः प्रदर्शितम् ॥२०॥ त्वमात्मनाऽऽत्मानमवेह्यमोघदृक्परस्य पुंसः परमात्मनः कलाम् ॥ अजं प्रजातं जगतः शिवाय तन्महानुभावाभ्युदयोऽधिगण्यताम् ॥२१॥ इदं हि पुंसस्तपसः श्रुतस्य वा स्विष्टस्य सूक्तस्य च बुद्धिदत्तयोः ॥ अविच्युतोऽर्थः कविभिर्निरूपितो यदुत्तमश्लोकगुणानुवर्णनम् ॥ २२ ॥ अहं पुरातीतभवेऽभवं दास्यास्तु कस्याश्चन वेदवादिनाम् ॥ निरूपितो बालक एव योगिनां शुश्रूषणे प्रावृषि निर्विविक्षताम् ॥२३॥ ते मय्यपेताखिलचापलेऽर्भके दान्तेऽधृतक्रीडनकेऽनुवर्तिनि ॥ चक्रुः कृपां यद्यपि तुल्यदर्शनाः शुश्रूषमाणे मुनयोऽल्पभाषिणि ॥२४॥ उच्छिष्टलेपाननुमोदितो द्विजैः सकृत्स्म भुञ्जे तदपास्तकिल्बिषः ॥ एवं प्रवृत्तस्य विशुद्धचेतसस्तद्धर्म एवात्मरुचिः प्रजायते ॥ २५ ॥ तत्रान्वहं कृष्णकथाः प्रगायतामनुग्रहेणाशृणवं मनोहराः ॥ ताः श्रद्धया मेऽनुपदं विशृण्वतः प्रियश्रवस्याङ्ग ममाभवद्रुचिः ॥२६॥ तस्मिंस्तदा लब्धरुचेर्महामुने प्रियश्रवस्यस्खलिता मतिर्मम ॥ यया मयैतत्सदसत्स्व-

यस संसारको पालन, संहार र उत्पत्ति हुन्छ, यो कुरा तपाईं पनि जान्नुहुन्छ । अतः मैले तपाईंलाई संकेत मात्र गरिदिएको हुँ ।२०॥ हे व्यासजी ! तपाईं आफूलाई संसारको हितका लागि स्वयं उत्पन्न र जन्मरहित परमात्माको अंश जान्नोस् र विष्णुको चरित्र वर्णन गर्नोस् ॥२१॥ विद्वान्हरूले मनुष्यको तपस्या, शास्त्र, उत्तम वचन र दानको यही सार्थकता कहिएको छ जगमा विष्णुको चरित्र वर्णन होस् ॥२२॥ म पूर्वजन्ममा केही वेदवादी मुनिहरूको दासीको छोरो थिएँ र वर्षातमा एकै स्थानमा निवास गर्न योगीहरूको सेवा गर्नका लागि मानैमा म नियुक्त भएको थिएँ । त्यस बखत पनि म इन्द्रियहरू वशमा पारी खेल-कूद त्यागी निश्चलभावले ती महात्माहरूको आज्ञामा रहन्थें र थोरै बोल्दथें । त्यसले समाधि ती समदर्शी महापुरुषहरूले ठूलो दया गरे ॥ २३ ॥ २४ ॥ मैले तिनको आज्ञाले एकपल्ट तिनको जुठो खाएको थिएँ, त्यसले मेरो पाप नष्ट भएर चित्त शुद्ध भयो र ईश्वर भजनमा मेरो

रुचि बलियो भयो ॥२५॥ ती महापुरुष दिनहुँ मनोहर विष्णुगुण गाउँथे । तिनको दयाले मैले पनि त्यो सुनें । त्यो श्रद्धापूर्वक सुन्दा-सुन्दा विष्णु भगवानमा मेरो प्रीति बढ्दै गयो ॥२६॥ त्यसै गरी विष्णुमा जब मेरो प्रेम भयो, तब मेरो बुद्धि उनमा दृढ भयो र तत्काल म स्थूल-सूक्ष्म शरीर र आफ्नो अज्ञानले परमात्मस्वरूपलाई आफूमा कल्पित मान्न लागें ॥२७॥ यसरी शरद् र वर्षाऋतु भरि ती महात्मा मुनिहरूले विष्णुको निर्मल यश-गान गरे । त्यो सुन्दा मेरो मनमा रजोगुण नष्ट पार्ने भक्ति उत्पन्न भयो ॥२८॥ अनि पापरहित, विनीत प्रेमी, श्रद्धावान् र जितेन्द्रिय म अनुचर बालकलाई त्यो गुप्त ज्ञान * जुन साक्षात् श्रीकृष्णले भनेका थिए ती दयालु मुनिहरूले जाने बेलामा भनिदिए ॥२९-३०॥ त्यसैले मैले ती भगवान् वासुदेवको त्यो महिमा जानें, जुन जानेपछि मनुष्य उनको समीप पुग्दछ ॥३१॥ हे ब्रह्मन् ! तीनै तापहरूको औषधिस्वरूप त्यो कर्म कहिएको छ, जुन सबैका स्वामी परब्रह्मलाई

मायया परं मयि ब्रह्मणि कल्पितं परे ॥२७॥ इत्थं शरत्प्रावृषिकावृतू हरेर्विशृण्वतो मेऽनुसवं यशोऽमलम् ॥ संकीर्त्यमानं मुनिभिर्महात्मभिर्भक्तिः प्रवृत्ताऽऽत्मरजस्तमोपहा ॥ २८ ॥ तस्यैवं मेऽनुरक्तस्य प्रश्रितस्य हतैनसः श्रद्दधानस्य बालस्य दान्तस्यानुचरस्य च ॥ २९ ॥ ज्ञानं गुह्यतमं यत्तत्साक्षाद्भगवतोदितम् ॥ अन्ववोचन्गमिष्यन्तः कृपया दीनवत्सलाः ॥ ३० ॥ तेनैवाहं भगवतो वासुदेवस्य वेधसः ॥ मायानुभावमविदं येन गच्छन्ति तत्पदम् ॥३१॥ एतत्संसूचितं ब्रह्मन् तापत्रयचिकित्सितम् ॥ यदीश्वरे भगवति कर्म ब्रह्मणि भावितम् ॥ ३२ ॥ आमयो यश्च भूतानां जायते येन सुव्रत ॥ तदेव ह्यामयं द्रव्यं न पुनाति चिकित्सितम् ॥३३॥ एवं नृणां क्रियायोगाः सर्वे संसृतिहेतवः ॥ त एवात्मविनाशाय कल्पन्ते कल्पिताः परे ॥३४॥ यदत्र क्रियते कर्म भगवत्परितोषणम् ॥ ज्ञानं यत्तदधीनं हि भक्तियोगसमन्वितम् ॥ ३५ ॥ कुर्वाणा यत्र कर्माणि भगवच्छिक्षयाऽसकृत् ॥ गृणन्ति गुणनामानि कृष्णस्यानुस्मरन्ति च ॥ ३६ ॥ ॐ नमो भगवते तुभ्यं वासुदेवाय धीमहि ॥ प्रद्युम्नायानिरुद्धाय नमः संकर्षणाय च ॥ ३७ ॥ इति मूर्त्यभिधानेन मन्त्रमूर्तिममूर्तिकम् ॥ यजते यज्ञपुरुषं स सम्यग्दर्शनः पुमान् ॥३८॥ इमं स्वनिगमं ब्रह्मन्नवेत्य मदनु-

अर्पण गर्न सकियोस् ॥३२॥ हे सुव्रत ! जुन पदार्थबाट रोग उत्पन्न हुन्छ, त्यस पदार्थले रोग निको हुन सक्तैन, तर अन्य पदार्थहरूमा अनुपान रूपमा मिलेर त्यही पदार्थ रोग निवारण गर्न सक्छ ॥३३॥ यसै गरी मनुष्यहरूका जो कर्म जन्म-मरणको कारण बन्दछ, ती नै परब्रह्ममा अर्पण गर्नाले जन्म मरणबाट निवृत्ति गर्न समर्थ हुन सक्छन् ॥३४॥ यदि विष्णुलाई प्रसन्न पार्ने जुनै कर्म गरिन्छ भने भक्ति समेत ज्ञान स्वयं उत्पन्न हुन्छ ॥३५॥ भगवान्‌को शिक्षाले नै मनुष्यहरू कर्म गर्दछन् । ती फेरि फेरि श्रीकृष्णका गुण र नामहरूको स्मरण गर्दै रहन्छन्—॥३६॥ हे भगवन् वासुदेव ! हजुरलाई प्रणाम छ । प्रद्युम्न, अनिरुद्ध र संकर्षणलाई पनि नमस्कार ॥ ३७ ॥ जो मनुष्य यी मूर्तिहरूको नामले मन्त्रमूर्ति र रूपरहित यज्ञ-पुरुषको पूजा गर्दछ, त्यो उत्तम ज्ञानी बन्दछ ॥ हे भगवन् ! हे ब्रह्मन् ! हजुरलाई आफ्नो विषयका सबै प्रकारले ज्ञाता तथा ज्ञानोपदेश दाता

* उदाहरण—यत्करोषि यदश्नासि यज्जुहोषि ददासि यत् । यत्तपस्यसि कौन्तेय तत् कुरुष्व मदर्पणम् ॥ अर्थ—जिहो जे गर्दछौ, जे खान्छौ, जो हवन गर्दछौ, जे जति दान दिन्छौ, ती सबै मलाई अर्पण गर भनी गीतामा श्रीकृष्णले कौन्तेयलाई उपदेश दिए ।

जानेर साक्षात् भगवानले ईश्वर सम्बन्धी ज्ञान र आफूप्रति प्रेम मलाई दिनुभएको छ ॥ ३९ ॥ हे वहुश्रुत ! तिमि पनि विष्णु भगवानको त्यो चरित्र भन, जसमा विद्वानहरूको जिज्ञासा समाप्त हुन्छन् र दुःखहरूले मान्दै क्लेशित चित्त हुने मनुष्यहरूका दुःखको शान्ति हुन्छ ॥४०॥ इति श्रीमद्भागवतेमहापुराणे प्रथमस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषा-टीकायां पञ्चमोऽध्यायः ॥५॥ यस अध्यायमा देवर्षि नारद आफ्नो पूर्वजन्मको वृत्तान्त भन्दछन् । सूतजीले भने—हे ब्रह्मन् ! नारदजीको जन्म र कर्म सुनेर सत्यवतीका छोरा भगवान् वेदव्यासजीले नारदजीसित फेरि सोधे ॥१॥ व्यासजी भन्दछन्—तिमीलाई ज्ञानको उपदेश दिने योगी गएपछि, त्यो बाल्यावस्थामा तिमीले के गर्‍यौ ? ॥२॥ हे स्वायम्भुव ! तिमीले कुन जीविका द्वारा आफ्नो युवावस्था बितायौ र बेला पुगेपछि कसरी शरीर छाड्यौ ? ॥३॥ हे सुरसत्तम ! काल सबैलाई बिर्साउन सक्छ भने त्यसले तिम्रो पहिले कल्पको स्मरण किन

छिदितम् ॥ अदान्मे ज्ञानमैश्वर्यं स्वस्मिन्भावं च केशवः ॥ ३९ ॥ त्वमप्यदभ्रश्रुत विश्रुतं विभोः समाप्यते येन विदां बुभुत्सितम् ॥ आख्याहि दुःखैर्मुहुरर्दितात्मनां संक्लेशनिर्वाणमुशन्ति नान्यथा ॥४०॥ इति श्रीमद्भागवते महापुराणे व्याससनारदसंवादे पञ्चमोऽध्यायः ॥ ५ ॥ सूत उवाच ॥ एवं निशम्य भगवान्देवर्षेर्जन्म कर्म च ॥ भूयः पप्रच्छ तं ब्रह्मन् व्यासः सत्यवतीसुतः ॥ १ ॥ व्यास उवाच ॥ भिक्षुभिर्विप्रवसिते विज्ञानादेष्टृभिस्तव ॥ वर्तमानो वयस्याद्ये ततः किमकरोद्भवान् ॥२॥ स्वायंभुव कया वृत्त्या वर्तितं ते परं वयः ॥ कथं चेदमुदस्राक्षीः काले प्राप्ते कलेवरम् ॥३॥ प्राक्कल्पविषयामेतां स्मृतिं ते सुरसत्तम ॥ न ह्येष व्यवधात्काल एष सर्वनिराकृतिः ॥ ४ ॥ नारद उवाच ॥ भिक्षुभिर्विप्रवसिते विज्ञानादेष्टृभिर्मम ॥ वर्तमानो वयस्याद्ये तत एतदकारषम् ॥५॥ एकात्मजा मे जननी योषिन्मूढा च किंकरी ॥ मय्यात्मजेऽनन्यगतौ चक्रे स्नेहानुबन्धनम् ॥ ६ ॥ साऽस्वतन्त्रा न कल्पाऽऽसीद्योगक्षेमं ममेच्छती ॥ ईशस्य हि वशे लोको योषा दारुमयी यथा ॥७॥ अहं च तद्ब्रह्मकुले ऊषिवांस्तदपेक्षया ॥ दिग्देशकालव्युत्पन्नो बालकः पञ्चहायनः ॥ ८ ॥ एकदा निर्गतां गेहाद्दुहन्तीं निशि गां पथि ॥ सर्पोऽदशत्पदा स्पृष्टः कृपणां कालचोदितः ॥ ९ ॥ तदा तदहमीशस्य भक्तानां शमभीप्सतः ॥ अनुग्रहं मन्यमानः प्रातिष्ठं दिशमुत्तराम् ॥१०॥ स्फीताञ्जनपदांस्तत्र पुरग्रामव्रजाकरान् ॥ खेटखर्वटवाटीश्च वनान्युपवनानि च ॥११॥

बिर्साएन ? ॥४॥ नारदजीले भने–मलाई ज्ञानोपदेश दिने भिक्षुहरू गएपछि त्यो बाल्यकालमा मैले के गरें, सबै सुन्नुहोस् ॥५॥ आफ्नी आमाको म नै एउटा छोरो थिएँ । त्यसै कारण ती तथा मूर्ख र दासीका मेरी आमाले अनन्यगति मेरो ठूलो स्नेह गर्थिन् ॥६॥ ती मेरो कल्याण कामना गर्दथिन्, तर स्वयं परवश थिइन्, त्यसैले केही गर्न समर्थ थिइनन्, किनकि कठपुतली जस्तै समस्त संसार ईश्वरको वशमा छ ॥७॥ दिशा, देश र काललाई नजान्ने पाँच वर्षको बालक म आफ्नी आमाको संरक्षणमा त्यो ब्राह्मणवंशमा जीवनको दिन बिताउँदै रहें ॥८॥ एक दिन राति गाई दुहुन भनी निस्केकी मेरी आमालाई खुट्टाले थिचिएर कालप्रेरित सर्पले टोकिदियो र ती मरिन् ॥९॥ आमाको मृत्युलाई ईश्वरको दया मान्दै म उत्तर दिशातिर हिंडे ॥१०॥ त्यहाँ ठूला-ठूला समृद्ध देश, राजधानी, ग्राम, गोकुल, रत्नादिहरू उत्पन्न हुने खानी नगर, किसानहरूको गाउँ, पर्वतहरूका छेउ-छाउका ग्राम, बगैंचा, जंगल

र उद्यानहरू नाघेर हात्तीहरूले जहाँका वृक्षादिका हाँगाहरू भाँचिदिएका थिए, त्यस्ता सुन-चाँदी आदि धातुहरूका खानबाट विचित्र पर्वत, उत्तम जलभएका तड़ाग र देव-सेवित स-साना जलाशयहरू, विचित्र शब्द बोल्ने पक्षीहरूको ध्वनि तथा गुञ्जन गर्ने भ्रमराको शोभाले युक्त नकुल, बाँस, कुश, *कीचक कहिने बाँसहरूको दुर्गम तथा साँप, उल्लू, स्यालहरूका स्थान हुनाले डरलाग्दा ती जंगल मैले एक्लै घुमेर देखें ॥११-१४॥ मेरा इन्द्रियहरू र मेरो शरीर थाकेको थियो। भोक-प्यासले दुःख दिइरहेथ्यो, अतः मैले नदीको कुण्डमा स्नान गरेर पानी पिएँ र थकाई मेटें ॥१५॥ अनि त्यो मानवहीन जंगलमा पाँटा पीपल-वृक्ष मनी बसेर आफ्नो हृदयमा स्थित परमात्माको जस्तो स्वरूप सुनेथें, आफ्नो बुद्धिले उस्तै

चित्रधातुविचित्राद्रीनिभभग्नभुजद्रुमान् ॥ जलाशयाञ्छिवजलान्नलिनीः सुरसेविताः ॥ १२ ॥ चित्रस्वनैः पत्ररथैर्विभ्रमद्भ्रमरश्रियः ॥ नलवेणुशरस्तम्बकुशकीचकगह्वरम् ॥ १३ ॥ एक एवातियातोऽहमद्राक्षं विपिनं महत् ॥ घोरं प्रतिभयाकारं व्यालोलूकशिवाऽजिरम् ॥ १४ ॥ परिश्रान्तेन्द्रियात्माऽहं तृट्परीतो बुभुक्षितः ॥ स्नात्वा पीत्वा ह्रदे नद्या उपस्पृष्टो गतश्रमः ॥ १५ ॥ तस्मिन्निर्मनुजेऽरण्ये पिप्पलोपस्थ आस्थितः ॥ आत्मनाऽऽत्मानमात्मस्थं यथाश्रुतमचिन्तयम् ॥ १६ ॥ ध्यायतश्चरणाम्भोजं भावनिर्जितचेतसा ॥ औत्कण्ठ्याश्रुकलाक्षस्य हृद्यासीन्मे शनैर्हरिः ॥ १७ ॥ प्रेमातिभरनिर्भिन्नपुलकाङ्गोऽतिनिर्वृतः ॥ आनन्दसंप्लवे लीनो नापश्यमुभयं मुने ॥ १८ ॥ रूपं भगवतो यत्तन्मनःकान्तं शुचापहम् ॥ अपश्यं सहसोत्तस्थे वैक्लव्याद्दुर्मना इव ॥ १९ ॥ दिदृक्षुस्तदहं भूयः प्रणिधाय मनो हृदि ॥ वीक्षमाणोऽपि नापश्यमवितृप्त इवातुरः ॥ २० ॥ एवं यतन्तं

ध्यान गर्न थालें ॥१६॥ भक्तिको भावावेशमा चित्तबाट भगवान्का चरणकमलको ध्यान गर्दा गर्दै उत्कण्ठाको आँसुले भरिएका नेत्र भएको मेरो हृदयमा बिस्तार-बिस्तार भगवान् आएर [illegible] ॥१७॥ अनि हे मुने ! अति प्रेमले मेरो देहमा रोमाञ्च भयो र म परमानन्दमा प्राप्त भएँ। त्यस आनन्दको प्रवाहमा लीन हुँदा आफ्नो र बिरानो भन्ने ज्ञान पनि हराएर गयो ॥१८॥ विष्णुभगवान्को जुन रूप शोक हरण गर्ने, मनलाई प्रिय थियो, त्यसलाई अकस्मात् हराएको देखेर म विकल र अप्रसन्न जस्तै भएँ, मेरो चित्तवृत्तिबाट ध्यान हराएर गयो ॥१९॥ त्यसलाई फेरि देख्ने इच्छाले आफ्नो मन एकाग्र पारेर देखेर पनि देख्न नाइन र अतृप्त एवं आतुर झैं हुनगएँ ॥ २० ॥ यसरी त्यो निर्जन वनमा अथक प्रयत्न गर्दा गर्दै

* 'कीचका वेणवस्ते स्युर्ये स्वनन्त्यनिलोद्धताः।'—जुन बाँसहरूमा प्वाल हुन्छ र वायु भित्रिएर [illegible] आवाज [illegible], तिनलाई 'कीचक' भन्दछन्।

† [illegible]

गमित-जसलाई वाणीले भन्न सकिन्न, त्यस्ता ईश्वरले मेरो शंका निवारण गर्दै मधुर र गम्भीर वचन भने–॥२१॥ तिनले भने–यस जन्ममा तिमी मलाई देख्न योग्य छैनौ । किन भने जसका काम, क्रोध आदि मल नष्ट भएका हुँदैनन्, त्यस्ता कुयोगीहरूलाई म निकै कठिनले देखिन्छु ॥२२॥ हे अनघ ! एकपल्ट जुन रूप तिमीलाई देखाइएको छ, त्यो यस निमित्त कि तिम्रो ममा प्रेम थियो । ममित प्रेम गर्ने मनुष्य विस्तार-विस्तार सबै कामना छाडिदिन्छ ॥२३॥ धेरै दिनसम्म महात्माहरूको सेवा गर्नाले ममा तिम्रो दृढ बुद्धि उत्पन्न भएको छ । अतएव यो निन्दित लोक त्यागेर तिमी मेरा पार्षद हुनेछौ ॥२४॥ ममा लागेको बुद्धि कहिल्यै पनि नष्ट हुँदैन । अर्को कल्पमा पनि मेरो दयाले तिमीलाई यस जन्मको स्मरण बनिरहने छ ॥२५॥ यति भनेर आकाशमा जसको मूर्ति थियो, ती प्रसिद्ध र अद्भुत ईश्वर चुप लागे र मैले ती ठूलाहरू भन्दा पनि ठूला भगवान्लाई शिर निहुराई प्रणाम गरें ॥२६॥ लाज त्यागेर अनन्त भगवान्का गुप्त नामहरू जप गर्दै तथा तिनका कल्याणकारी चरित्रहरू स्मरण गर्दै मैले समस्त पृथ्वीको परिक्रमा गरें र प्रसन्न मन चित्त भई कालको प्रतीक्षा गर्दै मद तथा मत्सरबाट

विजने मामाहागोचरो गिराम् ॥ गम्भीरश्लक्ष्णया वाचा शुचः प्रशमयन्निव ॥ २१ ॥ हन्तास्मिञ्जन्मनि भवान्न मां द्रष्टुमिहार्हति ॥ अविपक्व-कषायाणां दुर्दर्शोऽहं कुयोगिनाम् ॥ २२ ॥ सकृद्यद्दर्शितं रूपमेतत्कामाय तेऽनघ ॥ मत्कामः शनकैः साधुः सर्वान्मुञ्चति हृच्छयान् ॥ २३ ॥ सत्सेवया दीर्घया ते जाता मयि दृढा मतिः ॥ हित्वाऽवद्यमिमं लोकं गन्ता मज्जनतामसि ॥ २४ ॥ मतिर्मयि निबद्धेयं न विपद्येत कर्हिचित् ॥ प्रजासर्ग-निरोधेऽपि स्मृतिश्च मदनुग्रहात् ॥ २५ ॥ एतावदुक्त्वोपरराम तन्महद्भूतं नभोलिङ्गमलिङ्गमीश्वरम् ॥ अहं च तस्मै महतां महीयसे शीर्ष्णाऽवनामं विदधेऽनुकम्पितः ॥ २६ ॥ नामान्यनन्तस्य हतत्रपः पठन्गुह्यानि भद्राणि कृतानि च स्मरन् ॥ गां पर्यटंस्तुष्टमना गतस्पृहः कालं प्रतीक्षन्विमदो विमत्सरः ॥ २७ ॥ एवं कृष्णमतेर्ब्रह्मन्नासक्तस्यामलात्मनः ॥ कालः प्रादुरभूत्काले विद्युत्सौदामनी यथा ॥२८॥ प्रयुज्यमाने मयि तां शुद्धां भागवतीं तनुम् ॥ आरब्धकर्मनिर्वाणो न्यपतत्पाञ्चभौतिकः ॥ २९ ॥ कल्पान्त इदमादाय शयानेऽम्भस्युदन्वतः ॥ शिशयिषोरनुप्राणं विविशेऽन्तरहं विभोः ॥३०॥ सहस्रयुगपर्यन्ते उत्थायेदं सिसृक्षतः ॥ मरीचिमिश्रा ऋषयः प्राणेभ्योऽहं च जज्ञिरे ॥ ३१ ॥ अन्तर्बहिश्च लोकांस्त्रीन्पर्येम्यस्कन्दितव्रतः ॥ अनुग्रहान्महाविष्णोरविघातगतिः क्वचित् ॥ ३२ ॥ देवदत्तामिमां वीणां स्वरब्रह्मविभूषिताम् ॥ मूर्च्छयित्वा हरिकथां गायमानश्चराम्यहम् ॥ ३३ ॥

रहित भएँ ॥२७॥ हे ब्रह्मन् ! यस प्रकार श्रीकृष्णमा निमग्न बुद्धि, उनैमा आसक्त तथा निर्मल चित्त भएको मेरो अचिन्तित सहसा बिजुलीको तेज झैं मृत्यु आई उपस्थित भयो ॥२८॥ त्यसपछि विष्णु भगवान्ले जब मलाई शुद्ध सत्वमय पार्षद शरीर दिए अनि प्रारब्ध कर्मको समाप्ति सूचक मेरो पंचभूतात्मक अर्थात् पृथ्वी, जल, तेज, वायु र आकाश निर्मित शरीर नष्ट भयो ॥२९॥ कल्पान्तमा तीनै लोकका संहारक र एकार्णव जलमा शयन गर्न इच्छा भएका विष्णुको श्वाससित म उनको भित्र पसें ॥३०॥ एकहजार युगपछि संसार रचनाका इच्छुक ब्रह्माका प्राणद्वारा मरीचि आदि ऋषि र म उत्पन्न भएँ ॥३१॥ ती महाविष्णुको दयाले सर्वत्र गमन गर्ने म अखण्डित ब्रह्मचारी छु र तीनै लोकको भित्र तथा बाहिर जहाँ इच्छा हुन्छ, त्यहीं डुलिरहन्छु ॥३२॥ षड्ज आदि स्वर-स्वरूप र ब्रह्मस्वरद्वारा सुशोभित उनै ईश्वरले दिएको वीणा बजाउँदै तथा विष्णुका लीलाहरूको गान गर्दै म डुल्दै रहन्छु ॥३३॥

तो चरित्रहरूको गान गर्दा मेरो चित्तमा उत्तम यश र पवित्र चरण भएका भगवान् शीघ्र नै प्रकट भएर आउँछन् ॥३४॥ विषय-भोगको इच्छाले चंचल चित्त भएका पुरुषहरूका निमित्त बारम्बार विष्णु-चरित्रको वर्णन संसाररूपी समुद्रमा जहाजको समान उद्धारक मानिएको छ ॥३५॥ जस्तो काम र लोभले भएको आत्मा विष्णुको आराधनाले शान्त भएर जान्छ, त्यस्तो यम-नियम आदि योग साधनाहरूले शान्त हुन सक्दैन ॥३६॥ हे अनघ ! मेरो जन्म-कर्मको रहस्य र हजुरको चित्तप्रसन्न पार्ने उपाय जुन हजुरले मसित सोध्नुभएको थियो, त्यो सबै मैले विस्तार गरें ॥३७॥ सूतजी भन्छन्—यस प्रकार वसुकी छोरी सत्यवतीका पुत्र व्याससँग सम्भाषण गरेर उहाँसित आज्ञा मागी आफ्नो वीणा बजाउँदै नारद मुनि त्यहाँबाट हिँडे ॥३८॥ यी देवर्षि नारद धन्य हुन् जो वीणामा विष्णुको यश गान गर्दै र स्वयं सदैव प्रसन्न रहेर दुःखी संसारलाई आनन्दित पार्दै रहन्छन् ॥३९॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे पं-

प्रगायतः स्ववीर्याणि तीर्थपादः प्रियश्रवाः ॥ आहूत इव मे शीघ्रं दर्शनं याति चेतसि ॥ ३४ ॥ एतद्ध्यातुरचित्तानां मात्रास्पर्शेच्छया मुहुः ॥ भवसिन्धुप्लवो दृष्टो हरिचर्यानुवर्णनम् ॥ ३५ ॥ यमादिभिर्योगपथैः कामलोभहतो मुहुः ॥ मुकुन्दसेवया यद्वत्तथात्माऽद्धा न शाम्यति ॥ ३६ ॥ सर्वं तदिदमाख्यातं यत्पृष्टोऽहं त्वयाऽनघ ॥ जन्मकर्मरहस्यं मे भवतश्चात्मतोषणम् ॥ ३७ ॥ सूत उवाच ॥ एवं संभाष्य भगवान्नारदो वासवीसुतम् ॥ आमन्त्र्य वीणां रणयन् ययौ यादृच्छिको मुनिः ॥३८॥ अहो देवर्षिर्धन्योऽयं यत्कीर्तिं शार्ङ्गधन्वनः ॥ गायन्माद्यन्निदं तन्त्र्या रमयत्यातुरं जगत् ॥३९॥ इति श्रीमद्भागवते प्रथमस्कन्धे व्यासनारदसंवादे षष्ठोऽध्यायः ॥६॥ शौनक उवाच ॥ निर्गते नारदे सूत भगवान्बादरायणः ॥ श्रुतवांस्तदभिप्रेतमितः किमकरोद्विभुः ॥ १ ॥ सूत उवाच ॥ ब्रह्मनद्यां सरस्वत्यामाश्रमः पश्चिमे तटे ॥ शम्याप्रास इति प्रोक्त ऋषीणां सत्रवर्धनः ॥ २ ॥ तस्मिन्स्व आश्रमे व्यासो बदरीषण्डमण्डिते ॥ आसीनोऽप उपस्पृश्य प्रणिदध्यौ मनः स्वयम् ॥ ३ ॥ भक्तियोगेन मनसि सम्यक् प्रणिहितेऽमले ॥ अपश्यत्पुरुषं पूर्वं मायां च तदपाश्रयाम् ॥४॥ यया संमोहितो जीव आत्मानं त्रिगुणात्मकम् ॥ परोऽपि मनुतेऽनर्थं तत्कृतं चाभिपद्यते ॥५॥ अनर्थोपशमं साक्षाद्भक्तियोगमधोक्षजे ॥ लोकस्याजानतो विद्वांश्चक्रे सात्वतसंहिताम् ॥६॥ यस्यां वै श्रूयमाणायां कृष्णे परमपूरुषे ॥ भक्तिरुत्पद्यते पुंसः

गौरीशंकर वसिष्ठकृत नेपाली भाषा-टीकायां व्यास-नारद संवादे षष्ठोऽध्यायः ॥६॥ यस अध्यायमा अश्वत्थामाद्वारा द्रौपदीका छोराहरूको मृत्युको वृत्तान्त वर्णन गरिन्छ। शौनकजी भन्दछन्—हे सूत ! नारदजी गएपछि उनको आशय सुनेर भगवान् वेदव्यासले के गरे ? ॥१॥ सूतजी भन्दछन्—ब्रह्मनदी सरस्वतीको पश्चिमतटमा शम्याप्रास नामले प्रसिद्ध ऋषिहरूको यज्ञ-ज्ञान बढाउने यौटा आश्रम छ ॥२॥ बदरी अर्थात् बयरका वृक्ष-समूहले सुशोभित त्यस आश्रममा व्यासजी बसेर जलले आचमन गरी उनले भगवान्को ध्यान गरे ॥३॥ भक्तियोगद्वारा निर्मल चित्त निश्चल भएपछि उनले प्रधान पुरुष ईश्वर र उनको आश्रित मायालाई देखे ॥४॥ जुन मायाद्वारा मोहित र तीनै गुणहरूबाट भिन्न रहने जीव पनि आफूलाई त्रिगुणात्मक मान्दछ र त्यसबाट प्राप्त अनर्थ शोकमोह आदिमा प्राप्त हुन्छ ॥५॥ विष्णुको भक्तियोगबाट अनभिज्ञ संसारीहरूका निमित्त वेदव्यासले त्यस अनर्थलाई शान्त पार्ने श्रीमद्भागवत संहिता

बनाए ॥६॥ जुन प्रेमपूर्वक सुन्नाले मनुष्यको हृदयमा परमपुरुष श्रीकृष्णको शोक, मोह र जरा नाश गर्ने भक्ति उत्पन्न हुन्छिन् । ती व्यास मुनिले श्रीमद्भागवत संहिता बनाई क्रमबद्ध पारेर निवृत्तिमार्गपरायण आफना छोरा शुकदेवलाई पढाए ॥७-८॥ शौनकजी भन्दछन्—हजी कर्मैबाट पनि स्नेह नगर्ने निवृत्तिमार्गमा निरत तथा आत्माराम शुकमुनिले केको निमित्त पनि हरो संहिताको अध्ययन गरे ? ॥९॥ सूतजी भन्दछन्—क्रोध तथा अहङ्कार रहित आत्मज्ञानी मुनिजन विष्णुको फलाशारहित भक्ति गर्दछन्, किनकि विष्णुमा यस्तै गुणहरू छन् ॥१०॥ अतः विष्णुका चरित्रले प्रसन्न बुद्धि र नित्य विष्णुभक्तप्रिय शुकदेवले यो ठूलो संहिता पढे ॥११॥ अब म राजर्षि परीक्षितको जन्म, कर्म, मुक्ति र पाण्डु-पुत्रहरूको महाप्रस्थानको वृत्तान्त भन्दछु, किनकि यसै प्रकार विस्तार विस्तार श्रीकृष्णका कथाको क्रम आउने छ ॥१२॥ जब महाभारतको युद्धमा कौरव र पाण्डवपक्षका वीरगति ( मृत्यु ) मा प्राप्त भए र भीमसेनले आफनो गदाद्वारा धृतराष्ट्रको छोरो दुर्योधनको तिघ्रा भाँचिदिए ॥१३॥ तब अश्वत्थामाले द्रौपदीका सुतेका छोराहरूको सिर यो विचार गरेर काटे कि यसले

शोकमोहजरापहा ॥ ७ ॥ स संहितां भागवतीं कृत्वाऽनुक्रम्य चात्मजम् ॥ शुकमध्यापयामास निवृत्तिनिरतं मुनिः ॥ ८ ॥ शौनक उवाच ॥ स वै निवृत्तिनिरतः सर्वत्रोपेक्षको मुनिः ॥ कस्य वा बृहतीमेतामात्मारामः समभ्यसत् ॥ ९ ॥ सूत उवाच ॥ आत्मारामाश्च मुनयो निर्ग्रन्था अप्युरुक्रमे ॥ कुर्वन्त्यहैतुकीं भक्तिमित्थंभूतगुणो हरिः ॥ १० ॥ हरेर्गुणाक्षिप्तमतिर्भगवान्बादरायणिः ॥ अध्यगान्महदाख्यानं नित्यं विष्णुजनप्रियः ॥ ११ ॥ परीक्षितोऽथ राजर्षेर्जन्मकर्मविलापनम् ॥ संस्थां च पाण्डुपुत्राणां वक्ष्ये कृष्णकथोदयम् ॥ १२ ॥ यदा मृधे कौरवसृञ्जयानां वीरेष्वथो वीरगतिं गतेषु ॥ वृकोदराविद्धगदाभिमर्शभग्नोरुदण्डे धृतराष्ट्रपुत्रे ॥ १३ ॥ भर्तुः प्रियं द्रौणिरिति स्म पश्यन्कृष्णासुतानां स्वपतां शिरांसि ॥ उपाहरद्विप्रियमेव तस्य तज्जुगुप्सितं कर्म विगर्हयन्ति ॥ १४ ॥ माता शिशूनां निधनं सुतानां निशम्य घोरं परितप्यमाना ॥ तदाऽरुदद्बाष्पकलाकुलाक्षी तां सान्त्वयन्नाह किरीटमाली ॥ १५ ॥ तदा शुचस्ते प्रमृजामि भद्रे यद्ब्रह्मबन्धोः शिर आततायिनः ॥ गाण्डीवमुक्तैर्विशिखैरुपाहरे त्वाक्रम्य यत्स्नास्यसि दग्धपुत्रा ॥ १६ ॥ इति प्रियां वल्गुविचित्रजल्पैः स सान्त्वयित्वाऽच्युतमित्रसूतः ॥ अन्वाद्रवद्दंशित उग्रधन्वा कपिध्वजो गुरुपुत्र रथेन ॥ १७ ॥ तमापतन्तं स विलक्ष्य दूरात्कुमारहोद्विग्नमना रथेन ॥ पराद्रवत्प्राणपरीप्सुरुर्व्यां यावद्गमं रुद्रभयाद्यथार्कः ॥ १८ ॥ यदाऽशरण-

दुर्योधन प्रसन्न हुनेछन्, तर दुर्योधनलाई यो मनपरेन किनकि यस्ता निन्दित कामको विद्वानहरू निन्दा नै गर्दछन् ॥१४॥ आफना छोराहरूको मृत्यु सुनेर तिनकी आमा द्रौपदी गाह्रै विकल भइन् र आँसुका धारा बगाई रुन लागिन् तब तिनलाई बुझाउँदै अर्जुनले भने—॥१५॥ हे भद्रे ! त्यो आततायी तथा अधम ब्राह्मण अश्वत्थामाको शिर म आफनो गाण्डीव धनुष द्वारा प्रहार गरेका बाणहरूले काटेर तिम्रो सामुन्ने ल्याउने छु त्यसैमाथि बसेर तिमी स्नान गर्नेछौ । यसरी म तिम्रो शोक निवारण गर्नेछु ॥१६॥ यस्ता राम्रा र विचित्र वचनहरू द्वारा आफ्नी प्यारी द्रौपदीलाई बुझाएर—जसका श्रीकृष्ण सखा र सारथी थिए—ती उग्र धनुर्धारी धनञ्जय कवच पहिरेर रथमा चढी गुरु-पुत्र अश्वत्थामालाई लखेट्न दगुरे ॥१७॥ विजयलाई आफूतिर आउन लागेका देखेर बालघाती अश्वत्थामा कम्पित-हृदय भई प्राण-रक्षाको इच्छाले रथमा चढेर जहाँसम्म भाग्न सक्ने त्यहाँसम्म त्यसै गरी भागे,

जसरी शिवको डरले सूर्य भागेका थिए※ ॥ १८ ॥ जब द्रोणाचार्यका छोरा अश्वत्थामाका घोडा थाके र तिनले कोही आफ्ना रक्षक देखेनन् तब तिनले ब्रह्मास्त्रलाई नै आफ्नो रक्षक माने ॥१९॥ तुरुन्त आचमन तथा ध्यान गरेर तिनले ब्रह्मास्त्र राखे । यद्यपि तिनलाई फर्काउने ज्ञान थिएन तापनि प्राणसंकट प्राप्त हुनाले तिनले ब्रह्मास्त्र प्रहार गरिदिए ॥२०॥ त्यसले सबै दिशाहरूमा प्रचण्ड तेज व्याप्त भयो । आफ्नो प्राण आपत्तिमा परेको देखेर अर्जुनले श्रीकृष्णसित भने—॥२१॥ अर्जुन भन्दछन्—हे भक्तजनलाई अभयदान दिने महाभाग कृष्ण ! जन्म-मरणको सन्तापमा जल्ने मनुष्यहरूको क्लेशनाशक एकमात्र तिमी नै हौ ॥२२॥ प्रकृतिदेखि पर साक्षात् ईश्वर र आदिपुरुष पनि तिमी नै हौ । आफ्नो चैतन्य शक्तिद्वारा मायालाई अलग्ग पारेर केवल परमात्मस्वरूपमा स्थित रहन्छौ ॥२३॥ उही तिमी मायाले मोहित भएका जीवलाई आफ्नो पराक्रमले धर्मादि हरूको फलस्वरूप कल्याण गर्दछौ ॥२४॥ तिम्रो अवतार

मात्मानमैक्षत श्रान्तवाजिनम् ॥ अस्त्रं ब्रह्मशिरो मेने आत्मत्राणं द्विजात्मजः ॥ १९ ॥ अथोपस्पृश्य सलिलं संदधे तत्समाहितः ॥ अजानन्नुपसंहारं प्राणकृच्छ्र उपस्थिते ॥ २० ॥ ततः प्रादुष्कृतं तेजः प्रचण्डं सर्वतो दिशम् ॥ प्राणापदमभिप्रेक्ष्य विष्णुं जिष्णुरुवाच ह ॥ २१ ॥ अर्जुन उवाच ॥ कृष्ण कृष्ण महाभाग भक्तानामभयङ्कर ॥ त्वमेको दह्यमानानामपवर्गोऽसि संसृतेः ॥ २२ ॥ त्वमाद्यः पुरुषः साक्षादीश्वरः प्रकृतेः परः ॥ मायां व्युदस्य चिच्छक्त्या कैवल्ये स्थित आत्मनि ॥ २३ ॥ स एव जीवलोकस्य मायामोहितचेतसः ॥ विधत्से स्वेन वीर्येण श्रेयो धर्मादिलक्षणम् ॥ २४ ॥ तथाऽयं चावतारस्ते भुवो भारजिहीर्षया ॥ स्वानां चानन्यभावानामनुध्यानाय चासकृत् ॥ २५ ॥ किमिदंस्वित्कुतो वेति देवदेव न वेद्म्यहम् ॥ सर्वतोमुखमायाति तेजः परमदारुणम् ॥ २६ ॥ श्रीभगवानुवाच ॥ वेत्थेदं द्रोणपुत्रस्य ब्राह्ममस्त्रं प्रदर्शितम् ॥ नैवासौ वेद संहारं प्राणबाध उपस्थिते ॥ २७ ॥ न ह्यस्यान्यतमं किंचिदस्त्रं प्रत्यवकर्शनम् ॥ जह्यस्त्रतेज उन्नद्धमस्त्रज्ञो ह्यस्त्रतेजसा ॥ २८ ॥ सूत उवाच ॥ श्रुत्वा भगवता प्रोक्तं फाल्गुनः परवीरहा ॥ स्पृष्ट्वाऽपस्तं परिक्रम्य ब्राह्मं ब्राह्माय संदधे ॥ २९ ॥ संहत्यान्योन्यमुभयोस्तेजसी शरसंवृते ॥ आवृत्य रोदसी खं च ववृधातेऽर्कवह्निवत् ॥ ३० ॥ दृष्ट्वाऽस्त्रतेजस्तु तयोस्त्रीँल्लोकान्प्रदहन्महत् ॥ दह्यमानाः प्रजाः सर्वाः सांवर्तकममंसत ॥ ३१ ॥

पृथ्वीको भार हर्नको इच्छाले भएको छ र आफ्ना भक्तजन तथा कुटुम्बहरूको बारम्बार स्मरण गरिने योग्य छ ॥२५॥ हे देवदेव ! सबैतिरबाट प्रकाशित यो उग्रतेज के हो र कहाँबाट आइरहेको छ ? यो म जान्दिन ॥२६॥ यति सुनेर भगवान् भन्नुहुन्छ—प्राणसंकटको बेलामा यो अश्वत्थामाले प्रहार गरेको ब्रह्मास्त्र हो । अश्वत्थामा यस अस्त्रलाई फर्काउन जान्दैन ॥२७॥ यस अस्त्रलाई शान्त पार्ने कुनै अस्त्र छैन । यस कारण यस्तो तेज अस्त्र विद्यामा निपुण तिमी आफ्नो ब्रह्मास्त्रको तेजले नष्ट पार । २८॥ सूतजी भन्दछन्—भगवान्को वचन सुनेर शत्रु वीरहरूलाई नष्ट पार्ने धनञ्जयले आचमन गरेर श्रीकृष्णको प्रदक्षिणा गरे अनि त्यो ब्रह्मास्त्रको नाशार्थ आफ्नो ब्रह्मास्त्र धनुषमा सन्धान गरे ॥२९॥ बाणहरूले घेरिएका दुवै ब्रह्मास्त्रका तेज

※ उदाहरण—शिवजीले विद्युन्माली नामक आफ्नो भक्तलाई सोरह सुनको विमान दिएका थिए । त्यसले त्यो विमानमा चढेर विमानको तेजले रातलाई पनि दिन बनाइदियो । अनि सूर्यले आफ्नो तेजले त्यसको विमान गिराइदिए । तो कुरा सुनेर जब शिवजी रिसाए, तब सूर्य डराई भागे र काशीको कठोर ठाउँमा आई पानीमा खसे । तिनै सूर्य 'लोलार्क' नामले प्रसिद्ध भए ।

परस्पर ठक्कर खाएर पृथ्वीलाई डाढ्न सूर्य तथा अग्नि झैं बढ्नलागे ॥३०॥ तीनै लोकलाई पोल्न लागेको अर्जुन र अश्वत्थामाको ब्रह्मास्त्रको तेज देखेर त्यसले डढ्न लागेका सबै व्यक्तिले त्यसलाई प्रलयाग्नि ठाने ॥३१॥ संसारलाई नष्ट पार्ने त्यो उपद्रवलाई देखेर श्रीकृष्णको सम्मतिले धनञ्जयले दुवै अस्त्रलाई शान्त पारे ॥३२॥ अनि क्रूर अश्वत्थामाको नजीकै गएर रिसले राता नेत्र भएका अर्जुनले तिनलाई पशुझैं डोरीले बाँधे ॥३३॥ शत्रुलाई डोरीले टन्काएर लैजाने इच्छुक अर्जुनसित श्रीकृष्णले रिसाएर भन्नुभयो—॥ ३४ ॥ हे पार्थ ! यस अधम ब्राह्मणलाई मारिदेऊ, यसको रक्षा नगर, किनकि यसले रातिमा सुतेका निरपराध बालकहरूलाई मार्‍यो ॥३५॥ मद्यादिले मत्त, असावधान, ग्रहादिको आवेशले उन्मत्त, सुतेका, बालक, स्त्री, उद्यम रहित, शरणागत, जसको रथ भाँचिएको होस् यस्ता र भयभीत शत्रुलाई धर्मज्ञ पुरुष मार्दैनन् ॥३६॥ जो निर्दयी तथा दुष्ट मनुष्य अर्काको प्राण लिएर आफ्नो प्राणरक्षा

प्रजोपप्लवमालक्ष्य लोकव्यतिकरं च तम् ॥ मतं च वासुदेवस्य संजहारार्जुनो द्वयम् ॥ ३२ ॥ तत आसाद्य तरसा दारुणं गौतमीसुतम् ॥ बबन्धामर्षताम्राक्षः पशुं रशनया यथा ॥३३॥ शिबिराय निनीषन्तं दाम्ना बद्ध्वा रिपुं बलात् ॥ प्राहार्जुनं प्रकुपितो भगवानम्बुजेक्षणः ॥३४॥ मैनं पार्थार्हसि त्रातुं ब्रह्मबन्धुमिमं जहि ॥ योऽसावनागसः सुप्तानवधीन्निशि बालकान् ॥ ३५ ॥ मत्तं प्रमत्तमुन्मत्तं सुप्तं बालं स्त्रियं जडम् ॥ प्रपन्नं विरथं भीतं न रिपुं हन्ति धर्मवित् ॥३६॥ स्वप्राणान् यः परप्राणैः प्रपुष्णात्यघृणः खलः ॥ तद्वधस्तस्य हि श्रेयो यद्दोषाद्यात्यधः पुमान् ॥३७॥ प्रतिश्रुतं च भवता पाञ्चाल्यै शृण्वतो मम ॥ आहरिष्ये शिरस्तस्य यस्ते मानिनि पुत्रहा ॥ ३८ ॥ तदसौ वध्यतां पाप आतताय्यात्मबन्धुहा ॥ भर्तुश्च विप्रियं वीर कृतवान् कुलपांसनः ॥३९॥ एवं परीक्षितो धर्मं पार्थः कृष्णेन चोदितः ॥ नैच्छद्धन्तुं गुरुसुतं यद्यप्यात्महनं महान् ॥४०॥ अथोपेत्य स्वशिबिरं गोविन्दप्रियसारथिः ॥ न्यवेदयत्तं प्रियायै शोचन्त्या आत्मजान् हतान् ॥ ४१ ॥ तथाऽऽहृतं पशुवत्पाश-

गर्दछ, त्यसलाई मार्नु त्यस पुरुषको कल्याण गर्नु हो किनकि त्यस दोषले त्यो पुरुष नरकगामी हुन्छ ॥३७॥ मेरो सामुन्ने तिमीले द्रौपदीसित प्रतिज्ञा गरेका थियौ—हे मानिनी ! जसले तिम्रा छोराहरूलाई मार्‍यो, म त्यसको शिर काटेर ल्याउँला ॥३८॥ यो तिम्रा बालकहरूको घातक, आततायी र पापी हो । अतः यसलाई मारिदेऊ । हे वीर ! नीच अश्वत्थामाले आफ्नो स्वामी दुर्योधनको पनि भलो गरेन ॥३९॥ सूतजी भन्दछन्—श्रीकृष्णले यसरी भनेर अर्जुनको धर्म-परीक्षा लिएर मार्न भने, यद्यपि अश्वत्थामाले छोराहरू मारेका थिए, तापनि अर्जुनले गुरु-पुत्रलाई मार्न मन गरेनन् ॥४०॥ त्यसपछि उनका श्रीकृष्ण प्रिय सारथी थिए, त्यस्ता अर्जुनले आफ्नो स्थानमा गएर मरेका छोराहरूको निम्ति विलाप गर्दी आफ्नी प्यारी द्रौपदीको सामुन्ने अश्वत्थामालाई उभ्याए ॥ ४१ ॥ आफ्नो कुकर्मले तल मुख पारेका, पशु समान डोरीले टन्काइएका र अपकारी अश्वत्थामालाई *दयादृष्टिले हेरेर राम्रो

---

* दयादान (दया)—बोरा सदाझैं नदीमा स्नान गर्न गए । बोरा बिच्छीलाई पानीमा [illegible] देखी [illegible] उठाए । बिच्छीले तिनको हातमा [illegible] टोक मार्‍यो [illegible] त्यसलाई [illegible] । [illegible] पानीको [illegible] । [illegible] दयाभाव देखाउन [illegible] बोरा [illegible] भन्यो—[illegible] दुःखदायी जीवमा दया गर्नु उचित होइन ।' [illegible] दिए—'[illegible] [illegible] स्वभावानुसार [illegible] र [illegible] आफ्नो स्वभावानुसार [illegible] । [illegible] किनकि ती नै परमपिताका दयाको [illegible] अधिकारी हुन्छन् ।

स्वभाव भएकी द्रौपदीले प्रणाम गरिन् ॥४२॥ अश्वत्थमालाई बाँधेर ल्याउनु असह्य मान्दै ती द्रौपदीले भनिन्—यसलाई छाडिदेओ किन भने ब्राह्मण सबै प्रकारले गुरु हुन्छन् ॥४३॥ गुप्त-मन्त्र समेत धनुर्वेद र शस्त्रास्त्र प्रहार गर्ने र त्यसलाई फर्काउने समस्त अस्त्रसमुदाय हजुरले जुन द्रोणाचार्यको कृपाले सिक्नु भयो ॥४४॥ उनै द्रोणाचार्य पुत्ररूपमा यहाँ रहनु भएका छन् र तिनको शरीरको आधाभाग उनकी पत्नी अझै जीवित छन्, किनकि वीर छोरो भएकी कृपी पतीसित सती भएकी छैनन् ॥४५॥ अतः हे महाभाग, हे धर्मज्ञ ! गुरुको वंशलाई हजुर द्वारा दुःख हुन हुँदैन । यी त सदैव पूजा र प्रणाम गर्न योग्य छन् ॥४६॥ जसरी छोराहरू मर्नाले दुखी भएर म आँखले मुख धोएर रोइरहेकी छु, त्यसै गरी यिनकी आमा पतिव्रता गौतमी ( कृपी ) नरोउन् ॥४७॥ जो अज्ञानी राजाहरू ब्राह्मण-वंशलाई मार्दछन् भने ती शोकाकुल विप्र-वंश परिवार सहित राजाहरूका वंशलाई भस्म पारिदिन्छन् ॥४८॥ हे

वद्धमवाङ्मुखं कर्मजुगुप्सितेन ॥ निरीक्ष्य कृष्णाऽपकृतं गुरोः सुतं वामस्वभावा कृपया ननाम च ॥४२॥ उवाच चासहन्त्यस्य बन्धनानयनं सती ॥ मुच्यतां मुच्यतामेष ब्राह्मणो नितरां गुरुः ॥ ४३ ॥ सरहस्यो धनुर्वेदः सविसर्गोपसंयमः ॥ अस्त्रग्रामश्च भवता शिक्षितो यदनुग्रहात् ॥ ४४ ॥ स एव भगवान् द्रोणः प्रजारूपेण वर्तते ॥ तस्यात्मनोऽर्धं पत्न्यास्ते नान्वगाद्वीरसूः कृपी ॥४५॥ तद्धर्मज्ञ महाभाग भवद्भिर्गौरवं कुलम् ॥ वृजिनं नार्हति प्राप्तुं पूज्यं वन्द्यमभीक्ष्णशः ॥४६॥ मा रोदीदस्य जननी गौतमी पतिदेवता ॥ यथाऽहं मृतवत्साऽऽर्ता रोदिम्यश्रुमुखी मुहुः ॥ ४७ ॥ यैः कोपितं ब्रह्मकुलं राजन्यैरकृतात्मभिः ॥ तत्कुलं प्रदहत्याशु सानुबन्धं शुचार्पितम् ॥ ४८ ॥ सूत उवाच ॥ धर्म्यं न्याय्यं सकरुणं निर्व्यलीकं समं महत् ॥ राजा धर्मसुतो राज्ञ्याः प्रत्यनन्दद्वचो द्विजाः ॥ ४९ ॥ नकुलः सहदेवश्च युयुधानो धनंजयः ॥ भगवान् देवकीपुत्रो ये चान्ये याश्च योषितः ॥५०॥ तत्राहामर्षितो भीमस्तस्य श्रेयान् वधः स्मृतः ॥ न भर्तुर्नात्मनश्चार्थे योऽहन् सुप्तान् शिशून् वृथा ॥ ५१ ॥ निशम्य भीमगदितं द्रौपद्याश्च चतुर्भुजः ॥ आलोक्य वदनं सख्युरिदमाह हसन्निव ॥५२॥ श्रीभगवानुवाच ॥ ब्रह्मबन्धुर्न हन्तव्य आततायी वधार्हणः ॥ मयैवोभयमाम्नातं परिपाह्यनुशासनम् ॥ ५३ ॥ कुरु प्रतिश्रुतं सत्यं यत्तत्सान्त्वयता प्रियाम् ॥ प्रियं च भीमसेनस्य पाञ्चाल्या मह्यमेव च ॥ ५४ ॥ सूत उवाच ॥ अर्जुनः सहसाऽऽज्ञाय हरेर्हार्दमथासिना ॥ मणिं जहार मूर्धन्यं द्विजस्य सहमूर्धजम् ॥ ५५ ॥ विमुच्य रशनाबद्धं बालहत्याहतप्रभम् ॥ तेजसा मणिना हीनं

द्विज हो धर्मयुक्त, नीतिसम्पन्न, दयायुक्त, सत्यकी प्रतिमूर्ति रानी द्रौपदीका वचन सुनेर धर्मपुत्र युधिष्ठिरले प्रशंसा गरे ॥४९॥ नकुल सहदेव, युयुधान, अर्जुन, देवकीनन्दन श्रीकृष्ण र अरु जो पुरुष एवं स्त्रीहरू त्यहाँ थिए तिनीहरूले पनि द्रौपदीका वचनको सहानि गरे ॥५०॥ केवल क्रुद्ध भीमसेनले अवश्य भने—यो अश्वत्थामालाई मारिदिनु नै उचित छ, किन भने यसले न आफ्नो न आफ्नो स्वामी दुर्योधनको भलो गर्नका लागि सुतेका छोराहरूको व्यर्थ प्राण लियो ॥५१॥ द्रौपदी र भीमसेनको कुरा सुनेर चतुर्भुज श्रीकृष्ण प्यारा सखा [illegible] मुखतिर हेरेर बोले ॥५२॥ श्रीभगवान्ले भने—जो भए पनि ब्राह्मण मार्न योग्य हुँदैन र आततायी वधको योग्य हुन्छ, यो दुवै कुरा मैले नै भनेको छु । तिमी यी दुवैको पालन गर [illegible] द्रौपदीलाई बुझाउँदै जुन प्रतिज्ञा गरेका छौ, त्यो पूर्ण पार्दै, द्रौपदी र मलाई जुन प्रिय होस्, त्यही गर । सूतजी भन्दछन्—पार्थले श्रीकृष्णका मनको भाव बुझी [illegible]

मणि कपाल समेत झिकेर लिए ॥५४॥५५॥ अनि तेज एवं मणिरहित, बालकहरूको हत्याले कान्तिहीन र डोरीमा बाँधिएको अश्वत्थामालाई छाडेर आफ्नो स्थानबाट धपाइदिए ॥५६॥ कपाल खौरिदिनु, धन लिनु र स्थानबाट धपाइदिनु नै नीच ब्राह्मणहरूको वध हो। अन्य कुनै प्रकारले शारीरिक दण्डको विधान ब्राह्मणको निम्ति छैन ॥५७॥ त्यसपछि द्रौपदी तथा पुत्र-शोकले दुःखित सबै पाण्डवहरूले मरेका आफ्ना बालकहरूको दाह-संस्कार आदि कर्म गरे ॥५८॥ इति श्रीमद्भागवते महापुराणे नेपाली भाषाटीकायां सप्तमोऽध्यायः ॥७॥ भगवान द्वारा गर्भस्थित शिशुको ब्रह्मास्त्रबाट रक्षा गर्नु ॥ सूतजी भन्दछन्—त्यसपछि मरेका र जलको इच्छुक आफ्ना वंशहरूलाई गङ्गामा जलदान दिनको निम्ति श्रीकृष्ण तथा सबै पाण्डवहरू स्त्रीहरूलाई अघि लगाएर हिंडे ॥१॥ उहाँ तिनले जलदान दिएर विलाप गर्दै विष्णुका चरणकमलको धूलोले पवित्र गङ्गामा स्नान गरे ॥२॥ त्यहाँ बसेका भाइहरूसमेत युधिष्ठिर, धृतराष्ट्र, पुत्र-शोकले व्याकुल गान्धारी, कुन्ती र द्रौपदी आदिलाई मुनिहरूले र श्रीकृष्णले, जसको कुनै उपाय छैन, प्राणिहरूमा त्यस कालको गति देखाउँदै सम्झाए-बुझाए ॥३॥४॥ ती कपटी

शिबिरान्निरयापत ॥ ५६ ॥ वपनं द्रविणादानं स्थानान्निर्यापणं तथा ॥ एष हि ब्रह्मबन्धूनां वधो नान्योऽस्ति दैहिकः ॥ ५७ ॥ पुत्रशोकातुराः सर्वे पाण्डवाः सह कृष्णया ॥ स्वानां मृतानां यत्कृत्यं चक्रुर्निर्हरणादिकम् ॥ ५८ ॥ इति श्रीमद्भागवते प्रथमस्कन्धे द्रौणिनिग्रहो नाम सप्तमोऽध्यायः ॥ ७ ॥ सूत उवाच ॥ अथ ते संपरेतानां स्वानामुदकमिच्छताम् ॥ दातुं सकृष्णा गङ्गायां पुरस्कृत्य ययुः स्त्रियः ॥ १ ॥ ते निनीयोदकं सर्वे विलप्य च भृशं पुनः ॥ आप्लुता हरिपादाब्जरजःपूतसरिज्जले ॥ २ ॥ तत्रासीनं कुरुपतिं धृतराष्ट्रं सहानुजम् ॥ गान्धारीं पुत्रशोकार्तां पृथां कृष्णां च माधवः ॥ ३ ॥ सान्त्वयामास मुनिभिर्हतबन्धूञ्छुचार्पितान ॥ भूतस्य कालस्य गतिं दर्शयन्नप्रतिक्रियाम् ॥ ४ ॥ साधयित्वाऽजातशत्रोः स्वं राज्यं कितवैर्हृतम् ॥ घातयित्वाऽसतो राज्ञः कचस्पर्शक्षतायुषः ॥ ५ ॥ याजयित्वाऽश्वमेधैस्तं त्रिभिरुत्तमकल्पकैः ॥ तद्यशः पावनं दिक्षु शतमन्योरिवातनोत् ॥ ६ ॥ आमन्त्र्य पाण्डुपुत्रांश्च शैनेयोद्धवसंयुतः ॥ द्वैपायनादिभिर्विप्रैः पूजितैः प्रतिपूजितः ॥ ७ ॥ गन्तुं कृतमतिर्ब्रह्मन् द्वारकां रथमास्थितः ॥ उपलेभेऽभिधावन्तीमुत्तरां भयविह्वलाम् ॥८॥ पाहि पाहि महायोगिन् देवदेव जगत्पते ॥ नान्यं त्वदभयं पश्ये यत्र मृत्युः परस्परम् ॥९॥ अभिद्रवति मामीश शरस्तप्तायसो विभो ॥ कामं दहतु मां नाथ मा मे गर्भो निपात्यताम् ॥१०॥ सूत उवाच ॥ उपधार्य वचस्तस्या भगवान्भक्तवत्सल-

दुर्योधनादिबाट खोसिएको राज्य युधिष्ठिरलाई दिन लगाई र द्रौपदीको कपाल समाउनाले आयु नष्ट भएका दुष्ट राजाहरूको संहार गराई, युधिष्ठिरद्वारा उत्तम सामग्रीले तीन अश्वमेध यज्ञ सम्पन्न गराई श्रीकृष्णले इन्द्रसमान पाण्डवहरूको पवित्र यश दशै दिशामा फिजाए ॥५॥६॥ अनि पूज्य व्यास आदि ब्राह्मण हरू द्वारा सम्मानित भई सात्यकी र उद्धवसमेत श्रीकृष्ण पाण्डु-पुत्र युधिष्ठिर आदिसित बिदा भई द्वारका जाने इच्छाले रथमा बस्नु भयो। त्यसै बखत उनले सामुन्नेबाट दगुर्दै आइरहेकी र डरले विह्वल परीक्षितकी आमा उत्तरालाई देखे ॥७॥८॥ उत्तराले श्रीकृष्णको प्रार्थना गर्दै भनिन्—हे देवदेव ! हे जगत्पते ! हे महायोगिन् ! मेरो रक्षा गर्नुहवस्। हजुरबाहेक अरु कसैलाई म आफ्नो भय हटाउन सक्ने देखिरहेकी छैन। यहाँ त सबै योद्धा अर्काको प्राणघाती भइरहेका छन्। हे ईश, हे प्रभो ! लौ, हेर्नुहवस्। तातो फलामे बाण मतिर आइरहेको छ। यो बाणले मलाई डढाओस् तर मेरो गर्भको नाश नगरोस् ॥९॥१०॥

सूतजी भन्दछन्–द्रौपदीको वचन सुन्नासाथ भगवान् श्रीकृष्णले स्पष्ट बुझ्नुभयो–पाण्डव-वंशको समूल नाश गर्नका लागि अश्वत्थामाले यो अस्त्र प्रहार गरेको हो ॥११॥ हे मुनिश्रेष्ठ ! त्यसै बखत पाँचै पाण्डव सामुन्ने आइरहेको पाँच बाणहरू देखेर आफ्ना अस्त्र सम्हाले ॥१२॥ अनि श्रीकृष्णले आफ्ना आश्रित पाण्डवहरूको दुःख देखेर सुदर्शनचक्रले ती भक्तहरूको रक्षा गरे ॥१३॥ सबै प्राणिहरूका अन्तर्यामी र योगेश्वर श्रीकृष्णले पाण्डवहरूको सन्तानको रक्षा गर्नका लागि स्वयं उत्तराको उदरमा प्रवेश गरेर आफ्नी मायाले गर्भलाई ढाके ॥१४॥ हे भृगुद्वह ! यद्यपि त्यो ब्रह्मशिर अस्त्र अमोघ तथा प्रतिक्रियारहित थियो तथापि वैष्णव तेजोमय सुदर्शनचक्रको सामुन्ने त्यो शान्त भयो ॥१५॥ सबै आश्चर्यमय कर्म गर्ने ईश्वर कृष्णको विषयमा यो आश्चर्यको कुरा नठान्नुहोला किनभने ईश्वर नै आफ्नी मायाद्वारा संसारको सृष्टि, पालन र संहार गर्दछन् ॥१६॥ ब्रह्मास्त्रबाट जोगिएका छोराहरू र द्रौपदी सहित कुन्तीले यात्राको निम्ति तयार श्रीकृष्णसित भनें–॥१७॥ कुन्ती भन्दछिन्–प्रकृतिदेखि भिन्न हजुर ईश्वर र आदिपुरुषलाई म प्रणाम गर्दछु। जो सबै प्राणिहरूका भित्र र बाहिर स्थित छन् तापनि

लः ॥ अपाण्डवमिदं कर्तुं द्रौणेरस्त्रमबुध्यत ॥११॥ तर्ह्येवाथ मुनिश्रेष्ठ पांडवाः पञ्च सायकान् ॥ आत्मनोऽभिमुखान् दीप्तानालक्ष्यास्त्राण्युपाददुः ॥१२॥ व्यसनं वीक्ष्य तत्तेषामनन्यविषयात्मनाम् ॥ सुदर्शनेन स्वास्त्रेण स्वानां रक्षां व्यधाद्विभुः ॥१३॥ अंतस्थः सर्वभूतानामात्मा योगेश्वरो हरिः ॥ स्वमायया-ऽवृणोद्गर्भं वैराट्याः कुरुतंतवे ॥१४॥ यद्यप्यस्त्रं ब्रह्मशिरस्त्वमोघं चाप्रतिक्रियम् ॥ वैष्णवं तेज आसाद्य समशाम्यद्भृगूद्वह ॥१५॥ मा मंस्था ह्येतदाश्चर्यं सर्वाश्चर्यमयेऽच्युते ॥ य इदं मायया देव्या सृजत्यवति हंत्यजः ॥१६॥ ब्रह्मतेजोविनिर्मुक्तैरात्मजैः सह कृष्णया ॥ प्रयाणाभिमुखं कृष्णमिदमाह पृथा सती ॥१७॥ कुंत्युवाच ॥ नमस्ये पुरुषं त्वाद्यमीश्वरं प्रकृतेः परम् ॥ अलक्ष्यं सर्वभूतानामंतर्बहिरवस्थितम् ॥१८॥ मायाजवनिकाच्छन्नमज्ञाऽधोक्षजमव्ययम् ॥ न लक्ष्यसे मूढदृशा नटो नाट्यधरो यथा ॥१९॥ तथा परमहंसानां मुनीनाममलात्मनाम् ॥ भक्तियोगविधानार्थं कथं पश्येमहि स्त्रियः ॥२०॥ कृष्णाय वासुदेवाय देवकीनन्दनाय च ॥ नन्दगोपकुमाराय गोविन्दाय नमो नमः ॥२१॥ नमः पङ्कजनाभाय नमः पङ्कजमालिने ॥ नमः पङ्कजनेत्राय नमस्ते पङ्कजांघ्रये ॥ २२ ॥ यथा हृषीकेश खलेन देवकी कंसेन रुद्धाऽतिचिरं शुचार्पिता ॥ विमोचिताऽहं च सहात्मजा विभो त्वयैव नाथेन मुहुर्विपद्गणात् ॥ २३ ॥ विषान्महाग्नेः पुरुषाददर्शनादसत्सभाया वनवासकृच्छ्रतः ॥ मृधे मृधेऽनेकमहारथास्त्रतो द्रौण्यस्त्रतश्चास्म हरेऽभिरक्षिता ॥ २४ ॥

देखिंदैनन् ॥१८॥ मायारूपी आवरणले ढाकिएका हजुरको भक्ति-योगको रहस्य जान्न नसक्ने म प्रणाम गर्दछु। नाट्य गर्ने नटको समान हजुर हुने पनि देहाभिमानी पुरुषलाई देखिनु हुन्न ॥१९॥ अनि निर्मल चित्त भएका मुनिहरू र परमहंसहरूलाई भक्ति-युक्त पार्नको निम्ति अवतार धारण गर्ने हजुरलाई हामी स्त्रीगण कसरी देख्न सक्छौं ? ॥२०॥ हे देवकीनन्दन ! हजुर श्रीकृष्णलाई मेरो प्रणाम छ ! नन्द-गोपका पुत्र तथा गोविन्दलाई म नमस्कार गर्दछु ॥२१॥ जसको नाभिबाट कमल उत्पन्न भएको थियो, उनै हजुरलाई मेरो प्रणाम छ। कमलको माला धारण गर्ने हजुरलाई प्रणाम छ ! कमल जस्ता नयन तथा कमलके समान चरण भएका हजुरलाई नमस्कार छ ॥२२॥ हे हृषीकेश ! जस्तै कंसद्वारा धेरै दिनसम्म ज्यालखानामा अवरुद्ध देवकीलाई हजुरले मुक्त पार्नुभयो। हे विभो ! त्यसै गरी छोराहरू समेत शोकले विकल मलाई हजुरले नै बारम्बार विपत्तिहरूबाट मुक्त पार्नुभयो ॥२३॥ हे हरे !

विषबाट, अग्निबाट, अनेकानेक राक्षसहरूबाट, धूतबाट, वनवासको कष्टबाट, प्रत्येक युद्धमा अनेक महारथिहरूको शस्त्रास्त्रबाट र अहिले तत्काल अश्वत्थामाको अस्त्रबाट हजुरले नै हाम्रो रक्षा गर्नुभयो ॥२४॥ हे जगद्गुरो ! हामीउपर यस्ता विपत्तिहरू सधैं परिरहुन् र ती विपत्तिहरूमा हजुरको दर्शन पाउँदैरहौं, जसले कि मोक्ष प्राप्त हुन्छ ॥२५॥ उत्तम कुलमा जन्म, ऐश्वर्य, शास्त्र र लक्ष्मीले जसको गर्व बढिरहेको छ, त्यस्ता पुरुष भक्तहरूलाई दर्शन दिने भएका हजुरको नाम लिने योग्य पनि हुँदैनन्, दर्शन त धेरै परको कुरा छ ॥२६॥ भक्त नै हजुरका सर्वस्व छन्, गुणहरूको वृत्तिले रहित, आत्माराम र कैवल्यपति हजुरलाई प्रणाम छ ॥२७॥ हजुरलाई म आदि-अन्त्य रहित, ईश्वर, काल र सर्वत्र समान आचरण गर्ने सर्वज्ञ मान्दछु, जसद्वारा प्राणिहरूमा परस्पर कलह हुन्छ ॥२८॥ हे भगवन् ! मनुष्यहरू झैं आचरण गर्ने गरेका हजुरको जे इच्छा हुन्छ, त्यो कसैले पनि जान्दैन । हजुरको न कोही मित्र छ, न कोही शत्रु । तथापि हजुरमा मनुष्यहरूको बुद्धि विषम हुन्छ ॥२९॥ हे विश्वात्मन् ! जन्म नलिने हजुरको पशु, मनुष्य, ऋषिहरू तथा जलजन्तुहरूमा जो जन्म भएको छ र अकर्ता हजुरको

विपदः सन्तु नः शश्वत्तत्र तत्र जगद्गुरो ॥ भवतो दर्शनं यत्स्यादपुनर्भवदर्शनम् ॥ २५ ॥ जन्मैश्वर्यश्रुतिश्रीभिरेधमानमदः पुमान् ॥ नैवार्हत्य-भिधातुं वै त्वामकिंचनगोचरम् ॥ २६ ॥ नमोऽकिंचनवित्ताय निवृत्तगुणवृत्तये ॥ आत्मारामाय शांताय कैवल्यपतये नमः ॥ २७ ॥ मन्ये त्वां कालमीशानमनादिनिधनं विभुम् ॥ समं चरन्तं सर्वत्र भूतानां यन्मिथः कलिः ॥२८॥ न वेद कश्चिद्भगवंश्चिकीर्षितं तवेहमानस्य नृणां विडम्बनम् ॥ न यस्य कश्चिद्दयितोऽस्ति कर्हिचिद्द्वेष्यश्च यस्मिन्विषमा मतिर्नृणाम् ॥ २९ ॥ जन्म कर्म च विश्वात्मन्नजस्याकर्तुरात्मनः ॥ तिर्यङ्नृषिषु यादःसु तदत्यन्तविडम्बनम् ॥ ३० ॥ गोप्याऽऽददे त्वयि कृतागसि दाम तावद्या ते दशाऽश्रुकलिलाञ्जनसंभ्रमाक्षम् ॥ वक्त्रं निनीय भयभावनया स्थितस्य सा मां विमोहयति भीरपि यद्बिभेति ॥ ३१ ॥ केचिदाहुरजं जातं पुण्यश्लोकस्य कीर्तये ॥ यदोः प्रियस्यान्ववाये मलयस्येव चंदनम् ॥ ३२ ॥ अपरे वसुदेवस्य देवक्यां याचितोऽभ्यगात् ॥ अजस्त्वमस्य क्षेमाय वधाय च सुरद्विषाम् ॥ ३३ ॥ भारावतरणायान्ये भुवो नाव इवोदधौ ॥ सीदन्त्या भूरिभारेण जातो ह्यात्मभुवाऽर्थितः ॥३४॥ भवेऽस्मिन्क्लिश्यमानानामविद्याकामकर्मभिः ॥ श्रवणस्मरणार्हाणि करिष्यन्निति केचन ॥ ३५ ॥ शृण्वन्ति

जुन कर्म छ, त्यो साह्रै आश्चर्यजनक छ ॥३०॥ हजुरले जब दहीका भाँडा आदि फुटाउने अपराध गर्नुभयो र यशोदाले बाँध्नको निम्ति डोरी समाइन् तथा आँसुले गलेका अंजन युक्त नयनले शोभित मुख निहुराएर भयको भावनाले उभिंदा हजुरको जुन स्थिति भएको थियो, त्यो मलाई मोहित पार्दछ किनकि शोभित डरले पनि डर मान्दछ, त्यस्ता हजुरलाई डर कसरी भयो ? ॥३१॥ कसै-कसैको भनाइ छ—जन्मरहित पनि हजुरको यदुवंशमा जन्म युधिष्ठिरको यशका निम्ति नै भएको हो । यो मलयपर्वतमा चन्दनको जन्म हुने हो ॥३२॥ कति यस्तो भन्दछन्—अजन्मा हजुरको वसुदेवको पत्नी देवकीको कोखबाट जन्म लिनले प्रार्थना गर्नाले र संसारको कल्याणार्थ तथा दैत्यहरूको संहार गर्न भएको हो ॥३३॥ कोही भन्दछन्—धेरै भारले पीडित एवं समुद्रमा स्थित डुङ्गा झैं धराको भार हटाउन पार्न ब्रह्माले प्रार्थना गर्दा हजुर उत्पन्न हुनुभयो ॥३४॥ कतिपयको यस्तो भनाइ छ कि अज्ञान, काम र कर्मले दुःखीहरूको उद्धार र स्मरण गरिरहने योग्य चरित्र गर्नाको इच्छाले नै संसारमा हजुरको अवतार भएको हो ॥३५॥ जो मनुष्य निरन्तर हजुरको चरित्र सुन्दै,

गाउँदै, भन्दै, स्मरण गर्दै र जो अर्कालें भनेका चरित्रको अनुमोदन ( समर्थन ) गर्दछन्, ती पुरुष जन्म-मरणको बाधा शान्त पार्ने हजुरका चरणारविन्दलाई शीघ्र देख्दछन् ॥३६॥ अनि हे प्रभो ! हजुर हामी प्रेमी र अनुगामी भक्तहरूलाई किन छाड्न खोज्नु हुन्छ । राजाहरूलाई दुःख दिने हामीहरूको हजुरका चरणारविन्दबाहेक अन्य गति छैन ॥३७॥ इन्द्रिय-हरूको स्वामी जीव नरहनाले नाम र रूप केही पनि नरहे जस्तै, जब हजुरको दर्शन हुँदैन तब यदुवंशीहरू समेत पाण्डवहरूलाई प्रसिद्धि र ऐश्वर्यबाट के लाभ होला ॥३८॥ हे गदाधर ! वज्र, अंकुशादि चिह्नले युक्त हजुरका चरणले विभूषित पृथ्वी, जस्तै यस बखत शोभित छन् त्यस्तै हजुर सवारी भएपछि शोभित हुने छैनन् ॥३९॥ यी वन, पर्वत, नदी समुद्र तथा समस्त ऐश्वर्य संयुक्त देश हजुरलाई देखेर नै बढ्दछन् र विविध अन्न तथा लताहरू फलेर पाक्दछन् ॥४०॥ हे विश्वेश ! हे विश्वात्मन् ! हे विश्वमूर्ते ! पाण्डवहरू र यदुवंशीहरूमा आसक्त

गायन्ति गृणन्त्यभीक्ष्णशः स्मरन्ति नन्दन्ति तवेहितं जनाः ॥ त एव पश्यन्त्यचिरेण तावकं भवप्रवाहोपरमं पदाम्बुजम् ॥ ३६ ॥ अप्यद्य नस्त्वं स्वकृतेहित प्रभो जिहाससि स्वित्सुहृदोऽनुजीविनः ॥ येषां न चान्यद्भवतः पदाम्बुजात्परायणं राजसु योजितांहसाम् ॥ ३७ ॥ के वयं नामरूपाभ्यां यदुभिः सह पाण्डवाः ॥ भवतोऽदर्शनं यर्हि हृषीकाणामिवेशितुः ॥३८॥ नेयं शोभिष्यते तत्र यथेदानीं गदाधर ॥ त्वत्पदैरङ्किता भाति स्वलक्षणविलक्षितैः ॥ ३९ ॥ इमे जनपदाः स्वृद्धाः सुपक्वौषधिवीरुधः ॥ वनाद्रिनद्युदन्वन्तो ह्येधन्ते तव वीक्षितैः ॥ ४० ॥ अथ विश्वेश विश्वात्मन्विश्वमूर्ते स्वकेषु मे ॥ स्नेहपाशमिमं छिन्धि दृढं पाण्डुषु वृष्णिषु ॥ ४१ ॥ त्वयि मेऽनन्यविषया मतिर्मधुपतेऽसकृत् ॥ रतिमुद्वहतादद्धा गङ्गेवौघमुदन्वति ॥ ४२ ॥ श्रीकृष्ण कृष्णसख वृष्ण्यृषभावनिध्रुग्राजन्यवंशदहनानपवर्गवीर्य ॥ गोविन्द गोद्विजसुरार्तिहरावतार योगेश्वराखिलगुरो भगवन्नमस्ते ॥ ४३ ॥ सूत उवाच ॥ पृथयेत्थं कलपदैः परिणूताखिलोदयः ॥ मन्दं जहास वैकुण्ठो मोहयन्निव मायया ॥ ४४ ॥ तां बाढमित्युपामन्त्र्य प्रविश्य गजसाह्वयम् ॥ स्त्रियश्च स्वपुरं यास्यन्प्रेम्णा राज्ञा निवारितः ॥ ४५ ॥ व्यासाद्यैरीश्वरेहाज्ञैः कृष्णेनाद्भुतकर्मणा ॥ प्रबोधितोऽपीतिहासैर्नाबुध्यत शुचार्पितः ॥४६॥ आह राजा धर्मसुतश्चिन्तयन्सुहृदां वधम् ॥ प्राकृतेनात्मना विप्राः स्नेहमोहवशं गतः ॥४७॥ अहो मे पश्यताज्ञानं हृदि रूढं दुरात्मनः ॥ पारक्यस्यैव देहस्य बह्व्यो मेऽक्षौहिणीर्हताः ॥ ४८ ॥ बालद्विजसुहृन्मित्रपितृभ्रातृगुरुद्रुहः ॥ न मे

मेरो बलियो पाश काटिदिनोस् ॥४१॥ हे यदुपते ! अन्य विषयहरू छाडेर मेरो बुद्धि हजुरमित्र त्यस्तै प्रीति गरोस् जसै गंगा आफ्नो प्रवाह समुद्रमा पुऱ्याउँदछिन् ॥४२॥ हे पार्थका सखा ! वैरीहरूलाई पेल्ने र पूर्ण प्रभाव हे भगवन् ! हे गो, ब्राह्मण र देवताहरूका दुःख हरण गर्न जन्म लिने गोविन्द ! हे योगेश्वर, हे अखिलगुरो ! हजुरलाई प्रणाम छ ॥४३॥ सुतजी भन्दछन्–कुन्तीले मधुर वाणीद्वारा जब त्यसरी श्रीकृष्णको प्रशंसा गरिन्, तब आफ्नो मायाले मोहित पार्दै भगवान् मन्द मन्द हाँस्न लाग्नुभयो ॥४४॥ त्यसपछि कुन्ती तथा सुभद्रा आदि अन्य स्त्रीहरूको अनुमति लिएर ती हस्तिनापुर गए । त्यहाँबाट आफ्नो नगर द्वारका जान खोज्ने श्रीकृष्णलाई युधिष्ठिरले प्रेमपूर्वक रोके ॥४५॥ ईश्वरीय लीला जान्ने भएका व्यास मुनिहरू तथा अद्भुत कर्म गर्ने श्रीकृष्णद्वारा इतिहासहरूका माध्यमबाट बुझाउँदा पनि शोकमग्न युधिष्ठिरले केही बुझेनन् ॥४६॥ हे विप्र हो ! आफ्नैहरूको मरिएको चित्तबाट

वशीभूत भएर धर्मराजका छोरा युधिष्ठिरले स्वजन वधको कुरा विचार गर्दै भने–॥४७॥ यो आश्चर्यको कुरा छ, दुष्ट चित्त भएको मेरो हृदयको अज्ञान हेर्नुहोस्–कुकुरहरू वा स्यालहरूको भोजन स्वरूप शरीरको ※ वास्तानाका पार्नको निमित्त मैले अनेक अक्षौहिणी सेनाको नाश पारिदिएँ। म बालक, ब्राह्मण, सम्बन्धी, मित्र, काका, भाई र गुरुलाई मार्ने भएको पातकी हुँ। मेरो लाखौं वर्ष पनि नरकबाट उद्धार हुँदैन। राजालाई धर्मयुद्धमा शत्रुहरूलाई मारेको पाप लाग्दैन, यो शिक्षा मलाई बुझाउन को समर्थ छैन, मैले अबला बन्धुहरूलाई मारेको छु, तिनका स्त्रीहरूप्रति द्रोहले जुन पाप भएको छ, त्यो म गृहस्थाश्रमका कर्महरूले हटाउन समर्थ छैन ॥४८-५१॥ जस्तै हिलो हिलैले र मदिरापान जनित दोष मदिराले निवारण गर्न सकिन्न। त्यस्तै थोडा जीवहत्याको पाप अन्यान्य जीवहत्यायुक्त यज्ञहरूले नासिन सक्तैन ॥५२॥ इति श्रीमद्भागवते प्रथमस्कन्धे पं० गौरीशंकर वशिष्ठकृत नेपाली भाषा-टीकायां युधिष्ठिरानुतापो

स्यान्निरयान्मोक्षो ह्यपि वर्षायुतायुतैः ॥ ४९ ॥ नैनो राज्ञः प्रजाभर्तुर्धर्मयुद्धे वधो द्विषाम ॥ इति मे न तु बोधाय कल्पते शासनं वचः ॥ ५० ॥ स्त्रीणां मद्धतबन्धूनां द्रोहो योऽसाविहोत्थितः ॥ कर्मभिर्गृहमेधीयैर्नाहं कल्पो व्यपोहितुम ॥ ५१ ॥ यथा पंकेन पङ्काम्भः सुरया वा सुराकृतम् ॥ भूतहत्यां तथैवैकां न यज्ञैर्मार्ष्टुमर्हति ॥ ५२ ॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे अष्टमोऽध्यायः ॥ ८ ॥ सूत उवाच ॥ इति भीतः प्रजाद्रोहात्सर्वधर्मविवित्सया ॥ ततो विनशनं प्रागाद्यत्र देवव्रतोऽपतत् ॥ १ ॥ तदा ते भ्रातरः सर्वे सदश्वैः स्वर्णभूषितैः ॥ अन्वगच्छन् रथैर्विप्रा व्यासधौम्यादयस्तथा ॥ २ ॥ भगवानपि विप्रर्षे रथेन सधनञ्जयः ॥ स तैर्व्यरोचत नृपः कुबेर इव गुह्यकैः ॥ ३ ॥ दृष्ट्वा निपतितं भूमौ दिवश्च्युतमिवामरम् ॥ प्रणेमुः पाण्डवा भीष्मं सानुगाः सह चक्रिणा ॥ ४ ॥ तत्र ब्रह्मर्षयः सर्वे देवर्षयश्च सत्तम ॥ राजर्षयश्च तत्रासन्द्रष्टुं भरतपुंगवम् ॥५॥

नाम अष्टमोऽध्यायः ॥८॥ यस अध्यायमा कृष्ण स्तुति र भीष्मपितामहको उपदेश वर्णन गरिन्छ। सूतजी भन्दछन्–त्यसपछि प्रजाको द्रोहले डराएका युधिष्ठिर सबै धर्महरू जान्ने इच्छाले कुरुक्षेत्र गए–जहाँ भीष्मपितामह शर-शय्यामा थिए ॥१॥ त्यस बखत तिनका सबै भाई स्वर्णालंकारले सुशोभित तथा उत्तम अश्वले युक्त रथहरूद्वारा उनीसित गए र व्यास तथा धौम्य आदि महर्षि तिनका पछि पछि हिंडे ॥२॥ हे विप्रर्षे ! अब अर्जुन समेत श्रीकृष्ण रथमा बसेर हिंडे तब यस्तो शोभित भए, जस्तो यक्षहरूका साथ कुबेर कतै गइरहेका हुन् ॥३॥ स्वर्गबाट पृथ्वीमा झरेका देवता झैं पृथ्वीमा ढलेका भीष्मपितामहलाई साथमा गएका र श्रीकृष्ण समेत पाण्डवहरूले प्रणाम गरे ॥४॥ हे सत्तम ! त्यस बखत सबै ब्रह्मर्षि पनि भरतपुत्र भीष्मपितामहलाई

---

※ दृष्टान्त—थोडा दुर्बल र भोको मुसा-कुनै गहुँको भण्डारमा पस्यो र भित्री दाम्रर खूब मोटो भयो। अब त्यो हर्षले उम्लेर म बाहिर [illegible] थाल्यो। त्यसै भोकाया भण्डारको कुनै अन्न [illegible] भयो र मुसो बाहिर निस्कने चिन्ता गर्नलाग्यो, तर जुन द्वारबाट भित्र आएको थियो त्यो सानो भएको देख्यो। भण्डारको भित्र [illegible] रोंदै थियो। तसको दशिका [illegible] सोचिन्। अब त्यो पिजरा के गरौँ ? बाहिर निस्कन सक्तिन, भीरै भित्र बस्न सक्तैन। जसै बच्न मुसाको जसीनैबाट बास्नामिमी [illegible] [illegible] सुस्तो पिट्न लाग्ने त्यो मुसाको [illegible] सहजै बाहिर निस्कन सकाउन्।' मुसो यति सुनेर डराइरियो। [illegible] अनेक [illegible] [illegible] अनि बाहना [illegible] अनि मात्र मायारूपी भण्डारबाट बाहिर निस्कन सकाउ।

हेर्न र भेट्न त्यहाँ आएका थिए ॥५॥ ती ब्रह्मर्षिहरूका नाम थियो— पर्वत, नारद, धौम्य, व्यास, बृहदश्व, भरद्वाज, शिष्यहरू समेत परशुराम, वशिष्ठ, इन्द्रप्रमद, त्रित, गृत्समद, असित कक्षीवान्, गौतम, अत्रि, विश्वामित्र र सुदर्शन ॥६॥७॥ हे ब्रह्मन् ! शुकदेव आदि अरु पनि निर्मल विचारका मुनिहरू तथा शिष्य सहित कश्यप, बृहस्पति आदि ऋषि आएका थिए ॥८॥ एकै साथमा आएका ती महापुरुषहरूलाई देखेर देश-कालको विभागलाई जान्ने, वसुहरूमा श्रेष्ठ र धर्मज्ञ भीष्मले मनबाट तथा वचनले सबैको सत्कार गरे ॥९॥ मायाद्वारा शरीर धारण गर्नु भएका, हृदयमा स्थित तथा जगदीश्वर-स्वरूप सामुन्ने बसेका श्रीकृष्णको महिमा जान्ने भएका भीष्मले तिनको पूजा गरे ॥१०॥ विनय तथा प्रेमले आएर समीप बसेका पाण्डु-पुत्रहरूलाई भीष्मले प्रेमको आँसुले भरिएको नेत्रले हेरेर भने—॥११॥ हे धर्मपुत्र हो ! यो ठूलो कष्ट र अनीतिको कुरा हो कि विप्र, धर्म र श्रीकृष्णका आश्रित भएर पनि तिमी दुःखी छौ, तिमीलाई क्लेश नहुनु पर्ने हो ॥१२॥ अतिरथी पाण्डु मरेपछि नाना छोरा भएकी कुन्तीले तिमीहरूको निम्ति धेरै कष्ट सहेकी छन् ॥१३॥ तिमीहरूको विरुद्ध जे जति

पर्वतो नारदो धौम्यो भगवान्बादरायणः ॥ बृहदश्वो भरद्वाजः सशिष्यो रेणुकासुतः ॥ ६ ॥ वसिष्ठ इन्द्रप्रमदस्त्रितो गृत्समदोऽसितः ॥ कक्षीवान् गौतमोऽत्रिश्च कौशिकोऽथ सुदर्शनः ॥७॥ अन्ये च मुनयो बहवो ब्रह्मरातादयोऽमलाः ॥ शिष्यैरुपेता आजग्मुः कश्यपाङ्गिरसादयः ॥८॥ तान्समेतान्महाभागानुपलभ्य वसूत्तमः ॥ पूजयामास धर्मज्ञो देशकालविभागवित् ॥९॥ कृष्णं च तत्प्रभावज्ञ आसीनं जगदीश्वरम् ॥ हृदिस्थं पूजयामास माययोपात्तविग्रहम् ॥ १० ॥ पाण्डुपुत्रानुपासीनान्प्रश्रयप्रेमसंगतान् ॥ अभ्याचष्टानुरागास्रैरन्धीभूतेन चक्षुषा ॥ ११ ॥ अहो कष्टमहोऽन्याय्यं यद्यूयं धर्मनन्दनाः ॥ जीवितुं नार्हथ क्लिष्टं विप्रधर्माच्युताश्रयाः ॥१२॥ संस्थितेऽतिरथे पांडौ पृथा बालप्रजा वधूः ॥ युष्मत्कृते बहून्क्लेशान्प्राप्ता तोकवती मुहुः ॥१३॥ सर्वं कालकृतं मन्ये भवतां च यदप्रियम् ॥ स कालो यद्वशे लोको वायोरिव घनावलिः ॥१४॥ यत्र धर्मसुतो राजा गदापाणिर्वृकोदरः ॥ कृष्णोऽस्त्री गांडिवं चापं सुहृत्कृष्णस्ततो विपत् ॥१५॥ न ह्यस्य कर्हिचिद्राजन् पुमान्वेद विधित्सितम् ॥ यद्विजिज्ञासया युक्ता मुह्यन्ति कवयोऽपि हि ॥ १६ ॥ तस्मादिदं दैवतन्त्रं व्यवस्य भरतर्षभ ॥ तस्यानुविहितोऽनाथा नाथ पाहि प्रजाः प्रभो ॥ १७ ॥ एष वै भगवान्साक्षादाद्यो नारायणः पुमान् ॥ मोहयन्मायया लोकं गूढश्चरति वृष्णिषु ॥१८॥ अस्यानुभावं भगवान्वेद गुह्यतमं शिवः ॥ देवर्षिर्नारदः साक्षाद्भगवान्कपिलो नृप ॥१९॥

भयो, त्यो सबै म कालप्रेरित मान्दछु किनकि इन्द्रादि लोकपालहरूसमेत समस्त-संसार त्यसै सर्वकालको वशमा छ, जसरी वायुको वशमा मेघ समुदाय रहन्छन् ॥१४॥ जहाँ धर्मपुत्र राजा छन्, गदा हातमा लिएका भीमसेन छन्, अस्त्र लिएका अर्जुन र तिनको गाण्डीव धनुष होस् र मित्र श्रीकृष्ण छन्, त्यहाँ विपत्ति कसरी टिक्न सक्छ ? ॥१५॥ हे राजन् ! कालको इच्छालाई कहिल्यै कुनै मनुष्यले जान्न पाएन। त्यसलाई जान्ने इच्छा भएका विद्वान् पनि मोहित भएका देखिन्छन् ॥१६॥ अतः हे भरतर्षभ ! हे प्रभो ! यो दुःख सुखादि ईश्वरको लीला जानेर प्रभुको अनुगामी भएर तपाईं आफ्ना अनाथ प्रजाको रक्षा गर्नुहोस् ॥१७॥ साक्षात् आदिपुरुष नारायण यी श्रीकृष्ण आफ्नो मायाले संसारलाई मोहित पार्दै यदुवंशीहरूमा गुप्तरूपले विचरण गर्दछन् ॥१८॥ हे नृप ! जिनको गुप्त प्रभाव भगवान् शिव, देवर्षि नारद र साक्षात् भगवान् कपिलमुनि नै जान्दछन् ॥१९॥ जुन श्रीकृष्णलाई तिमी आफ्ना प्रिय

मित्र, अत्यन्त उपकारी र मामाको छोरा मान्दछौ–जसलाई तिमीले सौहार्दवश दूत, सारथी तथा मन्त्री बनाएका छौ ॥२०॥ सर्वात्मा, समदर्शी, अद्वय, अहङ्कार रहित, निष्कलङ्क ती श्रीकृष्णमा उच्च-नीच कर्मद्वारा गरिएका मतिको विषमता रहन्न ॥२१॥ हे भूप ! आफ्ना भक्तजन माथि तिनको दया त हेर्नुहवस्–प्राण त्याग्ने बेलामा मलाई साक्षात् कृष्णले नै स्वयं आएर दर्शन दिए ॥२२॥ यी श्रीकृष्णमा चित्त लगाएर भक्तिपूर्वक वाणीले इनैको नाम स्मरण गर्दै योगीजन शरीर त्यागेर संसारका बन्धन स्वरूप कर्महरूबाट मुक्त हुन्छन् ॥२३॥ जबसम्म म यो शरीर छाड्दीन तबसम्म प्रसन्न-हास्य, रक्त-नयनले शोभित मुख-कमल हुने, ध्यानगम्य र चतुर्भुज देवदेव श्रीकृष्ण बाटो हेर्न मेरो साम्ने उपस्थित रहून ॥२४॥ सूतजी भन्दछन्–यस्ता वचन सुनेर युधिष्ठिरले शर-शय्यामा सुतेका भीष्मसित ऋषि-मुनिको साम्ने अनेक थरिका धर्महरू सोधे ॥२५॥ अनि भीष्म पितामहले मनुष्यहरूको धर्म, वर्ण र आश्रम हरूका धर्म, वैराग्य र अनुरागमा उपाधिहरूबाट निवृत्ति तथा प्रवृत्ति-मार्गको वर्णन गरे ॥२६॥ उनले भिन्न-भिन्न दान-धर्म र मोक्ष पनि सुनाए।

यं मन्यसे मातुलेयं प्रियं मित्रं सुहृत्तमम् ॥ अकरोः सचिवं दूतं सौहृदादथ सारथिम् ॥२०॥ सर्वात्मनः समदृश अद्वयस्यानहंकृतेः ॥ तत्कृतं मतिवैषम्यं निरवद्यस्य न क्वचित् ॥२१॥ तथाप्येकान्तभक्तेषु पश्य भूपानुकम्पितम् ॥ यन्मेऽसूंस्त्यजतः साक्षात्कृष्णो दर्शनमागतः ॥२२॥ भक्त्याऽऽवेश्य मनो यस्मिन्वाचा यन्नाम कीर्तयन् ॥ त्यजन्कलेवरं योगी मुच्यते कामकर्मभिः ॥ २३ ॥ स देवदेवो भगवान्प्रतीक्षतां कलेवरं यावदिदं हिनोम्यहम् ॥ प्रसन्नहासारुणलोचनोल्लसन्मुखाम्बुजो ध्यानपथश्चतुर्भुजः ॥ २४ ॥ सूत उवाच ॥ युधिष्ठिरस्तदाकर्ण्य शयानं शरपञ्जरे ॥ अपृच्छद्विविधान्धर्मानृषीणामनुशृण्वताम् ॥ २५ ॥ पुरुषस्वभावविहितान् यथावर्णं यथाऽऽश्रमम् ॥ वैराग्यरागोपाधिभ्यामाम्नातोभयलक्षणान् ॥ २६ ॥ दानधर्मान् राजधर्मान्मोक्षधर्मान्विभागशः ॥ स्त्रीधर्मान्भगवद्धर्मान्समासव्यासयोगतः ॥ २७ ॥ धर्मार्थकाममोक्षांश्च सहोपायान्यथा मुने ॥ नानाख्यानेतिहासेषु वर्णयामास तत्त्ववित् ॥२८॥ धर्मं प्रवदतस्तस्य स कालः प्रत्युपस्थितः ॥ यो योगिनश्छन्दमृत्योर्वाञ्छितस्तूत्तरायणः ॥२९॥ तदोपसंहृत्य गिरः सहस्रणीर्विमुक्तसंगं मन आदिपूरुषे ॥ कृष्णे लसत्पीतपटे चतुर्भुजे पुरःस्थिते मीलितदृग्व्यधारयत् ॥ ३० ॥ विशुद्धया धारणया हताशुभस्तदीक्षयैवाशु गतायुधव्यथः ॥ निवृत्तसर्वेन्द्रियवृत्तिविभ्रमस्तुष्टाव जन्यं विसृजञ्जनार्दनम् ॥ ३१ ॥ भीष्म उवाच ॥ इति मतिरुपकल्पिता वितृष्णा भगवति सात्वत-

नारीहरूको धर्म, वैष्णव-धर्म पनि संक्षेपमा वर्णन गरे ॥२७॥ हे मुने ! तत्त्वज्ञानी भीष्मपितामहले अनेक थरिका इतिहासहरू द्वारा प्रयत्नपूर्वक धर्म, अर्थ, काम तथा मोक्षको वर्णन गरे ॥२८॥ यसरी भीष्मले धर्म-ज्ञान भन्दाभन्दै त्यो उत्तरायणको समय आइपुग्यो, जुन इच्छामृत्यु खोज्ने योगीजन खोज्दछन् ॥२९॥ त्यस बखत मौन भएर दृष्टि एक हरो पारेर भीष्मले आफ्नो साम्ने स्थित पीतवस्त्रले सुशोभित, आदिपुरुष तथा चतुर्भुज श्रीकृष्णमा आफ्नो मुक्तसङ्ग मन लगाए ॥३०॥ उसको ध्यान गर्नाले अमङ्गल नष्ट हुन्छ, तिनै श्रीकृष्णतिर हेर्नासाथ भीष्मको शस्त्रजनित पीडा हरायो र सबै इन्द्रियहरूको वृत्तिको भ्रम लुप्त भयो। त्यस समय आफ्नो शरीर छाड्दै भीष्मपितामहले श्रीकृष्णको स्तुति गरे ॥३१॥ उनले भने–परमानन्द प्राप्त, देवताहरूमा श्रेष्ठ तथा सबैभन्दा बढी तेजस्वी भगवान श्रीकृष्णका चरणमा मेरो निष्काम बुद्धि समर्पित छ। जुन श्रीकृष्ण

पहिले कहीं विहारको निम्ति त्यस मायालाई पनि अँगाल्छन्, जसले संसारको जीवन र मरण हुन्छ ॥३२॥ तीनैलोकमा सर्वसुन्दर राम्रो, तमाल-पत्र समान नीलवर्ण, प्रातःकालीन सूर्यको किरणहरू झैं पीत वस्त्र लगाएका, अलकावलीले ढाकिएको मुखकमल भएको शरीर धारण गर्ने र अर्जुनका मित्र श्रीकृष्णका चरणमा मेरो निष्काम प्रेम होस् ॥३३॥ युद्ध को बेला घोडाका टापहरूको धूलोले धमिलो वर्ण हुने, यता-उता छरिएका केशावलिले व्याप्त, पसीनाका थोपाले शोभित मुख तथा मेरा तीखा बाणको चोटले जसको त्वचा काटिएको थियो, यस्ता श्रीकृष्णसित मेरो मन प्रेम गरोस् ॥३४॥ मित्र पार्थको वचन सुनेर आफ्नो र शत्रुको सेनाका माझमा रथ उभ्याई स्थित हुने, शत्रुका सेनाहरूको आयु आफ्नो दृष्टिले नै घानगर्ने, विजयका सखा श्रीकृष्णसित मेरो स्नेह हवस् ॥३५॥ पर उभिएका सेनाको मुख समान अगाडि उपस्थित म भीष्मादिलाई देखेर दोष-बुद्धिले आफ्ना कुटुम्बहरूलाई मार्नबाट निवृत्त हुने इच्छुक विजयको कुबुद्धिलाई जुन

पुङ्क्ते विभूम्नि ॥ स्वसुखमुपगते क्वचिद्विहर्तुं प्रकृतिमुपेयुषि यद्भवप्रवाहः ॥३२॥ त्रिभुवनकमनं तमालवर्णं रविकरगौरवराम्बरं दधाने ॥ वपुरलककुलावृताननाब्जं विजयसखे रतिरस्तु मेऽनवद्या ॥३३॥ युधि तुरगरजोविधूम्रविष्वक्कचलुलितश्रमवार्यलंकृतास्ये ॥ मम निशितशरैर्विभिद्यमानत्वचि विलसत्कवचेऽस्तु कृष्ण आत्मा ॥ ३४ ॥ सपदि सखिवचो निशम्य मध्ये निजपरयोर्बलयो रथं निवेश्य ॥ स्थितवति परसैनिकायुरक्ष्णा हृतवति पार्थसखे रतिर्ममास्तु ॥ ३५ ॥ व्यवहितपृतनामुखं निरीक्ष्य स्वजनवधाद्विमुखस्य दोषबुद्ध्या ॥ कुमतिमहरदात्मविद्यया यश्चरणरतिः परमस्य तस्य मेऽस्तु ॥ ३६ ॥ स्वनिगममपहाय मत्प्रतिज्ञामृतमधिकर्तुमवप्लुतो रथस्थः ॥ धृतरथचरणोऽभ्ययाच्चलद्गुर्हरिरिव हन्तुमिभं गतोत्तरीयः ॥ ३७ ॥ शितविशिखहतो विशीर्णदंशः क्षतजपरिप्लुत आततायिनो मे ॥ प्रसभमभिससार मद्वधार्थं स भवतु मे भगवान्गतिर्मुकुन्दः ॥ ३८ ॥ विजयरथकुटुम्ब आत्ततोत्रे धृतहयरश्मिनि तच्छ्रियेक्षणीये ॥ भगवति रतिरस्तु मे मुमूर्षोर्यमिह निरीक्ष्य हता गताः स्वरूपम् ॥ ३९ ॥ ललितगतिविलासवल्गु-

श्रीकृष्णले आत्मज्ञान द्वारा हरिदिएका थिए, ती परमपुरुषका चरणमा मेरो प्रेम होस् ॥३६॥ जुन श्रीकृष्ण आफ्नो प्रतिज्ञा त्यागेर मेरो प्रतिज्ञा सत्य पार्नको निम्ति रथबाट उफ्रिएर रथको पाङ्ग्रा लिई हात्तीलाई मार्न तयार सिंह जस्तै मेरो सामुन्ने आए, अनि पृथ्वी कम्पित भइन् र संभ्रममा तिनका काँधको पछ्यौरा भूमिमा झर्यो । (भीष्मपितामह भन्दछन्—यी सबै हजुरले मेरो प्रतिज्ञा पूर्ण गर्न नै गर्नुभएको थियो ॥३७॥ अनि मैले आफ्ना बाणहरूले तिनलाई हिर्काएँ । जब तिनको कवच काटियो, तब शरीरबाट रगत बग्न लाग्यो, तैपनि कृष्ण मलाई मार्नको निम्ति वेगले मेरो सामुन्ने आए । तिनै मुकुन्द मेरा गति होउन् ॥३८॥ कुटुम्ब झैं अर्जुनका रथको रक्षा गर्ने, कोर्रा लिएका र घोडाको डोरी समातेका, त्यस बेलाको शोभा देख्न योग्य ती श्रीकृष्णमा म मर्न लागेकोको प्रेम होस्, जसलाई देखेर यस युद्धमा मरेका अगणित प्राणी तिनको रूपमा प्राप्त भइसकेका छन् ॥३९॥ उत्तम गति, पवित्र लीला, सुन्दर

---

* कथान्तर—महाभारतको संग्राममा श्रीकृष्णले यस्तो प्रतिज्ञा गरेका थिए— युद्धमा म अस्त्र उठाउने छैन । तर भीष्मपितामहले एक दिन यस्तो प्रतिज्ञा गरेका थिए—आज श्रीकृष्णलाई अवश्य शस्त्र ग्रहण गराउँ नै छु । यसै निमित्त त्यस दिन भीष्मले यस्तो भयङ्कर बाण वर्षा गरे कि जसले विकल भएर श्रीकृष्ण रथको पाङ्ग्रा लिई भीष्मलाई मार्न दगुरेका थिए ।

हास्य तथा प्रेमपूर्वक हेरेर हजुरले आफ्ना जुन गोपीहरूको आदर गर्नुभएको थियो, प्रेमोन्मादले अन्धा भएर पनि श्रीकृष्णको गोवर्धन धारण आदि कर्महरूको लीला गरे ती हजुरकैरूपमा मिले ॥४०॥ धर्मराज युधिष्ठिरको राजसूय यज्ञमा असंख्य मुनिगण तथा श्रेष्ठ राजाहरूले ताँतीको समाजमा जो पूजा पाएका थिए, तिनै सबै लोकका आत्मा श्रीकृष्ण मेरा नेत्रका सामुन्ने छन्, मेरो भाग्य धन्य छ ॥४१॥ आफूले रचेका प्रत्येक प्राणिहरूको हृदय र प्रत्येक नयनमा अनेक रूपमा देखिने एक स्वयं समानस्थित यी अजन्मा श्रीकृष्णजीका चरणमा भेद र मोहले रहित भई म प्राप्त भएको छु ॥४२॥ सूतजी भन्दछन्—यसरी परमात्मा श्रीकृष्ण भगवानमा मन, वचन तथा दृष्टिकावृत्तिहरूबाट प्रविष्ट भएर तथा भित्र श्वास तानेर भीष्मपितामह सबैको लागि शान्त भए ॥४३॥ भीष्मलाई उपाधि रहित ब्रह्ममा लीन भएका जानेर सबै जना रात्रिको समयमा पक्षिहरू मौन भए झैं मौन भए ॥४४॥ त्यस बखत देवताहरू र मनुष्य हरू द्वारा बजाइएका विभिन्न बाजाहरू बज्नलागे र राजाहरूको माझमा जो साधु थिए, ती उनको प्रशंसा गर्नलागे र आकाशबाट फूलको वर्षा हुन लाग्यो ॥४५॥ त्यस बखत

हासप्रणयनिरीक्षणकल्पितोरुमानाः ॥ कृतमनुकृतवत्य उन्मदान्धाः प्रकृतिमगन्किल यस्य गोपवध्वः ॥ ४० ॥ मुनिगणनृपवर्यसंकुलेऽन्तः सदसि युधिष्ठिरराजसूय एषाम् ॥ अर्हणमुपपेदे ईक्षणीयो मम दृशि गोचर एष आविरात्मा ॥ ४१ ॥ तमिममहमजं शरीरभाजां हृदि हृदि धिष्ठितमात्मकल्पितानाम् ॥ प्रतिदृशमिव नैकधाऽर्कमेकं समधिगतोऽस्मि विधूतभेदमोहः ॥ ४२ ॥ सूत उवाच ॥ कृष्ण एवं भगवति मनोवाग्दृष्टिवृत्तिभिः ॥ आत्मन्यात्मानमावेश्य सोऽन्तःश्वास उपारमत् ॥४३॥ संपद्यमानमाज्ञाय भीष्मं ब्रह्मणि निष्कले ॥ सर्वे बभूवुस्ते तूष्णीं वयांसीव दिनात्यये ॥४४॥ तत्र दुन्दुभयो नेदुर्देवमानववादिताः ॥ शशंसुः साधवो राज्ञां खात्पेतुः पुष्पवृष्टयः ॥ ४५ ॥ तस्य निर्हरणादीनि संपरेतस्य भार्गव ॥ युधिष्ठिरः कारयित्वा मुहूर्तं दुःखितोऽभवत् ॥ ४६ ॥ तुष्टुवुर्मुनयो हृष्टाः कृष्णं तद्गुह्यनामभिः ॥ ततस्ते कृष्णहृदयाः स्वाश्रमान् प्रययुः पुनः ॥ ४७ ॥ ततो युधिष्ठिरो गत्वा सहकृष्णो गजाह्वयम् ॥ पितरं सान्त्वयामास गांधारीं च तपस्विनीम् ॥ ४८ ॥ पित्रा चानुमतो राजा वासुदेवानुमोदितः ॥ चकार राज्यं धर्मेण पितृपैतामहं विभुः ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे युधिष्ठिरराज्यप्रलम्भनो नाम नवमोऽध्यायः ॥ ९ ॥ शौनक उवाच ॥ हत्वा स्वरिक्थस्पृध आततायिनो युधिष्ठिरो धर्मभृतां वरिष्ठः ॥ सहानुजैः प्रत्यवरुद्धभोजनः कथं प्रवृत्तः किमकारषीत्ततः ॥ १ ॥

ती दिवंगत भीष्मको दाह आदि संस्कार गराएर युधिष्ठिर केही बेरसम्म दुःखित भए ॥४६॥ मुनिहरू प्रसन्न भएर श्रीकृष्णको स्तुति गर्नलागे। त्यसपछि श्रीकृष्णका चरणमा मनलाई लगाउँदै ती सबै आफ्ना-आफ्ना आश्रममा गए ॥ ७॥ तदनन्तर श्रीकृष्ण र युधिष्ठिरले हस्तिनापुर गएर धृतराष्ट्र तथा तपस्विनी गान्धारीलाई बुझाए ॥४८॥ अनि धृतराष्ट्रको आज्ञा र श्रीकृष्णको कथनानुसार राजा युधिष्ठिर पिता-पितामहहरूद्वारा पालित राज्यको धर्मपूर्वक शासन गर्नलागे ॥४९॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ'कृत नेपाली भाषा-टीकायां युधिष्ठिर राज्यप्रलम्भनो नाम नवमोऽध्यायः ॥९॥ यस अध्यायमा श्रीकृष्ण द्वारकापुरी जाने वृत्तान्त। शौनक भन्दछन्—आफ्नो धन खोस्न इच्छुक दुर्योधनादि आततायीहरूलाई मारेर धर्मराज युधिष्ठिर बन्धु-बधका कारणले दुःखी भएर राज्य भोग गर्दै भाईहरू समेत कसरी बसे र त्यसपछि उनले के गरे ? ॥१॥ सूतजी भन्दछन्

दावानलले डढेका बाँस झैं कुरुवंशलाई पुनः अंकुरित गराई संसारलाई उत्पन्न गर्ने श्रीकृष्ण युधिष्ठिरलाई राज्य-सिंहासनमा बसालेर प्रसन्न भए ॥२॥ भीष्म तथा श्रीकृष्णको कथन सुनेर विज्ञानको नष्ट-भ्रम युधिष्ठिरले आफ्ना भाइहरूद्वारा सेवित तथा श्रीकृष्णका आश्रित भएर इन्द्र समान समुद्रपर्यन्त पृथ्वीको पालन गरे ॥३॥ युधिष्ठिरको राज्यमा इच्छानुसार पानी पर्दथ्यो । पृथ्वी सबै मनोरथ पूर्ण पार्दथिन् र ठूला-ठूला थन भएकी गाई आफ्नो बस्ने स्थानलाई दूधले भिजाइराख्दथे । नदी, समुद्र, पर्वत, वनस्पति तथा लताहरू समेत औषधिहरू प्रत्येक ऋतुमा फुल्थे र फल्दथे, प्राणिहरूका दैहिक, दैविक र भौतिक क्लेश, मानसिक पीडा एवं शारीरिक रोग शान्त पार्दै रहन्थे ॥४–६॥ मित्रहरूको शोक हरण गर्न तथा सुभद्रालाई प्रसन्न पार्नको निम्ति केही महीना हस्तिनापुरमै बसेर श्रीकृष्ण युधिष्ठिरबाट आज्ञा लिई, उनलाई प्रणाम गरेर रथमा चढे । केही व्यक्तिले उनलाई छातीमा टाँसी

सूत उवाच ॥ वंशं कुरोर्वंशदवाग्निनिर्हृतं संरोहयित्वा भवभावनो हरिः ॥ निवेशयित्वा निजराज्य ईश्वरो युधिष्ठिरं प्रीतमना बभूव ह ॥ २ ॥ निशम्य भीष्मोक्तमथाच्युतोक्तं प्रवृत्तविज्ञानविधूतविभ्रमः ॥ शशास गामिन्द्र इवाजिताश्रयः परिध्युपान्तामनुजानुवर्तितः ॥ ३ ॥ कामं ववर्ष पर्जन्यः सर्वकामदुघा मही ॥ सिषिचुः स्म व्रजान्गावः पयसोधस्वतीर्मुदा ॥ ४ ॥ नद्यः समुद्रा गिरयः सवनस्पतिवीरुधः ॥ फलन्त्योषधयः सर्वाः काममन्वृतु तस्य वै ॥ ५ ॥ नाधयो व्याधयः क्लेशा दैवभूतात्महेतवः ॥ अजातशत्रावभवञ्जन्तूनां राज्ञि कर्हिचित् ॥ ६ ॥ उषित्वा हास्तिनपुरे मासान्कतिपयान्हरिः ॥ सुहृदां च विशोकाय स्वसुश्च प्रियकाम्यया ॥ ७ ॥ आमन्त्र्य चाभ्यनुज्ञातः परिष्वज्याभिवाद्य तम् ॥ आरुरोह रथं कैश्चित्परिष्वक्तोऽभिवादितः ॥ ८ ॥ सुभद्रा द्रौपदी कुन्ती विराटतनया तथा ॥ गांधारी धृतराष्ट्रश्च युयुत्सुर्गौतमो यमौ ॥ ९ ॥ वृकोदरश्च धौम्यश्च स्त्रियो मत्स्यसुतादयः ॥ न सेहिरे विमुह्यन्तो विरहं शार्ङ्गधन्वनः ॥ १० ॥ सत्सङ्गान्मुक्तदुःसङ्गो हातुं नोत्सहते बुधः ॥ कीर्त्यमानं यशो यस्य सकृदाकर्ण्य रोचनम् ॥ ११ ॥ तस्मिन्न्यस्तधियः पार्थाः सहेरन्विरहं कथम् ॥ दर्शनस्पर्शसंलापशयनासनभोजनैः ॥ १२ ॥ सर्वे तेऽनिमिषैरक्षैस्तमनुद्रुतचेतसः ॥ वीक्षन्तः स्नेहसंबद्धा विचेलुस्तत्र तत्र ह ॥ १३ ॥ न्यरुन्धन्नुद्गलद्बाष्पमौत्कण्ठ्याद्देवकीसुते ॥ निर्यात्यगाराज्ञोऽभद्रमि·

प्रणाम गरे ॥७।८॥ सुभद्रा, द्रौपदी, कुन्ती, राजा विराटकी कन्या उत्तरा, गान्धारी, धृतराष्ट्र, युयुत्सु, गौतम, नकुल र सहदेव ॥९॥ भीम, धौम्य र सत्यवती आदि स्त्रीहरू श्रीकृष्णको वियोग सहन नसक्नाले विकल भए ॥१०॥ सत्संगले जसको दुःसंग छुटेर जान्छ, त्यस्ता ज्ञानी पुरुष सत्संग छाड्न मन पराउन्नन् । सज्जनहरू द्वारा प्रतिदिन अथवा एकचोट मात्र सुने पनि जसको यश रुचिकर हुन्छ ॥११॥ तब दर्शन, स्पर्श, वार्तालाप, सुत्ने बस्ने र संगसँगै खान-पान गर्ने तो श्रीकृष्णजीमा संलग्न बुद्धि युधिष्ठिर आदि पाण्डव भगवान्‌को वियोग कसरी सहन सक्थे ? ॥१२॥ श्रीकृष्णका संगसँगै उनको मन पनि गइरहेको थियो, त्यस्तो स्नेह-पाशमा बाँधिएका व्यक्तिहरू आँखा नझिम्काई विकल नयनले प्रभुलाई हेर्दै अघि हुन लागे ॥१३॥ जब श्रीकृष्ण महलबाट बाहिर निस्के, द्रौपदी आदि स्त्रीहरूले उत्कण्ठाले गर्दा उम्लेर आएको आँसुको वेग यस कारण आँखामै रोके—कि अपशकुन नहुन

पाउँस् ॥१४॥ प्रस्थानको माँकामा मृदङ्ग, शङ्ख, नगरा, वीणा, पणव, गोमुख, ढोल तथा घण्टा आदि बाजा बज्नलागे ॥१५॥ प्रेम तथा लज्जापूर्वक हाँस्तै चियाउने कुलवती नगरीहरू प्रभुलाई हेर्ने इच्छाले महलहरूको कौसी अटालीमाथि चढेर भगवान् श्रीकृष्णमाथि पुष्पवर्षा गरे ॥१६॥ रत्न दण्ड युक्त तथा मोतिहरूको झालरले सुशोभित श्रीकृष्णको सेतो छत्र उनका प्रिय मित्र पार्थले पक्रे ॥१७॥ उद्धव र सात्यकिले अद्भुत व्यजन ग्रहण गरे । बाटोमा प्रभुमाथि बराबर फूल वर्षिरहेका थिए । त्यस बखत श्रीकृष्ण निकै शोभित भए ॥ १८ ॥ जताततै ब्राह्मणहरूको आशिर्वाद सुनिन्थ्यो, जुन निर्गुण ईश्वरको योग्य नभएर सगुण परमात्माको योग्य थिए ॥१९॥ श्रीकृष्णमा आसक्त चित्त भएका हस्तिनापुरका स्त्रीहरूको आपसमा मनोहर वार्तालाप भयो ॥२०॥ ती भन्दै थिए—ती गुणहरूको लोभ र प्रपञ्च रहित तथा स्वरूपमा स्थित अद्वितीय पुरुष हुन् । प्रलयको वेलामा जुन ईश्वरमा सबै जीव लीन हुन्छन्, तिनै पुराण-पुरुषोत्तम यी श्रीकृष्णभगवान् हुन् ॥२१॥ नाम-रूपरहित आफ्नो आत्मामा नाम-रूपरचना गर्ने इच्छा राख्दै उनै शास्त्रकर्ता ईश्वरले आफ्नो कालशक्ति-प्रेरित सृष्टि गर्ने इच्छा भएकी

ति स्याद्बांधवस्त्रियः ॥ १४ ॥ मृदङ्गशंखभेर्यश्च वीणापणवगोमुखाः ॥ धुन्धुर्यानकघण्टाद्या नेदुर्दुन्दुभयस्तदा ॥ १५ ॥ प्रासादशिखरारूढाः कुरुनार्यो दिदृक्षया ॥ ववृषुः कुसुमैः कृष्णं प्रेमव्रीडास्मितेक्षणाः ॥ १६ ॥ सितातपत्रं जग्राह मुक्तादामविभूषितम् ॥ रत्नदण्डं गुडाकेशः प्रियः प्रियतमस्य ह ॥ १७ ॥ उद्धवः सात्यकिश्चैव व्यजने परमाद्भुते ॥ विकीर्यमाणः कुसुमै रेजे मधुपतिः पथि ॥ १८ ॥ अश्रूयन्ताशिषः सत्यास्तत्र तत्र द्विजेरिताः ॥ नानुरूपाश्च ताः सर्वा निर्गुणस्य गुणात्मनः ॥१९॥ अन्योन्यमासीत्संजल्प उत्तमश्लोकचेतसाम् ॥ कौरवेन्द्रपुरस्त्रीणां सर्वश्रुतिमनोहरः ॥२०॥ स्त्रियः ऊचुः ॥ स वै किलायं पुरुषः पुरातनो य एक आसीदविशेष आत्मनि ॥ अग्रे गुणेभ्यो जगदात्मनीश्वरे निमीलितात्मन्निशि सुप्तशक्तिषु ॥२१॥ स एव भूयो निजवीर्यचोदितां स्वजीवमायां प्रकृतिं सिसृक्षतीम् ॥ अनामरूपात्मनि रूपनामनी विधित्समानोऽनुससार शास्त्रकृत् ॥ २२ ॥ स वा अयं यत्पदमत्र सूरयो जितेन्द्रिया निर्जितमातरिश्वनः ॥ पश्यन्ति भक्त्युत्कलितामलात्मना नन्वेषु सत्त्वं परिमार्ष्टुमर्हति ॥ २३ ॥ स वा अयं सख्यनुगीतसत्कथो वेदेषु गुह्येषु च गुह्यवादिभिः ॥ य एक ईशो जगदात्मलीलया सृजत्यवत्यत्ति न तत्र सज्जते ॥ २४ ॥ यदा ह्यधर्मेण तमोधियो नृपा जीवन्ति तत्रैव हि सत्त्वतः किल ॥ धत्ते भगं सत्यमृतं दयां यशो भवाय रूपाणि दधद्युगे युगे ॥ २५ ॥ अहो अलं श्लाघ्यतमं

तथा आफ्ना अंशभूत जीवहरूलाई मोहित पार्न प्रकृतिलाई अंगीकार गरे ॥२२॥ यस संसारमा प्राणवायु जित्ने जितेन्द्रिय विद्वान् उसका चरणलाई उत्कण्ठावश निर्मल चित्तले हेर्दछन्, उनै यी श्रीकृष्ण हुन् र यिनै बुद्धि शुद्ध पार्न समर्थ छन् ॥२३॥ हे सखी ! वेदहरू र नारद-पंचरात्र आदि ग्रन्थहरूमा ती शास्त्रहरू बनाउने आचार्य उसको सत्य मायाको ज्ञान गर्दछन् र भन्दछन् कि जो एक ईश्वर आफ्नो लीलाले संसारलाई रच्दछ, पालन तथा संहार गर्दछ—परन्तु आफू त्यसमा आसक्त हुँदैन, उनै यो श्रीकृष्ण भगवान् हुन् ॥२४॥ जब तमोगुणी राजाहरू अधर्मवश केवल आफ्नो प्राण-पोषण गर्दछन्, तब यिनै श्रीकृष्ण प्रजा-पालनको निम्ति प्रत्येक युगमा सत्वगुणमय रूप धारण गरेर सत्य ऐश्वर्य, सत्य प्रतिज्ञा र यशको संसारमा विस्तार गर्दछन् ॥२५॥ अहो ! यदुवंशी ठूलो प्रशंसाको योग्य छन्, जहाँ पुरुषहरूमा श्रेष्ठ यी लक्ष्मीपति विष्णुले जन्म लिएर यस वंशको सत्कार गरे, मधुवन मथुरा पनि अति

पवित्र छ, जसका यो आफ्नो आवागमनले पूजा गर्दछन् ॥२६॥ ठूलो सौभाग्यको कुरा छ कि स्वर्गको यशलाई तिरस्कृत गर्ने भएको द्वारका पनि पृथ्वीलाई पवित्र पार्दछिन्, किनकि द्वारका निवासी दयाले प्रेरित र मन्द हाँसोयुक्त दृष्टि भएका आफ्ना प्रभु श्रीकृष्णलाई नित्य देख्दछन् ! हे सखि हो ! यिनका स्त्रीहरूले व्रत, स्नान र हवन आदिले अन्य जन्महरूमा ईश्वरको विधिवत् पूजा गरेका हुनन्, त्यसैले त श्रीकृष्णलाई पतिरूपमा पाएर उनका नै अधरामृत पान गर्दछन्–जसको प्राप्तिको इच्छाले ब्रजकी नारीहरू उन्मत्त भएका छन्॥२७-२८॥ स्वयंवरमा शिशुपाल आदि बलवान् राजाहरूलाई जितेर पराक्रमरूपी मूल्यले ल्याइएकी रुक्मिणी, जाम्बवती, नाग्नजिती आदि स्त्रीहरू र भौमासुरको वध गरेर तुन हजारौं स्त्रीहरू ल्याइए ॥२९॥ यी स्वतन्त्रतारहित अपवित्र स्त्री जीवनलाई उत्तम तुल्याइरहेका छन् किनकि पारिजातादि ल्याएर तिनको हृदयलाई आनन्द दिँदै कमल-लोचन कृष्ण यी स्त्रीहरूको घरबाट कहिल्यै

यदोः कुलं अहो अलं पुण्यतमं मधोर्वनम् ॥ यदेष पुंसामृषभः श्रियः पतिः स्वजन्मना चंक्रमणेन चाञ्चति ॥ २६ ॥ अहो बत स्वर्यशसस्तिरस्करी कुशस्थली पुण्ययशस्करी भुवः ॥ पश्यन्ति नित्यं यदनुग्रहेषितस्मितावलोकं स्वपतिं स्म यत्प्रजाः ॥ २७ ॥ नूनं व्रतस्नानहुतादिनेश्वरः समर्चितो ह्यस्य गृहीतपाणिभिः ॥ पिबन्ति याः सख्यधरामृतं मुहुर्व्रजस्त्रियः संमुमुहुर्यदाशयाः ॥ २८ ॥ या वीर्यशुल्केन हृताः स्वयंवरे प्रमथ्य चैद्यप्रमुखान्हि शुष्मिणः ॥ प्रद्युम्नसाम्बाम्बसुतादयोऽपरा याश्चाहृता भौमवधे सहस्रशः ॥ २९ ॥ एताः परं स्त्रीत्वमपास्तपेशलं निरस्तशौचं बत साधु कुर्वते ॥ यासां गृहात्पुष्करलोचनः पतिर्न जात्वपैत्याहृतिभिर्हृदि स्पृशन् ॥ ३० ॥ एवंविधा गदन्तीनां स गिरः पुरयोषिताम् ॥ निरीक्षणेनाभिनन्दन्स्मितेन ययौ हरिः ॥ ३१ ॥ अजातशत्रुः पृतनां गोपीथाय मधुद्विषः ॥ परेभ्यः शङ्कितः स्नेहात्प्रायुङ्क्त चतुरङ्गिणीम् ॥ ३२ ॥ अथ दूरागतान्शौरिः कौरवान्विरहातुरान् ॥ सन्निवर्त्य दृढं स्निग्धान्प्रायात्स्वनगरीं प्रियैः ॥ ३३ ॥ कुरुजाङ्गलपाञ्चालान्शूरसेनान्सयामुनान् ॥ ब्रह्मावर्तं कुरुक्षेत्रं मत्स्यान्सारस्वतानथ ॥ ३४ ॥ मरुधन्वमतिक्रम्य सौवीराभीरयोः परान् ॥ आनर्तान्भार्गवोपागाच्छ्रान्तवाहो मनाग्विभुः ॥ ३५ ॥ तत्र तत्र ह तत्रत्यैर्हरिः प्रत्युद्यतार्हणः ॥ सायं भेजे दिशं पश्चाद्गविष्ठो गां गतस्तदा ॥३६॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे दशमोऽध्यायः ॥१०॥

निस्कन्नन् ॥३०॥ यस्ता वचन भन्ने हस्तिनापुरकी स्त्रीहरूको मन्दहास्यपूर्ण दृष्टिबाट प्रशंसा पाउँदै श्रीकृष्ण गइरहेका थिए ॥३१॥ शत्रुहरूबाट सशंक युधिष्ठिरले कृष्णको रक्षाका निमित्त हात्ती, घोडा, रथ र पैदलका चतुरंगिणी सेना साथमा दिएका थिए ॥३२॥ त्यसपछि परसम्म आएका तथा वियोगले दुःखी र ठूलो प्रेमी कौरवहरूलाई फर्काएर श्रीकृष्ण उद्धवादिहरूका संगै आफ्नो द्वारकापुरी हिँडे ॥३३॥ कुरु, जाङ्गल, पाञ्चाल, शूरसेन, यामुन, ब्रह्मावर्त, कुरुक्षेत्र, मत्स्य र सारस्वत आदि देशहरू उछिन्दै ॥३४॥ हे शौनक ! निर्जल देश, अनावृष्टक देश, सौवीर एवं आभीर देशको पल्लापट्टिका देशहरू नाघेर केही थाकेका घोडाहरू भएका श्रीकृष्णजी नगीचैका देशहरूमा पुगे ॥३५॥ ती देशहरूमा त्यहाँका निवासी मानिसहरूबाट दर्शन भेट प्राप्त गरी सायंकालको बेलामा रथबाट भूमिमा झरेर बसे । त्यसपछि जलाशयको नगीच गएर श्रीकृष्णले सन्ध्योपासन गरे ॥३६॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे

पं० गौरीशंकर 'वशिष्ठ'कृत नेपाली भाषा-टीकायां दशमोऽध्यायः ॥१०॥ यस अध्यायमा भगवान् द्वारका पुगेर निवास गरेको वृत्तान्त वर्णित छ । सूतजी भन्छन्-द्वारकाको हरियो-भरियो प्रदेशमा गएर त्यहाँका निवासीहरूको शोक हरण गर्दै श्रीकृष्णले शङ्ख बजाउनुभयो ॥१॥ दुवै हातको माझमा राखेर बजाएको सेतोरङ्ग भएको शङ्ख श्रीकृष्णका ओठको लीलाले रात भएर यस्तो शोभित भयो, जस्तै-राता कमलहरूको माझमा वेसरी कराउने कुनै हंस बसेको होस् ॥२॥ संसारलाई भयदायक त्यो ध्वनि सुनेर आफ्ना स्वामी श्रीकृष्णको दर्शनको इच्छाले सबै प्रजान तत्काल दगुरे ॥३॥ उसरी मानिस सूर्यको अगाडि सादर दीपदान गर्दछन्, त्यस्तै प्रजाले आफ्नो लाभले पूर्णकाम, आत्माराम श्रीकृष्णलाई दर्शन-भेट समर्पण गरे ॥४॥

सूत उवाच ॥ आनर्तान्स उपव्रज्य स्वृद्धाञ्जनपदान्स्वकान् ॥ दध्मौ दरवरं तेषां विषादं शमयन्निव ॥ १ ॥ स उच्चकाशे धवलोदरो दरोऽप्युरुक्रमस्याधरशोणशोणिमा ॥ दाध्मायमानः करकञ्जसंपुटे यथाऽब्जषण्डे कलहंस उत्स्वनः ॥ २ ॥ तमुपश्रुत्य निनदं जगद्भयभयावहम् ॥ प्रत्युद्ययुः प्रजाः सर्वा भर्तृदर्शनलालसाः ॥ ३ ॥ तत्रोपनीतबलयो रवेर्दीपमिवादृताः ॥ आत्मारामं पूर्णकामं निजलाभेन नित्यदा ॥ ४ ॥ प्रीत्यु-त्फुल्लमुख्याः प्रोचुर्हर्षगद्गदया गिरा ॥ पितरं सर्वसुहृदमवितारमिवार्भकाः ॥ ५ ॥ नताः स्म ते नाथ सदाङ्घ्रिपङ्कजं विरिञ्चिवैरिञ्च्यसुरेन्द्रवन्दितम् ॥ परायणं क्षेममिहेच्छतां परं न यत्र कालः प्रभवेत्परः प्रभुः ॥ ६ ॥ भवाय नस्त्वं भव विश्वभावन त्वमेव माताऽथ सुहृत्पतिः पिता ॥ त्वं सद्गुरुर्नः परमं च दैवतं यस्यानुवृत्त्या कृतिनो बभूविम ॥ ७ ॥ अहो सनाथा भवता स्म यद्वयं त्रैविष्टपानामपि दूरदर्शनम् ॥ प्रेम-स्मितस्निग्धनिरीक्षणाननं पश्येम रूपं तव सर्वसौभगम् ॥ ८ ॥ यर्ह्यम्बुजाक्षापससार भो भवान्कुरून्मधून्वाऽथ सुहृद्दिदृक्षया ॥ तत्राब्दकोटिप्रतिमः

जस्तै पितासित पुत्र बोल्दछन्, त्यस्तै गरी सबैको मित्र तथा रक्षा गर्ने श्रीकृष्णको प्रति प्रसन्न अनुहार भएका प्रजाजन हर्षले गद्गद् भएर भन्नलागे-॥५॥∗हे नाथ ! उत्तम गतिको इच्छा गर्ने पुरुषहरूका शरणदाता तथा ब्रह्मा, नारद र इन्द्र जसलाई प्रणाम गर्दछन्, यस्ता हजुरका चरण कमललाई हामी सदैव प्रणाम गर्दछौं, किनकि ब्रह्मादिका प्रभु काल पनि हजुर भगवान्‌का शरणमा जानेहरूको केही बिगार गर्नसक्तैनन् ॥६॥ हे विश्वभावन! हजुर हामीहरूको कल्याण गर्नुहवस् । हजुर हाम्रा माता-पिता, मित्र र पति हुनुहुन्छ । हजुर हामीहरूका उत्तम गुरु र सर्वप्रधान देवता हुनुहुन्छ । हजुरको अनुसरण गरेर हामीहरू आफूलाई कृतार्थ ठानिरहेका छौं ॥७॥ देवगणलाई पनि कठिनले दृष्टिगोचर हुने, मन्दहाँसो र अवर्णनीय शोभा-

∗ कादरत्व—पूर्वकालमा कोही [illegible] राजाको नोकर खुशामदी थियो र राजलाई खुशामद गर्दथ्यो । एक दिन राजाले त्यसलाई बुझाउने निश्चय गरे । त्यसको निम्ति ती समुद्र किनारमा [illegible] । भग-[illegible] राजा [illegible] । अब खुशामदी नोकरले खुशामद आरम्भ गर्यो-"हे राजन् ! हजुर यस पृथ्वीका स्वामी हुनुहुन्छ । समुद्र हजुरको आज्ञा मान्दछ ?" त्यसै बखत समुद्रमा ज्वार बढ्न लाग्यो । राजाले भने-"ए समुद्र ! [illegible] समुद्र हटेन । राजाले भन्यो— समुद्र ! [illegible] मान्दैनस् ! [illegible] ज्वार [illegible] गयो । अब राजाले त्यो खुशामदीतिर हेरेर भने-"ए खुशामदी ! [illegible] [illegible] । [illegible] पृथ्वी, पानी, समुद्र, सूर्य र चन्द्रमालाई प्रभुले बनाइदिएको हो । [illegible] प्रभुको स्तुति गर-उनैको भजन गर । मेरो खुशामदले तँलाई के मिल्छ ! [illegible] [illegible] पनि रोकिंदैन । अतएव भगवानलाई नै सम्मान देउ र उनैको सेवा गर ।

युक्त हजुरको मुखकमल देखेर हामी आफूलाई सनाथ ठान्दछौं ।। ८ ।। हे कमलनेत्र ! जब कहिल्यै हजुर पाण्डवकहाँ हस्तिनापुर तथा व्रजवासीहरूसित भेटन मथुरा अथवा कुनै मित्रसित भेटन अन्यत्र कहीं पाल्नुहुन्छ, तब हाम्रो एक-एक क्षण करोड वर्षको समान लाग्छ मानौं हुनो कहले बित्छ । हे अच्युत ! हजुरको वियोगमा हाम्रो उही दशा हुन्छ जो सूर्यास्त भएपछि अन्धकारले ढाकिएको संसारको हुन्छ । भक्तवत्सल भगवान् आफ्ना प्रजाको यस्तो सरल कुरा सुनी आफ्नो दृष्टिले प्रेम प्रकट गर्दै द्वारकापुरीमा प्रविष्ट भए, जहाँ मधु, भोज, दशार्ह, अर्ह र कुकुर वंशका ठूला-ठूला वीर त्यस नगरको रक्षा गर्न नियुक्त थिए । ती सबै श्रीकृष्णकै समान वीर थिए । ती उसै गरी सतर्कता साथ द्वारकाको रक्षा गर्दथे, जसरी नागगण नागलोक ( भोगवती पुरी ) को रक्षा गर्दछन् ।।९-११।। जुन नगरीको भित्र-बाहिर सबै ऋतुहरूमा फुल्ने-फल्ने वृक्षहरू, लताकुञ्ज, उद्यान, उपवन, आराम ( बगैंचा ) को संगसंगै फुलेका कमल पुष्पहरूले भरिएका ठूला-ठूला सरोवर विद्यमान थिए ।।१२।। जुन नगरीको मुख्यद्वारहरू, सबै घरका ढोकाहरू र बाटोहरूमा त्यहाँका निवासीहरूले कौतुकवश अनेक थरिका तोरण

क्षणो भवेद्रविं विनाक्ष्णोरिव नस्तवाच्युत ।।९।। इति चोदीरिता वाचः प्रजानां भक्तवत्सलः ।। शृण्वानोऽनुग्रहं दृष्ट्या वितन्वन्प्राविशत्पुरीम् ।।१०।। मधुभोजदशार्हार्हकुकुरान्धकवृष्णिभिः ।। आत्मतुल्यबलैर्गुप्तां नागैर्भोगवतीमिव ।। ११ ।। सर्वर्तुसर्वविभवपुण्यवृक्षलताश्रमैः ।। उद्यानोपवनारामैर्वृतपद्माकरश्रियम् ।। १२ ।। गोपुरद्वारमार्गेषु कृतकौतुकतोरणाम् ।। चित्रध्वजपताकाग्रैरन्तःप्रतिहतातपाम् ।। १३ ।। संमार्जितमहामार्गरथ्यापणकचत्वराम् ।। सिक्तां गन्धजलैरुप्तां फलपुष्पाक्षतांकुरैः ।। १४ ।। द्वारि द्वारि गृहाणां च दध्यक्षतफलेक्षुभिः ।। अलंकृतां पूर्णकुम्भैर्बलिभिर्धूपदीपकैः ।।१५।। निशम्य प्रेष्ठमायान्तं वसुदेवो महामनाः ।। अक्रूरश्चोग्रसेनश्च रामश्चाद्भुतविक्रमः ।।१६।। प्रद्युम्नश्चारुदेष्णश्च साम्बो जाम्बवतीसुतः ।। प्रहर्षवेगोच्छ्वसितशयनासनभोजनाः ।।१७।। वारणेन्द्रं पुरस्कृत्य पाणिभिश्च सुमङ्गलैः ।। शंखतूर्यनिनादेन ब्रह्मघोषेण चादृताः ।। प्रत्युज्जग्मू रथैर्हृष्टाः प्रणयागतसाध्वसाः ।।१८।। वारमुख्याश्च शतशो यानैस्तद्दर्शनोत्सुकाः ।। लसत्कुण्डलनिर्भातकपोलवदनश्रियः ।। १९ ।। नटनर्तकगन्धर्वाः सूतमागधवन्दिनः ।। गायन्ति

लगाइराखेका थिए । चित्र-विचित्र किसिमका ध्वजा र पताकाहरू फरफराइरहेका थिए । ती यति घना थिए कि बाटोमा घाम लाग्दैनथ्यो, किनकि सारा सडकमा छाया भएको थियो ।।१३।। त्यस नगरीका ठूला र साना सडकहरू स्वच्छ थिए । ती सन्दा केही कम चाक्लो बाटो र बजारका गल्लीहरूमा सुगन्धित जल छर्केर अनेक थरिका फल फूल दुबो र अक्षता आदिले सजाइएको थियो प्रत्येक द्वारका निवासीको ढोकामा भरिएका कलश राखिएका थिए र मङ्गलाचारको निम्ति कहतारामा दही अक्षता, फल ( नरिवल ) उखुर तथा धूप दीप आदि सामग्री भरी राखिएका थिए । महामनास्वी वसुदेव, अद्भुत पराक्रमी बलराम, प्रद्युम्न र जाम्बवतीका छोरा साम्ब आदिले जब सुने—श्रीकृष्ण हस्तिनापुरीबाट पाल्नुभयो— तब बर्ता हर्षले आसन, शयन, भोजन आदि छाडेर सर्वश्रेष्ठ हात्ती र मङ्गलमयी वस्तुहरू हातमा लिई ब्राह्मणहरूलाई अघि लगाई शङ्ख, मृदङ्ग आदि बाजा बजाउँदै र ब्राह्मणहरू द्वारा वेदमन्त्रको पाठ गराउँदै—।।१४-१८।। बडो प्रेमको आतुरी दर्शाउँदै ती रथहरूमा चढी हिंडेका थिए । हजारौं वेश्याहरू जिन्ले भगवान्को दर्शन गर्ने उत्सुकतावश अनेक थरिका वाहनहरूमा चढेर हिंडे । त्यस बखत कानमा लगाएका कुण्डलहरूले तिनका कपोलको र मुखको शोभा हेरिरहौं जस्तै थियो ।।१९।। नट ( जो रङ्गहरूको अभिनय गर्दमा ) नर्तक (नाच्ने जन )

गायक, सूत र पुराणहरूका कथा सुनाउने, मागध र वंशावली वर्णन गर्ने र वन्दीजन र समयानुकूल कुरा गर्ने पवित्र-चरित्र भगवान् कृष्णचन्द्रका अद्भुत चरित्रहरूको गान गर्दै गए जब तिनीहरू प्रभुको समक्ष पुगे तब ती भगवान् श्रीकृष्ण सबै बन्धुहरू र अनुगामी पुरवासीहरूसित विधिवत् प्रेमपूर्वक भेटे र सबैको सम्मान गरे ॥२१॥ न्युरेर प्रणाम, आलिङ्गन, उनका हातले स्पर्श, मन्दहास्ययुक्त अवलोकन आदि भावहरूले त्यहाँ भएका चाण्डालदेखि ब्राह्मण-क्षत्रियसम्म सबैलाई श्रीकृष्णले गद्गद पारिदिए र जसले जे वरदानको इच्छा गरे त्यो पाए ॥२२॥ त्यसपछि गुरुजन र सपत्नीक वृद्ध ब्राह्मणहरूको आशीर्वादात्मक वाक्य सुन्दै भगवान् कृष्णचन्द्र आफ्ना बान्धवहरूसित द्वारकापुरीमा प्रविष्ट भए ॥२३॥ हे शौनक ! जब भगवान् द्वारकाको विशाल राजमार्गमा आउनलागे तब उनलाई हेर्न अभिलाषा लिएर त्यहाँका स्त्रीहरू आफ्ना-आफ्ना अटालीहरूमा चढे ॥२४॥ यद्यपि ती स्त्रीहरू नित्य भगवान्को दर्शन गर्दै रहन्थे, तापनि ती शोभाधामको शोभा वारम्बार हेरेर पनि तिनका आँखा अघाउँदैनथे ॥२५॥ फेरि भगवान् पनि त त्यस्ता थिएनन्—उनको हृदयमा साक्षात् लक्ष्मीको

चोत्तमश्लोकचरितान्यद्भुतानि च ॥ २० ॥ भगवाँस्तत्र बन्धूनां पौराणामनुवर्तिनाम् ॥ यथाविध्युपसंगम्य सर्वेषां मानमादधे ॥ २१ ॥ प्रह्वाभिवादना-श्लेषकरस्पर्शस्मितेक्षणैः ॥ आश्वास्य चाश्वपाकेभ्यो वरैश्चाभिमतैर्विभुः ॥ २२ ॥ स्वयं च गुरुभिर्विप्रैः सदारैः स्थविरैरपि ॥ आशीर्भिर्युज्यमानोऽन्यैर्व-न्दिभिश्चाविशत्पुरम् ॥ २३ ॥ राजमार्गं गते कृष्णे द्वारकायाः कुलस्त्रियः ॥ हर्म्याण्यारुरुहुर्विप्र तदीक्षणमहोत्सवाः ॥ २४ ॥ नित्यं निरीक्षमाणानां यदपि द्वारकौकसाम् ॥ न वितृप्यन्ति हि दृशः श्रियो धामाङ्गमच्युतम् ॥२५॥ श्रियो निवासो यस्योरः पानपात्रं मुखं दृशाम् ॥ बाहवो लोकपालानां सारङ्गाणां पदाम्बुजम् ॥ २६ ॥ सितातपत्रव्यजनैरुपस्कृतः प्रसूनवर्षैरभिवर्षितः पथि ॥ पिशङ्गवासा वनमालया बभौ घनो यथार्कोडुपचापवैद्युतैः ॥२७॥ प्रविष्टस्तु गृहं पित्रोः परिष्वक्तः स्वमातृभिः ॥ ववन्दे शिरसा सप्त देवकीप्रमुखा मुदा ॥२८॥ ताः पुत्रमङ्कमारोप्य स्नेहस्नुतपयोधराः ॥ हर्ष-विह्वलितात्मानः शिषिचुर्नेत्रजैर्जलैः ॥ २९ ॥ अथाविशत्स्वभवनं सर्वकाममनुत्तमम् ॥ प्रासादा यत्र पत्नीनां सहस्राणि च षोडश ॥ ३० ॥ पत्न्यः

निवास थियो। तिनको स्वच्छ मुखमण्डल सबैका आँखालाई सौन्दर्यरूपी अमृत पिलाउने कचौरा थियो। तिनका भुजाहरूमा लोकपालहरूको निवास थियो र उनका चरण-कमल भक्तहरूको विश्रामस्थल थियो ॥२६॥ सेतो छाता र व्यजनले मण्डित हुँदै भगवान् गइरहेका थिए। बाटोमा उनको माथि पुष्प-वृष्टि हुँदैरहन्थ्यो। यदि मेघमाथि सूर्य-बिम्ब होस् र त्यसको दुबै-तिर दुइ चन्द्रमा हुन्, उनको चारैतिर नक्षत्र टल्किरहेका हुन्, माझमा सीधा [illegible] अभिमुख मिलेका दुइटा धनुष हुन् र त्यसको माझमा बिजुली स्थिर भएर बसेको होस् अनि उनको मुखको निमित्त उपमा उपयुक्त हुनसक्छ ॥२७॥ त्यसपछि उनी आफ्नो घर पुगे। त्यहाँ आमाहरूले दगुर्दै उनलाई आफ्नो छातीमा टाँसे र भगवान्ले देवकी आदि सातै जना आमा-हरूलाई ढोगे। आमाहरूले आफ्ना पुत्र कृष्णलाई काखमा बसाले र वात्सल्य स्नेहले तिनका स्तनबाट दूधको धारा बग्नलाग्यो। हर्षले तिनको आत्मा आकुल भै गयो र तिनले आनन्द [illegible] आँसुले कृष्ण भगवान्लाई भिजाइदियो। त्यसपछि ती सबै आवश्यक वस्तुहरूले सुसज्जित अन्तःपुरमा सोह्र हजार रानीहरूलाई प्रसन्न पार्नको निमित्त गए ॥२८-३०॥ भगवान्का

रुक्मिणी आदि पत्नीहरूले जब भगवान्‌लाई परदेशबाट फर्कनुभएको देखे तब तुरुन्त आँखा तल निहुराई आफ्नो आसनबाट उठेर उभिए त्यसै बखत तिनका प्रोषित पतिका नायिका-को व्रत पनि समाप्त भयो ॥३१॥ पतिलाई आकृष्ट गर्न आउनलागेको देखेर ती गम्भीर स्वभावका स्त्रीहरू पहिले आत्माद्वारा पतिसित मिले अनि दृष्टिले र त्यसपछि जब अङ्ग नजीकै आएर श्रीकृष्ण छोराहरूलाई हृदयमा टाँस्नलागे, अनि ती पनि अंकमाल गर्नलागे। यद्यपि तिनले रोक्ने निकै चेष्टा गरे तापनि आँखाबाट आँसुका केही थोपा चुहे। हे शौनक! त्यति आँसु आउन न भाग्दा, तर त्यसको निम्ति तिनी धेरै लज्जित भए॥३२॥ यद्यपि भगवान् सदैव एकान्तमा तिनको नजीक नै रहन्थे, तापनि ती स्त्रीहरूका निम्ति पद-पदमा नयाँ नै देखिन्थे। जब कि चञ्चला लक्ष्मी पनि तिनका चरण छाड्दिनथिन्, अनि अरू कुन स्त्री तिनका चरणलाई त्याग्न सक्थे? ॥३३॥ यस प्रकार पृथ्वीका भारभूत, अक्षौहिणी सेनाहरूले युक्त, अमित प्रभावशाली एवं दुष्ट राजाहरूलाई आपसमै जुधाएर उनले स्वयं नगरी वध गराए, जसरी वायु बाँसहरूलाई घोटेर तिनमा आगो उत्पन्न गरेर सम्पूर्ण जंगललाई डढाइ-

पतिं प्रोष्य गृहानुपागतं विलोक्य संजातमनोमहोत्सवाः ॥ उत्तस्थुरारात्सहसाऽऽसनाशयात्साकं व्रतैर्व्रीडितलोचनाननाः ॥ ३१ ॥ तमात्मजैर्दृष्टिभिरन्तरात्मना दुरन्तभावाः परिरेभिरे पतिम् ॥ निरुद्धमप्यास्रवदम्बु नेत्रयोर्विलज्जतीनां भृगुवर्य वैक्लवात् ॥ ३२ ॥ यद्यप्यसौ पार्श्वगतो रहोगतस्तथापि तस्याङ्घ्रियुगं नवं नवम् ॥ पदे पदे का विरमेत तत्पदाच्चलाऽपि यच्छ्रीर्न जहाति कर्हिचित् ॥ ३३ ॥ एवं नृपाणां क्षितिभारजन्मनामक्षौहिणीभिः परिवृत्ततेजसाम् ॥ विधाय वैरं श्वसनो यथानलं मिथो वधेनोपरतो निरायुधः ॥ ३४ ॥ स एष नरलोकेऽस्मिन्नवतीर्णः स्वमायया ॥ रेमे स्त्रीरत्नकूटस्थो भगवान्प्राकृतो यथा ॥३५॥ उद्दामभावपिशुनामलवल्गुहासव्रीडावलोकनिहतो मदनोऽपि यासाम् ॥ संमुह्य चापमजहात्प्रमदोत्तमास्ता यस्येन्द्रियं विमथितुं कुहकैर्न शेकुः ॥ ३६ ॥ तमयं मन्यते लोको ह्यसङ्गमपि सङ्गिनम् ॥ आत्मौपम्येन मनुजं व्यापृण्वानं यतोऽबुधः ॥ ३७ ॥ एतदीशनमीशस्य प्रकृतिस्थोऽपि तद्गुणैः ॥ न युज्यते सदात्मस्थैर्यथा बुद्धिस्तदाश्रया ॥३८॥ तं मेनिरेऽबला मूढाः स्त्रैणं चानुव्रतं रहः ॥ अप्रमाण-

दिन्छ, तर स्वयं उनले शस्त्रहरूलाई छुनसम्म पनि परेन ॥३४॥ यिनै नारायण आफ्नो मायाले यस संसारमा अवतार लिएर ती स्त्रीहरूका साथ साधारण मनुष्य झैं विहार गर्नलागे ॥३५॥ जुन स्त्रीहरूको गम्भीर आशयको सूचना दिने मन्दहास्य तथा लाजले भरिएको वक्रदृष्टि द्वारा चाहने कामदेव पनि मोहित भयो र [illegible] मानेर उसले आफ्नो धनुष फालिदियो। ती स्त्रीहरू पनि आफ्नो कपटपूर्ण हाउ-भाउले जुन श्री कृष्णचन्द्रका इन्द्रियहरूलाई विचलित पार्न समर्थ भएनन् ॥ ३६ ॥ तिनै असङ्ग श्रीकृष्णचन्द्रलाई यो नीच संसार आफू जस्तै विषयी ठान्दछन्, किन भने त्यो मूर्ख त आफू समान नै उनलाई पनि हीन व्यापारमा लागेको देख्दछन् ॥३७॥ ती ईश्वरको सर्वभन्दा ठूलो ऐश्वर्य यही छ कि ती प्रकृतिभित्रै रहेर पनि त्यसका सुख-दुःख आदि गुणहरूमा अल्झँदैनन्। जस्तै—आनन्द आदि सबै गुण आत्मामा रहन्छन् र बुद्धि आत्माको आश्रित

○ उदाहरण—शास्त्रमा लेखिएको छ—क्रीडा शरीर संस्कारं समाजोत्सवदर्शनम्। हास्यं परगृहे यानं त्यजेत्प्रोषितभर्तृका। अर्थ—जुन स्त्रीको पति परदेश गएको छ, त्यसले खेल कूद, शरीरको शृङ्गार आदि नगरोस्। [illegible] नगरोस्।

रहेर पनि त्यस आनन्दको नजीक पुग्न पाउन्नन् ॥३८॥ तिनको महिमालाई नजान्ने तो मूढ खोहरू तो नारायणलाई उनैं विषयी ( कैव ) र आफ्नो वशीभूत ठान्दछ, उनैं सर्वे चञ्चल रहने बुद्धि ईश्वरलाई जान्न सक्तैनन् ॥ ३९॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे पं० गौरीशंकर वशिष्ठकृत भाषाटीकायां एकादशोऽध्यायः ॥११॥ अब यस अध्यायमा राजा परीक्षितको जन्मको विवरण वर्णन गरिन्छ । यति कथा सुनेर शौनक भन्नलागे–हे सूतजी ! अश्वत्थामाले प्रहार गरेको महातेजस्वी ब्रह्मास्त्रबाट भगवान् कृष्णले उत्तराको नष्टप्राय गर्भ बचाउनु भएको थियो ॥१॥ उत्तगर्भबाट उत्पन्न महाबुद्धिमान् र महात्मा राजा परीक्षितका कामहरूको वर्णन गर्दै हामीलाई यो भन्नुहवस्—तिनको मृत्यु कसरी भयो ? तो कसरी कसरी स्वर्गवासी भए ? ॥२॥ यदि तपाईं भन्नुहुन्छ भने मयो सुन्ने इच्छा गर्दछु । हे भगवन् ! जुन राजा परीक्षितलाई स्वयं श्रीशुकदेव जीले ज्ञानोपदेश दिएका थिए तिनको चरित्र सुन्ने मेरो प्रबल इच्छा छ ॥ सूतजी भन्दछन्—श्रीकृष्णचन्द्रका चरण-कमलको आराधना गरेर अरू सबै कुराबाट निस्पृह महाराज युधिष्ठिर पिता झैं प्रजालाई सबै प्रकारले

विदो भर्तुरीश्वरं मतयो यथा ॥ ३६ ॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे एकादशोऽध्यायः ॥ ११ ॥ शौनक उवाच ॥ अश्वत्थाम्नोपसृष्टेन ब्रह्मशीर्ष्णोरुतेजसा ॥ उत्तराया हतो गर्भ ईशेनाजीवितः पुनः ॥ १ ॥ तस्य जन्म महाबुद्धेः कर्माणि च महात्मनः ॥ निधनं च यथैवासीत्स प्रेत्य गतवान् यथा ॥ २ ॥ तदिदं श्रोतुमिच्छामि गदितुं यदि मन्यसे ॥ ब्रूहि नः श्रद्दधानानां यस्य ज्ञानमदाच्छुकः ॥ ३ ॥ सूत उवाच ॥ अपी–पलद्धर्मराजः पितृवद्रञ्जयन्प्रजाः ॥ निस्पृहः सर्वकामेभ्यः कृष्णपादानुसेवया ॥ ४ ॥ संपदः क्रतवो विप्रा महिषी भ्रातरो मही ॥ जम्बूद्वीपाधि-पत्यं च यशश्च त्रिदिवं गतम् ॥ ५ ॥ किं ते कामाः सुरस्पार्हा मुकुन्दमनसो द्विजाः ॥ अधिजह्रुर्मुदं राज्ञः क्षुधितस्य यथेतरे ॥६॥ मातुर्गर्भगतो वीरः

प्रसन्न राखेर तिनको पालन गर्दथे ॥३-४॥ यद्यपि उनीसित अतुलित धन थियो, ठूला-ठूला यज्ञ गरेर स्वर्गलोक प्राप्तिको अधिकार पनि उनलाई मिलिसकेको थियो, तिनकी रानी द्रौपदी थिइन्, चार-चार वीर भाई थिए, समस्त जम्बूद्वीपमा प्रभुता थियो र स्वर्ग, मर्त्य, पाताल तीनै लोकमा फैलिएको उनको कीर्ति थियो ॥५॥ तर हे शौनक ! एक मात्र नारायणमा मन लगाउँदा ती पाण्डवहरूलाई त्यो सम्पत्तिहरूमा उसै गरी केही आनन्द प्राप्त भइरहेको थिएन, जसरी भोको मनुष्यको अभिलित माला-चन्दन रासिविद्दियोस् र त्यो उसलाई मन

* उदाहरण—चोरो को मिलै पवित्र थिई । कुनै कार्यले त्यो चोरा पर्वतमा । त्यहाँ चोटा दुइ सिपाही आइपुग्यो । त्यो स्त्रीलाई देखेर सिपाहीको नीयत बिग्रियो । स्त्रीले त्यो भाव बुझी । त्यसले यसरी बाँच्नुभन्दा मर्नु चालो भन्ने ठानी । अतः आफ्नो इज्जत बचाउन त्यो पर्वतबाट तल हाम्फाली । 'धर्म धारण गर्दो त्यही धर्म' यस कथनको अनुसार त्यसले जीवनभरि पतिव्रता धर्म पालन गरेकी थिई । त्यसै कारण धर्मले पनि त्यसको रक्षा गर्यो । त्यो आश्चिकार हाम्फाली तर तल नदीको बलमा परी र त्यसलाई नदीले बचाइदियो । त्यो स्त्री बाँची । केही दिनपछि कुनै काम परेर त्यो फेरि त्यही पर्वतमा पुगी । त्यहाँ त्यसले सिपाही सम्बन्धी घटना सम्झी । अनि विचार गरी—'उस दिन त म हाम्फालेर पनि बाँचेकी थिएँ । आज फेरि हाम्फालेर हेरौं के हुँदोरहेछ । ईश्वरले मेरो रक्षा गर्दछन् वा गर्दैनन् ।' अतः त्यो पर्वतबाट हाम्फाली । यसपटक त्यसलाई थिलै पार लाग्यो र त्यो अचेटी मरी । केही दिनपछि त्यसले चोटा महात्मासित सोधी—'उस बखत हाम्फालेर म बाँचें दोस्रो पटक हाम्फाल्दा किन पाइने भए' ? महात्माले उत्तर दिए—'पहिलोपल्ट तिम्रो धर्मको रक्षाका लागि हाम्फालेकी थियौ, त्यसैले ईश्वरले तिमीलाई बचायो अर्कोपल्ट ईश्वरको परीक्षा लिन हाम्फाल्यौ त्यसैले दुःख पायौ ।'

नपरोस् ॥६॥ हे शौनक ! जब महाराज परीक्षित् आफ्नी आमाको उदरमा थिए र कुनै अस्त्रको तेजले पोलिइरहेका थिए, त्यस बखत उनले यस्ता पुरुषलाई देखे— ॥७॥ उनको दर्शन योग्य आकृति थियो । केवल बुढीऔंला जति त्यसको लमाइ चौडाइ थियो । त्यसको शिरमा मुकुट टल्किरहेको थियो र त्यसमा पीताम्बर विराजमान थियो ॥८॥ त्यसका गाला राम्रा र लामा-लामा चार बाहु थिए । तताएको सुनको टल्कने कुण्डल कानमा हल्लिइरहेका थिए । रातो-रातो आँखा थिए । त्यो आफ्नो हातले आगोको मुस्लो जस्तो गदा घुमा-उँदै तिनको चारैतिर डुलिरहेको थियो ॥९-१०॥ तिनले हेर्दा-हेर्दै त्यो वीरपुरुषले आफ्नो गदाले ब्रह्मास्त्रसमेत तेजलाई शान्त पारिदिए । गर्भस्थ शिशु राजा परीक्षितले त्यसलाई जब नजीक देखेर विचार गरे—यो के हो ? ॥११॥ धर्मका रक्षक र सर्वव्यापी नारायणले त्यो घातक अस्त्रको तेज शान्त पारिदिए र जब दशौं महीनामा परीक्षित् [illegible] भगवान् गर्भबाट विलीन हुनुभयो ॥१२॥ त्यसपछि जब सबै ग्रह अनुकूल र गुणदायक थिए र लग्न पनि शुभ थियो, त्यसै बखत पाण्डु-वंशका रक्षक परीक्षित् जन्मे ॥१३॥ उन बखत

स तदा भृगुनंदन ॥ ददर्श पुरुषं कश्चिद्दह्यमानोऽस्त्रतेजसा ॥७॥ अंगुष्ठमात्रममलं स्फुरत्पुरटमौलिनम् ॥ अपीच्यदर्शनं श्यामं तडिद्वाससमच्युतम् ॥८॥ श्रीमद्दीर्घचतुर्बाहुं तप्तकांचनकुण्डलम् ॥ क्षतजाक्षं गदापाणिमात्मनःसर्वतो दिशम् ॥६॥ परिभ्रमन्तमुल्काभां भ्रामयन्तं गदां मुहुः ॥ कौमोदकीमानश्रेष्ठां भक्तरक्षणतत्पराम् ॥१०॥ अस्त्रतेजः स्वगदया नीहारमिव गोपतिः ॥ विधमन्तं सन्निकर्षे पर्यैक्षत क इत्यसौ ॥११॥ विधूय तदमेयात्मा भगवान्धर्मगुब्विभुः ॥ मिषतो दशमास्यस्य तत्रैवान्तर्दधे हरिः ॥१२॥ ततः सर्वगुणोदर्के सानुकूलग्रहोदये ॥ जज्ञे वंशधरःपांडोर्भूयः पांडुरिवौजसा ॥१३॥ तस्य प्रीतमना राजा विप्रैर्धौम्यकृपादिभिः ॥ जातकं कारयामास वाचयित्वा च मंगलम् ॥१४॥ हिरण्यं गां महीं ग्रामान्हस्त्यश्वान्नृपतिर्वरान् ॥ प्रादात्स्वन्नं च विप्रेभ्यः प्रजातीर्थे स तीर्थवित् ॥१५॥ तमूचुर्ब्राह्मणास्तुष्टा राजानं प्रश्रयान्वितम् ॥ एष ह्यस्मिन्प्रजातन्तौ कुरूणां पौरवर्षभ ॥१६॥ दैवेनाप्रतिघातेन शुक्ले संस्थामुपेयुषि ॥ रातो वोऽनुग्रहार्थाय विष्णुना प्रभविष्णुना ॥ १७ ॥ तस्मान्नाम्ना विष्णुरात इति लोके बृहच्छ्रवाः ॥ भविष्यति न संदेहो महाभागवतो महान् ॥ १८ ॥ युधिष्ठिर उवाच ॥ अप्येष वंश्यान्राजर्षीन्पुण्यश्लोकान्महात्मनः ॥ अनुवर्तिता स्विद्यशसा साधुवादेन सत्तमाः ॥१९॥ ब्राह्मणा ऊचुः ॥ पार्थ प्रजाविता साक्षादिक्ष्वाकुरिव मानवः ॥ ब्रह्मण्यः सत्यसन्धश्च रामो दाशरथिर्यथा ॥ २० ॥ एष दाता शरण्यश्च

परम प्रसन्न धर्मराज युधिष्ठिरले धौम्य र कृपाचार्य आदिलाई डाकेर पुण्याहवाचन र ती बालकको जातकर्म-संस्कार गराए ॥ १४ ॥ ब्राह्मणहरूलाई सुवर्ण, भूमि, ग्राम, हात्ती-घोडा र सुस्वादु भोजन दिए ॥१५॥ ती प्रसन्न ब्राह्मणहरूले विनयी राजा युधिष्ठिरसित भने—'हे पुरुवंश शार्दूल ! दैवीकोपले यो विशुद्ध कुलको संहार गर्न खोजेपछि हजुरको पवित्र वंशमा कृपा गरेर यो पवित्र पुत्र दिनु भयो ॥१६-१७॥ त्यसले यसको 'विष्णुरात' नाम राख्नु उचित हुनेछ । यो बालक संसारमा ठूलो यशस्वी र असाधारण भगवद्भक्त हुनेछ ॥१८॥ विप्रहरूका कुरा सुनिसकेर राजा युधिष्ठिरले भने—साँच्चै नै यो बालक संसारमा आफ्नो यशको विस्तार गरेर 'महान्' कहिने छ ? के वास्तवमा यो हाम्रा वंशजहरूको समान नै यशस्वी र महात्मा हुनेछ ? हे सज्जन हो ! के म विश्वास गरौं—यो आफ्नो शुभ कीर्तिद्वारा मेरा पूर्वजहरूका बाटोको अनुसरण गर्नेछ ? ॥१९॥ यति सुनेर ब्राह्मणले भने—हे पार्थ ! यो बालक साक्षात्

प्रजापालक, दशरथ-पुत्र रामचन्द्र जस्तै सत्य-प्रतिज्ञ तथा ब्राह्मण-भक्त हुनेछ ॥२०॥ यो ठूलो दानी र शरणागत-प्रतिपालक हुनेछ र राजा भरतको समान आफ्नो सुकीर्तिको विस्तार गर्नेछ ॥२१॥ यो दुवै अर्जुन ( यहाँ हजुरका भाइ र अर्को सहस्रबाहुको समान धनुर्धारीहरुमा अग्रणी हुनेछ । यो अग्निको समान तेजस्वी, दुर्धर्ष र समुद्रको समान तरिनसक्नु दुस्तर हुनेछ ॥२२॥ यो सिंह झैं बलवान्, हिमालय जस्तै सज्जनहरुको सेव्य, पृथ्वी जस्तै क्षमावान् तथा माता-पिताको समान सहनशील हुनेछ ॥२३॥ यो ब्रह्माजीको समान साम्यवादी, शिवजीको समान दयालु अर्थात् चाँडै प्रसन्न हुने र विष्णुभगवान झैं सबैको आश्रयदाता हुनेछ ॥२४॥ यो भगवान् श्रीकृष्ण जस्तै समस्त राम्रा गुणहरुको केन्द्र, राजा रन्तिदेव जस्तै उदार तथा महाराज ययाति जस्तै धर्मात्मा हुनेछ ॥२५॥ यो धर्ममा बलि र सत्याग्रहमा प्रह्लादको समान नेता (नायक) हुनेछ । गुरुजनहरुको आदर गर्दै यो अनेक अश्वमेध यज्ञ गर्नेछ ॥२६॥ आफ्नो वीर्यबाट यसले राजर्षि जनमेजय आदिलाई उत्पन्न गर्नेछ र कुमार्गमा हिड्नेलाई कठोर दण्ड दिनेछ । गोरूपधारिणी पृथ्वी तथा वृषभरूपधारी धर्मलाई

यथा ह्यौशीनरः शिबिः ॥ यशो वितनिता स्वानां दौष्यन्तिरिव यज्वनाम् ॥ २१ ॥ धन्विनामग्रणीरेष तुल्यश्चार्जुनयोर्द्वयोः ॥ हुताश इव दुर्धर्षः समुद्र इव दुस्तरः ॥ २२ ॥ मृगेन्द्र इव विक्रान्तो निषेव्यो हिमवानिव ॥ तितिक्षुर्वसुधेवासौ सहिष्णुः पितराविव ॥ २३ ॥ पितामहसमः साम्ये प्रसादे गिरिशोपमः ॥ आश्रयः सर्वभूतानां यथा देवो रमाश्रयः ॥ २४ ॥ सर्वसद्गुणमाहात्म्य एष कृष्णमनुव्रतः ॥ रन्तिदेव इवोदारो ययातिरिव धार्मिकः ॥ २५ ॥ धृत्या बलिसमः कृष्णे प्रह्लाद इव सद्ग्रहः ॥ आहर्तैषोऽश्वमेधानां वृद्धानां पर्युपासकः ॥ २६ ॥ राजर्षीणां जनयिता शास्ता चोत्पथगामिनाम् ॥ निग्रहीता कलेरेष भुवो धर्मस्य कारणात् ॥ २७ ॥ तक्षकादात्मनो मृत्युं द्विजपुत्रोपसर्जितात् ॥ प्रपत्स्यत उपश्रुत्य मुक्तसङ्गः पदं हरेः ॥२८॥ जिज्ञासितात्मयाथात्म्यो मुनेर्व्याससुतादसौ ॥ हित्वेदं नृप गङ्गायां यास्यत्यद्धाऽकुतोभयम् ॥२९॥ इति राज्ञ उपादिश्य विप्रा जातककोविदाः ॥ लब्धापचितयः सर्वे प्रतिजग्मुः स्वकान्गृहान् ॥ ३० ॥ स एष लोके विख्यातः परीक्षिदिति यत्प्रभुः ॥ पूर्वं दृष्टमनुध्यायन्परीक्षेत नरेष्विह ॥ ३१ ॥ स राजपुत्रो ववृधे आशु शुक्ल इवोडुपः ॥ आपूर्यमाणः पितृभिः काष्ठाभिरिव सोऽन्वहम् ॥ ३२ ॥ यक्ष्यमाणोऽश्वमेधेन ज्ञाति-

पीडा दिने कलिलाई पनि यो आफ्नो मुठीमा पार्नेछ ॥२७॥ अन्त्यमा यहाँ द्विज-पुत्रबाट प्रेरित तक्षकनागले टोकेर भगवान्‌कोस्मरण गर्दै वैराग्य [illegible] गरेर शरीर त्याग्नेछ ॥२८॥ आत्मज्ञानको जिज्ञासा भएपछि व्यास-पुत्र शुकमुनिबाट यसलाई ज्ञान प्राप्त हुनेछ र गङ्गाजीमा यो आफ्नो देह त्यागेर भगवानको निर्भय लोकमा जानेछ ॥२९॥ यसरी जातक शास्त्रमा निपुण पण्डितहरुले धर्मराज युधिष्ठिरलाई सबै कुरा सुनाइदिए र उनीद्वारा पूजित भएर ती आफ्ना-आफ्ना आश्रमहरुमा फर्के ॥३०॥ त्यो बालक गर्भमा [illegible] पुरुषको ध्यान गर्दै प्रत्येक मनुष्यको परीक्षा गर्दथ्यो-'यो उही त होइन,जसलाई मैले गर्भमा देखेको थिए ।' अतः परीक्षित नामले प्रख्यात भए ॥३१॥ युधिष्ठिर आदि गुरुजन[illegible] पालित त्यो राजपुत्र [illegible] बढ्न लाग्यो-जसरी शुक्लपक्षका चन्द्रमा बढ्दछन् ॥३२॥ त्यसपछि आफ्ना सजातीयहरुको वधजनित पाप नाश गर्नको अभिलाषाले महाराज [illegible] अश्वमेध [illegible] विचार

विचार गरे, जसमा प्रजामाथि कर लगाएर प्रजाबाट पाइएको धन बाहेक नगर्नुपरोस् र यज्ञको निमित्त आवश्यक धन पनि हुने युक्ति प्राप्त होओस् ॥३३॥ उनको अभिप्राय बुझेर श्रीकृष्ण अर्जुन, भीम आदिलाई उत्तर दिशामा त्यस ठाउँमा पठाए, जहाँ मरुत्तको यज्ञमा प्राप्त सुनका भाँडाहरू ब्राह्मणहरूले फ्याँकिदिएका थिए, त्यो धन बटुलेर उनीहरूले ल्याएर आफ्ना दाज्यूलाई सुम्पिदिए ॥३४॥ सजातीयहरूको वधजनित पापले भयभीत महाराज युधिष्ठिरले त्यही धनद्वारा यज्ञका सबै सामग्री एकत्र पारेर तीन अश्वमेध यज्ञ गरेर भगवान्को आराधना गरे ॥३५॥ त्यस अवसरमा धर्मराजले श्रीकृष्णलाई फेरि डाके र ब्राह्मणहरू मार्फत लिएर आई उनले नै यज्ञकार्य सम्पन्न गराए। आफ्ना प्रियजनलाई प्रसन्न पार्नका लागि ती अनेक महीनासम्म हस्तिनापुरमै बसे ॥३६॥ त्यसपछि युधिष्ठिर र द्रौपदीसित अनुमति लिएर श्रीकृष्णचन्द्र अर्जुन र यादवहरूका साथ आफ्नो द्वारकापुरी फर्कनुभयो ॥३७॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे पं० गौरीशंकर'वासष्ठ'कृत नेपाली भाषाटीकायां द्वादशोऽध्यायः ॥१२॥ तेह्रौं अध्यायमा विदुरको तीर्थयात्रा वर्णन गरिन्छ। सूतजी भन्दछन्–हे शौनक! तीर्थयात्रामा

द्रोहजिहासया ॥ राजाऽलब्धधनो दध्यावन्यत्र करदण्डयोः ॥ ३३ ॥ तदभिप्रेतमालक्ष्य भ्रातरोऽच्युतचोदिताः ॥ धनं प्रहीणमाजह्रुरुदीच्यां दिशि भूरिशः ॥ ३४ ॥ तेन संभृतसंभारो धर्मपुत्रो युधिष्ठिरः ॥ वाजिमेधैस्त्रिभिर्भीतो यज्ञैः समयजद्धरिम् ॥ ३५ ॥ आहूतो भगवान्राज्ञा याजयित्वा द्विजैर्नृपम् ॥ उवास कतिचिन्मासान्सुहृदां प्रियकाम्यया ॥ ३६ ॥ ततो राज्ञाऽभ्यनुज्ञातः कृष्णया सह बन्धुभिः ॥ ययौ द्वारवतीं ब्रह्मन्सार्जुनो यदुभिर्वृतः ॥ ३७ ॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे परीक्षिज्जन्माद्युत्कर्षो नाम द्वादशोऽध्यायः ॥ १२ ॥ सूत उवाच ॥ विदुरस्तीर्थयात्रायां मैत्रेयादात्मनो गतिम् ॥ ज्ञात्वाऽगाद्धास्तिनपुरं यथावाप्तविवित्सितः ॥ १ ॥ यावतः कृतवान्प्रश्नान्क्षत्ता कौषारवाग्रतः ॥ जातैकभक्तिर्गोविन्दे तेभ्यश्चोपरराम ह ॥ २ ॥ तं बन्धुमागतं दृष्ट्वा धर्मपुत्रः सहानुजः ॥ धृतराष्ट्रो युयुत्सुश्च सूतः शारद्वतः पृथा ॥ ३ ॥ गान्धारी द्रौपदी ब्रह्मन्सुभद्रा चोत्तरा कृपी ॥ अन्याश्च जामयः पाण्डोर्ज्ञातयः ससुताः स्त्रियः ॥४॥ प्रत्युज्जग्मुः प्रहर्षेण प्राणं तन्व इवागतम् ॥ अभिसंगम्य विधिवत्परिष्वङ्गाभिवादनैः ॥५॥ मुमुचुः प्रेमबाष्पौघं विरहौत्कण्ठ्यकातराः ॥ राजा तमर्हयांचक्रे कृतासनपरिग्रहम् ॥ ६ ॥ तं भुक्तवन्तमासीनं विश्रान्तं सुखमासने ॥

जब मैत्रेयको मुखबाट भगवान् परमगतिमा प्राप्त हुनुभयो भन्ने समाचार सुने तब ती सबै वृत्तान्त जान्ने इच्छाले विदुर हस्तिनापुर फर्केर आए ॥१॥ विदुरले मैत्रेयसित जति प्रश्न गरेका थिए, त्यतिले नै उनलाई पूर्ण शान्ति प्राप्त भयो र भगवान्का चरणमा भक्ति बढेर आयो, त्यसपछि उनले मैत्रेयसित अरू केही प्रश्न सोधेनन् ॥२॥ जब विदुरजी हस्तिनापुर पुगे तब हे शौनक! भाइहरू समेत महाराज युधिष्ठिर, धृतराष्ट्र, सूत, युयुत्सु, शारद्वत, पृथा (कुन्ती) ॥३॥ गान्धारी, सुभद्रा, उत्तरा, कृपी तथा आफ्ना परिवारका स्त्रीहरू आफ्ना छोराछोरी सहित ॥४॥ यस्तो हर्षले यस प्रकार दगुरे–जस्तै कसैको मृत शरीरमा फेरि प्राण फर्केर आएको होस्। सबै जना तिनका नगीचै गएर अंकमाल गरेर प्रणाम पनि गरे ॥५॥ धेरै दिनसम्म विरह-वेदना सहिसकेपछि उनलाई देखेर कति जना प्रेमका आँसु बगाउन लागे। राजा युधिष्ठिरले उनको विधिवत् पूजा गरे जब ती स्नान र भोजन आदि

नित्य-कृत्यबाट निवृत्त भएर उत्तम आसनमा बसे, अनि राजा युधिष्ठिर विनयावनत भएर भन्नलागे—यहाँ बसेका सबै जना उनका कुरा सुनिरहेका थिए ॥७॥ युधिष्ठिरले भने—जसरी पक्षी आफ्ना बच्चालाई प्वाँखमा लुकाएर ठूलो प्रेमले तिनको पालन-पोषण गर्दछन्, उसै गरी आफ्नो पक्षपातले हामीहरूको पालन गर्ने हजुरले हामीलाई बिर्सनु भएको त छैन ? हजुरले नै हाम्री माता र हामीहरूलाई विष, अग्नि आदि अनेक विपत्तिहरूबाट बचाउनु भएको थियो। हजुर यतिका दिनसम्म पृथ्वीमण्डलमा डुल्दै कसरी आफ्नू काम चलाउनु हुन्थ्यो र पृथ्वी तलका कुन-कुन तीर्थहरूमा हजुरले भ्रमण गर्नुभयो ? ॥८-९॥ हजुर जस्ता भगवद्भक्त त स्वयं तीर्थस्थान हुन्छन्। ती आफ्नो मन-मन्दिरमा नारायणलाई बसालेर सबै तीर्थहरूलाई वास्तविक तीर्थ तुल्याउँदै हिंड्छन् ॥१०॥ हाम्रा सुहृद् यादवगण—जुन श्रीकृष्ण भगवानलाई नै आफ्ना देवता मान्दछन्—ती आफ्नो पुरीमा सुखपूर्वक छन् ? हजुरले तिनीहरूलाई

प्रश्रयावनतो राजा प्राह तेषां च शृण्वताम् ॥ युधिष्ठिर उवाच ॥ अपि स्मरथ नो युष्मत्पक्षच्छायासमेधितान् ॥ विपद्गणाद्विषाग्न्यादेर्मोचिता यत्समातृकाः ॥८॥ कया वृत्त्या वर्तितं वश्चरद्भिः क्षितिमण्डलम् ॥ तीर्थानि क्षेत्रमुख्यानि सेवितानीह भूतले ॥ ९ ॥ भवद्विधा भागवतास्तीर्थभूताः स्वयं विभो ॥ तीर्थीकुर्वन्ति तीर्थानि स्वांतःस्थेन गदाभृता ॥१०॥ अपि नः सुहृदस्तात बान्धवाः कृष्णदेवताः ॥ दृष्टाः श्रुता वा यदवः स्वपुर्यां सुखमासते ॥ ११ ॥ इत्युक्तो धर्मराजेन सर्वं तत्समवर्णयत् ॥ यथाऽनुभूतं क्रमशो विना यदुकुलक्षयम् ॥ १२ ॥ नन्वप्रियं दुर्विषहं नृणां स्वयमुपस्थितम् ॥ नावेदयत्सकरुणो दुःखितान्द्रष्टुमक्षमः ॥ १३ ॥ कंचित्कालमथावात्सीत्सत्कृतो देववत्सुखम् ॥ भ्रातुर्ज्येष्ठस्य श्रेयस्कृत्सर्वेषां प्रीतिमावहन् ॥१४॥ अबिभ्रदर्यमा दण्डं यथावदघकारिषु ॥ यावद्दधार शूद्रत्वं शापाद्वर्षशतं यमः ॥ १५ ॥ युधिष्ठिरो लब्धराज्यो दृष्ट्वा पौत्रं कुलंधरम् ॥

कतै देख्नु भएको थियो ? कसैद्वारा केही सुन्नु भयो ? ॥११॥ यसरी युधिष्ठिरले सोधेपछि विदुरले त्यस यात्रा-प्रसङ्गमा जो घटनाहरू घटेका थिए, त्यसको सबै वर्णन गरेर सुनाए। केवल यदुवंशीहरूको विनाशको कुरा भनेनन् ॥१२॥ किन भने त्यो वृत्तान्त निकै अप्रिय र दुःसह थियो। दयालु विदुर पाण्डवहरूलाई यदुवंशीहरू नष्ट भएको समाचार सुनेर विकल भएका हेर्न इच्छा गर्दैनथे ॥१३॥ यसरी पूर्णरूपले सत्कार पाउँदै र आफ्ना ज्येष्ठ भ्राता धृतराष्ट्रको कल्याणार्थ तिनलाई ज्ञानोपदेश दिंदै विदुर देवताजस्तै केही दिनसम्म हस्तिनापुरमा नै बसे ॥ १४॥ यदि यो प्रश्न गरियोस् कि शूद्र भएर विदुरले धृतराष्ट्रलाई ज्ञानोपदेश कसरी दिए—यसको उत्तर यो हो—शूद्रवर्णमा उत्पन्न विदुर साक्षात् यमराज थिए। माण्डव्य ऋषिको श्रापले सय वर्षको निम्ति जब यमराज शूद्र भए, तब त्यति दिनसम्म अर्यमाले यमलोकको कार्यभार आफूले लिएका थिए* ॥ १५ ॥ यता युधिष्ठिर त्यति ठूलो राज्य

* उदाहरण—कुनै स्थानमा केही चोरहरू चोरी गरिरहेका थिए। त्यसै बखत राजाका भ… (पुलिस) आइपुगे। तिनलाई देखेर चोर भागे र पुलिसहरूले खेदे। ती दगुर्दै जाँदा ऋषि माण्डव्य ऋषिको आश्रम पुगे। त्यहाँ पुलिसहरूले चोरलाई पक्रन्दा माण्डव्य महर्षिलाई पनि र राजाको सामुन्ने लगे। राजाले पनि तिनीहरूमा विचार नगरेर ती सबैलाई शूलीको सजाय दिए। जब राजाले थाहा पाए तब महर्षि माण्डव्यलाई शूलीबाट झिकेर उनीसित आफ्नो भूलको क्षमा मागे। अनि माण्डव्य ऋषि यमराजकहाँ पुगे र उनीसित सोधे—'महाराज ! तिमीले मलाई किन शूलीमा चढायौ !' यमराजले भने—'आफ्नै उमेरमा तिमीले पोथ्रा पुतलीलाई कुशको टुप्पाले रोपेर मारिदिएका थियौ, त्यसैको यो दण्ड प्राप्त भएको हो।' त्यति सुनेर माण्डव्यले भने—'मैले त बाल्यकालमा अज्ञानवश त्यो अपराध गरेको थिएँ, त्यसको निम्ति तिमीले मलाई यति कठोर दण्ड दियौ। अब तिमी जन्मी जानी गरेको यस अपराधले शूद्र हुनेछौ !' यसैले यमराज शूद्र भए।

पाएर कुलको मर्यादाको रक्षा गर्न थाले (अर्थात्)। यस लोकपालहरू जस्ता वीर भाइहरूले निपुणतापूर्वक काम गरेको देखेर निकै प्रसन्न थिए ॥ १६॥ अब तिमीहरू राजकाजमा यति वर्षा तल्लीन भए कि आफ्नो धर्मको पनि सुद्धि रहेन, किनकि पहिले त धन र प्रभुता प्राप्त गर्नु नै कठिन हुन्छ र त्यो यदि कुनै प्रकारले प्राप्त भए पनि त्यसको सुरक्षा गर्नु त्यो भन्दा पनि कठिन हुन जान्छ । यसै कारण पाण्डव आफ्नो राज्य यति वर्षा कठले प्राप्त गरेर त्यसको रक्षा गर्नमा व्यस्त भए र उता उराल काल चुपचाप तिनको आयुका दिनहरूमा डाका दिन थाल्यो ॥१७॥ विदुरलाई त्यो कुरा थाहा भइसकेको थियो, किनकि ती तत्त्वज्ञानी थिए र तत्त्वज्ञानी कहिल्यै यसमा आसक्त भएर असावधान हुँदैनन् । यसैले तिनले एक दिन एकान्तमा धृतराष्ट्रलाई भेटेर भने—हे राजन् ! अब यस मोह-मायाको जंजाललाई त्यागेर यहाँबाट भाग्नुहवस् किनकि साहै ठूलो भय ढोकामा आउन तयार छ ॥१८॥ हे प्रभो ! जसको प्रतीकार कुनै प्रकार पनि गर्न सकिन्न, उही सर्व-शक्तिसम्पन्न काल हामीहरू माथि प्रहार गर्न आइ रहेको छ ॥ १९ ॥ त्यो प्राणीलाई क्षण मात्रमा त्यसका अतिशय प्रिय प्राणबाट पनि छुटाइदिन्छ, अनि धन-धामको त कुरै भएन ॥२०॥ तिम्रा पिता, सम्बन्धी, पुत्र आदि सबै हितैषीहरूलाई कालले खाइसक्यो । तिम्रो आयु पनि धेरजसो

भ्रातृभिर्लोकपालाभैर्मुमुदे परया श्रिया ॥ १६ ॥ एवं गृहेषु सक्तानां प्रमत्तानां तदीहया ॥ अत्यक्रामदविज्ञातः कालः परमदुस्तरः ॥ १७ ॥ विदुरस्तदभिप्रेत्य धृतराष्ट्रमभाषत ॥ राजन्निर्गम्यतां शीघ्रं पश्येदं भयमागतम् ॥ १८ ॥ प्रतिक्रिया न यस्येह कुतश्चित्कर्हिचित्प्रभो ॥ स एष भगवान् कालः सर्वेषां नः समागतः ॥ १९॥ येन चैवाभिपन्नोऽयं प्राणैः प्रियतमैरपि ॥ जनः सद्यो वियुज्येत किमुतान्यैर्धनादिभिः ॥ २० ॥ पितृभ्रातृसुहृत्पुत्रा हतास्ते विगतं वयः ॥ आत्मा च जरया ग्रस्तः परगेहमुपाससे ॥ २१ ॥ अहो महीयसी जन्तोर्जीविताशा यया भवान् ॥ भीमापवर्जितं पिण्डमादत्ते गृहपालवत् ॥ २२ ॥ अग्निर्निसृष्टो दत्तश्च गरो दाराश्च दूषिताः ॥ हृतं क्षेत्रं धनं येषां तद्दत्तैरसुभिः कियत् ॥ २३ ॥ तस्यापि तव देहोऽयं कृपणस्य जिजीविषोः ॥ परैत्यनिच्छतो जीर्णो जरया वाससी इव ॥२४॥ गतस्वार्थमिमं देहं विरक्तो मुक्तबन्धनः ॥ अविज्ञातगतिर्जह्यात्स वै धीर उदाहृतः ॥ २५ ॥ यः स्वकात्परतो वेह जातनिर्वेद आत्मवान् ॥ हृदि कृत्वा हरिं गेहात्प्रव्रजेत्स

बितिसक्यो र तिम्रो आफ्नो वृद्धावस्थाले अधिकार गरिसक्यो । यस दशामा पनि तिमी अरुका घरको घरमा बसेर खाइरहेका छौ ? ॥२१॥ हरे ! प्राणीलाई आफ्नो जीवनको आशा कति प्रिय हुन्छ, जसको हातमा परेर तिमी पोटा पाले झैं हन्लिई ( आफ्नो पुत्रघाती ) भीमसेनको अन्न खाइरहेका छौ ॥२२॥ तिमीहरूले जसलाई नष्ट गर्न विचारले लाक्षागृहमा पठाएर आगोले पोलिदिन खोज्यौ, जसलाई विष दिने आयोजना गर्यौ, जसकी पत्नीलाई नाङ्गो पारेर नचाउने र सिंहासमा बनाल्ने चेष्टा गरियो, जसको धन र भूमि लुटेर लियौ, तिनैले दिएको अन्न खाएर बाँच्नु पनि के काम ? ॥२३॥ यस प्रकार तिमी यद्यपि आफ्नो प्राण-रक्षाका लागि यो दैन्य ( निर्लज्जता ) भोगिरहेछौ, तापनि वृद्धावस्था द्वारा जीर्ण वस्त्र झैं दिनहुँ तिम्रो शरीर क्षीण हुँदै गइरहेको छ, यसैले अब तिमी सावधान होऊ ॥२४॥ जो मनुष्य यत्र-तत्र आफ्नो गति अरुलाई थाहा नदिई, आफ्नो यस शरीरमा मोह नराखिकन र अर्थ भावलाई त्यागेर बन्धनमुक्त भएर बिरक्त भई जान्छ, त्यस पुरुषलाई सज्जनहरू धीर ( सावधान ) भएको मान्दछन् ॥ २५ ॥ आफैं स्वतः प्राप्त भएको ज्ञानबाट अथवा कुनै मित्र आदिको

उपदेशबाट आफ्नो मनलाई वशमा पारेर हृदयमा नारायणको राम्रो मूर्ति राखेर घर-द्वारको मोह-माया त्यागेर अलग्ग हुन्छन्, तिनै मनुष्यहरूमा श्रेष्ठ मनुष्य भन्ने गनिन्छन् ॥२६॥ म तपाईंलाई मनुष्यहरूमा श्रेष्ठ हुने सल्लाह दिन्न, यदि यो मन्न खोजिरहेको छु—त्यसैले चुपचाप यहाँबाट उत्तर दिशातिर हिंडिदिनोस्, किनकि अब आउने समय ठूलो विकराल हुनेछ । त्यसले मनुष्यका धैर्य, दया आदि सद्गुणहरू लुप्त पारिदिनेछ ॥२७॥ अजमीढवंशज र धृतराष्ट्र आफ्नो कान्छोभाइ विदुरको कुरा सुनेर प्रसंग भए । उनले आफ्ना परिवार प्रतिको मोहरूपी बलियो बन्धन छिनालिदिए र भाता विदुरले बताएको बाटोमा हिंड्नका लागि घरबाट बाहिर निस्किए ॥२८॥ पति हिंडेका देखेर सुबलकी छोरी पतिव्रता गान्धारी पनि उनैसित संन्यासीहरूलाई आनन्द दिने हिमालयतिर उसै गरी हिंडे, जसरी कुनै वीर ठूलो प्रसन्नताका साथ संग्राम-भूमितिर जान्छ ॥२९॥ उता प्रातःकालको समयमा धर्मराज युधिष्ठिर उठे । शौचादिबाट निवृत्त भएर उनले सन्ध्या-वन्दन आदि नित्यकर्म गरे । अनि ब्राह्मणहरूलाई नमस्कार गरेर तिल, सुवर्ण र गाईहरू दान दिए । त्यसपछि गुरुजन–

नरोत्तमः ॥ २६ ॥ अथोदीचीं दिशं यातु स्वैरज्ञातगतिर्भवान् ॥ इतोऽर्वाक्प्रायशः कालः पुंसां गुणविकर्षणः ॥ २७ ॥ एवं राजा विदुरेणानुजेन प्रज्ञाचक्षुर्बोधित आजमीढः ॥ छित्वा स्वेषु स्नेहपाशान् द्रढिम्नो निश्चक्राम भ्रातृसंदर्शिताध्वा ॥ २८ ॥ पतिं प्रयान्तं सुबलस्य पुत्री पतिव्रता चानुजगाम साध्वी ॥ हिमालयं न्यस्तदण्डप्रहर्षं मनस्विनामिव सत्सम्प्रहारः ॥ २९ ॥ अजातशत्रुः कृतमैत्रो हुताग्निर्विप्रान्नत्वा तिलगोभूमिरुक्मैः ॥ गृहं प्रविष्टो गुरुवन्दनाय न चापश्यत्पितरौ सौबलीं च ॥ ३० ॥ तत्र सञ्जयमासीनं पप्रच्छोद्विग्नमानसः ॥ गावल्गणे क नस्तातो वृद्धो हीनश्च नेत्रयोः ॥ ३१ ॥ अम्बा च हतपुत्राऽऽर्ता पितृव्यः क गतः सुहृत् ॥ ( जानासि चेत्कथय नः कृपया वेत्थ वै ऋषे ) ॥ ३२ ॥ अपि मय्यकृतप्रज्ञे हतबन्धुः स भार्यया ॥ आशंसमानः शमलं गङ्गायां दुःखितोऽपतत् ॥ ३३ ॥ पितर्युपरते पाण्डौ सर्वान्नः सुहृदः शिशून् ॥ अरक्षतां व्यसनतः पितृव्यौ क गतावितः ॥ ३४ ॥ सूत उवाच ॥ कृपया स्नेहवैक्लव्यात्सूतो विरहकर्शितः ॥ आत्मेश्वरमचक्षाणो न प्रत्याहातिपीडितः ॥ ३५ ॥ विमृज्याश्रूणि पाणिभ्यां विष्टभ्यात्मानमात्मना ॥ अजातशत्रुं प्रत्यूचे प्रभोः पादावनुस्मरन् ॥ ३६ ॥ सञ्जय उवाच ॥ नाहं वेद व्यवसितं पित्रोर्वः

धृतराष्ट्र र गान्धारी आदिलाई प्रणाम गर्नको निम्ति उनको महलमा गएका त तिनलाई त्यहाँ देखेनन् ॥३०॥ त्यहाँ बसेका संजयसित उनले आत्तिएर सोधे–हे गवल्गणका छोरा संजय ! हाम्रा तात तथा दुवै आँखाका अन्धा धृतराष्ट्र, जसका छोराहरू मारिए, ती माता गान्धारी र हाम्रा काका विदुर कहाँ गए ? ॥ ३१ ॥ छोराहरू मर्नाले दुःखी महाराज म मन्दबुद्धि प्रति कुनै प्रकारको आशंका गरेर ( कि मैले जन्मभरि यिनको अहित नै गरेको छु, अतः मसित कुनै दुर्व्यवहार गर्छन् कि ) ती गंगामा त डुबेनन् ? ॥३२॥ ॥३३॥ पिता पाण्डु मरेपछि तिनै दुइ जनाले त हामीहरूको रक्षा गरेका थिए । त्यस्ता दयालु ती दुवै सज्जन यहाँबाट कहाँ हिंडिदिए ? ॥३४॥ स्नेहातिरेक र स्वामीको वियोगबाट दुःखी संजय आफ्ना प्रभु ( धृतराष्ट्र ) को विषयमा कुनै उत्तर नदिएर चुपलागे ॥३५॥ एक छिनपछि संजयले आफ्ना हातले आँखाको आँसु पुछे र आफ्ना स्वामी धृतराष्ट्रका चरणको स्मरण गर्दै ती धर्मराज युधिष्ठिरसित यस प्रकार भन्नलागे–॥३६॥ हे कुल नन्दन ! म हजुरका माता-पिताको सदृश पूज्य धृतराष्ट्र तथा गान्धारीको विषयमा केही पनि जान्दिन कि

उनीहरू कहाँ गए, यो कहिले मलाई केही ज्ञान छैन। ती महात्माहरूले त मलाई लुटिदिए—केही पनि भन्दै नभनी मलाई एक्लै छाडी ती दुवै कहाँ गए थाहा छैन। त्यसै बखत श्रीनारदमुनि मीठो वीणा बजाउँदै त्यहाँ आइपुगे। आफ्ना भाइहरूका साथै महाराज युधिष्ठिरले मुनिको स्वागत-सत्कार गरे ॥३७-३८॥ त्यसपछि अत्यन्त व्याकुलताका साथ महाराज युधिष्ठिर नारदजीसित भन्न लागे—हे भगवन्! मेरा माता-पिता गान्धारी र महाराज धृतराष्ट्र यहाँबाट कहाँ गए थाहा छैन। यस्तो अवस्थामा हजुर नै मेरा पथप्रदर्शक हुन सक्नुहुन्छ र हजुर नै पत्ताउन सक्नु हुन्छ कि ती यसबखत कहाँ छन्॥३९-४०॥ त्यति सुनेर नारद भन्दछन्—हे राजन्! तिमी कसैको विषयमा पनि शोक नगर किनकि समस्त संसारका अधिपति नारायण हुन् ॥४१॥ सबै लोकपाल उनैको लोकले बलिको वहन गरिरहेका छन्। ती नै प्रभु घर-घरका प्राणिहरूलाई जम्मा पारेर मिलाप गराउँछन् र वियोग पनि गराइदिन्छन् ॥४२॥ जसै-गोरु आदि ठूला-ठूला पशु नाकको पासलो डोरीमा बाँधिएर आफ्ना स्वामीको इच्छानुसार भारी बोक्छन्, ठीक त्यसैगरी तिनको वाणी (वेद) का विधिनिषेधरूपी डोरीमा बाँधिएर

कुलनन्दन ॥ गांधार्या वा महाबाहो मुषितोऽस्मि महात्मभिः ॥ ३७ ॥ अथाजगाम भगवान्नारदः सहतुम्बुरुः ॥ प्रत्युत्थायाभिवाद्याह सानुजोऽभ्यर्चयन्निव ॥ ३८ ॥ युधिष्ठिर उवाच ॥ नाहं वेद गतिं पित्रोर्भगवन्क्व गताविनः ॥ अम्बा वा हतपुत्राऽऽर्ता क्व गता च तपस्विनी ॥ ३९ ॥ कर्णधार इवापारे भगवान्पारदर्शनः ॥ (सर्वज्ञः सर्वगो धीमान्नारदोऽज्ञाननाशकः) ॥ ४० ॥ अथाबभाषे भगवान्नारदो मुनिसत्तमः ॥ मा कंचन शुचो राजन् यदीश्वरवशं जगत् ॥ ४१ ॥ लोकाः सपाला यस्येमे वहन्ति बलिमीशितुः ॥ स संयुनक्ति भूतानि स एव वियुनक्ति च ॥ ४२ ॥ यथा गावो नसि प्रोतास्तन्त्यां बद्धाः स्वदामभिः ॥ वाक्तन्त्यां नामभिर्बद्धा वहन्ति बलिमीशितुः ॥ ४३ ॥ यथा क्रीडोपस्कराणां संयोगविगमाविह ॥ इच्छया क्रीडितुः स्यातां तथैवेशेच्छया नृणाम् ॥ ४४ ॥ यन्मन्यसे ध्रुवं लोकमध्रुवं वा न चोभयम् ॥ सर्वथा हि न शोच्यास्ते स्नेहादन्यत्र मोहजात् ॥ ४५ ॥ तस्माज्जह्यङ्ग वैक्लव्यमज्ञानकृतमात्मनः ॥ कथं त्वनाथाः कृपणा वर्तेरन् वनमाश्रिताः ॥ ४६ ॥ कालकर्मगुणाधीनो देहोऽयं पाञ्चभौतिकः ॥ कथमन्यांस्तु गोपायेत्सर्पग्रस्तो यथाऽपरम् ॥ ४७ ॥ अहस्तानि सहस्तानामपदानि चतुष्पदाम् ॥ फल्गूनि तत्र महतां जीवो जीवस्य

यो समस्त संसार उनैको इच्छानुसार चल्दछ॥४३॥ जसरी कुनै खेलाडीको खेलाउने वस्तुको संयोग वियोग खेलाडीको इच्छामा निर्भर गर्दछ, त्यसै प्रकार जगत्‌का जीवहरूको संयोग-वियोग नारायणको इच्छामा नै अवलम्बित रहने गर्दछ ॥४४॥ यदि तिमी संसारका कुनै प्राणीको जीवरूपबाट नित्य वा शरीररूपबाट अनित्य ठान्दछौ भने भ्रममा हौ किनकि न यो नित्य छ, न अनित्य नै छ। नित्यको कहिल्यै नाश हुँदैन र अनित्यको नाश अनिवार्य छ। यस निम्ति तिमी उनीहरूको विषयमा शोक नगर ॥४५॥ हे राजन्! तिमी यो विचार गरेर कि म नभएपछि ती कसरी बाँच्लान् यस अज्ञानमूलक शोकलाई त्यागिदेऊ ॥४६॥ पृथ्वी, जल, अग्नि, वायु र आकाशको संयोगले बनेको यो शरीर काल, कर्म र गुणको अधीन छ। अनि यसले अन्य प्राणीको रक्षा कसरी गर्न सक्छ? जुन मनुष्यलाई अजिङ्गरले निलिरहेको छ, त्यो कुन अर्को प्राणीलाई सहायता कुन प्रकारले गर्न सक्छ? ॥४७॥ हात नभएका (गाई, गोरु आदि जीव) हात हुनेहरूको, खुट्टा नहुने र घाँस, अन्न आदि) चौपाया (पशुहरू) को र अरु स-साना जीव (जुन सूक्ष्म-दर्शक यन्त्रद्वारा नै देख्न सकिन्छ)

तो मुड्दा नहुने ( तृण आदि ) जीवहरूको आधार हुन् । यो सबैको निष्कर्ष यो निस्क्यो–'जीवो जीवस्य जीवनम्' ॥४८॥ हे राजन् ! उपर्युक्त सबै प्रकारका प्राणिहरूले भरिएको संसार स्वयं प्रकाशित हुने भगवानका नै स्वरूप हुन् । यो एकै भएर पनि मायाले गर्दा अनेक देखिन्छ । अतः तिमी आत्मज्ञानद्वारा आफ्नो अन्तर्दृष्टिलाई स्वच्छ पारेर ती परमपुरुषलाई हेर ॥४९॥ हे महाराज ! तीनै परमपुरुष र समस्त संसारी प्राणिहरूका जीवनदाता भगवान् कृष्ण पृथ्वीमा देव-द्रोही दैत्यहरूको नाश गर्न अवतरित भएका छन् ॥५०॥ उनले देवताहरूको काम सम्पन्न गरिदिए । केही काम (यदुवंशीहरूको नाश) बाँकी छ, सो त्यसै कामको लागि अडिएका छन् । जब सम्म तो यहाँ छन्, तिमी प्रतीक्षा गर ॥५१॥ ती, धृतराष्ट्र, विदुर र आफ्नी पतिव्रता पत्नी गान्धारीसंग हिमालयको पाटीमा उपस्थित ऋषिहरूको आश्रमतिर गएकाछन् ॥५२॥ जुन स्थानमा भगवती जाह्नवी (गङ्गाजी) सातधारामा बाँडिएर सप्तर्षिहरूलाई प्रसन्न पार्दी बहेकिन्, त्यस तीर्थलाई 'सप्तस्रोत' भन्दछन् ॥५३॥ त्यसै सप्तस्रोतमा तो त्रिकाल स्नान तथा विधिवत् अग्निहोत्र गरेर केवल जल पिई सबै वासनाहरूको

जीवनम् ॥ ४८ ॥ तदिदं भगवान्राजन्नेक आत्माऽऽत्मनां स्वदृक् ॥ अन्तरोऽनन्तरो भाति पश्य तं माययोरुधा ॥ ४९ ॥ सोऽयमद्य महाराज भगवान्भूतभावनः ॥ कालरूपोऽवतीर्णोऽस्यामभवाय सुरद्विषाम् ॥५०॥ निष्पादितं देवकृत्यमवशेषं प्रतीक्षते ॥ तावद्यूयमवेक्षध्वं भवेद्यावदिहेश्वरः ॥५१॥ धृतराष्ट्रः सह भ्रात्रा गान्धार्या च स्वभार्यया ॥ दक्षिणेन हिमवत ऋषीणामाश्रमं गतः ॥ ५२ ॥ स्रोतोभिः सप्तभिर्या वै स्वर्धुनी सप्तधा व्यधात् ॥ सप्तानां प्रीतये नाम्ना सप्तस्रोतः प्रचक्षते ॥ ५३ ॥ स्नात्वाऽनुसवनं तस्मिन् हुत्वा चाग्नीन् यथाविधि ॥ अब्भक्ष उपशान्तात्मा स आस्ते विगतैषणः ॥ ५४ ॥ जितासनो जितश्वासः प्रत्याहृतषडिन्द्रियः ॥ हरिभावनया ध्वस्तरजःसत्त्वतमोमलः ॥ ५५ ॥ विज्ञानात्मनि संयोज्य क्षेत्रज्ञे प्रविलाप्य तम् ॥ ब्रह्मण्यात्मानमाधारे घटाम्बरमिवाम्बरे ॥ ५६ ॥ ध्वस्तमायागुणोदर्को निरुद्धकरणाशयः ॥ निवर्तिताखिलाहार आस्ते स्थाणुरिवाचलः ॥ ५७ ॥ तस्यान्तरायो मैवाभूः संन्यस्ताखिलकर्मणः ॥ स वा अद्यतनाद्राजन्परतः पञ्चमेऽहनि ॥ ५८ ॥ कलेवरं हास्यति स्वं तच्च भस्मीभविष्यति ॥ ( धृतराष्ट्रस्य मोक्षः स्याज्ज्ञानेन विदुरस्य च ) ॥ ५९ ॥ दह्यमानेऽग्निभिर्देहे पत्युः पत्नी सहोटजे ॥ बहिःस्थिता पतिं साध्वी तमग्नि-

दमन गरेर शान्त मनले निवास गर्दछन् ॥५४॥ उनले पद्मासन-जस्तो आसन गरेर श्वासलाई जितिसकेका छन् र आफ्ना इन्द्रियहरूलाई वशमा गरेर भगवानको भजनद्वारा सत्त्व, रज, तम यी तीन गुणका विकारहरू नष्ट पारिसकेका छन् ॥५५॥ आत्मज्ञानद्वारा मन र बुद्धि एकत्र पारी आफ्नो बुद्धिलाई उनले ब्रह्ममा उसैगरी मिलाइदिएका छन्, जसरी कुनै योगी घटाकाशलाई महाकाशमा मिलाइदिन्छन् ॥५६॥ उनले नेत्र आदि सबै इन्द्रिय तथा मनलाई वशमा पारिसकेका छन् । आहार-विहारबाट उनको इच्छा निवृत्त भइसकेको छ र मायाका गुणहरूबाट मुक्त भएर तो स्थाणु (खाँबो) झैं निश्चल भावले बसिरहन्छन् ॥५७॥ हे राजन् ! तिनको यो सत्कर्मीय उद्योगमा तपाईं विघ्न नपार्नु होला । ती आजदेखि पाँचौं दिन आफ्नो शरीर त्यागिदिन्छन् । तिनको त्यो कलेवर भस्म हुनेछ र विदुरको उपदेशले मोक्ष मिल्नेछ । यदि तिमी ठान्दछौ कि उनी गएपछि आमा गान्धारीलाई बुझाएर यहाँ ल्याउनेछु, अब त्यो पनि हुन सक्तैन, किनकि जब गार्हपत्य अग्निद्वारा उनको पतिको शरीर तथा कुटी भस्म हुनेछ, तब बाहिर बसेकी उनकी साध्वी पत्नी गान्धारी त्यही आगोमा पतिका

मर्ने हुनेछन् ॥५८-५९॥ यदि तर्फाई विदुरलाई फर्काउने विचार गर्नुहुन्छ भने त्यो पनि सम्भव छैन, किनकि अब विदुरलाई आफ्ना दाजुको सद्गतिको वृत्तान्त ज्ञात हुनेछ, तब तो हर्ष-शोक युक्त मनले तीर्थाटन गर्न निस्कने छन् ॥६१॥ यति भनेर नारदजी आफ्नो वीणा बजाउँदै आकाश-मार्गबाट स्वर्ग गए र उनको कथनानुसार धर्मराज युधिष्ठिरले आफ्नो हृदयको शोक फालिदिए ॥६३॥ इति श्रीमद्भागवत महापुराणे प्रथमस्कन्धे पं० गौरीशंकर वशिष्ठ कृत नेपाली भाषा-टीकायां धृतराष्ट्र मोक्ष वर्णन नाम त्रयोदशोऽध्यायः ॥१३॥
यस अध्यायमा कृष्ण परमधाम गएको कुरा युधिष्ठिरलाई ज्ञात हुनेछ। सूतजी भन्दछन्—केही दिनपछि अर्जुन आफ्ना प्रियबन्धु कृष्णलाई भेट्न र उनको समचार लिन, भगवान् के गर्दै छन् अथवा के गर्न खोज्दैछन् भन्ने जान्नका लागि द्वारकापुरी गए ॥१॥ कृष्ण-सखा अर्जुन गएको निकै महीना बितिसक्यो तैपनि ती फर्केर आएनन् र यता महाराज युधिष्ठिर

सन्निवेक्ष्यति ॥ ६० ॥ विदुरस्तु तदाश्चर्यं निशाम्य कुरुनन्दन ॥ हर्षशोकयुतस्तस्माद्गन्ता तीर्थनिषेवकः ॥ ६१ ॥ इत्युक्त्वाऽथारुहत्स्वर्गं नारदः सह तुम्बुरुः ॥ युधिष्ठिरो वचस्तस्य हृदि कृत्वाऽजहाच्छुचः ॥ ६२ ॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे विदुरोक्तधा धृतराष्ट्रमोक्षवर्णनं नाम त्रयोदशोऽध्यायः ॥ १३ ॥ सूत उवाच ॥ संप्रस्थिते द्वारकायां जिष्णौ बन्धुदिदृक्षया ॥ ज्ञातुं च पुण्यश्लोकस्य कृष्णस्य च विचेष्टितम् ॥ १ ॥ व्यतीताः कतिचिन्मासास्तदा नायात्ततोऽर्जुनः ॥ ददर्श घोररूपाणि निमित्तानि कुरूद्वहः ॥ २ ॥ कालस्य च गतिं रौद्रां विपर्यस्तर्तुधर्मिणः ॥ पापीयसीं नृणां वार्तां क्रोधलोभानृतात्मनाम् ॥ ३ ॥ जिह्मप्रायं व्यवहृतं शाठ्यमिश्रं च सौहृदम् ॥ पितृमातृसुहृद्भ्रातृदम्पतीनां च कल्कनम् ॥ ४ ॥ निमित्तान्यत्यरिष्टानि काले त्वनुगते नृणाम् ॥ लोभाद्यधर्मप्रकृतिं दृष्ट्वोवाचानुजं नृपः ॥ ५ ॥ युधिष्ठिर उवाच ॥ संप्रेषितो द्वारकायां जिष्णुर्बन्धुदिदृक्षया ॥ ज्ञातुं च पुण्यश्लोकस्य कृष्णस्य च विचेष्टितम् ॥ ६ ॥ गताः सप्ताधुना मासा भीमसेन तवानुजः ॥ नायाति कस्य वा हेतोर्नाहं वेदेद-

विविध प्रकारका डरलाग्दा अपशकुन देख्नथाले ॥२॥ तिनले हेर्दाहेर्दै विचित्र प्रकारले समयको गति बदलियो। सबैको प्रवृत्ति पापतिर ढल्कियो र क्रोध, लोभ तथा असत्य व्यवहार बढ्दै जान लाग्यो ॥३॥ संसारी मानिसका सबै लौकिक र पारलौकि व्यवहार कपटपूर्ण भए र ठग्ने खालको मित्रता हुन लाग्यो। सबै व्यक्ति आफ्ना माता-पिता र दाजु-भाइसित लडाई गर्न लागे। पति-पत्नीमा कलह हुन लाग्यो ॥४॥ यस प्रकारका भीषण निमित्त र लोभ आदि अधर्ममा प्रवृत्त हुन लागेका मानिसहरूलाई देखेर युधिष्ठिर आफ्ना भाई भीमसित भन्न लागे—॥५॥ मैले पार्थलाई भगवानकृष्णचन्द्रसित भेट्न र उनको हाल-चाल जान्ने निम्ति द्वारका पठाएको थिएँ ॥६॥ हे भीम ! तिम्रो भाइ गएको सात महीना बित्यो, तापनि

दृष्टान्त—(भाईको स्नेह)—धौरा कारीगरलाई आफ्नो व्यापारमा ठूलो घाटा भयो। त्यसका दुःख [illegible] र सही गर्दैं। अब के गर्ने होला ? यस्तो विचार गरेर उसले पत्नीलाई अनाथालय पठाइदियो र बालकहरूसित दिन बिताउन थाल्यो। केही दिनपछि त्यो आफैं पनि मर्‍यो। अब ती अनाथ बालकले आमासँग बस्ने विचार गरेर ती गइरहेका थिए, बाटोमा धौरा शोक खाका थिएको। भाइको आमाले धौरा बालकलाई बाटामा बस भन्यो। दाजुले भाइलाई बाटामा बसालिदियो र आफू पनि हिंड्न लाग्यो। त्यो पनि केवल बाह वर्षको थियो। वैसा नहुनाले यो भोक प्यास लाग्दै बालीसित गइरहेको थियो। 'आमा हामीलाई देखेर प्रसन्न हुनेछिन र हामी आमालाई देख्न पाउने छौं।' यस्तै विचार गरेर त्यो बारो कारिगरको थियो। गर्मीको बेलामा यदि भाइ अलि पछाडि पर्‍यो त्यो दगुर्दै आफ्नो भाइको नजीक पुग्थ्यो। 'मेरो भाइ भोकै छ' भनेर त्यो भिक्षा माग्दथ्यो र आफूभन्दा राम्रो भाइलाई खान दिन्थ्यो, तर स्वयं लगभग भोकै बस्दथ्यो। प्रतिदिन भाइसित भोक बिर्सन लाग्दै कठदायक थियो। बाटोको

तौ अङ्गमम्म फर्कनन र कुनै समचार' पनि पठाएका छैनन् । म निकै आत्तिएको छु र तौ विना आएनन् भनेर विचार गर्न सकिरहेको छैन ॥ ७ ॥ देवर्षि नारदले उनको चर्चा गरेर थिए, कतै त्यही समय त आइपुगेन ! उनले भने झैं भगवान् यस क्रीडाभूमिलाई त्यागेर परमधाम जाने भएका छन् ॥८॥ श्रीकृष्ण भगवानको दयाले नै हामीलाई यो विशाल सम्पत्ति, राज्य, सज्जनको प्राण, स्त्री, परिवार र सन्तानको प्राप्ति भएको थियो । उनैको दयाले हामीले शत्रुमा विजय प्राप्त गर्यौं र उनैको अनुग्रहले अश्वमेध यज्ञ गराउने उद्योगी मनुष्यहरू पाएका थिए ॥९॥ हे नरश्रेष्ठ ! हेर त, हाम्रो समक्ष आकाश, भूमि तथा समस्त प्राणिहरूमा अनेक थरिका उत्पात दृष्टिगोचर भइरहेका छन् ॥ १० ॥ मेरो बायाँ नेत्र, बायाँ तिघ्रा र बायाँ पाखुरा फर्फराइरहेका छन् । हृदयमा कम्प उठिरहेको छ । यसले यस्तो ज्ञान भइरहेको छ कि शीघ्र नै अमङ्गल सूचक घटना घटित हुनेछ ॥११॥ स्यालिनीहरू मुखबाट आगो उकेल्दै उदाउन लागेका सूर्यतिर मुख फर्काएर रोइरहेका छन् । कुकुरहरू निर्भीक भावले मेरै सम्मुख आएर रुने गरिरहेका छन् ॥१२॥ हे भीम ! गाई आदि उत्तम पशुमलाई बायाँ पारेर गइ-

मञ्जसा ॥ ७ ॥ अपि देवर्षिणाऽऽदिष्टः स कालोऽयमुपस्थितः ॥ यदात्मनोऽङ्गमाक्रीडं भगवानुत्सिसृक्षति ॥ ८ ॥ यस्मान्नः संपदो राज्यं दाराः प्राणाः कुलं प्रजाः ॥ आसन्सपत्नविजयो लोकाश्च यदनुग्रहात् ॥ ९ ॥ पश्योत्पातान्नरव्याघ्र दिव्यान्भौमान्सदैहिकान् ॥ दारुणाञ्शंसतोऽदूराद्भयं नो बुद्धिमोहनम् ॥१०॥ उर्वक्षिबाहवो मह्यं स्फुरन्त्यङ्ग पुनः पुनः ॥ वेपथुश्चापि हृदये आराद्दास्यन्ति विप्रियम् ॥ ११ ॥ शिवैषोद्यन्तमादित्यमभिरौत्यनलानना ॥ मामङ्ग सारमेयोऽयमभिरौति ह्यभीरुवत् ॥१२॥ शस्ताः कुर्वन्ति मां सव्यं दक्षिणं पशवोऽपरे ॥ वाहाश्च पुरुष व्याघ्रलक्ष्यन्ते रुदतो मम ॥ १३ ॥ मृत्युदूतः कपोतोऽयमुलूकः कम्पयन् मनः ॥ प्रत्युलूकश्च कुह्वानैरनिद्रौ शून्यमिच्छतः ॥१४॥ धूम्रा दिशः परिधयः कम्पते भूः सहाद्रिभिः ॥ निर्घातश्च महानासीत्साकं च स्तनयित्नुभिः ॥ १५ ॥ वायुर्वाति खरस्पर्शो रजसा विसृजंस्तमः ॥ विसृग्वर्षन्ति जलदा बीभत्समिव सर्वतः ॥ १६ ॥ सूर्यं हतप्रभं पश्य ग्रहमर्दं मिथो दिवि ॥ ससंकुलैर्भूतगणैर्ज्वलिते इव रोदसी ॥ १७ ॥ नद्यो नदाश्च क्षुभिताः सरांसि च मनांसि च ॥

रहेका छन् र सुँगुर, गदहा आदि पशु दाहिने पारेर गइरहेछन् । हे पुरुषपुङ्गव ! म आफ्ना वाहन ( हात्ती, घोडा आदि ) लाई पनि रोइरहेका देख्दछु ॥१३॥ मृत्युका दूतस्वरूप परेवा, उल्लु र काग आदि यति कराउँछन्—मानौं तो आफ्नो अमंगलमय शब्दहरूले सम्पूर्ण विश्वलाई नष्ट पार्नेछन् ॥१४॥ सबै दिशाहरू मैलो देखिन्छन् र तिनका छेउमा अग्निमयी घेरा देखिइरहेछ । ती घेराहरू सबै दिशाहरूलाई समेटिरहे झैं देखिन्छ । वन र पर्वतहरूसमेत पृथ्वी काम्गिरहेकी छन् । बिना मेघकै डरलाग्दो गर्जन सहित वज्रपात भइरहेको छ ॥ १५॥ धूलो मिसिएको वायु चलेर अन्धकार पारिरहेछ, मेघ बीभत्स दृश्य उपस्थित गर्दै रगतको वर्षा गर्दछन् ॥१६॥ सूर्यको तेज नष्ट झैं भइरहेको छ, ग्रहगण परस्पर लडिरहे झैं छन् र पृथ्वी देखि आकाशसम्म आगोको ज्वाला झैं दोखिइरहेछ ॥१७॥ सबै नद, नदीहरू तथा तडाग र मनुष्यको मन क्षुब्ध भइरहेछन् । घिउ हाल्दा पनि आगो दन्कँदैन । थाह सकिरहेको छैन कि

दिन बित्यो, तब निश्चित अवधि नाघ्दा सम्म पनि उनी फर्किएनन् । धर्मराज चिन्तित भए कि—आह, अब तिमी आएनौ । म डिराउँछु ।' राजाले भन्थे —'जिसले मलाई जित्ला स्यादार सम्झार गर्नु मन्दुभयको थियो । यदि म आफ्नो कर्तव्यपूर्ण नगर्छु त आमाको अभिलाषा र अन्तमा ईश्वरको सम्मुखमा कसरी मुख देखाउन सक्नेछु ?' राजाको मन देखेर गाडा चलाउनेलाई दया लाग्यो र त्यसले राजालाई पनि गाडामा बसायो र ती दुवै आफ्नी आमाकहाँ पुगे । आमा आफ्ना छोरालाई देखेर साह्रै प्रसन्न भईं र तिनलाई छातीमा टाँसी ।

यो कस्तो काल के गर्न खोजिरहेको छ ॥ १८॥ बाछाले दूध पिउन्नन्, गाईहरू दूध दुहुन दिंदैनन् र आँसु बगाएर रोइरहन्छन् । वृषभ (साँढे) गाईहरूको बथानमा पनि प्रसन्न देखिंदैनन् ॥१९॥ मन्दिरमा स्थापित देवताका प्रतिमाहरू रोइरहेछन् । तिनको अंगबाट पसीना बग्दछ र ती आफ्नो स्थानबाट यता-उता सरेका देखिन्छन् । शहर, गाउँ र नगरका बगैंचा खानी र मुनिहरूका आश्रमको शोभा नष्ट हुँदै गइरहेको छ र संसारका सर्व प्राणी दुःखी देखिइरहेका छन् । विधाता अब हामीलाई कुन दुःख देखाउन खोजिरहेको छ—थाहा छैन ॥२०॥ यी उत्पातहरू देख्दा म त ठानिरहेको छु कि यो हतभागिनी पृथ्वीमा अब ती सर्वोत्तम पुरुष भगवान् श्रीकृष्णचन्द्रको चरण-कमल रहेन ॥२१॥ सूतजी भन्दछन्—हे शौनक ! युधिष्ठिर यस प्रकारको तर्कनाहरू गरिरहेके थिए—त्यसै बखत द्वारकापुरीबाट फर्केका अर्जुन तिनको सामुन्ने उपस्थित भए ॥२२॥ ती आउनासाथ ठूलो आतुरता साथ जस्तो पहिले कहिल्यै गरे थिएनन्—जेठ भ्राताका चरणमा लडे र अनुहार निहुराएर आँसु बगाउन थाले ॥२३॥ अर्जुनको दशा देखेर युधिष्ठिर आत्तिए । ती नारदले भनेका कुरा सम्झन्दै विजयसित सोध्न

न ज्वलत्यग्निराज्येन कालोऽयं किं विधास्यति ॥ १८ ॥ न पिबन्ति स्तनं वत्सा न दुह्यन्ति च मातरः ॥ रुदन्त्यश्रुमुखा गावो न हृष्यन्त्यृषभा व्रजे ॥१९॥ दैवतानि रुदन्तीव स्विद्यन्ति ह्युच्चलन्ति च ॥ इमे जनपदा ग्रामाः पुरोद्यानाकराश्रमाः ॥२०॥ भ्रष्टश्रियो निरानन्दाः किमघं दर्शयन्ति नः ॥ मन्य एतैर्महोत्पातैर्नूनं भगवतः पदैः ॥ अनन्यपुरुषश्रीभिर्हीना भूर्हतसौभगा ॥ २१ ॥ इति चिन्तयतस्तस्य दृष्टारिष्टेन चेतसा ॥ राज्ञः प्रत्यागमद्ब्रह्मन्यदुपुर्याः कपिध्वजः ॥२२॥ तं पादयोर्निपतितमयथापूर्वमातुरम् ॥ अधोवदनमब्बिन्दून्सृजन्तं नयनाब्जयोः ॥ २३ ॥ विलोक्योद्विग्नहृदयो विच्छायमनुजं नृपः ॥ पृच्छति स्म सुहृन्मध्ये संस्मरन्नारदेरितम् ॥२४॥ युधिष्ठिर उवाच ॥ कच्चिदानर्तपुर्यां नः स्वजनाः सुखमासते ॥ मधुभोजदशार्हार्हसात्वतान्धकवृष्णयः ॥ २५ ॥ शूरो मातामहः कच्चित्स्वस्त्यास्ते वाऽथ मारिषः ॥ मातुलः सानुजः कच्चित्कुशल्यानकदुन्दुभिः ॥ २६ ॥ सप्त स्वसारस्तत्पत्न्यो मातुलान्यः सहात्मजाः ॥ आसते सस्नुषाः क्षेमं देवकीप्रमुखाः स्वयम् ॥ २७ ॥ कच्चिद्राजाऽऽहुको जीवत्यसत्पुत्रोऽस्य चानुजः ॥ हृदीकः ससुतोऽक्रूरो जयन्तगदसारणाः ॥२८॥ आसते कुशलं कच्चिद्ये च शत्रुजिदादयः ॥ कच्चिदास्ते सुखं रामो भगवान् सात्वतां प्रभुः ॥२९ ॥ प्रद्युम्नः सर्ववृष्णीनां सुखमास्ते महारथः ॥ गम्भीररयोऽनिरुद्धो वर्धते भगवानुत ॥३०॥ सुषेणश्चारुदेष्णश्च साम्बो जाम्बवतीसुतः ॥

लागे । त्यसै बखत तिनका भाइहरू र सुहृद् पनि एकत्र भए ॥२४॥ युधिष्ठिरले सोधे—किन भाइ ! द्वारकापुरीका निवासी र हाम्रा सम्बन्धी मधु, भोज, दशार्ह, अर्ह, सात्वत, अन्धक र वृष्णि वंशका सर्व यादव राम्ररी बसेका छन् ? मेरा माननीय मातामह शूरसेन र आफ्ना भ्रातासमेत मेरा मामा वसुदेव त सकुशल छन् ? ॥२५-२६॥ वसुदेवजीका पत्नी देवकी र तिनका दिदी-बहिनीहरू राम्ररी बसेका छन् ? मेरा मामाजीका पत्नीहरू त प्रसन्न छन् ? ॥२७॥ जसको नालायक छोरो ( कंस ) थियो, ती उग्रसेन र तिनका भाइ देवक, हृदीक र उनका छोरा कृतवर्मा तथा भगवान् कृष्णचन्द्रका भाइ जयन्त, गद तथा सारण त सकुशल छन् ? ॥२८॥ शत्रुजित आदि यादव त कुशलपूर्वक छन् ? सात्वत वंशीहरूका प्रभु भगवान बलराम त राम्रै छन् ॥२९॥ समस्त यादवहरूमा महारथी प्रद्युम्न त आनन्दै छन् ? युद्धमा ठूलो वेगले लड्ने अनिरुद्ध त सकुशल छन् ॥३०॥ भगवान् कृष्णचन्द्रका छोरा सुषेण, चारुदेष्ण, साम्ब तथा

आदि आफ्ना सन्तानहरू समेत कुशल छन् ? भगवान्का अनुचर सुनन्द, श्रुतदेव तथा उद्धव आदि त सकुशल छन् ? ॥३२॥ श्रीकृष्णचन्द्र तथा बलरामका भुजाहरूको आश्रयमा रहेका समस्त द्वारका निवासी त रम्भरी बसेका छन् ? हामीहरूमित अगाध प्रेम बढाउने ती सबै मङ्गल-कामना गर्दै कहिले हामीलाई स्मरण गर्दछन् ॥३३॥ ब्राह्मण-भक्त र भक्तवत्सल श्रीकृष्णचन्द्र आफ्ना सुहृद् जनहरू सहित सुधर्मा नामको सभामा बस्तछन् ? ॥३४॥ बलरामको साथमार्थै भगवान् कृष्ण संसारको कल्याणार्थ जगत्को प्राप्त अधिकारहरूको उपभोग गर्दै र तिनको समृद्धिका लागि चेष्टा गर्दै अहिले संसारमै छन् ? ॥३५॥ उनका भुजदण्डले नै सुरक्षित भएर त सबै यदुवंशी संसारभर-पूज्य बनेर विष्णु भगवान्का पार्षदहरू समान परमानन्द प्राप्त गर्दै द्वारकामा निवास गर्दछन् ॥३६॥ उनका चरण कमलका सेवाको बलले स्वर्गका देवताहरूलाई पनि पराजित गरेर सत्यभामादिक सोह हजार स्त्रीहरू भगवान्को कृपाले ती ( पारिजातादिक ) कल्पवृक्षहरूको उपभोग गर्दछन्, जो केवलइन्द्राणीलाई मात्र प्राप्त हुनसक्थ्यो ॥ ३७ ॥ उनका भुजदण्डको महिमाले यादव वीर सबै प्रकारले निर्भय भएर

अन्ये च कार्ष्णिप्रवराः सपुत्रा ऋषभादयः ॥ ३१ ॥ तथैवानुचराः शौरेः श्रुतदेवोद्धवादयः ॥ सुनन्दनन्दशीर्षण्या ये चान्ये सात्वतर्षभाः ॥ ३२ ॥ अपि स्वस्त्यासते सर्वे रामकृष्णभुजाश्रयाः ॥ अपि स्मरन्ति कुशलमस्माकं बद्धसौहृदाः ॥ ३३ ॥ भगवानपि गोविन्दो ब्रह्मण्यो भक्तवत्सलः ॥ कच्चित्पुरे सुधर्मायां सुखमास्ते सुहृद्वृतः ॥ ३४ ॥ मङ्गलाय च लोकानां क्षेमाय च भवाय च ॥ आस्ते यदुकुलाम्भोधावाद्योऽनन्तसखः पुमान् ॥ ३५ ॥ यद्बाहुदण्डगुप्तायां स्वपुर्यां यदवोऽर्चिताः ॥ क्रीडन्ति परमानन्दं महापौरुषिका इव ॥ ३६ ॥ यत्पादशुश्रूषणमुख्यकर्मणा सत्यादयो द्व्यष्टसहस्रयोषितः ॥ निर्जित्य संख्ये त्रिदशाँस्तदाशिषो हरन्ति वज्रायुधवल्लभोचिताः ॥ ३७ ॥ यद्बाहुदण्डाभ्युदयानुजीविनो यदुप्रवीरा ह्यकुतोभया मुहुः ॥ अधिक्रमन्त्यङ्घ्रिभिराहृतां बलात्सभां सुधर्मां सुरसत्तमोचिताम् ॥ ३८ ॥ कच्चित्तेऽनामयं तात भ्रष्टतेजा विभासि मे ॥ अलब्धमानोऽवज्ञातः किं वा तात चिरोषितः ॥ ३९ ॥ कच्चिन्नाभिहितो भावैः शब्दादिभिरमङ्गलैः ॥ न दत्तमुक्तमर्थिभ्य आशया यत्प्रतिश्रुतम् ॥ ४० ॥ कच्चित्त्वं ब्राह्मणं बालं गां वृद्धं रोगिणं स्त्रियम् ॥ शरणोपसृतं सत्त्वं नात्याक्षीः शरणप्रदः ॥ ४१ ॥ कच्चित्त्वं नागमोऽगम्यां गम्यां वाऽसत्कृतां स्त्रियम् ॥ पराजितो वाऽथ भवान्नोत्तमैर्नासमैः पथि ॥ ४२ ॥ अपिस्वित्पर्यभुङ्क्थास्त्वं संभोज्यान् वृद्धबालकान् ॥ जुगुप्सितं कर्म किञ्चित्कृतवान्न यदक्षमम्

देवताहरूद्वारा सेवित सुधर्मा नामको देवसभालाई खोसेर ल्याएर आज ती त्यसलाई आफ्ना खुट्टाले दलिमलि गर्दछन्, ती नारायण त रम्भरी छन् ?॥३८॥ तिमी रम्भरी थियौ ! तर तिमी त खिन्न देखिँदै छौ । म त कहीं अपमानित भए झैं देखिरहेको छु । तिमी त्यहाँ धेरै दिनसम्म किन बसिरह्यौ ? कसैले तिमीसित कटु व्यवहार त गरेनन् ? अथवा कुनै कठोर वाक्य भनेर कसैले तिमीलाई दुःखी त तुल्याएनन् ? अथवा कसैलाई आशा दिएर—म फलानो वस्तु दिनेछु,भन्ने प्रतिज्ञा गरेर तिमीले त्यसलाई त्यो वस्तु दिन सकेनौ ? शरणमा आएका ब्राह्मण, गाई, वृद्ध, रोगी वा कुनै स्त्रीलाई त तिमीले त्यागिदिएनौ ? अशरणलाई शरण दिनु त तिम्रो स्वभावनै थियो ॥३९-४१॥ तिमीले कुनै अगम्य स्त्रीसित गमन त गरेनौ अथवा कुनै आदरणीय स्त्रीको अनादर त गरिदिएनौ ? तिमी बाटोमा कुनै समान बल अथवा आफूभन्दा हीन बल हुने पुरुषसित पराजित त भएका होइनौ ? ॥४२॥ तिमी कुनै वृद्ध

अथवा बालकलाई–जसलाई ख्वाएर मात्र आफूले खानुपर्न थियो–त्यसैगरि पहिले स्वयं त खाएनौ ?* अथवा कुनै निषिद्ध कर्म त गरिसकेका छैनौ ? अथवा नखान हुन खानेकुरा त खाएनौ ? ॥४३॥ अथवा हामीहरू आफ्ना परम प्रियतम भगवान् श्रीकृष्णचन्द्रसित सधैंको निम्ति वियुक्त भएका त होइनौ ? यदि यी सबै कुरामा यौटा पनि भएको होइन भने त तिमी यति धेरै खिन्न देखिने थिएनौ ॥४४॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषा-टीकायां चतुर्दशोऽध्यायः ॥ १४ ॥

( यस अध्यायमा कलियुगको प्रवेश देखेर युधिष्ठिरको स्वर्ग गमन कहिन्छ । ) सूतजी भन्दछन्–हे शौनक ! यसरी अनेक प्रकारले आफ्ना दाजू युधिष्ठिरले सोधेपछि पनि अर्जुनले केही उत्तर दिन सकेनन्, किनकि तो भगवान् कृष्णचन्द्रको वियोगले धेरै दुःखी थिए ॥१॥ शोकले तिनको हृदय र मुख दुवै सुकिरहेका थिए । ती एकमात्र आफ्ना प्रभु श्रीकृष्णचन्द्र ।।

॥ ४३ ॥ कच्चित्प्रेष्ठतमेनाथ हृदयेनात्मबन्धुना ॥ शून्योऽस्मि रहितो नित्यं मन्यसे तेऽन्यथा न रुक् ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे युधिष्ठिरवितर्के द्वारकाया अर्जुनस्यागमनवर्णनं नाम चतुर्दशोऽध्यायः ॥ १४ ॥ सूत उवाच ॥ एवं कृष्णसखः कृष्णो भ्रात्रा राज्ञा विकल्पितः ॥ नानाशङ्कास्पदं रूपं कृष्णविश्लेषकर्शितः ॥ १ ॥ शोकेन शुष्यद्वदनहृत्सरोजो हतप्रभः ॥ विभुं तमेवानुध्यायन्नाशक्नोत्प्रतिभाषितुम् ॥ २ ॥ कृच्छ्रेण संस्तभ्य शुचः पाणिनाऽऽमृज्य नेत्रयोः ॥ परोक्षेण समुन्नद्धप्रणयौत्कण्ठ्यकातरः ॥ ३ ॥ सख्यं मैत्रीं सौहृदं च सारथ्यादिषु संस्मरन् ॥ नृपमग्रजमित्याह बाष्पगद्गदया गिरा ॥ ४ ॥ अर्जुन उवाच ॥ वञ्चितोऽहं महाराज हरिणा बन्धुरूपिणा ॥ येन मेऽपहृतं तेजो देवविस्मापनं महत् ॥ ५ ॥ यस्य क्षणवियोगेन लोको ह्यप्रियदर्शनः ॥ उक्थेन रहितो ह्येष मृतकः प्रोच्यते यथा ॥ ६ ॥ यत्संश्रयाद्द्रुपदगेहमुपागतानां

मनमनै ध्यान गरिरहेका थिए । चेष्टा गरेर पनि ती केही बोल्न सकेनन् ॥२॥ निकैबेरपछि तिनले कसै गरी आफ्नो अश्रुवेग रोके । बगिरहेका आँखाका धाराहरू हातले पुछे । अनि कृष्णको वियोग जनित उत्कण्ठाले व्याकुल हुँदै भगवान्‌को हितैषिता, मित्रता, सम्बन्ध, प्रेमवश गरिएको सारथित्व तथा दूतत्व आदि गुणहरूलाई स्मरण गर्दै ती आफ्ना ज्येष्ठ भ्राता युधिष्ठिरसित यस प्रकार भन्न लागे । त्यस बखत पनि उम्लिरहेको आँसुको आवेगले तिनको वाणी गद्‌गद् भइरहेको थियो ॥३-४॥ अर्जुनले भने–हे महाराज ! मेरा बन्धु-स्वरूप भगवान् कृष्णचन्द्रले हामीलाई लुटिदिए ; देवताहरूलाई नि विस्मित पार्ने मेरो तेजको तिनले अपहरण गरिदिए ॥५॥ एक क्षणको निम्ति पनि उसको वियोग हुँदा मलाई सारा संसार

* उदाहरण–( पुत्र कि पेट पुत होलो )–हात्तीको मुखबाट केही खस्यो त्यसले हात्तीको आहारा कम भएन, तर त्यही खाएर कमिलाले आफ्ना परिवारलाई ख्वाउन ! तात्पर्य के भने–अनेक मनुष्यहरूको घर ॥ विचार रहन्छ—'आफ्नै काम चल्ने सकि त छैन, अरूलाई खाने-पिने तथा बस्ने प्रबन्ध के गर्न सकिन्छ ।' यौटा शहरमा दुई जिमिदार समान धनी थिए । दुवैको पत्नैलाई सोल पत्र थियो र सामान पनि समान नै थियो । एक दिन यौटा महात्मा आएर ती दुवैलाई उपदेश दिदै उनले भने—तिम्रो माथि ईश्वरको ठूलो कृपा छ । यसैले तिमीले मानव शरीर पायौ, अब भगवान्‌ले प्रशस्त सम्पत्ति पनि दिएका छन् । यो पुण्यको फल हो । आफ्नो धनको सदुपयोग गर्नु तिम्रो कर्तव्य हो ।' यस्तो उपदेश सुनेर दुवैमध्ये यौटा त यसरी भन्दथ्यो, उसै गरी चलिरह्यो । दोस्रो चाहिले आफ्ना स्त्री-पुत्रादिलाई डाकेर भन्यो–'तिमीहरू आजदेखि भोग गर्न घटाओ र पूर्व जन्मको पुण्यले पाएको धन परमार्थमा खर्च गर ।' त्यसकी पत्नीले बीस हजारका गहनामध्ये दस हजारका गहना पतिलाई दिदै भनी—'अलिकति गहना थाँरै लगाए पनि म कुरूप देखिन्न ।' त्यो लगेर यहाँ धर्मार्थ उही खर्च गर ।' उसका छोरा-छोरीले पनि आफ्नो भोग गर्न कम गरेर बचेको पैसा पितालाई धर्म गर्नको निम्ति दिए । यसरी त्यसले परमार्थ बढाइदियो । त्यसले गर्दा सबै कुटुम्ब साधारण जीवन-यापन गर्न लागे । अर्को गृहस्थमाथि महात्माको वाणीले प्रभाव पार्न सकेन । यस निम्ति त्यसका छोरा कुबाटो लागे । ती दुर्व्यसनी भएर रक्सी खान थाले । पछि घरको सबै सम्पत्ति सिद्धियो र ती भिक्षुक भएर ठाउँ-ठाउँको ठक्कर खान लागे ।

यस्तो शून्य लाग्नथाल्यो—जस्तै प्राण विहीन मृतक देह ॥६॥ जसको बलमा राजा द्रुपदकहाँ मैले स्वयंवरमा पुगेर त्यहाँ आएका कामी राजाहरूको तेज हरिलिएँ र ताँदो खँचेर माछा खसालिदिएँ र सबैलाई जितेर द्रौपदीलाई प्राप्त गरें ॥७॥ जसको कृपाले देवताहरू सहित इन्द्रलाई पनि मैले जितें र खाण्डव बन अग्निलाई दिएँ। यसको अतिरिक्त मय-दानवद्वारा निर्मित अद्भुत कलापूर्ण राज्यसभा प्राप्त गरें। जसको प्रतापले हजुरको राजसूय यज्ञमा संसारका सबै राजाहरू उपहार लिएर आएका थिए ॥ ८ ॥ जसको प्रतापले दस हजार हात्तीको बल भएको जरासन्धलाई हजुरका भाइ भीमसेनले मारे र त्यसका कारागारमा थुनिएका राजाहरूलाई मुक्त गरे। ती राजाहरू पनि हजुरको राजसूय यज्ञमा उपहार स्वरूप रत्नादि लिएर आएका थिए ॥९॥ त्यस बखत दुष्ट दुःशासन आदि धूर्त राजाहरू हजुरकी पत्नी द्रौपदीलाई भरिभराउ सभामा नाङ्गी पार्नको निम्ति त्यसका ती पवित्र कपाल समातेर तान्दै ल्याएका

स्वयंवरमुखे स्मरदुर्मदानाम् ॥ तेजो हृतं खलु मयाऽभिहतश्च मत्स्यः सज्जीकृतेन धनुषाऽधिगता च कृष्णा ॥ ७ ॥ यत्संनिधावहमु खाण्डवमग्नये-ऽदामिन्द्रं च सामरगणं तरसा विजित्य ॥ लब्धा सभा मयकृताऽद्भुतशिल्पमाया दिग्भ्योऽहरन् नृपतयो बलिमध्वरे ते ॥ ८ ॥ यत्तेजसा नृपशिरोऽङ्घ्रिमहन्मखार्थे आर्योऽनुजस्तव गजायुतसत्त्ववीर्यः ॥ तेनाहृताः प्रमथनाथमखाय भूपा यन्मोचितास्तदनयन्बलिमध्वरे ते ॥ ९ ॥ पत्न्यास्तवाधिमखक्लृप्तमहाभिषेकश्लाघिष्ठचारुकबरं कितवैः सभायाम् ॥ स्पृष्टं विकीर्य पदयोः पतिताश्रुमुख्या यस्तत्स्त्रियोऽकृत हतेशविमुक्तकेशाः ॥ १० ॥ यो नो जुगोप वनमेत्य दुरन्तकृच्छ्राद्दुर्वाससोऽरिविहितादयुताग्रभुग्यः ॥ शाकान्नशिष्टमुपभुज्य यतस्त्रिलोकीं तृप्ताममंस्त सलिले विनिमग्नसंघः

थिए जब राजसूय यज्ञमा अभिषेकको बेला वेद-मन्त्रहरू द्वारा अभिषिक्त गरिएका थिए। ती द्रौपदीले आफ्ना नेत्रबाट आँसु बगाउँदै जुन भगवान्‌का चरण युगलको वन्दना गरेकी थिइन् उनैको कृपाले मैले ती दुष्टहरूलाई मारेर तिनकी स्त्रीहरूलाई राँडी तुल्याइदिएँ। आज ती आफ्ना केश-पाश फुकाएर वैधव्य भोगिरहेका छन् ॥१०॥ जुन भगवान् कृष्णचन्द्रले शत्रुहरू द्वारा पठाइएका र क्रोधी दस हजार शिष्यहरू लिई भोजन गर्न आएका दुर्वासाको श्रापबाट बचाएका थिए। तिनले त भाँडामा रहेको एक त्यान्द्रो साग खाइदिएका थिए, त्यसैले शिष्यहरू साथमा लिएर नदीमा स्नान गर्न गएका दुर्वासा र तिनका शिष्य आफूलाई मात्र होइन कि सम्पूर्ण विश्वलाई तृप्त ठानेका थिए र तिनको भोक शान्त भएको थियो* ॥११॥

* एक दिन महर्षि दुर्वासा दुर्योधनकहाँ गए। उनले तिनको राम्ररी अतिथि सत्कार गरे। त्यसले दुर्वासा मुनि धेरै प्रसन्न भएर उनले दुर्योधनसित भने—'वत्स ! तिम्रो सत्कारले म साह्रै प्रसन्न भएँ तिमी वर माग।' दुर्योधनले विचार गरे—'राम्रो मौका छ। तिनकै आफ्नो पाण्डवहरूको नाश गराइदिउँ।' प्रकटमा भने—'भगवन् ! युधिष्ठिर हाम्रो कुलमा सबै भन्दा जेठा छन्। अतः मेरो इच्छा छ कि एक दिन आफ्ना दशै हजार शिष्यहरू लिएर उनको आश्रममा गई अतिथि बन्नु होला—द्रौपदीले भोकै बस्न नपरोस्। यस निमित्त हजुर यस्तो मौकामा पुग्नु हवास, जब सबै पाण्डव र ती दौले पनि भोजन गरिसकेका होऊन्।' पछि एक दिन दुर्वासा दुर्योधनले भने बस्तै मौकामा आफ्ना दस हजार शिष्यहरू लिएर महाराज युधिष्ठिरको आश्रममा पुगे। त्यसताका सबै पाण्डव राज्यच्युत भएर वनमा बस्तथे। महाराज युधिष्ठिरले ठूलो सम्मानका साथ तिनको स्वागत गरे। एक छिनपछि दुर्वासा शिष्यहरू समेत नदीमा स्नान गर्न गए उता द्रौपदीलाई ठूलो चिन्ता पर्‍यो—अब के गर्ने ! यद्यपि सूर्य नारायणको कृपाले तिनलाई योटा सिद्धस्थाली ( कसौंडी ) प्राप्त भएको थियो। त्यस पात्रको यो विशेषता थियो कि त्यसमा एकपल्ट जुन चीज तयार भयो, त्यति नै वस्तुले जतिसुकै धेरै मानिस एकत्र भए पनि—सबैको इच्छा पूर्ण हुन्थ्यो। तर त्यो विशेषता त्यति बेलासम्ममात्र रहन्थ्यो, जबसम्म द्रौपदी स्वयं भोजन गरिसकेकी थिइन्, तिनले भाँडाकेपछि त्यस दिन फेरि केही पनि दिन सक्तैनथ्यो या दिँदैनथ्यो। त्यस बखत पनि द्रौपदीले आइसकेर पात्र आफ्नो ठेगानामा राखिसकेकी थिइन्, अनि दुर्वासा महाराज आइपुगे। त्यस्तो

जसको प्रताप द्वारा मैले संग्राम-भूमिमा भगवान् शङ्करलाई पनि विस्मयमा पारिदिएँ र प्रसन्न भएका शिवजीले मलाई आफ्नु पाशुपतास्त्र दिनुभएको थियो । त्यो बाहेक अन्यान्य लोकपालहरूले पनि मलाई आफ्आफ्ना अस्त्र दिएका थिए । यतिसम्म भयो कि म आफ्नो यही नाशवान् शरीरले देवराज इन्द्रको प्रासाद स्वर्गसम्म पनि पुगें र त्यहाँ इन्द्रासनको आधा भाग बस्नको निम्ति प्राप्त भयो ॥१२॥ जब म स्वर्गमा डुलिरहेको थिएँ, त्यसै बखत गाण्डीवका लक्षणहरूले युक्त मेरा भुजदण्डहरू देखेर दैत्यगणको नाश गर्न तयार इन्द्रादि समस्त देवता भगवान् कृष्णचन्द्रको कृपाले नै मेरो अधीन भएका थिए । हे आजमीढ युधिष्ठिर ! आज उनै भगवानले मलाई ठगेर छाडेर गए ॥ १३ ॥ जुन भगवान्को एकमात्र

॥ ११ ॥ यत्तेजसाऽथ भगवान् युधि शूलपाणिर्विस्मापितः सगिरिजोऽस्त्रमदान्निजं मे ॥ अन्येऽपि चाहममुनैव कलेवरेण प्राप्तो महेन्द्रभवने महदासनार्धम् ॥१२॥ तत्रैव मे विहरतो भुजदण्डयुग्मं गाण्डीवलक्षणमरातिवधाय देवाः सेन्द्राः श्रिताः यदनुभावितमाजमीढ तेनाहमद्य मुषितः पुरुषेण भूम्ना ॥ १३ ॥ यद्बान्धवः कुरुबलाब्धिमनन्तपारमेको रथेन ततरेऽहमतीर्यसत्त्वम् ॥ प्रत्याहृतं बहुधनं च मया परेषां तेजास्पदं मणिमयं च हृतं शिरोभ्यः ॥१४॥ यो भीष्मकर्णगुरुशल्यचमूष्वदभ्रराजन्यवर्यरथमण्डलमण्डितासु ॥ अग्रेचरो मम विभो रथयूथपानामायुर्मनांसि च दृशा सह ओज आर्च्छत् ॥१५॥ यद्दोःषुमा प्रणिहितं गुरुभीष्मकर्णद्रोणित्रिगर्तशल्यसैन्धवबाह्लिकाद्यैः ॥ अस्त्राण्यमोघमहिमानि निरूपितानि नोपस्पृशुर्नृहरिदास-

बन्धु म कुरु-कुलका सेनारूपी अपार समुद्रलाई यौटै रथमा बसेर पारितरें शत्रुहरूको धेरै धन पनि खोसें र ठूला-ठूला राजाहरूका मस्तकबाट तिनका मणिमय मुकुट खोसें, आज तिनै नारायणले मलाई धोकादिए ॥१४॥ जसले भीष्म कर्ण, द्रोण तथा शल्य जस्ता अगणित वीरहरूद्वारा मण्डित सेनाको माझमा मेरो रथ कुन्याइदिएर आफ्नो दृष्टि मात्रले ती सबै वीरहरू आयुष्य, तिनको मन, तेज हरण गरेर तिनलाई अकिंचन तुल्याइदिएका थिए, आज ती दयालु भगवानले मलाई ठगयाए ॥१५॥ गुरु द्रोण, भीष्म पितामह कर्ण, अश्वत्थामा, त्रिगर्त, शल्य, सिन्धु र बाह्लीक आदि देशहरूका वीर राजाहरूले प्रहार गरेका अस्त्र पनि जसको कृपाले-उनैको मेरो शरीरलाई छुन सकेनन्-जस्तो भगवद्भक्तमाथि दैत्यगणका अस्त्र काम गर्दैनन्

परिस्थितिमा पनि दीनतापूर्वक तिनले भगवान् कृष्णचन्द्रको स्मरण गरिन् । त्यस बखत भगवान द्वारकामा रुक्मिणी महारानीलाई आफ्नो बसालेर तिनको सत्कार गरिरहेका थिए । द्रौपदीको करुणापूर्ण पुकार सुन्नासाथ उनले रुक्मिणीलाई तत्काल तल राखि दिए र बस्तै कसैसित केही नभनी युधिष्ठिरको आश्रमतिर दगुरे । त्यहाँ पुगेर सोझै द्रौपदीके नजीक पुगे । द्रौपदीले सबै कुरा सुनाइन्, अनि भगवानले भन्नुभयो—कृष्णे ! मलाई पनि साह्रै भोक लागिरहेछ । पहिले तिमी मलाई केही खान देऊ ।' द्रौपदी लज्जित भएर भन्न लागिन्– प्रभो ! मैले सकेसम्म पर्याप्त खाइसकेकी थिएँ अब त मैले पनि खाइसकें । अब म गरीबको कुटीमा केही पनि छैन ।' अब भगवानले बढो आग्रह गर्नु भयो तब ती भित्र गएर र रित्तो पात ल्याएर आफ्नो राखिदिइन् । संयोगले त्यस पातको भाँडोमा एक त्यान्द्रो साग लागेको रहेछ । भगवानले त्यो खाइदिनुभयो र भीमलाई डाकेर भन्नुभयो—'तिमी गएर दुर्वासा र तिनका शिष्यहरूलाई भोजन गर्नको निम्ती छिट्टै डाकेर ल्याऊ ।' भीम जब तिनलाई डाक्न गए त्यो भन्दा पहिले नै सबैको पेट डम्म भइसकेको थियो । त्यसै कारण फेरि त्यहाँ आउन अघाउँदो हुने भयले ती सबै त्यहाँबाट भागे ।

ती भगवान् हामीलाई त्यागेर गए ॥१६॥ हरे ! म कुमतिले ती नारायणलाई सारथी तुल्याएँ, भक्तजन यस संसारको माया-जालबाट मुक्ति पाउनको निम्ति जसका चरण-कमलको भजन गर्दछन् । एक समय युद्ध-भूमिमा घोडाहरू थाकेका थिए, त्यसै कारण म रथबाट तल बसिएँ, तर उनै भगवान्‌को प्रभावले उभिएका कर्णआदि वीरले मलाई मार्न सकेनन् ॥१७॥ हे नरदेव ! गम्भीर र सुन्दर हास्यका साथै गरिएका भगवान्‌का ठट्टाका कुराहरू र बेलाबेलामा–'हे पार्थ ! हेपार्थ ! हे मित्र ! हे कुरुनन्दन ! हे अर्जुन ! आदि मर्मस्पर्शी सम्बोधनहरूको स्मरण गर्नासाथ हृदयमा कोलाहल मच्चिन थाल्दछ ॥१८॥ सुत्दा, बस्दा, डुल्दा, भोजन गर्दा र आफ्नै मुखले आफ्नो बडाई गरेको बेला उनलाई आफ्नो समान अथवा अभिन्न मित्र ठानेर प्रायः म ठट्टा गर्दै भन्न लाग्दथेँ–'हो मित्र, तिमी त सत्यवादी हौ ।' तर ती महाप्रभुले मेरा त्यस्तै-त्यस्ता अपराधहरूलाई त्यसैगरी चुपचाप सहिदिए, जस्तै मित्र मित्रको र पिता पुत्रको अपराध सहन्छन् ॥१९॥ हे नृपेन्द्र ! केवल एक ती दीनानाथ नरहनाले मेरो हृदय शून्य भए झैं अनुभव भइरहेछ । हे अङ्ग ! म भगवान्‌का पत्नीहरूलाई आफ्नो

भिवासुराणि ॥१६॥ सौत्ये वृतः कुमतिनाऽऽत्मद ईश्वरो मे यत्पादपद्ममभवाय भजन्ति भव्याः ॥ मां श्रान्तवाहमरयो रथिनो भुविष्ठं न प्राहरन् यदनुभावनिरस्तचित्ताः ॥ १७ ॥ नर्माण्युदाररुचिरस्मितशोभितानि हे पार्थ हेऽर्जुनसखे कुरुनन्दनेति ॥ संजल्पितानि नरदेव हृदिस्पृशानि स्मर्तुर्लुठन्ति हृदयं मम माधवस्य ॥ १८ ॥ शय्यासनाटनविकत्थनभोजनादिष्वैक्याद्वयस्य ऋतवानिति विप्रलब्धः ॥ सख्युः सखेव पितृवत्तनयस्य सर्वं सेहे महान्महितया कुमतेरघं मे ॥ १९ ॥ सोऽहं नृपेन्द्र रहितः पुरुषोत्तमेन सख्या प्रियेण सुहृदा हृदयेन शून्यः ॥ अध्वन्युरुक्रमपरिग्रहमङ्ग रक्षन्गोपैरसद्भिरबलेव विनिर्जितोऽस्मि ॥ २० ॥ तद्वै धनुस्त इषवः स रथो हयास्ते सोऽहं रथी नृपतयो यत आनमन्ति ॥ सर्वं क्षणेन तदभूदसदीशरिक्तं भस्मन्हुतं कुहकराद्धमिवोप्तमूष्याम् ॥ २१ ॥ राजंस्त्वयाऽभिपृष्टानां सुहृदां नः सुहृत्पुरे ॥ विप्रशापविमूढानां निघ्नतां मुष्टिभिर्मिथः ॥ २२ ॥ वारुणीं मदिरां पीत्वा मदोन्मथितचेतसाम् ॥ अजानतामिवान्योन्यं चतुःपञ्चावशेषिताः ॥ २३ ॥ प्रायेणैतद्भगवत ईश्वरस्य विचेष्टितम् ॥ मिथो निघ्नन्ति भूतानि भावयन्ति च यन्मिथः ॥ २४ ॥ जलौकसां जले यद्वन्महान्तोऽदन्त्यणीयसः ॥ दुर्बलान् बलिनो राजन्महान्तो बलिनो मिथः ॥ २५ ॥

लिएर आइरहेको थिएँ । बाटोमा केही ग्वालाहरू आएर मलाई त्यसै गरी पराजित पारिदिए, जसरी कुनै पुरुष स्त्रीलाई पराजित पारिदिन्छ ॥२०॥ मेरो हातमा उही गाण्डीव थियो, उनै अमोघ वाणहरू थिए, उही रथ थियो, उनै घोडा थिए र म पनि उही रथी थिएँ–जसको सामुन्ने ठूलठूला राजाहरू आफ्नो मस्तक निहुराइदिन्थे, किन्तु एक मात्र ती जगदीश्वर नहुनाले ती सबै त्यसै गरी व्यर्थ भए, जस्तै सस्वर वेदमन्त्रहरूका साथ खरानीमा गरिएको हवन, कुनै ठगको हात परेको धन अथवा बाँझो भूमिमा छरेको बीउ व्यर्थ जान्छ ॥२१॥ हे राजन ! हजुरले द्वारकापुरीका जुन सम्बन्धीहरू वा मित्रहरूको कुशल सोध्नुभयो, ती सबै यादव ब्राह्मणको शापले मतवाला भएका थिए ॥२२॥ ती सबैले वारुणी मदिरा पान गरे, जब त्यसको नशा चढ्यो तब यादवले अर्कोलाई नचिनेर सबै आपसमै लडेर समाप्त भए । तिनमा केवल चार या पाँच मनुष्य जीवित बाँचेका छन् ॥२३॥ यो पनि उनै भगवान्‌को काम हो भन्ने ठानिरहेको छु, किनकि तिनै परस्पर प्राणिहरूलाई मार्न लाउने र आपसमै पालन पनि गराइदिन्छन् ॥२४॥ जसै—जलका ठूला-ठूला जन्तु सानासाना जन्तुलाई खाइदिन्छन्–ठीक त्यसै गरी

संसारमा पनि बलियोले निर्धोलाई खाइदिन्छ र जो धेरै बलवान् हुन्छन् ती परस्पर लडेर स्वयं समाप्त हुन्छन् ॥२५॥ यसै गरी ती सर्वव्यापी भगवान्ले ती बलवान् यदुवंशीहरूलाई अर्का बलवान् यदुवंशीहरूद्वारा नै मारेर लगाएर भूमिको भार घटाए ॥२६॥ देश-कालका निम्ति उचित, अर्थगर्भित र मनका तापहरूलाई निवारण गरिदिने भगवान्का वचनहरूको स्मरण गर्नाले बलपूर्वक मेरो मन उनैतिर तानिइरहेको छ ॥२७॥ सूतजी भन्दछन्—हे शौनक ! यस प्रकार भगवान् श्रीकृष्णचन्द्रका चरण-कमलको स्मरण गर्ने तथा अत्यन्त प्रगाढ प्रेम हुनाले अर्जुनको बुद्धि निर्मल र शान्त भएको थियो ॥२८॥ भगवान् श्रीकृष्णका युगल चरणको स्मरण गरेर भक्तिद्वारा उनले आफ्नो सबै मानसिक विकारहरूलाई हटाइदिए तथा उनको बुद्धि ऐना जस्तै स्वच्छ भयो ॥२९॥ एक दिन संग्राम-भूमिमा भगवानले उनलाई जुन गीताको ज्ञानोपदेश दिएका थिए, त्यो समयको लबटा पापहरूको ल्याउलो तथा तामसिक गुणहरूको तीव्रताको कारणले बिर्सिसकेको थिए । उनले त्यसको फेरि मनन गरेर ज्ञान प्राप्त गरे ॥३०॥ त्यस ज्ञानोदयबाट तिनलाई ब्रह्म-साक्षात्कार भयो, जसले तिनको हार्दिक द्वैतभाव नष्ट भयो । ज्ञानमा लीन हुनाले तिनको अविद्या नष्ट भयो र सत्व, रज, तथा तम यी तीन गुणहरूको कार्य पनि नष्ट भयो । जब सबै भ्रमहरूको भण्डार स्वरूप द्वैतभाव पर

एवं बलिष्ठैर्यदुभिर्महद्भिरितरान्विभुः ॥ यदून्यदुभिरन्योन्यं भूभारान्संजहार ह ॥ २६ ॥ देशकालार्थयुक्तानि हृत्तापोपशमानि च ॥ हरन्ति स्मरतश्चित्तं गोविन्दाभिहितानि मे ॥ २७ ॥ एवं चिन्तयतो जिष्णोः कृष्णपादसरोरुहम् ॥ सौहार्देनातिगाढेन शान्ताऽऽसीद्विमला मतिः ॥ २८ ॥ वासुदेवाङ्घ्र्यनुध्यानपरिबृंहितरंहसा ॥ भक्त्या निर्मथिताशेषकषायधिषणोऽर्जुनः ॥ २९ ॥ गीतं भगवता ज्ञानं यत्तत्संग्राममूर्धनि ॥ कालकर्मतमोरुद्धं पुनरध्यगमद्विभुः ॥ ३० ॥ विशोको ब्रह्मसंपत्त्या संछिन्नद्वैतसंशयः ॥ लीनप्रकृतिनैर्गुण्यादलिङ्गत्वादसंभवः ॥ ३१ ॥ निशाम्य भगवन्मार्गं संस्थां यदुकुलस्य च ॥ स्वःपथाय मतिं चक्रे निभृतात्मा युधिष्ठिरः ॥ ३२ ॥ पृथाऽप्यनुश्रुत्य धनंजयोदितं नाशं यदूनां भगवद्गतिं च ताम् ॥ एकान्तभक्त्या भगवत्यधोक्षजे निवेशितात्मोपरराम संसृतेः ॥ ३३ ॥ ययाऽहरद्भुवो भारं तां तनुं विजहावजः ॥ कण्टकं कण्टकेनेव द्वयं चापीशितुः समम् ॥ ३४ ॥ यथा मत्स्यादिरूपाणि धत्ते जह्याद्यथा नटः ॥ भूभारः क्षपितो येन जहौ तच्च कलेवरम् ॥ ३५ ॥ यदा मुकुन्दो भगवानिमां

हट्यो, तब संशयको उत्पत्ति कसरी हुन सक्तथ्यो ? संशय ( भ्रम ) को अभावमा शोक पनि नष्ट भयो । तात्पर्य के हो भने जबसम्म मनुष्यमा द्वैतको भ्रम रहन्छ, तबसम्म त्यो 'यो मेरो भाग हो, यो उसको भाग हो' आदि थरि-थरिका उपद्रव रहिरहन्छन् । जब कुनै पुण्य-बलले मनुष्यलाई ज्ञान प्राप्त भएर 'मेरो-तेरो' भन्ने भ्रम नष्ट हुन्छ, तब कुनै प्रकारको शोक-मोह हुन सक्दैन ॥३१॥ उता युधिष्ठिरले जब अर्जुनको मुखबाट भगवान्को परमधाम-यात्रा र यदुवंशीहरूको विनाशको समाचार सुने, तब आफ्ना मनोवृत्तिहरूलाई एकत्र पारेर उनले स्वर्गलोक जाने दृढ निश्चय गरे ॥ ॥३२॥ कुन्तीले पनि अर्जुनद्वारा भगवानको देह-त्याग र यदुवंशीहरूको संहारको वृत्तान्त सुनिन्, अनि ती भगवान्को एकान्त भक्तिमा लीन भइन् र नारायणमा आफ्नो मन लगाएर संसारबाट पृथक् भइन् । ( मरिन् अथवा अन्तर्मुख भइन् ) ॥३३॥ भगवान्ले जुन यादव शरीरद्वारा पृथ्वीको भार टारेका थिए, उसै गरी जसरी काँडाले नै काँडा निकालिन्छ, त्यस यदुवंशी शरीरलाई पनि त्यागिदिए, किन भने सर्व समर्थ प्रभु ती श्रीकृष्णको निम्ति त्यो यादव-शरीर र विश्व-शरीर दुवै समान थिए ॥३४॥ जसरी भगवान् नट झैं बेला-बेला मत्स्य, कूर्म र वाराह आदिको शरीर धारण गरेर त्यसलाई त्यागिदिने गर्दछन्, त्यसै गरी उनले जुन शरीरद्वारा पृथ्वीको भार टारेका थिए, त्यस

लाई पनि त्यागिदिए ॥३५॥ जुन बेला भगवानले यस भूमण्डललाई त्यागे, त्यसै बखत मूढ प्राणीहरूका हृदयमा अधर्मको मूल कलिले घर गऱ्यो ॥३६॥ जब युधिष्ठिरले यो देखे— नगर राष्ट्र र घर-घरै तथा प्रत्येक प्राणीका हृदयमा लोभ, कपट आदिको रूपमा कलि प्रवृत्त भइरहेको छ, तब ती स्वर्गारोहणको तयारी गर्न लागे। त्यस अनुसार तिनले सर्वगुणसम्पन्न नाति परीक्षितलाई हस्तिनापुरमा समुद्र-मेखलामयी पृथ्वीको राजसिंहासनमा अभिषिक्त गरिदिए ॥३७-३८॥ त्यसपछि महाराज युधिष्ठिरका छोरा वज्रलाई मथुराको राज्यमा अभिषिक्त गरी तिनलाई शूरसेनवंशीहरूको सम्राट् तुल्याइदिए। त्यसपछि ती ईश्वर ( सर्वस्व त्याग्न समर्थ युधिष्ठिर ) ले प्राजापत्य यज्ञ गरेर अग्निहरू पान गरेर आफ्नो आत्मामा आश्रय दिए ॥३९॥ सबै उत्तमोत्तम वस्त्राभूषण त्यागेर ती ममता र अहङ्कारबाट मुक्त भए। यसरी सबै सांसारिक बन्धनहरूबाट आफूलाई मुक्त पारे ॥४०॥ उनले आफ्ना सबै इन्द्रियहरूका व्यापार मनको अधीन पारेर त्यस मनलाई प्राणमा मिलाएर प्राणलाई अपान वायुको जिम्मा लगाए। त्यसपछि त्यो अपान वायुलाई मृत्युको हातमा सुम्पिदिए र मृत्युलाई तिनले आफ्नो

महीं जहौ स्वतन्वा श्रवणीयसत्कथः ॥ तदाहरेवाप्रतिबुद्धचेतसामभद्रहेतुः कलिरन्ववर्तत ॥ ३६ ॥ युधिष्ठिरस्तत्परिसर्पणं बुधः पुरे च राष्ट्रे च गृहे तदात्मनि ॥ विभाव्य लोभानृतजिह्महिंसनाद्यधर्मचक्रं गमनाय पर्यधात् ॥ ३७ ॥ स्वराट् पौत्रं विनयिनमात्मनः सुसमं गुणैः ॥ तोयनीव्याः पतिं भूमेरभ्यषिञ्चद्गजाह्वये ॥ ३८ ॥ मथुरायां तथा वज्रं शूरसेनपतिं ततः ॥ प्राजापत्यां निरूप्येष्टिमग्नीनपिबदीश्वरः ॥ ३९ ॥ विसृज्य तत्र तत्सर्वं दुकूलवलयादिकम् ॥ निर्ममो निरहंकारः सञ्छिन्नाशेषबन्धनः ॥ ४० ॥ वाचं जुहाव मनसि तत्प्राण इतरे च तम् ॥ मृत्यावपानं सोत्सर्गं तं पंचत्वे ह्यजोहवीत् ॥४१॥ त्रित्वे हुत्वाऽथ पंचत्वं तच्चैकत्वेऽजुहोन्मुनिः ॥ सर्वमात्मन्यजुहवीद्ब्रह्मण्यात्मानमव्यये ॥ ४२ ॥ चीरवासा निराहारो बद्धवाङ्मुक्तमूर्धजः ॥ दर्शयन्नात्मनो रूपं जडोन्मत्तपिशाचवत् ॥ ४३ ॥ अनवेक्षमाणो निरगादशृण्वन्बधिरो यथा ॥ उदीचीं प्रविवेशाशां गतपूर्वां महात्मभिः ॥ हृदि ब्रह्म परं ध्यायन्नावर्तेत यतो गतः ॥ ४४ ॥ सर्वे तमनु निर्जग्मुर्भ्रातरः कृतनिश्चयाः ॥ कलिनाऽधर्ममित्रेण दृष्ट्वा स्पृष्टाः प्रजा भुवि ॥ ४५ ॥ ते साधु कृतसर्वार्था ज्ञात्वाऽऽत्यन्तिकमात्मनः ॥ मनसा धारयामासुर्वैकुण्ठचरणाम्बुजम् ॥ ४६ ॥ तद्ध्यानोद्रिक्तया भक्त्या विशुद्धधिषणाः परे ॥ तस्मिन्नारायणपदे एकान्तमतयो गतिम् ॥ ४७ ॥ अवापुर्दुरवापां ते असद्भिर्विषयात्मभिः ॥ विधूतकल्मषाः स्थानं विरजेना-

शरीरसित मिलाए ॥४१॥ तिनले शरीरलाई सत्त्वादि तीनै गुणहरूमा, ती गुण अविद्यामा र अविद्यालाई जीवमा तथा जीवलाई अविनाशी ब्रह्ममा लीन गरिदिए ॥४२॥ त्यसपछि वल्कल वस्त्र लगाए, भोजन त्यागे, मौन धारण गरे, कपाल फुकाइदिए, मूर्ख, बौलाहा वा पिशाच समान आफ्नो आकृति तुल्याएर महाराज युधिष्ठिर—॥ ४३ ॥ यता-उता नहेरी र कसैसित केही बोल-चाल नगरेर त्यस उत्तर दिशातिर हिंडे जता उनका अन्यान्य विवेकशील पूर्वज महात्माहरू गएका थिए। त्यस बखत उनको ध्यान एकमात्र ब्रह्ममा लागेको थियो। त्यहाँबाट ती त्यस दिशातिर हिंडे जहाँ गएपछि मनुष्य फेरि यस संसारमा आउँदैन ॥ ४४ ॥ त्यसपछि संसारका सबै प्राणीहरूमा अधर्मको साथी कलियुगको छाया परेको देखेर भीम आदि भाइहरू पनि उनको पछि-पछि हिंडे ॥ ४५ ॥ सबै तरहले पूर्णकाम पाण्डव मनमनै एक मात्र शरणदाता श्रीकृष्णचन्द्रका चरण-कमलको ध्यान

गर्न आगे ॥ ४६॥ भगवान्‌को ध्यान गर्नाले प्रभुका चरणमा अनुराग बढ्‌दै गयो, अनि उनको बुद्धि निर्मल पारिदियो र ती भगवान्‌लाई आफ्नो सर्वस्व मान्न लागे ।।४७।। यस प्रकार सबै विकारबाट रहित भएपछि ती आफ्नो रजोगुण रहित आत्माद्वारा त्यस उत्तम गतिमा प्राप्त भए जुन विषय-वासनामा आसक्त प्राणिहरूका निम्ति दुर्लभ नै छ ।।४८।। उता विदुर तीर्थाटन गर्दै प्रभासक्षेत्र पुगे र भगवान् कृष्णचन्द्रमा मन लगाउँदै त्यहीं शरीर त्यागेर आफना पितृहरूसित वैकुण्ठ-धाममा प्राप्त भए ॥४९॥ सती द्रौपदीले अब देखिन्—मेरा स्वामी मकिर कुनै पनि ध्यान नदिएर आफ्नो सद्‌गतिको उपाय गरिरहेका छन्—तब तिनले पनि आफ्नो मन भगवान्‌का चरणमा लगाइन् र उनैको ध्यान गर्दै परमधाम पुगिन् ॥ ५० ॥ पाण्डवहरूको महाप्रयाणको यो कथा मंगलमयी र भक्तगणको प्रियमाला जो प्राणी श्रद्धापूर्वक सुन्दछन्, तिनलाई भगवान्‌को भक्तिरूपिणी सिद्धि प्राप्त हुन्छिन् ॥ ५१॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषा-टीकायां पञ्चदशोऽध्यायः ॥१५॥ ( राजा परीक्षितको भूमि र धर्मसित भेट हुनु । ) सूतजी शौनकादि मुनिहरूसित

स्मनेव हि ॥ ४८ ॥ विदुरोऽपि परित्यज्य प्रभासे देहमात्मवान् ॥ कृष्णावेशेन तच्चित्तः पितृभिः स्वक्षयं ययौ ॥ ४९ ॥ द्रौपदी च तदाऽऽज्ञाय पतीनामनपेक्षताम् ॥ वासुदेवे भगवति ह्येकान्तमतिराप तम् ॥ ५० ॥ यः श्रद्धयैतद्भगवत्प्रियाणां पाण्डोः सुतानामिति संप्रयाणम् ॥ शृणोत्यलं स्वस्त्ययनं पवित्रं लब्ध्वा हरौ भक्तिमुपैति सिद्धिम् ॥५१॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे पांडवस्वर्गारोहणं नाम पंचदशोऽध्यायः ॥१५॥ सूत उवाच ॥ ततः परीक्षिद्द्विजवर्यशिक्षया महीं महाभागवतः शशास ह ॥ यथा हि सत्यामभिजातकोविदाः समादिशन्विप्रमहद्गणस्तथा ॥१॥ स उत्तरस्य तनयामुपयेम इरावतीम् ॥ जनमेजयादींश्चतुरस्तस्यामुत्पादयत्सुतान् ॥ २ ॥ आजहाराश्वमेधांस्त्रीन् गङ्गायां भूरिदक्षिणान् ॥ शारद्वतं गुरुं कृत्वा देवा यत्राक्षगोचराः ॥ ३ ॥ निजग्राहौजसा वीरः कलिं दिग्विजये क्वचित् ॥ नृपलिङ्गधरं शूद्रं घ्नन्तं गोमिथुनं पदा ॥ ४ ॥ शौनक उवाच ॥ कस्य हेतोर्निजग्राह कलिं दिग्विजये नृपः ॥ नृदेवचिह्नधृक्शूद्रः कोऽसौ गां यः पदाऽहनत् ॥ ५ ॥ तत्कथ्यतां महाभाग यदि कृष्णकथा-

भन्दछन्—परम भगवद्भक्त महाराज परीक्षित जन्म-कर्म दुवैमा श्रेष्ठ र विद्वान ब्राह्मणहरूको अनुसार पृथ्वीको शासन गर्न लागे ॥ १ ॥ तिनले महाराज उत्तर ( मामाकी छोरी ) इरावतीसित आफ्नो विवाह गरेर जनमेजय आदि चार छोराहरू जन्माए ॥ २ ॥ केही समयपछि तिनले कृपाचार्यलाई गुरु मानेर गङ्गातटमा तीन अश्वमेध यज्ञ गरे, त्यसमा देवताहरूले प्रत्यक्ष प्रकट भएर बलि ग्रहण गरे र त्यसमा सम्मिलित ब्राह्मणहरूलाई धेरै-धेरै दक्षिणा दिए ॥ ३ ॥ त्यसपछि तो दिग्विजय गर्न निस्के । एक स्थानमा तिनले राजाको वेशमा मोटा विकराल रूपधारी शूद्रलाई समाते । त्यो मोटो गाई र गोरुलाई लातिले कुटिरहेको थियो । त्यस विषयमा सूतजीले सोधे—त्यस दिग्विजयको प्रसंगमा राजा परीक्षितले त्यसलाई किन समाते ? राजाको रूप धारण गर्ने त्यो शूद्र को थियो ? त्यो गाईलाई किन लातिले कुटिरहेको थियो ? त्यसको कारण के थियो ? ॥४-५॥ यदि यस

० उदाहरण ( सतीधर्म )—दोमको दुराचारी बादशाह बलोक्लियसले विट्‌सनासको पीता अदृश्यहरूलाई प्राणदण्ड दियो र भन्यो—'यो समाज बलाई आफ्ना कुटुम्बहरूका माझमा बसेर आफ्नै हातले मोगुपरेक बदि मरेको नसको गर्दैन भने मराउने चाहले मर्ने मर्नुपर्नेछ ।' आफ्नो पति यस निष्ठुर आज्ञाको पालन गर्नमा आनाकानी गर्छ र राजाका अधिकार अनेक यातना दिएर प्राण लिनेछन्, यस डरले त्यसकी स्त्रीले बादशाहको साथुन्ने आफ्नो छातीमा छुरा रोपी र अवरुद्ध कण्ठले भनी—'मेरो प्यारो पति ! मर्नमा दुःख हुँदैन !' अनि पतिले पनि राजाको आज्ञा पालन गर्दै आफ्नै हातले प्राण दियो र पतिपत्नी दुवैको संस्कार सँगै सम्पन्न भयो ।

कथामा भगवान् अथवा उनका भक्तहरूको कुनै कुरा ज्ञात हुन सक्तछ भने सुनाउनोस् । व्यर्थको बकवाद गरेर आयुका पवित्र क्षणलाई व्यतीत गर्नाले के लाभ ! हे अङ्ग ! संसारका
अल्पायु तर सत्यका अन्वेषक मनुष्यहरूको कल्याणार्थ मृत्युलाई हामीले पशु-बलि बनाएर यस यज्ञमा डाकिसकेका छौं । यी यमराज जबसम्म यहाँ उपस्थित छन् तबसम्म यस यज्ञभूमिमा
कोही पनि मर्नेछैन ॥६-८॥ यसैनिम्ति ठूला-ठूला ऋषिहरूले उनलाई डाकेका छन्—जसले संसारका सबै मनुष्य नारायणका लीलाले भरिएको यो अमृतमय वचन सुन्नसकून ॥९॥ अज्ञानी,
अल्पबुद्धि र अल्पायु प्राणिहरूको रात्रिको समय सुत्नमा र दिन व्यर्थका काममा बितेर जान्छन्, यसनिम्ति हजुर भगवान्‌का गुण-गान गर्नुहवस् ॥१०॥ सूतजी भन्नुहुन्छ—हे शौनक !
परीक्षित जब कुरु-जाङ्गल देशमा थिए उसैबेला तिनले सुने—मेरो राज्यमा कलि पसिसक्यो । यो अप्रिय समाचार सुन्नासाथ ती वीर राजाले आफ्नो धनुष-वाण उचाले ॥११॥ ती श्यामवर्ण-
का घोडा भएको सुन्दर रथमा बसेर अगणित रथ, घोडा, हात्ती तथा पैदल सेना लिएर दिग्विजय गर्न विचारले हिंडे ॥१२॥ पूर्व, पश्चिम, दक्षिण तथा उत्तर यी चारै दिशाहरूमा

श्रयम् ॥ अथवाऽस्य पदाम्भोजमकरन्दलिहां सताम् ॥ ६ ॥ किमन्यैरसदालापैरायुषो यदसद्व्ययः ॥ क्षुद्रायुषां नृणामङ्ग मर्त्यानामृतमिच्छताम्
॥ ७ ॥ इहोपहूतो भगवान्मृत्युः शामित्रकर्मणि ॥ न कश्चिन्म्रियते तावद्यावदास्त इहान्तकः ॥ ८ ॥ एतदर्थं हि भगवानाहूतः परमर्षिभिः ॥ अहो
नृलोके पीयेत हरिलीलामृतं वचः ॥ ९ ॥ मन्दस्य मन्दप्रज्ञस्य वयो मन्दायुषश्च वै ॥ निद्रया ह्रियते नक्तं दिवा च व्यर्थकर्मभिः ॥ १० ॥ सूत
उवाच ॥ यदा परीक्षित्कुरुजाङ्गले वसन्कलिं प्रविष्टं निजचक्रवर्तिते ॥ निशम्य वार्तामनतिप्रियां ततः शरासनं संयुगशौण्डिराददे ॥ ११ ॥ स्वलं-
कृतं श्यामतुरंगयोजितं रथं मृगेन्द्रध्वजमाश्रितः पुरात् ॥ वृतो रथाश्वद्विपपत्तियुक्तया स्वसेनया दिग्विजयाय निर्गतः ॥ १२ ॥ भद्राश्वं केतुमालं
च भारतं चोत्तरान्कुरून् ॥ किंपुरुषादीनि वर्षाणि विजित्य जगृहे बलिम् ॥ १३ ॥ तत्र तत्रोपशृण्वानः स्वपूर्वेषां महात्मनाम् ॥ प्रगीयमानं च
यशः कृष्णमाहात्म्यसूचकम् ॥ १४ ॥ आत्मानं च परित्रातमश्वत्थाम्नोऽस्त्रतेजसः ॥ स्नेहं च वृष्णिपार्थानां तेषां भक्तिं च केशवे ॥ १५ ॥ तेभ्यः
परमसन्तुष्टः प्रीत्युज्जृम्भितलोचनः ॥ महाधनानि वासांसि ददौ हारान्महामनाः ॥ १६ ॥ सारथ्यपारषदसेवनसख्यदौत्यवीरासनानुगमनस्तवन-
प्रणामान् ॥ स्निग्धेषु पाण्डुषु जगत्प्रणतिं च विष्णोर्भक्तिं करोति नृपतिश्चरणारविन्दे ॥ १७ ॥ तस्यैवं वर्तमानस्य पूर्वेषां वृत्तिमन्वहम् ॥ नातिदूरे

समुद्र-तटमा विद्यमान भद्राश्व, केतुमाल, भारत र उत्तर-कुरु नामका देशहरू विजय गरेर त्यहाँका राजाहरूसित कर ग्रहण गरे ॥१३॥ बाटोका सबै देशहरूमा त्यहाँका निवासीको मुखबाट
आफ्ना महात्मा पूर्वजहरू तथा भगवान् कृष्णको माहात्म्य सुन्दै जान्थे ॥१४॥ त्यहीं नै उनले यो वृत्तान्त पनि सुने—अश्वत्थामा आफ्नो ब्रह्मास्त्रले मलाई आमाको कोखिमै
पोलिदिन चाहन्थे, तर भगवानले रक्षा गर्नुभयो । भगवान्‌मा तिनका पूर्वज पाण्डवहरू र यदुवंशीहरूको कति स्नेह थियो—यो कुरा पनि त्यहीं थाहा पाए ॥ १५ ॥ यो पवित्र कथा सुनेर
उनलाई ठूलो आनन्द प्राप्त भयो र उनका प्रेमले नेत्र प्रफुल्लित भए । वार्ता सुनाउनेहरूलाई उनले धेरै धन वस्त्र र उपहार प्रदान गरे ॥ १६ ॥ कसैद्वारा उनले श्रीकृष्ण पाण्डव-
हरूका सारथी हुने, पार्षद बन्ने, अनुचर बन्ने, मैत्रीको पालन गर्ने, रातमा वीरासनले पहरा दिने, पछि-पछि हिंड्ने र स्तुति एवं प्रणाम गर्ने वृत्तान्त पनि सुने, जसले भगवान

कृष्णका चरणमा तिनको अटल श्रद्धा भयो ॥१७॥ यस प्रकार आफ्ना पूर्वजहरूको पदानुसरण गर्दै केही दिनपछि महाराज परीक्षितको अगाडि यौटा आश्चर्यजनक घटना घट्यो त्यो सुन ॥१८॥ यस प्रकार राजाले देखे–केवल यौटै खुट्टाले लंग्याएर हिँड्ने वृषभरूपधारी धर्म तथा रोइरहेकी र उसको बच्चा हराएको होस्, त्यस्तो आमा झैं खिन्न गोरूपधारिणी पृथ्वीको नजीकै गएर सोध्नलागे–॥१९॥ हे गाई ! तिमी राम्री छौ ? तर तिमी खिन्न झैं देखिन्छ्यौ । मुख सुकेजस्तो छ । मलाई त यस्तो अनुभव भइरहेको छ कि तिम्रो हृदयमा कुनै असह्य पीडा उठिरहेको छ । हे माता ! के तिम्रो कुनै घनिष्ठ बन्धु कतै टाढा गएको छ, जसको निम्ति तिमी दुःखी भइरहेकी छौ ? अथवा मेरा तीन खुट्टा भाँचिइसकेका छन्, यसनिम्ति खिन्न छौ ? अथवा शूद्रगण कहीं समयमा तिमीमाथि शासन गर्नेछन् भन्ने विचार गर्दैछौ ? अथवा देवताहरूको यज्ञ-भाग खोसिरहेको छ, यसनिम्ति विकल छौ ? अथवा बेलामा पानी नपर्नाले दुःखिनी प्रजाको क्लेश तिमीलाई व्याकुल पारिरहेको छ ॥२०-२१॥ हे पृथ्वी ! वर्तमानसमयमा पुरुष आफ्ना स्त्रीहरूलाई र पिता आफ्ना छोराहरूको रक्षा गर्दैनन्

किलाश्चर्यं यदासीत्तन्निबोध मे ॥ १८ ॥ धर्मः पदैकेन चरन्विच्छायामुपलभ्य गाम ॥ पृच्छति स्माश्रुवदनां विवत्सामिव मातरम् ॥ १९ ॥ धर्म उवाच ॥ कच्चिद्भद्रेऽनामयमात्मनस्ते विच्छायाऽसि म्लायतेषन्मुखेन ॥ आलक्षये भवतीमन्तराधिं दूरे बन्धुं शोचसि कञ्चनाम्ब ॥ २० ॥ पादैर्न्यूनं शोचसि मैकपादमात्मानं वा वृषलैर्भोक्ष्यमाणम् ॥ अहो सुरादीन्हृतयज्ञभागान्प्रजा उतस्विन्मघवत्यवर्षति ॥ २१ ॥ अरक्ष्यमाणाः स्त्रिय उर्वि बालाञ्छोचस्यथो पुरुषादैरिवार्तान् ॥ वाचं देवीं ब्रह्मकुले कुकर्मण्यब्रह्मण्ये राजकुले कुलाग्र्यान् ॥ २२ ॥ किं क्षत्रबन्धून्कलिनोपसृष्टान्राष्ट्राणि वा तैरवरोपितानि ॥ इतस्ततो वाऽशनपानवासःस्नानव्यवायोन्मुखजीवलोकम् ॥ २३ ॥ यद्वाऽम्ब ते भूरि भरावतारकृतावतारस्य हरेर्धरित्रि ॥ अन्तर्हितस्य स्मरसि विसृष्टा कर्माणि निर्वाणविलम्बितानि ॥ २४ ॥ इदं ममाचक्ष्व तवाधिमूलं वसुन्धरे येन विकर्शिताऽसि ॥ कालेन वा ते बलिनां बलीयसा सुरार्चितं किं हृतमद्य सौभगम् ॥ २५ ॥ धरण्युवाच ॥ भवान्हि वेद तत्सर्वं यन्मां धर्मानुपृच्छसि ॥ चतुर्भिर्वर्तसे येन पादै-

र ती स्त्री-पुत्रहरूलाई मनुष्यभक्षी दैत्य झैं निर्दयी पुरुष कष्ट दिइरहेका छन् ? के यसैले तिमी व्याकुल छौ ? आज वेदवाक्य दुराचारी ब्राह्मणका अधीन र उत्तम ब्राह्मण राजाको सेवक भएका छन् यसैले तिमीलाई दुःख भइरहेको छ ? ॥२२॥ आज त कलिको फेला परेका क्षत्रियाधम राजा विमुख भएका प्रजाको धनले आफ्नो वासना पूर्ण गर्दै राज्यको शक्तिलाई नष्ट पारिरहेका छन् । ती आफ्ना प्रजाको रक्षा गर्न छाडेर तामसी भोजन, रक्सी, रात्रा र उत्ताउला वस्त्र, सुगन्धित जलले स्नान र मैथुनलाई श्रेष्ठ ठान्दछन् । तिनैका कुकर्महरूको त तिमी चिन्ता गरिरहेकी छैनौ ? ॥२३॥ अथवा हे माता ! तिम्रो भार हरण गर्न आएका नारायण यहाँबाट गइसके र तिमी उनका सराहनीय कामहरूको, जसको विचार गर्नाले मोक्षको आनन्द प्राप्त हुन्छ–स्मरण गर्दै उनको वियोगमा रोइरहेकी छौ ? हे वसुन्धरे ! तिम्रो हृदयमा कुन वेदना छ र जसले गर्दा तिमी यस प्रकार दुःखी छौ, त्यो सबै कुरा सुनाऊ । हे अम्ब ! सबभन्दा प्रबल कलिले त तिम्रो सौभाग्य खोसेर लिएन ? ॥२४॥ पृथ्वी बोलिन्—हे धर्म ! तिमी यो मसित जे कुरा सोधिरहेका छौ, त्यो सबै तिमीलाई ज्ञात छ भगवान् श्रीकृष्णचन्द्रको

प्रतापले तिम्रा तप, दया, शौच र सत्यरूपी चार पाउ थिए, त्यसले संसारका प्राणीहरूको कल्याण हुन्थ्यो ॥२५-२६॥ जुन नारायणमा सत्य, शौच, दया, क्षमा, सन्तोष, कोमलता, शम ( मनको निश्चलता ), दम ( बाह्य इन्द्रियहरूको स्थिरता ), समता, अर्काका अपराध सहन सक्नु उदासीनता, शास्त्र विचारणा ॥२७॥ आत्मज्ञान, विरक्ति ( तृष्णाको अभाव ), ऐश्वर्य ( सबैलाई आफ्नो नियन्त्रणमा राख्ने शक्तिले सम्पन्न हुनु ) शौर्य ( संग्राममा उत्साह राख्नु ), तेज ( प्रभाव ), बल ( पराक्रम ), स्मृति ( कर्तव्याकर्तव्यको निर्णय गर्नु ) स्वतन्त्रता, कौशल ( प्रत्येक कार्यमा निपुणता ), सौन्दर्य, धैर्य, मार्दव ( कोमल स्वभाव ) ॥२८॥ प्रागल्भ्य ( अतिशय ढीट हुनु ), प्रश्रय ( विनय ), शील ( सुस्वभाव ), मनले ज्ञानेन्द्रिय र कर्मेन्द्रिय द्वारा हुने कर्महरूको निर्णयमा पटु हुनु, भग ( भोगहरूको अधिकारी हुनु ), गाम्भीर्य ( आकुलताको अभाव ), स्थैर्य ( अचञ्चलता ), आस्तिक्य ( श्रद्धा ), कीर्ति ( यश ), मान ( पूज्यत्व ) र यी सबै भए पनि अहङ्कारको अभाव हुन्—॥२९॥ यी र यी बाहेक पनि उनमा कहिल्यै नष्ट नहुने अगणित गुणगण विद्यमान रहने गर्दथे

लोकसुखावहैः ॥ २६ ॥ सत्यं शौचं दया क्षान्तिस्त्यागः सन्तोष आर्जवम् ॥ शमो दमस्तपः साम्यं तितिक्षोपरतिः श्रुतम् ॥ २७ ॥ ज्ञानं विरक्ति-रैश्वर्यं शौर्यं तेजो बलं स्मृतिः ॥ स्वातन्त्र्यं कौशलं कान्तिर्धैर्यं मार्दवमेव च ॥ २८ ॥ प्रागल्भ्यं प्रश्रयः शीलं सह ओजो बलं भगः ॥ गाम्भीर्यं स्थैर्यमास्तिक्यं कीर्तिर्मानोऽनहंकृतिः ॥ २९ ॥ एते चान्ये च भगवन्नित्या यत्र महागुणाः ॥ प्रार्थ्या महत्त्वमिच्छद्भिर्न वियन्ति स्म कर्हिचित् ॥ ३० ॥ तेनाहं गुणपात्रेण श्रीनिवासेन साम्प्रतम् ॥ शोचामि रहितं लोकं पाप्मना कलिनेक्षितम् ॥ ३१ ॥ आत्मानं चानुशोचामि भवन्तं चा-मरोत्तमम् ॥ देवान्पितॄनृषीन्साधून्सर्वान्वर्णांस्तथाऽऽश्रमान् ॥ ३२ ॥ ब्रह्मादयो बहुतिथं यदपाङ्गमोक्षकामास्तपः समचरन्भगवत्प्रपन्नाः ॥ सा श्रीः स्व-वासमरविन्दवनं विहाय यत्पादसौभगमलं भजतेऽनुरक्ता ॥ ३३ ॥ तस्याहमब्जकुलिशांकुशकेतुकेतैः श्रीमत्पदैर्भगवतः समलंकृताङ्गी ॥ त्रीनत्यरोच उपलभ्य ततो विभूतिं लोकान्स मां व्यसृजदुत्स्मयतीं तदन्ते ॥ ३४ ॥ यो वै ममातिभरमासुरवंशराज्ञामक्षौहिणीशतमपानुददात्मतन्त्रः ॥ त्वां दुः-स्थमूनपदमात्मनि पौरुषेण संपादयन्यदुषु रम्यमबिभ्रदङ्गम् ॥ ३५ ॥ का वा सहेत विरहं पुरुषोत्तमस्य प्रेमावलोकरुचिरस्मितवल्गुजल्पैः ॥

॥३०॥ गुणहरूका एकमात्रपात्र र लक्ष्मीका पति नारायणदेखि शून्य, पापमा गाडिएका संसारका प्राणिहरूलाई देखेर म शोक गरिरहेकी छु ॥३१॥ एवं आफूलाई, तिमीलाई र देवतागण, पितृगण ऋषि र साधुहरू, वर्ण र आश्रमहरूमा पापी कलिको छाया परेकाले देखेर म दुःखी भइरहेकी छु ॥३२॥ जसको कृपा-दृष्टि प्राप्त गर्नको निमित्त ब्रह्मादि देवता आदिहरूले भगवान्को चरणमा सुम्पेर धेरै समयसम्म कठोर तप गर्ने गर्दथे र लक्ष्मी पनि कमल वनको सुन्दर निवासस्थल त्यागेर उनका चरणको सौन्दर्यमा अनुरक्त भई उनको सेवामा निरत रहने गर्दथिन् ॥३३॥ कमल, कुलिश, अंकुश, केतु आदि चिह्न अंकित हुने भगवान्का जुन चरण-कमलबाट मलाई त्रिलोकमा सर्वश्रेष्ठ सम्पत्ति प्राप्त भएको थियो, जसमा मलाई गर्व थियो, आज ती नारायणका चरण अब यहाँ रहेनन् र उनको अभावमा त्यो शोभा पनि रहेन ॥३४॥ उनले असुरवंशी राजाहरूको अनेक अक्षौहिणी सेनाहरू मारेर मेरो शिरको ठूलो भारी पन्छाइदिएका थियो र तिमीलाई पनि दृढ खुट्टाले हीन देखेर तिम्रा चारै खुट्टा गर्ने गर्दै यदुवंशीहरूमा रम्य कलेवर धारण गरेका थिए ॥ ३५ ॥ उनले आफ्नो प्रेमपूर्वक हेराइले, मीठो

हास्य र मधुर वार्तालाप द्वारा सत्यभामादिका पनि गर्व खर्व गरिदिएका थिए, उनका चरणका धूलोले सुशोभित भएर म पुलकायमान भएकी थिएँ, ती पुरुषोत्तम नारायणको वियोग कसले सहन सक्छ ॥३६॥ जब पूर्ववाहिनी सरस्वती नदीको तटमा पृथ्वी र धर्म परस्पर यस्तै कुरा गरिरहेका थिए, त्यसै बेला राजर्षि परीक्षित त्यस स्थानमा पुगे ॥३७॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे पं० गौरीशंकर'वशिष्ठ'कृतनेपालीभाषा-टीकायां षोडशोऽध्यायः॥१६॥ राजा परीक्षितले कलिलाई बन्दी तुल्याउनु । सूतजी भन्दछन्—हे शौनक ! त्यहाँ परीक्षितले देखे—गोरु र गाई उभिएका छन् र राजाको वेष धारण गरेको शूद्र ती दुबैलाई कुटिरहेको छ ॥ ११ ॥ त्यो गोरु मृणाल झैं सेतो वर्णको थियो । त्यसको केवल खुट्टामात्र शेष थियो ( अरु तीन भाँचिइसकेका थिए ) त्यसैको बलमा उभिएर काँपिरहेको थियो र डरले मल-मूत्र त्याग्दै थियो , धर्मदुघा गाई पनि दीन-हीन भएर उभिएकी थिई, शूद्र त्यसलाई लातिले कुटिरहेको थियो, त्यसको बाछा पहिले नै हराइसकेको थियो, त्यो धेरै दुःखी भएकी थिई, त्यसका नेत्रबाट आँसु बगिरहेको थियो । भोकले व्याकुल त्यो

स्वैर्यं समानमहरन्मधुमानिनीनां रोमोत्सवो मम यदंघ्रिविटङ्किताया: ॥ ३६ ॥ तयोरेवं कथयतो: पृथिवीधर्मयोस्तदा ॥ परीक्षिन्नाम राजर्षि: प्राप्त: प्राचीं सरस्वतीम् ॥ ३७ ॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे पृथ्वीधर्मसंवादो नाम षोडशोऽध्याय: ॥ १६ ॥ सूत उवाच ॥ तत्र गोमिथुनं राजा हन्यमानमनाथवत् ॥ दण्डहस्तं च वृषलं ददृशे नृपलाञ्छनम् ॥ १ ॥ वृषं मृणालधवलं मेहन्तमिव बिभ्यतम् ॥ वेपमानं पदैकेन सीदन्तं शूद्रताडितम् ॥ २ ॥ गां च धर्मदुघां दीनां भृशं शूद्रपदा हताम् ॥ विवत्सामश्रुवदनां क्षामां यवसमिच्छतीम् ॥ ३ ॥ पप्रच्छ रथमारूढ: कार्तस्वरपरिच्छदम् ॥ मेघगम्भीरया वाचा समारोपितकार्मुक: ॥ ४ ॥ कस्त्वं मच्छरणे लोके बलाद्धंस्यबलान्बली ॥ नरदेवोऽसि वेषेण नटवत्कर्मणाऽद्विज: ॥ ५ ॥ कस्त्वं कृष्णे गते दूरं सह गाण्डीवधन्वना ॥ शोच्योऽस्यशोच्यान्रहसि प्रहरन्वधमर्हसि ॥ ६ ॥ त्वं वा मृणालधवल: पादैर्न्यून: पदा चरन् ॥ वृषरूपेण किं कश्चिद्देवो न: परिखेदयन् ॥ ७ ॥ न जातु पौरवेन्द्राणां दोर्दण्डपरिरम्भिते ॥ भूतलेऽनुपतन्त्यस्मिन्विना ते प्राणिनां शुच: ॥ ८ ॥ मा सौरभेयानुशुचो व्येतु ते वृषलाद्भयम् ॥ मा रोदीरम्ब भद्रं ते खलानां मयि शास्तरि ॥ ९ ॥

घास खोज्दै थिई ॥२-३॥ राजर्षि परीक्षितले त्यसलाई देखनासाथ रथ माथिर धनुष उचालेर त्यो स्वर्णभूषणधारी शूद्रलाई मेघझैं गम्भीर वाणीमा सोधे॥४॥ बाँठा नटजस्तै राजाको वेष बनाएर कर्मले चाण्डाल तँ को होस् ? जो मेरो राज्यमा आएर यी निबर्लीलाई व्यर्थ कुट्दैछस् ? ॥५॥ गाण्डीव धनुर्धारी धनञ्जय र भगवान् श्रीकृष्ण गएकाले निरपराध जीवलाई एकान्तमा कष्ट दिने तँ मेरो अपराधी होस्, म तलाई मारिदिन्छु । त्यस दुष्टलाई त्यति सोधेर राजा गोरुतिर भन्दछन्—मृणाल झैं श्वेतवर्ण र तीन खुट्टा रहित वृषको रूप धारण गरेर केवल एउटा खुट्टाले हिंड्ने तिमी कुन देवता हौ, जो यसरी दुःख पाइरहेछौ ? ॥ ६ ॥ ७ ॥ पुरुवंशीहरूका भुजदण्डले सुरक्षित देशमा तिमी झैं निरीह जीवलाई अतिशय शोकाकुल नभएका यसरी आँसु बगाउँदैन ॥८॥ हे गोरु ! तँ अब यस शूद्रसित नडरा । हे माता ! तिमी पनि नरोऊ । दुष्टहरूलाई दण्ड दिने म परीक्षित छँदाछँदै तिमीले रुनु पर्दैन

॥९॥ जुन राजाको राज्यमा ॰अन्याय हुन्छ र यस्ता दुर्जनद्वारा सताइन्छन्, त्यस मत्वाला राजाको कीर्ति, आयु र ऐश्वर्य नष्ट भएर जान्छ ॥ १० ॥ दुःखीहरूको दुःख निवारण गर्नु नै राजाको परम धर्म हो । यसनिम्ति प्राणिमात्रलाई कष्ट दिने यस शठलाई म नमारी छाड्दीन ॥११॥ हे चतुष्पद वृषभ ! तिम्रा तीन खुट्टा कसले काटिदियो ? भगवान् कृष्णका भक्त हामी हौं राजाको राज्यमा तिमी जस्ता दुःखी त कोही पनि देखिएन ॥१२॥ हे वृषभ ! तिम्रो कल्याण होस् । अब मलाई भन जसले तिम्रो रूप बिगारेर यी पवित्र विचार भएका पाण्डव-हरूको उज्ज्वल कीर्तिमा टाटो लगायो ॥१३॥ यदि तिमी—यस प्रबल शत्रुको सामुन्ने म यसको निन्दा कसरी गरौं—यस्तो विचार गरिरहेका छौ भने त्यसो नगर किन भने निरप-राध जीवहरूलाई कष्ट दिने सबै जीव ममित डराउँछन् र दुष्टहरूको दमन गर्नाले सज्जनहरूको भलो नै हुन्छ ॥ १४ ॥ मेरो राज्यमा यदि कुनै देवता पनि कुनै निरपराध प्राणीलाई

यस्य राष्ट्रे प्रजाः सर्वास्त्रस्यन्ते साध्व्यसाधुभिः ॥ तस्य मत्तस्य नश्यन्ति कीर्तिरायुर्भगो गतिः ॥१०॥ एष राज्ञां परो धर्मो ह्यार्तानामार्तिनिग्रहः ॥ अत एनं वधिष्यामि भूतद्रुहमसत्तमम् ॥ ११ ॥ कोऽवृश्चत्तव पादांस्त्रीन्सौरभेय चतुष्पद ॥ मा भूवंस्त्वादृशा राष्ट्रे राज्ञां कृष्णानुवर्तिनाम् ॥ १२ ॥ आख्याहि वृष भद्रं वः साधूनामकृतागसाम् ॥ आत्मवैरूप्यकर्तारं पार्थानां कीर्तिदूषणम् ॥ १३ ॥ जनेऽनागस्यघं युञ्जन्सर्वतोऽस्य च मद्भयम् ॥ साधूनां भद्रमेव स्यादसाधुदमने कृते ॥ १४ ॥ अनागस्स्विह भूतेषु य आगस्कृन्निरंकुशः ॥ आहर्ताऽस्मि भुजं साक्षादमर्त्यस्यापि साङ्गदं ॥ १५ ॥ राज्ञो हि परमो धर्मः स्वधर्मस्थानुपालनम् ॥ शासतोऽन्यान् यथाशास्त्रमनापद्युत्पथानिह ॥ १६ ॥ धर्म उवाच ॥ एतद्वः पाण्डवेयानां युक्तमार्ताभयं वचः ॥ येषां गुणगणैः कृष्णो दौत्यादौ भगवान् कृतः ॥१७॥ न वयं क्लेशबीजानि यतः स्युः पुरुषर्षभ ॥ पुरुषं तं विजानीमो वाक्य-

सताइरहेको छ भने त्यसको हात काटिदिनेछु, अनि अरूको विषयमा के कुरा गर्नु ॥१५॥ शास्त्रले देखाएको बाटोमा हिंड्ने, प्रजाको पालन गर्नु राजाको सर्वश्रेष्ठ धर्म हुनु र उसको त्यो पुनीत कर्तव्य हुन जान्छ—जो शास्त्र-मार्ग त्यागेर अरूलाई विना उत्क्रम गर्दछन् कष्ट दिन्छन्, तिनलाई दण्ड दिनु ॥१६॥ वृषभरूपधारी धर्मले राजासित भने—हजुर जस्ता पाण्डववंशी राजा-हरूको यो धर्म हो कि ती दुःखीहरूलाई अभयदान दिएर सान्त्वना दिउन् । हजुरका पूर्वजहरूको यी सद्गुणमा मुग्ध भएर नै साक्षात् श्रीकृष्ण भगवान्ले उनको सारथी र दूत आदिको काम गरेका थिए ॥ १७ । हे राजन् ! मलाई यो थाहा छैन—यो कुन पुरुष मलाई सताइरहेको छ र म दुःखी हुनाले हजुर जस्ता सज्जन पनि दुःखी छन् । किनकि मानिसका परि-

---

॰ उदाहरण ( अन्यायले सिंहासन हल्लिन्छ )—पूर्वकालमा राजा वसु, पर्वत र नारद यी तीन विद्यार्थी ओटै गुरुकहाँ पढ्थे । पर्वत मुनि [illegible] राजाका पुरोहित थिए । कुनै दिन पर्वत मुनि [illegible] लाई ) पढ्दैरहेका थिए । प्रसंगवश 'अज' शब्द आयो । त्यसको अर्थ पर्वत मुनिले बोको अर्थात् [illegible] पर्छ भने । नारदले भने—'गुरुजीले यसो अर्थ गर्नु भएको थिएन । उनले भनेका थिए—'जो [illegible] न [illegible] अज ।' अर्थात् फेरि नउम्रोस् ।' यज्ञमा होम गरिने 'धान' भन्ने अर्थ गर्नुभएको थियो । पर्वत मुनिलाई गुरुका वचनको सम्झना भयो, तर [illegible] शिष्यहरूको मासमा सम्मान रहोस् भनी आफ्नो अर्थ मात्र सिद्ध गर्नपट्टि लागे । अब दुवैले न्यायको निम्ति राजा वसुकहाँ जाने निश्चय गरे । त्यहाँ [illegible] पर्वतकी आमाले भनिन्—'राजा वसुले यदि सत्य कुरा भनिदिए भने तँ झूटा हुनेछस् ।' पर्वतले भने—'उसो भए तिमी वसुकहाँ जाऊ र भन मेरै अर्थलाई ठीक हो भनून् ।' पर्वतकी आमा राजाकहाँ पुगिन् । कुरा सुनेर पहिले वसुले अस्वीकार गरिदिए तर पछि गुरुपत्नी र गुरुपुत्रको मान राख्नका लागि झूटो बोल्न स्वीकार गरे । उसै बखत पर्वत र नारद पनि आइपुगे र तिनले राजा वसुलाई सोधे—'अज शब्दको अर्थ गुरुले के भन्नुभएको थियो ?' राजाले पर्वतको पक्ष लिएर 'बोको' भन्ने अर्थ गरे । त्यसै बखत तिनको राजसिंहासन हल्लन लाग्यो, राजा वसु भूमिमा पछारिए । 'अन्यायले राजाको सिंहासन हल्लिन्छ' भनेको यस्तै हो ।

यस्तिै कुरा सुन्नाले नै हामी भ्रममा पर्यौं ॥१७॥ अनेक योगी जनको कथन छ–प्राणी आफ्नो सुख-दुःखको कारण स्वयं हुन्छ । अरु कसैले कसैलाई कष्ट दिंदैन । 'आत्मैव रिपुरात्मनः' कतिपय व्यक्ति भाग्यलाई दोष दिन्छन् । कोही कर्मलाई सुख-दुःखको कारण भन्दछन् र केही व्यक्ति स्वभावलाई नै सुख-दुःखको निमित्त भन्दछन् ॥ १९ ॥ यसनिम्ति म तर्कद्वारा न त्यसलाई मनोगोचर गर्न सक्छु, न त्यो वचन-गोचर नै हुन सक्छ । अतः हजुर स्वयं त्यसलाई खोज्नुहवस्-खोज्नुहवस्-जो हामीलाई दुःख दिन्छ ॥ २० ॥ सूतजी भन्दछन्—हे शौनक ! यस प्रकार धर्मका कुरा सुनेर राजा परीक्षितले आफ्नो मन एकाग्र पारेर केही बेरसम्म विचार गरे । त्यसपछि प्रसन्न भएर भन्नलागे—॥२१॥ हे धर्मज्ञ ! तिमी वृषरूप धारण गरेका साक्षात् धर्म नै हौ र जानी जानीकन त्यस अधर्मलाई भन्न चाहन्नौ किनकि अधर्म गर्ने प्राणीको स्थान बताउने पनि अधर्मको भागीदार हुन्छ ॥ २२ ॥ अथवा अस्तो तिमी भनिरहेका छौ ईश्वरको मायाको गति अलक्ष्य हुन्छ, त्यसलाई कसैले मन र वचनले पनि बुझ्न सक्तैन । यो निश्चित छ ॥ २३ ॥ तप, शौच, दया र सत्य यी तिम्रा चार पाउ थिए ।

भेदविमोहिताः ॥ १८ ॥ केचिद्विकल्पवसना आहुरात्मानमात्मनः ॥ दैवमन्ये परे कर्म स्वभावमपरे प्रभुम् ॥ १९ ॥ अतर्क्यादनिर्देश्यादिति केष्वपि निश्चयः ॥ अत्रानुरूपं राजर्षे विमृश स्वमनीषया ॥ २० ॥ सूत उवाच ॥ एवं धर्मे प्रवदति स सम्राड् द्विजसत्तम ॥ समाहितेन मनसा विखेदः पर्यचष्ट तम् ॥ २१ ॥ राजोवाच ॥ धर्मं ब्रवीषि धर्मज्ञ धर्मोऽसि वृषरूपधृक् ॥ यदधर्मकृतः स्थानं सूचकस्यापि तद्भवेत् ॥ २२ ॥ अथवा देवमायाया नूनं गतिरगोचरा ॥ चेतसो वचसश्चापि भूतानामिति निश्चयः ॥२३॥ तपः शौचं दया सत्यमिति पादाः प्रकीर्तिताः ॥ अधर्मांशैस्त्रयो भग्नाः स्मयसङ्गमदैस्तव ॥२४॥ इदानीं धर्म पादस्ते सत्यं निर्वर्तते यतः ॥ तं जिघृक्षत्यधर्मोऽयमनृतेनैधितः कलिः ॥ २५ ॥ इयं च भूर्भगवता न्यासितोरुभरा सती ॥ श्रीमद्भिस्तत्पदन्यासैः सर्वतः कृतकौतुका ॥ २६ ॥ शोचत्यश्रुकला साध्वी दुर्भगेवोज्झिताऽधुना ॥ अब्रह्मण्या नृपव्याजाः शूद्रा भोक्ष्यन्ति मामिति ॥२७॥ इति धर्मं महीं चैव सान्त्वयित्वा महारथः ॥ निशातमाददे खड्गं कलयेऽधर्महेतवे ॥ २८ ॥ तं जिघांसुमभिप्रेत्य विहाय नृपलाञ्छनम् ॥ तत्पादमूलं शिरसा समगाद्भयविह्वलः ॥२९॥ पतितं पादयोर्वीक्ष्य कृपया दीनवत्सलः ॥ शरण्यो नावधीच्छ्लोक्य आह चेदं हसन्निव ॥३०॥

त्यसबाट तीनलाई संयम, संग र मद अधर्मका यी तीन अंशले भाँचिदिएको छ ॥२४॥ हे धर्म ! अब सत्यरूपी पाउ तिम्रो रहेको छ । त्यो असत्यको आश्रयबाट हुर्केको यो कलियुग तिम्रो त्यस बचेको त्यो खुट्टा पनि भाँचिन खोजिरहेको छ ॥२५॥ जसको भार भगवानले स्वयं उतारि दिनु भएको थियो जसको चरणका चारैतिर भ्रमण गरेर उनले विविध-प्रकारका कौतुक गरेका थिए, उसले गर्दा यो सबै तरहले मङ्गलमयी भएकी थिइन् ॥२६॥ उनै साध्वी पृथ्वी आज त्यक्त(परि)त्यक्ता अभागिनी झैं आँखाबाट आँसु बगाउंदै यसनिम्ति विलाप गरि-रहेकी छिन् कि भविष्यमा नृपवेषधारी शूद्र राजागण मलाई भोग्नेछन् ॥ २७ ॥ धर्म र पृथ्वीलाई यसरी आश्वासन दिएर महारथी राजा परीक्षितले त्यस अधर्मको मूल कारण कलिलाई मार्नको निम्ति आफ्नो तीक्ष्ण खड्ग उचाले ॥२८॥ अब महाराजले मलाई नमारी छाड्दैनन् भन्ने देखेपछि कलिले राजवेष त्यागिदियो र भयले काम्दै उनका पाउमा शिर राखेर लुटपुटिन लाग्यो ॥२९॥ दीनवत्सल राजाले जब देखे—अब यो दीन हीन बन्यो—तब उनले त्यसलाई मार्ने विचार त्यागिदिए र हाँस्तै भन्नलागे—॥३०॥ पार्थका वंशज राजाहरूको

हात जोरिदिने ( शरणागतहरू ) लाई कुनै पनि भय रहन्न, तर आजदेखि तिमी फेरि कहिल्यै मेरो राज्यमा नदेखिनु, किनकि तिमीलाई अधर्म नै प्रिय छ ॥३१॥ जब तिमी यहाँका राजाहरूको शरीरमा घर गर्दछौ तब लोभ, असत्य, चोरी, दुराचार, स्वधर्म, त्याग, अमङ्गल, कपट, कलह र पाखण्डरूपी विविध प्रकारका अधर्म आइपुग्दछन् ॥३२॥ हे अधर्मका सखा ! हाम्रो देशमा मानिस अनेक थरिका यज्ञ गरेर नारायणको पूजा गर्दछन्, सत्य र धर्मलाई आफ्नो श्रेष्ठ नेता मानेर उसकै अनुसरण गर्दछन्, त्यहाँ तिम्रो अस्तित्व कुनै प्रकारले वान्छनीय हुन सक्तैन ॥३३॥ जुन देशमा यज्ञमूर्ति नारायणको नित्य पूजा गरिन्छ, त्यहाँ ती नारायण सबैका सबै तरहका इच्छाहरू पूर्ण गरिदिंदै उनको कल्याण गर्दछन् । जहाँका निवासीहरूको हृदयमा बाहिर-भित्र रहने वायुको समान ती भगवान् विराजमान रहन्छन्, त्यहाँ तिमी कसरी बस्न सक्छौ ? ॥३४॥ सूतजी भन्दछन्-हे शौनक ! हातमा तरवार लिएर यमराज समान दण्डाघात गर्न उभिएका परीक्षितको त्यो आज्ञा सुनेर कलियुग थर-थर काम्न लाग्यो ॥३५॥ कलि बोल्यो—हे चक्रवर्तिन् ! यस्तो स्थितिमा त म जहाँ बस्नेछु, त्यहाँ धनुष

राजोवाच ॥ न ते गुडाकेशयशोधराणां बद्धाञ्जलेर्वै भयमस्ति किञ्चित् ॥ न वर्तितव्यं भवता कथञ्चन क्षेत्रे मदीये त्वमधर्मबन्धुः ॥ ३१ ॥ त्वां वर्तमानं नरदेव देहेष्वनुप्रवृत्तोऽयमधर्मपूगः ॥ लोभोऽनृतं चौर्यमनार्यमंहो ज्येष्ठा च माया कलहश्च दम्भः ॥ ३२ ॥ न वर्तितव्यं तदधर्मबन्धो धर्मेण सत्येन च वर्तितव्ये ॥ ब्रह्मावर्ते यत्र यजन्ति यज्ञैर्यज्ञेश्वरं यज्ञवितानविज्ञाः ॥ ३३ ॥ यस्मिन्हरिर्भगवानिज्यमान इज्यामूर्तिर्यजतां शं तनोति ॥ कामानमोघान्स्थिरजंगमानामन्तर्बहिर्वायुरिवैष आत्मा ॥ ३४ ॥ सूत उवाच ॥ परीक्षितैवमादिष्टः स कलिर्जातवेपथुः ॥ तमुद्यतासिमाहेदं दण्डपाणिमिवोद्यतम् ॥ ३५ ॥ यत्र क्वचन वत्स्यामि सार्वभौम तवाज्ञया ॥ लक्षये तत्र तत्रापि त्वामात्तेषुशरासनम् ॥ ३६ ॥ तन्मे धर्मभृतां श्रेष्ठ स्थानं निर्देष्टुमर्हसि ॥ तत्रैव नियतो वत्स्य आतिष्ठंस्तेऽनुशासनम् ॥ ३७ ॥ सूत उवाच ॥ अभ्यर्थितस्तदा तस्मै स्थानानि कलये ददौ ॥ द्यूतं पानं स्त्रियः सूना यत्राधर्मश्चतुर्विधः ॥ ३८ ॥ पुनश्च याचमानाय जातरूपमदात्प्रभुः ॥ ततोऽनृतं मदं कामं रजो वैरं च पञ्चमम् ॥ ३९ ॥ अमूनि पञ्च स्थानानि ह्यधर्मप्रभवः कलिः ॥ औत्तरेयेण दत्तानि न्यवसत्तन्निदेशकृत ॥ ४० ॥ अथैतानि न सेवेत बुभूषुः पुरुषः क्वचित् ॥ विशेषतो धर्मशीलो राजा लोक-

बाण धारण गरेका हजुरलाई उभिएको देख्नेछु, अर्थात् यस्तो कुन देश छ, जहाँ हजुरको राज्य छैन, अनि म कहाँ जाऊँ ? ॥३६॥ हे धर्मात्माहरूमा श्रेष्ठ नरपति ! हजुर मलाई त्यो स्थान बताउनोस्–जहाँ हजुरको अनुशासन मान्दै म नित्यनिवास गर्नसकूँ ॥३७॥ सूतजी भन्दछन्–कलिले प्रार्थना गरपछि राजाले त्यसको निम्ति चार स्थान नियत गरे। जस्तै–जूवा, रक्सी, वेश्यालय र प्राणिहरूको मृत्यु स्थान ॥३८॥ जब उसले अरुठाउँ माग्यो तब राजाले कलिलाई सुनमा पनि स्थान दिए । सुनमा स्थान दिनाले त्यसलाई असत्य, मद, काम, रजोगुण र वैरत्व यी पाँच स्थान स्वयं प्राप्त हुनगए ॥३९॥ अधर्मबाट जायमान कलिले परीक्षितले दिएका इनै पाँच स्थानहरूमा आफ्नो डेरा जमायो र राजा परीक्षितका आज्ञाहरू पालन गर्दै रहन थाल्यो ॥४०॥ यसै निम्ति जो व्यक्ति आत्मोन्नति गर्नखोज्दछन्,ती असत्य, मद,काम, राग, वैर,मद्यपान, वेश्या, जूवा आदि कामहरूमा कहिल्यै अघि नसरुं । धर्मात्मा राजा

आफ्ना प्रजाका पथप्रदर्शक र स्वामी हुन्छन्, यसैनिम्ति कलिको जालमा नअल्झने विशेष सतर्कता राख्नु पर्दछ ॥४१॥ (यसपछि राजाले पृथ्वी र धर्मलाई शक्ति-साहस दिए) धर्मका तप, शौच र दयारूपी जुन तीन पाऊ नष्ट भइसकेका थिए, तिनलाई फेरि जोरिदिए ॥४२॥ यस बखत वन जान तत्पर आफ्ना पितामह युधिष्ठिरद्वारा अर्पित राजसिंहासनमा बसेर महाराज परीक्षित यस भूमण्डलको शासन गरिरहेका छन् ॥४३। राजर्षि परीक्षित दशै दिशामा आफ्नो कीर्ति प्रसार गर्दै चक्रवर्ती भएर हस्तिनापुरीमा निवास गर्दछन् । कुरुवंशी राजाहरूमा जुन तेज हुनुपर्दथ्यो त्यो उनमा विद्यमान छ ॥४४॥ अभिमन्युका छोरा महाराज परीक्षितको नै यो महिमा छ कि उनको सुखदायक राज्यकालमा तिमीहरू लामो अवधिमा पूर्ण हुने यज्ञको दीक्षा लिएका छौ ॥४५॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे पं० गौरीशंकर'वशिष्ठ' कृत नेपालीभाषा-टीकायां सप्तदशोऽध्यायः ॥१७॥ (शृङ्गी ऋषिद्वारा महाराज परीक्षितलाई श्राप।) सूतजी शौनकसित भन्दछन्–हे शौनक ! आमाको उदरमै अश्वत्थामाको ब्रह्मास्त्रले पिल्सिएर जुन अद्भुत कर्मठ राजा भगवान् कृष्णको कृपाले मरेनन्- ॥१॥ र आफ्नो तन

पतिर्गुरुः ॥ ४१ ॥ वृषस्य नष्टांस्त्रीन्पादांस्तपः शौचं दयामिति ॥ प्रतिसंदध आश्वास्य महीं च समवर्धयत् ॥ ४२ ॥ स एष एतर्ह्यध्यास्त आसनं पार्थिवोचितम् ॥ पितामहेनोपन्यस्तं राज्ञाऽरण्यं विविक्षता ॥ ४३ ॥ आस्तेऽधुना स राजर्षिः कौरवेन्द्रः श्रियोल्लसन् ॥ गजाह्वये महाभागश्चक्रवर्ती बृहच्छ्रवाः ॥ ४४ ॥ इत्थंभूतानुभावोऽयमभिमन्युसुतो नृपः ॥ यस्य पालयतः क्षोणीं यूयं सत्राय दीक्षिताः ॥ ४५ ॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे कलिनिग्रहो नाम सप्तदशोऽध्यायः ॥ १७ ॥ सूत उवाच ॥ यो वै द्रौण्यस्त्रविप्लुष्टो न मातुरुदरे मृतः ॥ अनुग्रहाद्भगवतः कृष्णस्याद्भुतकर्मणः ॥ १ ॥ ब्रह्मकोपोत्थिताद्यस्तु तक्षकात्प्राणविप्लवात् ॥ न संमुमोहोरुभयाद्भगवत्यर्पिताशयः ॥ २ ॥ उत्सृज्य सर्वतः सङ्गं विज्ञाताजितसंस्थितिः ॥ वैयासकेर्जहौ शिष्यो गङ्गायां स्वं कलेवरम् ॥ ३ ॥ नोत्तमश्लोकवार्तानां जुषतां तत्कथामृतम् ॥ स्यात्संभ्रमोऽन्तकालेऽपि स्मरतां तत्पदाम्बुजम् ॥ ४ ॥ तावत्कलिर्न प्रभवेत्प्रविष्टोऽपीह सर्वतः ॥ यावदीशो महानुर्व्यामाभिमन्यव एकराट् ॥ ५ ॥ यस्मिन्नहनि यर्ह्येव भगवानुत्ससर्ज गाम् ॥ तदैवेहानुवृत्तोऽसावधर्मप्रभवः कलिः ॥ ६ ॥ नानुद्वेष्टि कलिं सम्राट् सारङ्ग इव सारभुक् ॥ कुशलान्याशु सिद्ध्यन्ति नेतराणि कृतानि यत् ॥ ७ ॥ किं नु बालेषु शूरेण कलिना धीरभीरुणा ॥ अप्रमत्तः प्रमत्तेषु यो वृको नृषु वर्तते ॥ ८ ॥ उपवर्णितमेतद्वः पुण्यं पारीक्षितं मया ॥ वासुदे-

मन-धन सर्वस्व भगवान्लाई अर्पण गरेर जो तक्षकद्वारा आफ्नो मृत्यु जानेर पनि विचलित भएनन् ॥२॥ बरू ब्राह्मणको श्राप परेपछि उनले संसारबाट नाता तोडेर तथा पूर्णज्ञान प्राप्त गरेर गङ्गाजीमा आफ्नो देह त्यागे ॥३॥ भगवान्का पवित्र कथाहरू प्रेमले सुन्ने व्यक्ति अन्त्यमा भगवान्कै चरणकमलको नै ध्यान गर्दछन्, त्यसैले उसबेला पनि तिनलाई कुनै प्रकारको भ्रम हुँदैन ॥४। जबसम्म महाराज परीक्षितले राज्य गरे, तबसम्म भगवान् परमधाम सवारी भएपछि नै आएको कलियुग यस संसारमा अधर्मको विस्तार गर्नमा समर्थ भएन ॥ -६॥ ती सम्राट्ले पापी कलिलाई यस निम्ति मृत्यु-दण्ड दिएनन्–कि यस युगमा यदि कुनै पवित्र कार्यको संकल्पमात्र गरे पनि त्यो सिद्ध हुन्छ र पाप चाहिं तब सिद्ध हुन्छ जब ती मन, वचन र शरीरले गरियोस्। केवल कल्पनाले मात्र त्यसको फल भोग्नु पर्दैन ॥ ७ ॥ यसै कारण राजा परीक्षितले कलिसित द्वेष-भाव गर्दैनन् ।

किनकि कलियुग अधीर व्यक्तिका निम्ति वीर र धैर्यवान् पुरुषहरूका समक्ष स्वयं भयभीत रहन्थ्यो। त्यो प्रमादी व्यक्तिमा बुद्धिमान बनेर, चितुवा झैं प्रहार गर्दथ्यो ॥८॥ हे शौनक! मैले यहाँहरूको प्रश्नानुसार महाराज परीक्षित र श्रीकृष्णको पवित्र चरित्र वर्णन गरेर सबैलाई सुनाएँ ॥९॥ सबै शास्त्रहरूको सार यही हो—आफ्नो कल्याणको इच्छा गर्ने व्यक्तिहरूको कर्तव्य हो कि ती भगवानका जुन-जुन कथाहरू सुनुन्, तिनको आदर गर्दै त्यसै अनुसार चल्ने चेष्टा गरून् ॥१०॥ त्यसमा ऋषिले भने—हे सूतजी! तिमी अगणित वर्षसम्म बाँची रहँ किनकि तिमीले हामीहरूलाई भगवान्को जुन कीर्ति सुनायौ, त्यो हामी मर्त्यलोक निवासी मनुष्यहरूको निम्ति अमृत समान छ। (यसले यस जन्म-मरणरूपी संसारका बन्धनहरूबाट मुक्ति पाइन्छ) ॥ ११ ॥ यस अनाश्वासनीय कर्म (यज्ञ) मा लागेका हामी मलीन मन भएका व्यक्तिहरूलाई तपाईं कथारूपी अमृत पान गराउँदै हुनुहुन्छ ॥१२॥ भगवद्भक्तहरूको क्षणमात्रको समागमलाई म स्वर्ग एवं मोक्षको तुलनामा तौलन चाहन्न। फेरि संसारका विनाशशील सम्पत्तिहरूको त कुरै रहेन ॥१३॥ कुन यस्तो रसिक पुरुष होला, जो महात्माहरूका

यदुपेतमाख्यानं यदपृच्छत ॥ ९ ॥ या याः कथा भगवतः कथनीयोरुकर्मणः ॥ गुणकर्माश्रयाः पुंभिः संसेव्यास्ता बुभूषुभिः ॥१० ॥ ऋषय ऊचुः ॥ सूत जीव समाः सौम्य शाश्वतीर्विशदं यशः ॥ यस्त्वं शंससि कृष्णस्य मर्त्यानाममृतं हि नः ॥ ११ ॥ कर्मण्यस्मिन्ननाश्वासे धूमधूम्रात्मनां भवान् ॥ आपाययति गोविन्दपादपद्मासवं मधु ॥ १२ ॥ तुलयाम लवेनापि न स्वर्गं नापुनर्भवम् ॥ भगवत्सङ्गिसङ्गस्य मर्त्यानां किमुताशिषः ॥ १३ ॥ को नाम तृप्येद्रसवित्कथायां महत्तमैकान्तपरायणस्य ॥ नान्तं गुणानामगुणस्य जग्मुर्योगेश्वरा ये भवपाद्ममुख्याः ॥१४ ॥ तन्नो भवान्वै भगवत्प्रधानो महत्तमैकान्तपरायणस्य ॥ हरेरुदारं चरितं विशुद्धं शुश्रूषतां नो वितनोतु विद्वन् ॥ १५ ॥ स वै महाभागवतः परीक्षिद्येनापवर्गाख्यमदभ्रबुद्धिः ॥ ज्ञानेन वैयासकिशब्दितेन भेजे खगेन्द्रध्वजपादमूलम् ॥ १६ ॥ तन्नः परं पुण्यमसंवृतार्थमाख्यानमत्यद्भुतयोगनिष्ठम् ॥ आख्याह्यनन्ताचरितोपपन्नं पारीक्षितं भागवताभिरामम् ॥ १७ ॥ सूत उवाच ॥ अहो वयं जन्मभृतोऽद्य हास्म वृद्धानुवृत्त्याऽपि विलोमजाताः ॥ दौष्कुल्यमाधिं विधुनोति शीघ्रं महत्तमानामभिधानयोगः ॥ १८ ॥ कुतः पुनर्गृणतो नाम तस्य महत्तमैकान्तपरायणस्य ॥

पनि आराध्यदेव 'नारायण' को ती कथाहरूले तृप्ति हुन सक्दैन्—जसका गुणहरूको शिव र ब्रह्मा पनि पार पाउन सक्तैनन् ॥ १४॥ हे विद्वन्! भगवद्भक्त! हरूमा श्रेष्ठ अतः तपाईं हामीलाई महात्माहरूले सेव्य नारायणका पवित्र चरित्र सुनाउनोस्, किनकि हामी प्रेमपूर्वक त्यो सुन्न उत्सुक छौं ॥१५॥ ती बुद्धिमान महाराज परीक्षित शुक मुनिले दिएको जुन ज्ञान ले शरीर त्यागेर अपवर्ग नामक भगवानका कोमल चरण प्राप्त गर्नसके ॥१६॥ त्यही ज्ञान हामीहरूलाई पनि प्रदान गर्नुहवन, किनकि परीक्षितको निम्ति दिइएको त्यस ज्ञानमा भगवान्का चरित्र पनि सम्मिलित होलान् जुन भगवान्द्वारा भक्तहरूलाई विशेष मनपर्छ ॥ १७ ॥ यति सुनेर सूतजी भन्दछन्—हे शौनक! यहाँहरूका चरणको सेवा गर्नाले म (क्षत्रिय पिताको वीर्यद्वारा ब्राह्मणी माताको गर्भबाट उत्पन्न) विलोमज भएर पनि आफूलाई धन्य ठान्दछु। किनकि तपाईं जस्ता सज्जनसित वार्तालाप गर्नाले नै नीच कुलमा उत्पन्न हुनाले अन्तःकरणमा हुने ग्लानि नष्ट भएर जान्छ ॥ १८॥ अनि ती अनन्त भगवान् श्रीकृष्णको नाम, जसमा अनन्त शक्ति छ र महान् गुण छन्।

त्यसको चिन्तन गर्न पुरुषहरूसित सत्संग गर्ने अवसर पाइयोस्, अनि हीनकुलमा उत्पन्न भएको दोष नष्ट हुनमा के बाधा पर्न सक्छ ? ॥१९॥ जुन भगवान्‌को सदृश वा तीभन्दा बढी गुणवान् त्रिलोकमा अरु कोही छैदैछैन, जिनका महिमा को पहाँसम्म गान गर्लो ? यतिले पुग्नुहोस्—ब्रह्मादि अनेकौं चाहना गर्नेहरूलाई तिरस्कार गरेर लक्ष्मी उनै उदासीन नारायण-का चरणरजलाई शिरमा राख्दछिन् ॥२०॥ जसको चरण-नखबाट निस्केको जल शिव र ब्रह्मासमेत समस्त संसारलाई पवित्र पार्दछ, ती भगवान्‌को सामुन्ने अरु को श्रेष्ठ हुन सक्छ ? ॥२१॥ जुन भगवान्‌को भक्ति गरेर धैर्यशाली पनि आफ्नो शरीरसम्बन्धी सुदि-बुद्धि बिर्सेर अन्तिम परमहंस पदमा पुग्दछन् । जहाँ अहिंसा र उपशम स्वाभाविक धर्म बनिजान्छन् ॥२२॥ हे सूर्य समान तेजस्वी महर्षि हो ? तपाईंहरूको प्रश्न अनुसार जहाँसम्म मेरो बुद्धिले भेटेको म भगवान्‌को पवित्र चरित्र सुनाउँछु । जस्तै विस्तृत आकाशमण्डलमा पक्षीगण आफ्नो सामर्थ्य अनुसार उड्दछन्, अनि सम्पूर्ण आकाशलाई नाप्ने सामर्थ्य राख्दैन त्यसै गरी विद्वान् व्यक्ति पनि आफ्नो पहुँचसम्म मात्र भगवान्‌को गुण गाउँछन् ॥ २३ ॥ अब महाराज

योऽनन्यशक्तिर्भगवाननन्तो महद्गुणत्वाद्यमनन्तमाहुः ॥१९॥ एतावताऽलं ननु सूचितेन गुणैरसाम्यानतिशायनस्य ॥ हित्वेतरान्प्रार्थयतो विभूतिर्यस्याङ्घ्रिरेणुं जुषतेऽनभीप्सोः ॥ २० ॥ अथापि यत्पादनखावसृष्टं जगद्विरिञ्चोपहृतार्हणाम्भः ॥ सेशं पुनात्यन्यतमो मुकुन्दात्को नाम लोके भगवत्पदार्थः ॥ २१ ॥ यत्रानुरक्ताः सहसैव धीरा व्यपोह्य देहादिषु सङ्गमूढम् ॥ व्रजन्ति यत्पारमहंस्यमन्त्यं यस्मिन्नहिंसोपशमः स्वधर्मः ॥ २२ ॥ अहं हि पृष्टोऽर्यमणो भवद्भिराचक्ष आत्मावगमोऽत्र यावान् ॥ नभः पतन्त्यात्मसमं पतत्त्रिणस्तथा समं विष्णुगतिं विपश्चितः ॥ २३ ॥ एकदा धनुरुद्यम्य विचरन्मृगयां वने ॥ मृगाननुगतः श्रान्तः क्षुधितस्तृषितो भृशम् ॥२४॥ जलाशयमचक्षाणः प्रविवेश तमाश्रमम् ॥ ददर्श मुनिमासीनं शान्तं मीलितलोचनम् ॥२५॥ प्रतिरुद्धेन्द्रियप्राणमनोबुद्धिमुपारतम् ॥ स्थानत्रयात्परं प्राप्तं ब्रह्मभूतमविक्रियम् ॥ २६ ॥ विप्रकीर्णजटाच्छन्नं रौरवेणाजिनेन च ॥ विशुष्यत्तालुरुदकं तथाभूतमयाचत ॥ २७ ॥ अलब्धतृणभूम्यादिरसंप्राप्तार्घ्यसूनृतः ॥ अवज्ञातमिवात्मानं मन्यमानश्चुकोप ह ॥२८॥ अभूतपूर्वः सहसा क्षुत्तृड्भ्यामर्दितात्मनः ॥ ब्राह्मणं प्रत्यभूद्ब्रह्मन्मत्सरो मन्युरेव च ॥ २९ ॥ स तु ब्रह्मऋषेरंसे गतासुमुरगं रुषा ॥ विनिर्गच्छन्ध-

परीक्षितलाई प्राप्त श्रापको कुरा सुनाउँदै बताउँदै गर्दछन्—एक दिन महाराज परीक्षित धनुष-बाण लिएर आखेट ( शिकार ) खेल्न वनमा गए । मृगको पछि-पछि ती धेरै पर पुगे त्यसले तिनलाई थकाईको अनुभव र भोक-प्यासले दुःख दियो ॥ २४ ॥ त्यहाँ कुनै जलाशय नदेखेर ती मौंदा ऋषिको आश्रममा पसे । त्यहाँ राजा परीक्षितले देखे—ती ऋषि आँखा चिम्लेर शान्तभावले बसेका छन ॥ २५ ॥ ती ऋषि आफ्ना इन्द्रिय, प्राण, मन र बुद्धि वशमा पारेर जाग्रत्, स्वप्न र सुषुप्ति यी तीनै अवस्थाबाट अलग तुरीयावस्थामा प्राप्त भई ब्रह्ममा लीन ( समाधिस्थ ) भएर बसेका छन्—तिनमा कुनै प्रकारको विकार छैन ॥ २६ ॥ तिनको जटा फुस्केर छरिएको छ र ती काला मृगचर्म धारण गरेका छन् । यस प्रकार ध्यानपरायण मुनिलाई देखेर राजाले तीमित पानी माग्न मागे—तिनको प्यासले तिनको तालु सुकिसकेको थियो ॥२७॥ कहीं बेरसम्म उभिइरहँदा पनि जब राजालाई न आसन मिल्यो न अर्घ्यको सत्कार नै प्राप्त भयो, अनि तिनले आफूलाई अपमानित ठाने र तिनलाई रिस उठ्यो ॥ २८ ॥ भोक र प्यासले दुःखी राजा ब्राह्मण ( शमीक )

को उत्कर्ष सहन सकेनन् । यसनिमित्त तिनको हृदयमा ईर्ष्या र क्रोध दुवै उत्पन्न भए ॥ २९ ॥ अब त्यस स्थानमा अहिलु अनुचित ठानेर फरक फर्के । फर्कनासाथ तिनको मनमा अकस्मात् के विचार उठ्यो कि तिनले धनुषको टुप्पाले काँटा मरेको सर्प उचालेर महर्षि शमीकको काँधमा हालिदिए ॥३०॥ यस विचारले तिनले ऋषिको काँधमा हालेका थिए कि हेरौं यी साच्चै नै समाधिमा छन् वा मलाई देखेर मेरो आतिथ्य सत्कार गर्नबाट जोगिनको लागि यो स्वाङ पारेर बसेका हुन् । त्यसपछि राजा त्यहाँबाट हिंडेर आफ्नो नगरमा फर्केर आइपुगे । केही बेरपछि ती महर्षि शमीकका तेजस्वी छोरा शृङ्गीले–जो आश्रमका बालकहरूसित खेलिरहेका थिए–केही बालक द्वारा आफ्ना पिता अपमानित भएको कुरा सुने । त्यसले क्रोधित भएर भने–प्रजाबाट कर लिएर मोटो बनेका यी राजाहरूको अधर्म त हेर ! मेरो पिताप्रति यी राजाको दुर्व्यवहार उसै प्रकारको छ, जस्तै बलि खाने काग बलि प्रदान गर्नलाई नै विष्ठा वा मूत्रले अपवित्र पारिदिउन् वा स्वामीको अर्कले पालिएको सेवक वा ढोकामा रखाका निमित्त नियुक्त कुकुरस्वामीलाई नै हाई गरोस् ॥३१-३२॥ स्वामीस्वरूप हामी ब्राह्मणहरूले क्षत्रियहरूलाई कुकुर जैं द्वारपाल तुल्याएर उभ्याएको छ । अनि त्यो पवित्र भाँडामा राखेको पदार्थ त्यो स्वेच्छाले कसरी खान सक्छ ? त्यसले त त्यो गाँसमै सन्तोष गर्नुपर्दछ, जो

नुःकोट्या निधाय पुरमागतम् ॥ ३० ॥ एष किं निभृताशेषकरणो मीलितेक्षणः ॥ मृषा समाधिराहोस्वित्किं न स्यात्क्षत्रबन्धुभिः ॥ ३१ ॥ तस्य पुत्रोऽतितेजस्वी विहरन्बालकोऽर्भकैः ॥ राज्ञाघं प्रापितं तातं श्रुत्वा तत्रेदमब्रवीत् ॥३२॥ अहो अधर्मः पालानां पीव्नां बलिभुजामिव ॥ स्वामिन्यघं यद् दासानां द्वारपानां शुनामिव ॥३३॥ ब्राह्मणैः क्षत्रबन्धुर्हि द्वारपालो निरूपितः ॥ स कथं तद्गृहे द्वाःस्थः सभाण्डं भोक्तुमर्हति ॥ ३४ ॥ कृष्णे गते भगवति शास्तर्युत्पथगामिनाम् ॥ तद्भिन्नसेतूनद्याहं शास्मि पश्यत मे बलम् ॥३५॥ इत्युक्त्वा रोषताम्राक्षो वयस्यानृषिबालकान् ॥ कौशिक्याप उपस्पृश्य वाग्वज्रं विससर्ज ह ॥३६॥ इति लङ्घितमर्यादं तक्षकः सप्तमेऽहनि ॥ दङ्क्ष्यति स्म कुलाङ्गारं चोदितो मे ततद्रुहम् ॥३७॥ ततोऽभ्येत्याश्रमं बालो गले सर्पकलेवरम् ॥पितरं वीक्ष्य दुःखार्तो मुक्तकंठो रुरोद ह ॥३८॥ स वा आङ्गिरसो ब्रह्मञ्छ्रुत्वा सुतविलापनम् ॥ उन्मील्य शनकैर्नेत्रे दृष्ट्वा स्वांसे मृतोरगम् ॥३९॥ विसृज्य पुत्रं पप्रच्छ वत्स कस्माद्धि रोदिषि ॥ केन वा ते प्रतिकृतमित्युक्तः स न्यवेदयत् ॥४०॥ निशम्य शप्तमतदर्हं नरेन्द्रं स ब्राह्मणो

त्यसका अधिपतिहरू क्याँचि दिइन्छ ॥३४॥ उत्पथगामी दुष्टहरूमा शासन गर्ने भगवान श्रीकृष्णचन्द्र परलोक गएपछि यी दुष्टहरूले मर्यादा भंग गर्ने निश्चय गरेका छन् । आज म स्वयं त्यसलाई दण्ड दिन्छु, तिमीहरू मेरो बल हेर ॥३५॥ रातो-रातो आँखा पारेर आफ्ना समवयस्क ऋषिपुत्रहरूसित त्यति भनेर ती ब्राह्मण-बालकले कौशिकी नदीको जल आचमन गरी आफ्नो वचनरूपी वज्र प्रहार गर्दै ती यस प्रकार भन्न लागे—॥३६॥ यसरी मर्यादाको उल्लङ्घन गर्ने त्यस कुलाङ्गार राजालाई आजको सातौं दिन मद्वारा प्रेरित तक्षक नामले टोक्ने छ, जसले ती मरनछन् ॥३७॥ त्यसपछि ती आफ्नो आश्रममा आए र पिताको काँधमा मरेको सर्प देख्दा दुःखी भएर कराइ-कराइ रुन लाग्यो ॥३८॥ अङ्गिराका छोरा महर्षि शमीकले छोरो त्यसरी रोएको सुनेर समाधि भङ्ग भयो । बिस्तार-बिस्तार आँखा उघिए अनि उनले आफ्नो काँधमा मरेको सर्प देखे ॥३९॥ त्यसलाई फ्याँकेर महर्षि आफ्नो छोरासित भन्नलागे–तँ किन रोइरहेको छस् ? बाबु, कसैले केही अपराध गर्‍यो ? अनि त्यो बालकले सरल स्वभावबाट सबै वृत्तान्त सुनाइदियो ॥ ४० ॥ श्रापको कुरा सुनेर महर्षि

शमीक सार्है दुःखी भए । तिनले आफ्नो छोरोको आपको समर्थन गरेनन् र भने—'हे अज्ञानी बालक ! तैंले सार्है ठूलो पाप गरिदिइस् । थोंटा साधारण अपराधको तैंले राजालाई ठूलो दण्ड दिइस् ॥४१॥ ए काँचो बुद्धिको बालक ! विष्णुको समान प्रभावशाली त्यो राजालाई तैंले साधारण मनुष्य ठान्नु हुँदैनथ्यो । फेरि थोंटा यस्तो राजालाई मनुष्य ठान्नु त ठूलो भूल हो, उनको प्रभावले राज्यका सारा प्रजा सुख पाइरहेका छन् ॥४२॥ जब त्यो विष्णुभक्त राजा रहने छैन तब सेना विहीन राजा जस्तै यो प्रजा चारैतिर डाकाहरुद्वारा लुटिने छन् । मानिस यसमाई अनाथ भएर मनपर्दो ढङ्गले सताउन लाग्नेछन् ॥४३॥ स्वामी नष्ट भएपछि प्रजामा जब चोरहरुको संख्या बढ्नेछ तब प्रजाको धन, पशु र स्त्रीहरु लुटिन थाल्नेछन् । दुःखी प्रजा आपुसमा लडेर मर्नेछन् र थोंटाले अर्कोलाई जाती र गाली भन्नेछन्, यसको सबै पाप हामीमाथि आइलाग्ने छ ॥४४॥ राजाको अभावमा शास्त्रोक्त

नात्मजमभ्यनन्दत् ॥ अहो बतांहो महदद्य ते कृतं स्वल्पीयसि द्रोह उरुर्दमो धृतः ॥ ४१ ॥ न वै नृभिर्नरदेवं पराख्यं संमातुमर्हस्यविपक्वबुद्धे ॥ यत्तेजसा दुर्विषहेण गुप्ता विन्दन्ति भद्राण्यकुतोभयाः प्रजाः ॥ ४२ ॥ अलक्ष्यमाणे नरदेवनाम्नि रथाङ्गपाणावयमङ्ग लोकः ॥ तदा हि चौरप्रचुरो विनङ्क्ष्यत्यरक्ष्यमाणोऽविवरूथवत्क्षणात् ॥ ४३ ॥ तदद्य नः पापमुपैत्यनन्वयं यन्नष्टनाथस्य वसोर्विलुम्पकात् ॥ परस्परं घ्नन्ति शपन्ति वृञ्जते पशू-स्त्रियोऽर्थान्पुरुदस्यवो जनाः ॥ ४४ ॥ तदार्यधर्मश्च विलीयते नृणां वर्णाश्रमाचारयुतस्त्रयीमयः ॥ ततोऽर्थकामाभिनिवेशितात्मनां शुनां कपीनामिव वर्णसंकरः ॥४५॥ धर्मपालो नरपतिः स तु सम्राड् बृहच्छ्रवाः ॥ साक्षान्महाभागवतो राजर्षिर्हयमेधयाट् ॥ क्षुत्तृट्श्रमयुतो दीनो नैवास्मच्छापमर्हति ॥ ४६ ॥ अपापेषु स्वभृत्येषु बालेनापक्वबुद्धिना ॥ पापं कृतं तद्भगवान्सर्वात्मा क्षन्तुमर्हति ॥४७॥ तिरस्कृता विप्रलब्धाः शप्ताः क्षिप्ता हता अपि ॥

वर्णाश्रम व्यवस्था नष्ट हुनेछ र आर्यधर्म लुप्त हुनेछ । मनुष्य कुकुर र बाँदर जस्तै काम-वासनामा आसक्त हुनेछन् र सारा प्रजा वर्णसङ्कर हुनेछन् ॥४५॥ राजा परीक्षित ठूला यशस्वी र धर्मात्मा सम्राट् छन् । ती असाधारण भगवद्भक्त छन् र उनले अश्वमेध यज्ञ पनि गरेका छन् । त्यस बखत ती बिचरा भोक-प्यास र थकाईले व्यग्र थिए, मैले उनको आतिथ्य सत्कार गर्न सकिन । ज्ञात भइरहेको छ कि यसै कारण तिनले यस्तो गरे । जे होस्, बाबु ! उनलाई हामीतिरबाट श्राप त कुनै प्रकारले पनि दिन उचित थिएन । त्यसपछि ती महर्षि भगवान्सित प्रार्थना गर्दै भन्नलागे—हाम्रो पवित्र आत्मा भएका ऋषिहरुमध्ये यो तुच्छ-बुद्धि बालकले सार्है ठूलो पाप गरिदियो । हे भगवन् ! हजुर यसलाई क्षमा गर्नुहवस् ॥४६-४७॥

* उदाहरण । अतिथि-सत्कार —कौन गाउँमा म यस भक्त बस्तथे । तिनका कुनै सन्तान थिएनन् । ती ईश्वरको भक्तिमै आफ्ना दिन बिताउँदथे । एक दिन सायंकालमा कोही अज्ञात अतिथिले तिनको घरमा डेरा दिन भने । रातिमा ती अतिथि सार्है बिरामी परे । भक्त दुई रातसम्म नसुती उभिएर ती अतिथिको चाकरी गर्दैरहे । तेस्रो रातमा अतिथिको स्थिति केही सञ्चो देखेर भक्त पल्टिए, त्यसै बखत अतिथि कराए—'हे ईश्वर ! यस्ता क्रूरको घरमा तिमीले मलाई किन पठायौ ? यहाँ त मेरो कुरा सुन्ने कोही छैन ।' यति सुनेर भक्तको पत्नी भक्ति-वत्सल कुतर्कको सेवा हामीले गर्नु पर्ने थियो । सुन, यी के भनिरहेको छ ? यसको चाकरी गर्नाले के काम हुनेछ ? तिमीले गरेको उपकारमा यो अपकार भन्दैछ ।' भक्तले भने—'यो बिचरा बीमारीको कारण यस्तो भनिरहेको छ । त्यसमाथि पनि गर्नु पर्ने छ, फेरि हामी यसलाई सुखी तुल्याउन गरिरहेका छैनौं, हामीले त ईश्वरलाई प्रसन्न पार्नु छ र ईश्वर हामीमाथि प्रसन्न भै हेर्नुहुन्छ, समय म पनि बिरामी परिसक्ने थिएँ । हेर, मेरो शरीर कति राम्रो छ, यो ईश्वरीय कृपा बाहेक अरु के हो ?' भक्तको यस्तो मनोभाव तिनकी स्वास्नी हुनिन् । अब ती दुवै सतर्क भएर सेवा गर्नलागे । जब अतिथि तिनको घरदेखि जान लागे तब आशीर्वाद दिएँ गए, त्यसैले भक्तलाई पुत्र-रत्न प्राप्त भयो ।

अनेपछि तिनकी श्रीले बुझिन् । अब ती दुवै सतर्क भए र सेवा गर्नथाले । जब अतिथि तिनी भएर घर जान लागे तब आशीर्वाद दिदै गए, जसैले भाग्यवश पुत्र-रत्न प्राप्त भयो ।


किनकि भगवान्का भक्तजन समर्थ भए पनि कसैद्वारा तिरस्कृत भएर, धोका पाएर, उचालेर पछारिदिने र प्राणै लिने स्थिति आए पनि अपराधीमा प्रहार गर्दैनन् ॥४८॥ छोराले गरेको अपराधमा ती महर्षि साह्रै दुःखी भए । यद्यपि राजाले पनि तिनको ठूलो अपमान गरेका थिए तर त्यसमा तिनले ध्यानै दिएनन् ॥४९॥ किनकि सज्जनहरू अर्काले कुनै द्वन्द्वमा पारिदिए पनि त्यसले न दुःखी हुन्छन्, न रिसाउँछन् । तिनको आत्मा सुख-दुःखको प्रपञ्चबाट पृथक् रहन्छ ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धेऽष्टादशोऽध्यायः ॥१८॥ ( राजापरीक्षित भागवत सुन्न गङ्गातटमा जानु । ) सूतजी भन्दछन्—त्यहाँबाट भएपछि स्वयं राजा परीक्षितलाई आफूले गरेको त्यस निन्दनीय काममा पश्चात्ताप हुन लाग्यो । ती आफूलाई नै धिक्कार दिदैं मनमनै भन्नलागे—मैले ती निरपराध र गूढ तेज भएका महर्षि प्रति यौटा अनार्य र नीच व्यक्ति झैं ठूलो घृणित व्यवहार गरें ॥ १ ॥ मैले जुन यौटा देवता समान पूज्य विप्रको अवहेलना गर्ने महान् पाप गरेकोछु यसको भलाई चाँडै नै कुनै दण्ड मिल्नु पर्दछ । यसबाहेक मेरो पापको निष्कृति हुने उपाय छैन । यदि दण्ड पाएँ

नास्य तत्प्रतिकुर्वन्ति तद्भक्ताः प्रभवोऽपि हि ॥४८॥ इति पुत्रकृताघेन सोऽनुतप्तो महामुनिः ॥ स्वयं विप्रकृतो राज्ञा नैवाघं तदचिन्तयत् ॥४९॥ प्रायशः साधवो लोके परैर्द्वन्द्वेषु योजिताः ॥ न व्यथन्ति न हृष्यन्ति यत आत्माऽगुणाश्रयः ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे विप्रशापोपलम्भनं नामाष्टादशोऽध्यायः ॥ १८ ॥ सूत उवाच ॥ महीपतिस्त्वथ तत्कर्म गर्ह्यं विचिन्तयन्नात्मकृतं सुदुर्मनाः ॥ अहो मया नीचमनार्यवत्कृतं निरागसि ब्रह्मणि गूढतेजसि ॥ १ ॥ ध्रुवं ततो मे कृतदेवहेलनाद्दुरत्ययं व्यसनं नातिदीर्घात् ॥ तदस्तु कामं ह्यघनिष्कृताय मे यथा न कुर्यां पुनरेवमद्धा ॥ २ ॥ अद्यैव राज्यं बलमृद्धकोशं प्रकोपितब्रह्मकुलानलो मे ॥ दहत्वभद्रस्य पुनर्न मेऽभूत्पापीयसी धीर्द्विजदेवगोभ्यः ॥ ३ ॥ स चिन्तयन्नित्थमथाशृणोद्यथा मुनेः सुतोक्तो निरृतिस्तक्षकाख्यः ॥ स साधु मेने न चिरेण तक्षकानलं प्रसक्तस्य विरक्तिकारणम् ॥४॥ अथो विहायेममुं च लोकं विमर्शितौ हेयतया पुरस्तात् ॥ कृष्णाङ्घ्रिसेवामधिमन्यमान उपाविशत्प्रायममर्त्यनद्याम् ॥ ५ ॥ या वै लसच्छ्रीतुलसीविमिश्रकृष्णाङ्घ्रिरेण्वभ्यधिकाम्बुनेत्री ॥ पुनाति लोकानुभयत्र सेशान्कस्तां न सेवेत मरिष्यमाणः ॥६॥ इति व्यवच्छिद्य स पाण्डवेयः प्रायोपवेशं प्रति विष्णुपद्याम् ॥

भने फेरि मद्वारा यस्तो कुनै निकृष्ट काम हुने छैन ॥२॥ यदि आज नै त्यस ब्राह्मणको रिसबाट उठेको अग्निको ज्वालाले मेरो राज्य सेना कोष र ढुकुटी आदि पोलेर खरानी पारिदिए राम्रो हुने थियो । त्यसले म फेरि कहिल्यै यस्तो कुनै ब्राह्मण देवता र गाईलाई कष्ट दिने साहस गर्न नसकूँ ॥३॥ महाराज परीक्षित एकान्तमा बसेर यस्तै प्रकारका तर्क गरिरहेकै थिए—त्यही बखत महर्षि शमीकले पठाएको यौटा शिष्य आयो र उसले राजालाई श्रापसम्बन्धी सबै कुरा सुनायो । त्यसले भन्यो—आजको सातौंदिन तक्षक नागले टोकेर हजुरको मृत्यु हुनेछ । यो संवाद सुनेर राजा परीक्षितले त्यस श्रापलाई पनि वरदान ठाने ॥४॥ अब उनले भगवान्का चरणको सेवा नै सबभन्दा उत्तम कार्य माने र नारायणका चरणबाट निस्केकी गङ्गाको तटमा गएर बसे र यो संकल्प गरे—अब म मरणकालपर्यन्त यहीं बस्तछु ॥५॥ जो गङ्गा र तुलसी भगवान्को चरण-रजबाट मिश्रित हुनाले सर्वोत्कृष्ट मानिएको छ र जसको पवित्र धारा

गर्दै संसारका सबै झ्याउलाहरूबाट पृथक् भई मन एकाग्र गरेर ती नारायणका चरण-कमलको ध्यान गर्नलागे ॥७॥ त्यसपछि अनेक प्रभावशाली मुनि शिष्यसमेत तीर्थाटनको प्रसंगबाट त्यहाँ पुगे । यस्ता महामहिमामय मुनिहरूको तीर्थयात्रा सम्बन्धी यो टा निहुँ नैही भन्न सकिन्छ किनकि यस्ता-यस्ता सज्जन तीर्थलाई पनि पवित्र पार्दछन्—स्वयं त सधैं पवित्र रहिरहन्छन् ॥८॥ ती ऋषिहरूमा अत्रि, वसिष्ठ, च्यवन, शरद्वान्, अरिष्टनेमि, भृगु, अङ्गिरा, पराशर विश्वामित्र परशुराम, उतथ्य, इन्द्रप्रमद, इध्मवाहु ॥ ९ ॥ देवल, मेधातिथि आर्ष्टिषेण, भारद्वाज, गौतम, पिप्पलाद, मैत्रेय, और्व, कवष, अगस्त्य र व्यास मुख्य थिए ॥१०॥ ती बाहेक धेरै थरि देवर्षि र अरुण आदि राजर्षि पनि त्यहाँ एकत्र भए ॥ राजाले ती सबैको पूजा गरेर शिर निहुराई प्रणाम गरे ॥ ११ ॥ जब ती सबै आनन्दपूर्वक आफ्ना-आफ्ना आसनमा बसिसकेपछि राजाले एकपल्ट फेरि सबैको सामुन्ने आफ्नो विचार प्रकट गरे ॥ १२ ॥

दध्यौ मुकुन्दाङ्घ्रिमनन्यभावो मुनिव्रतो मुक्तसमस्तसङ्गः ॥ ७ ॥ तत्रोपजग्मुर्भुवनं पुनाना महानुभावा मुनयः सशिष्याः ॥ प्रायेण तीर्थाभिगमापदेशैः स्वयं हि तीर्थानि पुनन्ति सन्तः ॥८॥ अत्रिर्वसिष्ठश्च्यवनः शरद्वानरिष्टनेमिर्भृगुरङ्गिराश्च ॥ पराशरो गाधिसुतोऽथ राम उतथ्य इन्द्रप्रमदेध्मवाहौ ॥९॥ मेधातिथिर्देवल आर्ष्टिषेणो भारद्वाजो गौतमः पिप्पलादः ॥ मैत्रेय और्वः कवषः कुम्भयोनिर्द्वैपायनो भगवान्नारदश्च ॥१०॥ अन्ये च देवर्षिब्रह्मर्षिवर्या राजर्षिवर्या अरुणादयश्च ॥ नानार्षेयप्रवरान्समेतानभ्यर्च्य राजा शिरसा ववन्दे ॥ ११ ॥ सुखोपविष्टेष्वथ तेषु भूयः कृतप्रणामः स्वचिकीर्षितं यत् ॥ विज्ञापयामास विविक्तचेता उपस्थितोऽग्रेऽभिगृहीतपाणिः ॥१२॥ राजोवाच ॥ अहो वयं धन्यतमा नृपाणां महत्तमानुग्रहणीयशीलाः ॥ राज्ञां कुलं ब्राह्मणपादशौचाद्दूराद्विसृष्टं बत गर्ह्यकर्म ॥ १३ ॥ तस्यैव मेऽघस्य परावरेशो व्यासक्तचित्तस्य गृहेष्वभीक्ष्णम् ॥ निर्वेदमूलो द्विजशापरूपो यत्र प्रसक्तो भयमाशु धत्ते ॥१४॥ तं मोपयातं प्रतियन्तु विप्रा गङ्गा च देवी धृतचित्तमीशे ॥ द्विजोपसृष्टः कुहकस्तक्षको वा दशत्वलं गायत विष्णुगाथाः ॥ १५ ॥ पुनश्च भूयाद्भगवत्यनन्ते रतिः प्रसङ्गश्च तदाश्रयेषु ॥ महत्सु यां यामुपयामि सृष्टिं मैत्र्यस्तु सर्वत्र नमो द्विजेभ्यः ॥ १६ ॥

राजाले भने—आज म जगतका सबै राजाहरूको अपेक्षा आफूलाई धन्य ठानिरहेको छु । त्यो यसनिमित्त कि हजुर जस्ता महात्माहरूले सधैँ अनुग्रह गरेर मलाई दर्शन दिनुभयो । वास्तवमा हामी राजा पर फ्याँकेका ब्राह्मणहरूका पाद-प्रक्षालित जलको नमाँचे पनि बस्ने अधिकारी हुँदैनन्, फेरि कैले त सार्है निन्दित कर्म गरेको छु ॥१३॥ आफ्नो घरद्वार पर श्री-पुत्रामै मन लगाएको म पापीलाई पापबाट मुक्त पार्नको निमित्त साक्षात् नारायणले नै ब्राह्मणको श्राप बनेर सधैँ कृपा गर्नु भएको छ । यदि यस्तो कृपा नभए म दीनपापीको झ्याउलो कसरी त्याग्न पाउँथें र मेरो आमालाई शान्ति कसरी मिल्दथ्यो ॥१४॥ अतः आफ्नो शरणमा आएको म पापीलाई हजुरहरू तथा गङ्गाजी दयादृष्टिले हेर्नुस् । यस्तो स्थितिमा ब्राह्मणद्वारा प्रेरित कपटवेषधारी तक्षक आएर मलाई टोकोस् त्यसको म चिन्ता गर्दिन । अब हजुरहरू पवित्र कथा सुनाउनुहोस् ॥ १५ ॥ मलाई यहाँहरू यही आशीर्वाद दिनोस्—पुनर्जन्म पाँनमा जन्म लिन जाऊँ तर भगवान्‌का चरणमा मेरो अनुराग रहिरहोस् र असल व्यक्तिको मित्रता मिलोस् । तपाईं ब्राह्मणहरूलाई म फेरि प्रणाम गर्दछु ॥ १६ ॥ यस्तो निश्चय गरेर राजाले राज्यको

भार आफ्नो छोरो जनमेजयलाई सुम्पिदिए र स्वयं गङ्गाको दक्षिण तटमा कुशका मूलभागलाई पूर्वतिर फर्काएर स्वयं उत्तरतिर फर्केर आसनमा बसे ॥१७॥ जब परीक्षित त्यसरी अनशन व्रतको पालन गरेर गङ्गाको तटमा आएर बसे तब आकाशमा देवताहरूले भूरि-भूरि प्रशंसा गरेर दुन्दुभी बजाउँदै भूमाथि पुष्प-वृष्टि गरे ॥१८॥ त्यहाँ जति महर्षि एकत्रित थिए, तिनीहरूले पनि साधु-साधु भनेर राजाका विचारको अनुमोदन गरेर प्राणिमात्रमा दया देखाउने ती ऋषिजन उनीसित यस प्रकार भन्नलागे—॥१९॥ हे राजर्षि श्रेष्ठ ! परम कृष्णभक्त हजुर जस्ता राजाले यस्तो गर्नु कुनै ठूलो कुरा होइन । अर्को कुरो हजुरका हेर—जब तपाईंका पूर्वज पाण्डवहरूले पनि भगवान्को प्रीतिका लागि आफ्नो राज्य सिंहासन त्यागिदिएका थिए ॥२०॥ राजासित यति भनेर ती ऋषि परस्पर कुरा गर्दै भन्नलागे—हामी सबैजना आज यहाँ यसैनिमित्त एकत्रित भएका थियौं कि यी धर्मात्मा राजा आफ्नो कलेवर त्यागेर यस्तो लोकमा जान आँटेका छन् जुन रोग र शोक रहित छ । अतः जबसम्म यी आनन्दपूर्वक परमधाममा जाँदैनन् तबसम्म हामीहरू पनि यहीं बसिरहन्छौं ॥२१॥ राजा परीक्षित

इति स्म राजाऽध्यवसाययुक्तः प्राचीनमूलेषु कुशेषु धीरः ॥ उदङ्मुखो दक्षिणकूल आस्ते समुद्रपत्न्याः स्वसुते न्यस्तभारः ॥ १७ ॥ एवं च तस्मिन्नरदेवदेवे प्रायोपविष्टे दिवि देवसङ्घाः ॥ प्रशस्य भूमौ व्यकिरन्प्रसूनैर्मुदा मुहुर्दुन्दुभयश्च नेदुः ॥ १८ ॥ महर्षयो वै समुपागता ये प्रशस्य साध्वित्यनुमोदमानाः ॥ ऊचुः प्रजानुग्रहशीलसारा यदुत्तमश्लोकगुणाभिरूपम् ॥ १९ ॥ न वा इदं राजर्षिवर्य चित्रं भवत्सु कृष्णं समनुव्रतेषु ॥ येऽध्यासनं राजकिरीटजुष्टं सद्यो जहुर्भगवत्पार्श्वकामाः ॥ २० ॥ सर्वे वयं तावदिहास्महेऽथ कलेवरं यावदसौ विहाय ॥ लोकं परं विरजस्कं विशोकं यास्यत्ययं भागवतप्रधानः ॥ २१ ॥ आश्रुत्य तदृषिगणवचः परीक्षित्समं मधुच्युद्गुरु चाव्यलीकम् ॥ अभाषतैतानभिनन्द्य युक्तान् शुश्रूषमाणश्चरितानि विष्णोः ॥ २२ ॥ समागताः सर्वत एव सर्वे वेदा यथा मूर्तिधरास्त्रिपृष्ठे ॥ नेहाथवाऽमुत्र च कश्चनार्थ ऋते परानुग्रहमात्मशीलम् ॥ २३ ॥ ततश्च वः पृच्छ्यमिमं विपृच्छे विश्रभ्य विप्रा इतिकृत्यतायाम् ॥ सर्वात्मना म्रियमाणैश्च कृत्यं शुद्धं च तत्रामृशताभियुक्ताः ॥ २४ ॥ तत्राभवद्भगवान्व्यासपुत्रो यदृच्छया गामटमानोऽनपेक्षः ॥ अलक्ष्यलिङ्गो निजलाभतुष्टो वृतः श्चबालैरवधूतवेषः ॥२५॥ तं द्व्यष्टवर्षं सुकुमारपादकरोरुबाह्वंसकपोलगात्रम् ॥

ऋषिहरूका यस्ता मीठा र सत्य कुरा सुनेर प्रसन्न भए र भगवान्का चरित्र सुन्ने इच्छाले तिनले ती ऋषिहरूको अभिनन्दन (स्वागत) गर्दै यस प्रकार भन्नलागे—॥२२॥ जसरी सत्यलोकमा चारै वेद मूर्तिमान् रहन्छन् उनैको समान हजुरहरू यहाँ एकत्रित हुनुभएको छ । परोपकार बाहेक हजुरहरूको यसलोक र परलोकमा कहीं पनि र कुनै काम पनि रहन्न ॥२३॥ अतः हजुरहरूसित म यो सोध्दछु—हे विप्र हो ! हजुरहरू एकमत भएर मलाई भन्नुहवस्—जुन प्राणी मर्नको निमित्त तयार भएर बसेको छ, त्यसले के गर्नुपर्दछ ? यस विषयमा जुन पवित्र कर्तव्य मानिएको छ, त्यो मलाई आज्ञा हवस् ॥२४॥ यसमा ती ऋषि यज्ञ, योग, तप र दान आदिको चर्चा गर्दै परस्पर शास्त्रार्थ गर्नलागे । तीमा कुनै निर्णय नै हुन सकेन । त्यसै बेला आत्मज्ञानले प्रसन्न महर्षि व्यासका छोरा श्री शुकदेव यहाँ आइपुगे । तिनको अवधूत जस्तो वेष थियो । (जसलाई बौलाहा या अकर्मण्य ठानेर जन-साधारण तिरस्कारपूर्वक त्यागिदिन्छन्, उनलाई अवधूत भनिन्छ ।) अनेक बालक र स्त्रीहरू तिनको पछि-पछि दगुरिरहेका थिए । यसरी हेर्दा पनि यस कुराको पत्तो लाग्दैनथ्यो कि

तीनको कुन वर्ण हो र कुन आश्रम हो ॥२५॥ तिनको सोह्र वर्षको अवस्था थियो । तिनका हात, खुट्टा, घुँडा, भुजदण्ड, कपोल आदि सबै अंग राम्रा थिए र ठूला-ठूला नेत्र थिए । अग्लो नासिका थियो । तिनको राम्रो मुखमा सुन्दर आँखिभौं थिए । शङ्ख समान मनोहर तिनको घाँटी थियो ॥२६॥ तिनका दुवै जत्रुहरू ( सकाले हाड ) पुरिएका थिए । चाक्लो र अग्लो छाती थियो । बाटुलिएको नाभि थियो । मासु झुण्डिएको सुन्दर पेट थियो । ती कुनै पनि लुगा लगाउँदैनथे । फुकेका कपाल मुखभरि छरिएका थिए । तिनका लामा-लामा बाहु थिए ॥२७॥ शरीर श्याम वर्णको भए तापनि आफ्ना अवयवहरूको शोभा र मन्द-हास्यले ती सबैलाई विशेष गरेर स्त्रीजातिलाई धेरै राम्रा लागिरहेथे । तिननलाई देख्नासाथ उनको महिमा जान्ने महर्षि तुरुन्त आफ्ना आसनबाट जुरुक्क उठे ॥२८॥ विष्णुभक्त राजा परीक्षितले उनलाई जसै देखे, तत्काल शिर निहुराए मानस-पूजा गरेर आफूलाई नै उनीप्रति अर्पण गरिदिए । अब तिनका पछि-पछि दगुर्ने स्त्री-बालक र अज्ञ प्राणी फर्किए र शुकमुनि राजाले पूजित भएर ठूलो उच्चासनमा विराजमान भए ॥२९॥ शुकमुनि

चार्वायताक्षोन्नसतुल्यकर्णसुभ्र्वाननं कम्बुसुजातकण्ठम् ॥२६॥ निगूढजत्रुं पृथुतुङ्गवक्षसमावर्तनाभिं वलिवल्गूदरं च ॥ दिगम्बरं वक्त्रविकीर्णकेशं प्रलम्बबाहुं स्वमरोत्तमाभम् ॥२७॥ श्यामं सदाऽपीव्यवयोऽङ्गलक्ष्म्या स्त्रीणां मनोज्ञं रुचिरस्मितेन ॥ प्रत्युत्थितास्ते मुनयः स्वासनेभ्यस्तल्लक्षणज्ञा अपि गूढवर्चसम् ॥२८॥ स विष्णुरातोऽतिथय आगताय तस्मै सपर्यां शिरसाऽऽजहार ॥ ततो निवृत्ता ह्यबुधाः स्त्रियोऽर्भका महासने सोपविवेश पूजितः ॥२९॥ स संवृतस्तत्र महान्महीयसां ब्रह्मर्षिराजर्षिदेवर्षिसंघैः ॥ व्यरोचतालं भगवान्यथेन्दुर्ग्रहर्क्षतारानिकरैः परीतः ॥३०॥ प्रशान्तमासीनमकुण्ठमेधसं मुनिं नृपो भागवतोऽभ्युपेत्य ॥ प्रणम्य मूर्ध्नाऽवहितः कृताञ्जलिर्नत्वा गिरा सूनृतयाऽन्वपृच्छत् ॥३१॥ अहो अद्य वयं ब्रह्मन्सत्सेव्याः क्षत्रबन्धवः ॥ कृपयाऽतिथिरूपेण भवद्भिस्तीर्थकाः कृताः ॥३२॥ येषां संस्मरणात्पुंसां सद्यः शुद्ध्यन्ति वै गृहाः ॥ किं पुनर्दर्शनस्पर्शपादशौचासनादिभिः ॥३३॥ सान्निध्यात्ते महायोगिन्पातकानि महान्त्यपि ॥ सद्यो नश्यन्ति वै पुंसां विष्णोरिव सुरेतराः ॥३४॥ अपि मे भगवान्प्रीतः कृष्णः पाण्डुसुतप्रियः ॥ पैतृष्वसेयप्रीत्यर्थं तद्गोत्रस्यात्तबान्धवः ॥ ३५ ॥ अन्यथा तेऽव्यक्तगतेर्दर्शनं नः कथं नृणाम् ॥ नितरां म्रियमाणानां संसिद्धस्य वनीयसः ॥ ३६ ॥

जब देवर्षि, ब्रह्मर्षि र राजर्षि समुदायको माझमा बसे तब मंगल, शुक्र आदि ग्रहहरूको बीच चन्द्रमा विराजमान भएका हुन् भन्ने झैं ज्ञात भयो ॥३०॥ शुकमुनि जब राम्ररी बसे, तब भगवद्भक्त राजा परीक्षितले फेरि एकपल्ट मस्तक निहुराएर उनलाई प्रणाम गरे र हात जोरेर कोमल एवं मीठो वाणीमा भने–॥ ३१ ॥ हे विप्र ! तपाईं अति विरूपमा यहाँ सवारी भएर सम्प्रति जुन कृपा गर्नुभयो, यसले हामी अधम क्षत्रिय पनि आफूलाई धन्य ठान्दछौं ॥३२॥ जसको केवल स्मरणले नै घर पवित्र हुन्छन्, ती महात्मा यदि स्वयं आएर दर्शन, चरणस्पर्श, पादप्रक्षालन र आसन प्रदान गर्ने अवसर दिन्छन् भने त सुनमा सुगन्ध भयो ॥३३॥ हजुरकहाँ पुगेपछि ठूला-ठूला पाप पनि तत्काल नष्ट हुन्छन् । जस्तै विष्णुको सामुन्ने पुग्नासाथ दैत्यगण नष्ट भएर जान्छन् ॥३४॥ पाण्डवहरूका प्रिय श्रीकृष्ण आज उनै पाण्डवका वंशज परीक्षित प्रति प्रसन्न भए ॥३५॥ यदि ती प्रसन्न नभएका भए स्वयं पूर्णकाम भएर पनि मान्नेहरूको अभिलाषा पूर्ण पारिदिने हजुर जस्ता अव्यक्त गति पुरुषको दर्शन हामी जस्ता मर्न तयार व्यक्तिलाई कसरी प्राप्त हुन सक्थ्यो ? ॥ ३६ ॥

अतएव योगीहरूका परमगुरु हजुरसित म यो सोध्न खोज्दैछु कि मर्नेको निम्ति उप्रत मनुष्यको कर्तव्य के हो ? ॥३७॥ त्यसले सुन्नु, जान्नु, जप्नु कुनै काम गर्नु, कसैको स्मरण वा भजन गर्ने आदि कर्तव्य होस् र जे गर्नु उचित छ, त्यो हजुर आज्ञा हवस् ॥३८॥ पछि हजुरको दर्शन दुर्लभ हुनेछ किनकि हजुर गृहस्थका घरमा गाई दुहुने समय जति पनि

अतः पृच्छामि संसिद्धिं योगिनां परमं गुरुम् ॥ पुरुषस्येह यत्कार्यं म्रियमाणस्य सर्वथा ॥ ३७ ॥ यच्छ्रोतव्यमथो जप्यं यत्कर्तव्यं नृभिः प्रभो ॥ स्मर्तव्यं भजनीयं वा ब्रूहि यद्वा विपर्ययम् ॥ ३८ ॥ नूनं भगवतो ब्रह्मन्गृहेषु गृहमेधिनाम् ॥ न लक्ष्यते ह्यवस्थानमपि गोदोहनं क्वचित् ॥ ३९ ॥ सूत उवाच ॥ एवमाभाषितः पृष्टः स राज्ञः श्लक्ष्णया गिरा ॥ प्रत्यभाषत धर्मज्ञो भगवान् बादरायणिः ॥ ४० ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टादशसाहस्र्यां पारमहंस्यां संहितायां प्रथमस्कन्धे शुकागमनं नाम एकोनविंशोऽध्यायः ॥ १९ ॥

अडिनु हुन्न ॥३९॥ सूतजी भन्दछन्–यसरी निकै कोमल वाणी द्वारा सोधेपछि धर्मज्ञ श्रीशुकमुनि राजा परीक्षितसित भन्नलागे ॥ ४० ॥ इति श्रीमद्भागवते महापुराणे प्रथमस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां एकोनविंशोऽध्यायः ॥१९॥ श्री नारायणार्पणमस्तु ।



॥ समाप्तोऽयं प्रथमः स्कन्धः ॥

—:०:—

इति 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते प्रथमः स्कन्धः समाप्तः ।

अथ 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते द्वितीयः स्कन्धः प्रारभ्यते।

ॐ नमो भगवते वासुदेवाय । ( यस अध्यायमा भगवानको ध्यान विधि र विराट स्वरूप ) शुकमुनि राजा परीक्षितसित भन्दछन्—हे राजन् ! तिम्रो प्रश्न साह्रै राम्रो छ ; यसले संसारका प्राणिहरूको कल्याण हुनेछ । ठूला-ठूला तत्त्वज्ञानी पनि यस्ता शङ्का-समाधानलाई उत्तम ठान्दछन् ॥१॥ हे राजेन्द्र ! हुन त मनुष्यले अनेक थरिका कुरा सुन्न र बुझ्न मन गर्दछन् तर जो गृहस्थ मनुष्य* देह पाएर पनि आत्मतत्त्व जान्दैनन्, तिनको जीवन व्यर्थ हुन्छ ॥२॥ यो राति सुतेर वा स्त्री-प्रसंगमै बिताउँछन् र दिन चाहिं धन कमाउन वा सन्तानको भरण-पोषणमा गुमाइदिन्छन् ॥३॥ आफ्नो शरीर, आफ्नो छोरो र आफ्नी स्त्री यी आत्मीयका सेनालाई मर्न लागेका देखेर पनि ती उनैमा तल्लीन रहन्छन्—तो सबै देखेर पनि देख्दैनन् अर्थात् तिनको नाश देखेर त्यसैबाट लाभ लिई आफ्नो जीवन सफल गर्न उपाय विचार गर्दैनन् ॥४॥ यसै निम्ति हे भारत ! जो व्यक्ति अभय हुने

ॐ नमो भगवते वासुदेवाय ॥ श्रीशुक उवाच ॥ वरीयानेष ते प्रश्नः कृतो लोकहितो नृप ॥ आत्मवित्संमतः पुंसां श्रोतव्यादिषु यः परः ॥१॥ श्रोतव्यादीनि राजेन्द्र नृणां सन्ति सहस्रशः ॥ अपश्यतामात्मतत्त्वं गृहेषु गृहमेधिनाम् ॥ २ ॥ निद्रया ह्रियते नक्तं व्यवायेन च वा वयः ॥ दिवा चार्थेहया राजन्कुटुम्बभरणेन वा ॥ ३ ॥ देहापत्यकलत्रादिष्वात्मसैन्येष्वसत्स्वपि ॥ तेषां प्रमत्तो निधनं पश्यन्नपि न पश्यति ॥ ४ ॥ तस्माद्भारत सर्वात्मा भगवान् हरिरीश्वरः ॥ श्रोतव्यः कीर्तितव्यश्च स्मर्तव्यश्चेच्छताऽभयम् ॥५॥ एतावान् सांख्ययोगाभ्यां स्वधर्मपरिनिष्ठया ॥ जन्मलाभः परः पुंसामन्ते नारायणस्मृतिः ॥ ६ ॥ प्रायेण मुनयो राजन्निवृत्ता विधिषेधतः ॥ नैर्गुण्यस्था रमन्ते स्म गुणानुकथने हरेः ॥ ७ ॥ इदं भागवतं नाम

इच्छा राख्दछन् तिनको मुख्य कर्तव्य हो—सबैका आत्मामा विराजमान भगवानका गुण सुनुन्, उनका पवित्र चरित्रहरूको गान गरुन् र उनैको ध्यानमा लागिरहुन् ॥५॥ सांख्य र योग यी दुवै शास्त्रको यही निर्णय छ कि मनुष्य जन्मको सफलता यसैमा छ—ती श्रद्धापूर्वक आफ्नो धर्मको रक्षा पालन गरुन्, जसले अन्त्य समयमा नारायणको स्मरण हुन सकोस् ॥६॥ धेरै व्रतनिष्ठ मुनि पानि विधि र निषेधको झमेलाबाट अलग्ग भएर भगवानको गुण-गानमा नै आनन्द पाउँछन् ॥७॥ यो भागवतपुराण वेद-प्रतिपादित छ । द्वापरयुग लाग्नासाथ मैले

---

* उदाहरण— चौटा दाउरा बेच्नेले जंगलको ठेका लिएको थियो । त्यो प्रतिवर्ष जंगल काटेर कोल बनाएर बिक्री गर्दथ्यो । यसको गर्ने दुनै बाकी जंगलको ठेका लिन्थ्यो । यसरी त्यो आफ्नो गुजारा गर्दथ्यो । एक पटक बैशाख महिनाको तीखो घाममा त्यही अङ्गार बनाउने भट्टीको नजीकैबाट कुनै राजा शिकार खेल्न गए तिनलाई तिर्खा लागेको थियो । तिनले दाउरेसँग पानी मागे । त्यसले प्रेमपूर्वक चीसो पानी दियो । राजा प्रसन्न भयो र दाउरेको नाम-धाम सोधेर आफ्नो देश फर्क्यो । पछि राजाले मन्त्रीलाई डाकेर आज्ञा दियो—'अमुक स्थानमा चौटा दाउरे जंगलको ठेका लिएर कोल तयार पार्दछ । त्यो साह्रै दुःखी छ । अतः आफ्नो चन्दनको बगैंचा त्यसलाई इनाममा दिइयोस्— जसले कोइला बनाउने कामबाट त्यसले मुक्ति पाओस् ।' मन्त्रीले आज्ञा पालन गर्‍यो । यसले दाउरे निकै प्रसन्न भयो तर त्यसलाई यो चाहिं थाहा थिएन कि चन्दन भन्ने कुरा थाहा थिएन । अतः त्यसले पहिले झैं चन्दन काटेर त्यसको पनि कोल बनायो । सबै चन्दन पोलिसकेपछि एक दिन राजा घुम्दै त्यहाँ आए । त्यो चरित्र देखेर निकै खिन्न भए र भने— ए मूर्ख ! तैंले यो के गरिस ? यो बगैंचा मैले तँलाई किन दिएको थिएँ ? चन्दनको एक-एक वृक्ष हजार-हजार रुपियाँका थिए । तिनलाई पोलेर तैंले कोल पारिस् ! जा, तँ जंगलको ठेका लिने योग्य नै छस् ।' यति भनेर बगैंचा फिर्ता लिए । त्यसै गरी जीवरूपी दाउरेलाई ईश्वररूपी राजाले यद्यपि मनुष्य-देहरूपी चन्दनको बगैंचा दिएका छन्, तर त्यो मूर्ख दाउरे कामी विषयरूपी कालोमा पोली-पोली कोल बनाइरहेको छ । यो भन्दा बढी दुःखको कुरा अरु के हुन सक्दछ !

यो आफ्ना पिता श्रीव्यासदेवसित पढें ॥८॥ यद्यपि पहिले निर्गुण ब्रह्ममा नै म टाँसिएको थिएँ, तर उत्तम गुणहरूले परिपूर्ण भगवान् कृष्णचन्द्रका लीलाहरू सुनेर मेरो मन यतातिर तानियो। मैले आफ्ना पिताको मुखबाट यस आख्यान सुनेँ ॥९॥ यो आज महाराजलाई सुनाउँछु किनकि हजुर पुरुषार्थी हुनुहुन्छ। यस आख्यानमा श्रद्धाले जो व्यक्ति ध्यानसहित त्यो सुन्दछन् तिनको हृदयमा भगवान्तिर लैजाने उत्तम बुद्धि जाग्रत हुन्छ ॥१०॥ संसारको दुःखबाट दुःखी जो छन् र सबै प्रकार निर्भय हुने इच्छा राख्दछन्, तिनको निम्ति यो उत्तम बाटो छ। हे राजन्! विरक्त मुमुक्षु र ज्ञानी जनहरूलाई भगवान्का नाम संकीर्तन गर्नु परम कल्याणदायक उपाय बताइएको छ ॥११॥ 'मेरो आयु व्यर्थ बितिरहेको छ' यस्तो यस्तो विचार गरेर जो एक दिन पनि आत्म-कल्याणको कुनै उपाय गर्दछ भने त्यसको जीवन सफल मानिन्छ ॥१२॥ पूर्वकालमा खट्वाङ्ग* राजा भए। तिनको आयु बितिसकेको

पुराणं ब्रह्मसम्मितम् ॥ अधीतवान्द्वापरादौ पितुर्द्वैपायनादहम् ॥ ८ ॥ परिनिष्ठितोऽपि नैर्गुण्य उत्तमश्लोकलीलया ॥ गृहीतचेता राजर्षे आख्यानं यदधीतवान् ॥ ९ ॥ तदहं तेऽभिधास्यामि महापौरुषिको भवान् ॥ यस्य श्रद्दधतामाशु स्यान्मुकुन्दे मतिः सती ॥ १० ॥ एतन्निर्विद्यमानानामिच्छतामकुतोभयम् ॥ योगिनां नृप निर्णीतं हरेर्नामानुकीर्तनम् ॥ ११ ॥ किं प्रमत्तस्य बहुभिः परोक्षैर्हायनैरिह ॥ वरं मुहूर्तं विदितं घटेत श्रेयसे यतः ॥ १२ ॥ खट्वाङ्गो नाम राजर्षिर्ज्ञात्वेयत्तामिहायुषः ॥ मुहूर्तात्सर्वमुत्सृज्य गतवानभयं हरिम् ॥ १३ ॥ तवाप्येतर्हि कौरव्य सप्ताहं जीवितावधिः ॥ उपकल्पय तत्सर्वं तावद्यत्साम्परायिकम् ॥ १४ ॥ अन्तकाले तु पुरुष आगते गतसाध्वसः ॥ छिन्द्यादसङ्गशस्त्रेण स्पृहां देहेऽनु ये च तम् ॥ १५ ॥ गृहात्प्रव्रजितो धीरः पुण्यतीर्थजलाप्लुतः ॥ शुचौ विविक्त आसीनो विधिवत्कल्पितासने ॥ १६ ॥ अभ्यसेन्मनसा शुद्धं त्रिवृद्ब्रह्माक्षरं परम् ॥ मनो यच्छेज्जितश्वासो ब्रह्मबीजमविस्मरन् ॥ १७ ॥ नियच्छेद्विषयेभ्योऽक्षान्मनसा बुद्धिसारथिः ॥ मनः कर्मभिराक्षिप्तं

थियो। केवल एक मुहूर्त शेष थियो, अनि त्यतिनै समयमा सबै कुरा त्यागेर अभयदाता भगवान्को शरणमा पुगेका थिए ॥१३॥ हे राजन्! हजुरका जीवनको त अझ सात दिन शेष छन्। यसनिम्ति अहिल्यैदेखि आफ्नो निस्तारको उपाय गर्नुहोस् ॥१४॥ प्रत्येक बुद्धिमान पुरुषको यो कर्तव्य छ कि जब अन्त्यकाल उपस्थित हुन्छ तब त्यो निर्भय भएर त्यागरूपी शस्त्रले स्त्री पुत्र-धन आदि सबै माया-मोह काटेर फाल्दछ ॥१५॥ घरबाट बाहिर गएर कुनै पवित्र तीर्थमा स्नान गरेर जहाँ हुल-हाल नहोस्, त्यस्तो कुनै एकान्त र पवित्र स्थानमा विधिवत् आसन बिछाएर बसोस् ॥१६॥ त्यहाँ शुद्ध मनले परब्रह्म प्रणव 'ॐकार' को ध्यान गरेर प्राणायामद्वारा मनलाई वशमा पारोस् ॥१७॥ त्यो बुद्धिलाई सारथी बनाएर मनद्वारा

* उदाहरण—राजा खट्वाङ्ग ठूला प्रतापी थिए। सप्तद्वीप तिनको प्रभाव थियो। कतिसम्म भने देवताहरू पनि तिनको सम्मान गर्थे र कहिले काहीं राजासित सहायता लिन्थे। एक पटक देवता र दैत्यहरूको घोर [illegible] खट्वाङ्ग भएर युद्ध [illegible] युद्ध गरे र अन्तमा तिनलाई पराजित गरी देवताहरूलाई विजय दिलाए। त्यसपछि देवताहरू प्रसन्न भएर [illegible] भने—'यस विजयको उपलक्ष्यमा तपाईं [illegible] कुनै वर माग्नोस्।' राजाले भने—'पहिले तपाईंहरू मलाई यो भन्नोस् कि मेरो आयु कति शेष छ?' देवताहरूले अलि गम्भीर भएर भने—'आयु त अब तपाईंको केवल दुई घडी शेष छ।' यति सुन्नासाथ राजा खट्वाङ्ग रथमा चढेर तत्काल राज्यमा आएर र सारा राज्य, धन दान दिएर आफूलाई सर्वदै भगवान्को चरणमा अर्पित गरिदिए र मुक्त भएर गए।

आफ्ना इन्द्रियहरूलाई, विषयहरूबाट फर्काएर अन्त्यमा मनलाई बुद्धिद्वारा काबुमा पारेर भगवान्मा लगाऔंम् ॥१८॥ र मनशान्त पारेर नारायणका एकेक अंगहरूको ध्यान गरोस् । यसरी सबै विषयबाट पराङ्मुख मनलाई भगवान्मा लगाएर अरु केही पनि नसोचोस् । जहाँ पुगेर मनलाई परम आनन्दको प्राप्ति हुन्छ, त्यसैलाई नारायणको धाम ठान्नुपर्दछ ॥ १९ ॥ मनुष्यले धैर्य धारण गरेर रजोगुण र तमोगुणका चक्रमा परेको मनलाई यस्तो प्रतीत धारणा द्वारा आफ्नो वशमा ल्याओस्—उसले त्यसका विकारहरूलाई नष्ट पार्न सकोस् ॥ २० ॥ किन भने यस्तो धारणा गर्दा-गर्दा आत्म-कल्याणको इच्छा गर्ने प्राणीलाई भगवान्को भक्तियोग स्वतः प्राप्त हुन्छ ॥२१॥ राजाले भने—हे ब्रह्मन् ! अब तपाईं मलाई यो भन्नुहुन्छ कि भगवान्को त्यो धारणा कसरी गरिन्छ र कस्तो रहो मनको मल पखाल्न सक्छ ॥२२॥ श्रीशुकदेवजी भन्नुहुन्छ—साधक पहिले आसन जितोस् अर्थात् एक स्थानमा धेरै बेरसम्म बस्न सक्ने अभ्यास गरेर यस्तो होओस् कि उनिबेरसम्म बस्नुपरे पनि, मनमा बाक नलागोस् । त्यसपछि श्वास जितोस्, अनि रङ्ग ( स्त्री-पुत्र-धनादिको आसक्ति ) जितोस् । त्यसपछि

शुभार्थे धारयेद्धिया ॥ १८ ॥ तत्रैकावयवं ध्यायेदव्युच्छिन्नेन चेतसा ॥ मनो निर्विषयं युक्त्वा ततः किञ्चन न स्मरेत् ॥ पदं तत्परमं विष्णोर्मनो यत्र प्रसीदति ॥ १९ ॥ रजस्तमोभ्यामाक्षिप्तं विमूढं मन आत्मनः ॥ यच्छेद्धारणया धीरो हन्ति या तत्कृतं मलम् ॥ २० ॥ यतः संधार्यमाणायां योगिनो भक्तिलक्षणः ॥ आशु सम्पद्यते योग आश्रयं भद्रमीक्षतः ॥ २१ ॥ राजोवाच ॥ यथा सधार्यते ब्रह्मन्धारणा तत्र सम्मता ॥ यादृशी वा हरेदाशु पुरुषस्य मनोमलम् ॥ २२ ॥ श्रीशुक उवाच ॥ जितासनो जितश्वासो जितसङ्गो जितेन्द्रियः ॥ स्थूले भगवतो रूपे मनः संधारयेद्धिया ॥ २३ ॥ विशेषस्तस्य देहोऽयं स्थविष्ठश्च स्थवीयसाम् ॥ यत्रेदं दृश्यते विश्वं भूतं भव्यं भवच्च सत् ॥ २४ ॥ आण्डकोशे शरीरेऽस्मिन्सप्तावरण-संयुते ॥ वैराजः पुरुषो योऽसौ भगवान् धारणाश्रयः ॥ २५ ॥ पातालमेतस्य हि पादमूलं पठन्ति पार्ष्णिप्रपदे रसातलम् ॥ महातलं विश्वसृजोऽथ गुल्फौ तलातलं वै पुरुषस्य जंघे ॥ २६ ॥ द्वे जानुनी सुतलं विश्वमूर्तेरूरुद्वयं वितलं चातलं च ॥ महीतलं तज्जघनं महीपते नभस्तलं नाभिसरो गृणन्ति ॥ २७ ॥ उरःस्थलं ज्योतिरनीकमस्य ग्रीवा महर्वदनं वै जनोऽस्य ॥ तपो रराटीं विदुरादिपुंसः सत्यं तु शीर्षाणि सहस्रशीर्ष्णः ॥ २८ ॥ इन्द्रादयो बाहव आहुरुस्राः कर्णौ दिशः श्रोत्रममुष्य शब्दः ॥ नासत्यदस्रौ परमस्य नासे घ्राणोऽस्य गन्धो मुखमग्निरिद्धः ॥ २९ ॥ द्यौरक्षिणी

इन्द्रियहरू वशमा पारोस् । तदनन्तर आफ्नो बुद्धिद्वारा मनलाई विराट्स्वरूप नारायणमा लगाओस् ॥२३॥ ती भगवान्को विराट्स्वरूप स्थूलशरीरहो, जसमा भूत, भविष्य, वर्तमान र समस्त विश्व देखिन्छ ॥२४॥ नारायणको यस पृथ्वी, जल, तेज आदि सात आवरणहरू भएको शरीर भित्र जुन विराट् भगवान् छन्, ती नै धारणाका विषय हुन् ॥२५॥ पाताल लोक उनको । पैताला हो । पाउको अघिल्लो र पछिल्लो भाग रसातल हो । दुवै गुल्फ भाग महातल लोक र हो। नारायणका दुवै तिघ्रा तलातल लोक हुन् ॥२६॥ तिनका दुवै घुँडा सुतललोक हुन् । तिनका घुँडा मनिको भाग वितललोक, तिनको माथिल्लो भाग अतललोक, जघन भाग महातल र तिनको नाभि रसातललो हो ॥२७॥ तिनको उरस्थल स्वर्ग, ग्रीवा महर्लोक, मुख जनलोक, ललाट तपोलोक र शिर सत्यलोक हो ॥२८॥ इन्द्र आदि देवता तिनका बाहु, दिशाहरू कान, शब्द श्रोत्र, दुवै अश्विनीकुमार नासिका, गन्ध नाक र अग्नि

हुन्छ हो ॥२९॥ आकाश उनका नेत्रका परेला, सूर्य नेत्र, रात-दिन निमिष, ब्रह्मपद आँखीभौं, कटाक्ष जल, तालु तथा रस तिनका जिब्रो हो ॥३०॥ वेद उनका शिर, यम दाह्रा,स्त्री-पुत्र आदिको माया-मोह, दाँत, हास्य माया र अनन्त सृष्टि नै तिनको परेला उठ्नु र तल झर्नु हो॥३१॥माथिल्लो ओंठ तिनको लज्जा, तल्लो ओंठ लोभ, धर्म स्तन, अधर्म पिठिउ , शिश्न ( गुप्तेन्द्रिय ), प्रजापति, मित्रावरुण वृषण, समुद्र पेट, पर्वत तिनका हाडहरू हुन् ॥३२॥ नदीहरू ती विराट् भगवानका नाडी हुन् । वृक्ष-समूह तिनका रौंहरू, वायु श्वास, समय गति र संसार नै उनको कर्म हो ॥३३॥ हे कुरुवर्य ! ती विराट् भगवान्‌का केश मेघहरूकोसमूह, दुवै सन्ध्याहरू वस्त्र,अव्यक्त ब्रह्म तिनको हृदय र चन्द्रमा मन हुन् ॥३४॥ महत्तत्व तिनको चित्त, रुद्र अहङ्कार,हात्ती-घोडा तथा ऊँटआदि नङ रसमस्त वन जन्तु उनका श्रोणिदेशहुन् ॥३५॥ सबै पक्षीहरू उनको कलाकौशल हुन् स्वयंभू उनको बुद्धि, मनुष्य निवास-भूमि,

चक्षुरभूत्पतङ्गः पक्ष्माणि विष्णोरहनी उभे च ॥ तद्भ्रूविजृम्भः परमेष्ठिधिष्ण्यमापोऽस्य तालू रस एव जिह्वा ॥ ३० ॥ छन्दांस्यनन्तस्य शिरो गृणन्ति दंष्ट्रा यमः स्नेहकला द्विजानि ॥ हासो जनोन्मादकरी च माया दुरन्तसर्गो यदपाङ्गमोक्षः ॥ ३१ ॥ व्रीडोत्तरोष्ठोऽधर एव लोभो धर्मः स्तनोऽधर्मपथोऽस्य पृष्ठः ॥ कस्तस्य मेढ्रं वृषणौ च मित्रौ कुक्षिः समुद्रा गिरयोऽस्थिसङ्घाः ॥ ३२ ॥ नद्योऽस्य नाड्योऽथ तनूरुहाणि महीरुहा विश्वतनोर्नृपेन्द्र ॥ अनन्तवीर्य श्वसितं मातरिश्वा गतिर्वयः कर्म गुणप्रवाहः ॥ ३३ ॥ ईशस्य केशान्विदुरम्बुवाहान्वासस्तु सन्ध्यां कुरुवर्य भूम्नः ॥ अव्यक्तमाहुर्हृदयं मनश्च स चन्द्रमाः सर्वविकारकोशः ॥ ३४ ॥ विज्ञानशक्तिं महिमामनन्ति सर्वात्मनोऽन्तःकरणं गिरित्रम् ॥ अश्वाश्वतर्युष्ट्रगजा नखानि सर्वे मृगाः पशवः श्रोणिदेशे ॥ ३५ ॥ वयांसि तद्व्याकरणं विचित्रं मनुर्मनीषा मनुजो निवासः ॥ गन्धर्वविद्याधरचारणाप्सरःस्वरस्मृतीरसुरानीकवीर्यः ॥ ३६ ॥ ब्रह्माऽऽननं क्षत्रभुजो महात्मा विडूरुरङ्घ्रिश्रितकृष्णवर्णः ॥ नानाभिधाभीज्यगणोपपन्नो द्रव्यात्मकः कर्मवितानयोगः ॥ ३७ ॥ इयानसावीश्वरविग्रहस्य यः सन्निवेशः कथितो मया ते ॥ संधार्यतेऽस्मिन्वपुषि स्थविष्ठे मनः स्वबुद्ध्या न यतोऽस्ति किञ्चित् ॥ ३८ ॥ स सर्वधीवृत्त्यनुभूतसर्व आत्मा यथा स्वप्नजनेक्षितैकः ॥ तं सत्यमानन्दनिधिं भजेत नान्यत्र सज्जेद्यत आत्मपातः ॥ ३९ ॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धे महापुरुषसंस्थानुवर्णने प्रथमोऽध्यायः ॥ १ ॥ श्रीशुक उवाच ॥ एवं पुरा धारणयाऽऽत्मयोनिर्नष्टां

गन्धर्वहरु तिनका षड्ज स्वर स्मृतिहरू तथा दैत्यका सेना नै तिनको बल हो ॥३६॥ ब्राह्मण मुख,क्षत्रिय भुजा, वैश्य तिघ्रा,शूद्र दुवैखुट्टा र नानाप्रकारका द्रव्यात्मक यज्ञ तिनका कर्म हुन् ॥३७॥ यस प्रकार मैले तिमीलाई ईश्वर दिव्य विराट् पुरुषको शरीर र उसका अवयवहरूको भेद सुनाएँ । जुन प्राणी आफ्नो बुद्धिको बलद्वारा मनलाई नित्य नारायणमा लगाइराख्दछ भने अरू स्थलमा मन काम केही शेष रहन्न ॥३८॥ मनुष्यको कर्तव्य हो-सत्य र आनन्दका निधानको भजन गरोस् र अरु कतै पनि न अल्झियोस्, किनकि ती बाहेक अरु कुनै वस्तु वा अन्य देवतामा मन लगाउनाले क्याउलाहरू बढ्दै जानेछन् र अन्त्यमा आत्माको पतन पनि हुन सक्छ ॥३९॥ इति श्रीमद्भागवत महापुराणे द्वितीयस्कन्धे, पं० गौरीशङ्कर 'वशिष्ठ' कृत नेपाली भाषा-टीकायां प्रथमोऽध्यायः ॥१॥ ( सद्यः मुक्ति र क्रममुक्ति ) श्रीशुकदेव राजा परीक्षित्‌सित भन्नलागे-हे राजन् ! जुन धारणा मैले हजुरलाई सुनाएँ, त्यसै अनुसार ब्रह्माजीले

किन भने यस संसारका मायाजालको अन्त्य त्यहाँ हुन्छ ॥६॥ पशुहरूलाई छाडेर अरू यस्तो कुन मनुष्य होला, जो यति राम्रो र यति पवित्र धारणालाई त्यागेर तुच्छ एवं घृणित विषय-वासनामा मन लगाउला ? अरू अब त्यो देखिरहेको छ कि विषयहरूका भक्त वैतरणी नदीमा जाकिएर आफ्ना कर्महरूको फल भोगिरहेका छन्, अनि त्यो किन विषयको सेवन गर्ला ? ॥७॥ केही साधक आफ्नो धारणा अनुसार आफ्नो शरीररूपी आकाशमा शङ्ख, चक्र, गदा र पद्म धारण गरेका प्रादेशमात्र ( एक बित्ताका ) भगवानलाई देख्दछन्, उनको प्रसन्न मुख-मण्डल छ, कमलका समान सुन्दर र ठूला-ठूला नेत्र छन्, कदम्बको फूलको केशर जस्तै पहेला वस्त्र छन्, अमूल्य रत्नहरूको जडाऊ सुवर्णमय हार छन् र उनको शिरमा टल्किरहेको उत्तम किरीट छ, फेरि दुवै कानमा कुण्डल छन्, तिनमा अनेक रत्नहरू जडिआ छन् ॥८-९॥ ती विकसित कमल-कर्णिकामाथि पाउ राखेका छन् तिनको घाँटीमा कौस्तुभ, श्रीवत्स एवं रत्नमय हार शोभित छ र ताजा फूलहरूले बनाइएको वनमाला सुशोभित छ ॥१०॥ तिनको कम्मरमा कम्पनी, औंलाहरूमा औंठी, पाउमा नूपुर र दुवै हातमा कंकणादि छन् । चिल्लो

पतितं वैतरण्यां स्वकर्मजान्परितापाञ्जुषाणम् ॥ ७ ॥ केचित्स्वदेहान्तर्हृदयावकाशे प्रादेशमात्रं पुरुषं वसन्तम् ॥ चतुर्भुजं कञ्जरथाङ्गशंखगदाधरं धारणया स्मरन्ति ॥ ८ ॥ प्रसन्नवक्त्रं नलिनायतेक्षणं कदम्बकिञ्जल्कपिशङ्गवाससम् ॥ लसन्महारत्नहिरण्मयाङ्गदं स्फुरन्महारत्नकिरीटकुण्डलम् ॥ ९ ॥ उन्निद्रहृत्पङ्कजकर्णिकालये योगेश्वरास्थापितपादपल्लवम् ॥ श्रीलक्ष्मणं कौस्तुभरत्नकन्धरमम्लानलक्ष्म्या वनमालयाञ्चितम् ॥ १० ॥ विभूषितं मेखलयाङ्गुलीयकैर्महाधनैर्नूपुरकङ्कणादिभिः ॥ स्निग्धामलाकुञ्चितनीलकुन्तलैर्विरोचमानाननहासपेशलम् ॥ ११ ॥ अदीनलीलाहसितेक्षणोल्लसद्भ्रूभङ्गसंसूचितभूर्यनुग्रहम् ॥ ईक्षेत चिन्तामयमेनमीश्वरं यावन्मनो धारणयाऽवतिष्ठते ॥ १२ ॥ एकैकशोऽङ्गानि धियाऽनुभावयेत् पादादि यावद्धसितं गदाभृतः ॥ जितं जितं स्थानमपोह्य धारयेत् परं परं शुद्ध्यति धीर्यथा यथा ॥ १३ ॥ यावन्न जायेत परावरेऽस्मिन्विश्वेश्वरे द्रष्टरि भक्तियोगः ॥ तावत्स्थवीयः पुरुषस्य रूपं क्रियावसाने प्रयतः स्मरेत ॥ १४ ॥ स्थिरं सुखं चासनमाश्रितो यतिर्यदा जिहासुरिममङ्ग लोकम् ॥ काले च देशे च मनो न सज्जयेत् प्राणं नियच्छेन्मनसा जितासुः ॥१५॥ मनः स्वबुद्ध्याऽमलया नियम्य क्षेत्रज्ञ एतां निनयेत्तमात्मनि ॥ आत्मा-

र सफा-सुग्घर एवं भ्रमर समान काला केश तिनको मुखको शोभा बढाइरहेका छन् । यो बाहेक तिनको मन्द-मन्द मुस्कान भित्र आफ्नो चाला देखाइरहेको छ ॥११॥ तिनको आँखीभौंको संकेत द्वारा ज्ञात हुन्छ कि ती आफ्नो यस भक्तमाथि पूर्ण कृपा गरिरहेका छन् । विचित्र प्रकारको तथा महत्त्वपूर्ण लीलायुक्त हास्यले हाँस्ते ती रमपूर्ण नेत्रले हेरिरहेछन् । यस प्रकारका परमेश्वरको ध्यान साधक प्राणी तबसम्म गर्दै रहोस्, जबसम्म कि धारणा द्वारा मन आफ्नो वशमा नपारियोस् ॥१२॥ त्यसपछि आफ्नो बुद्धिलाई ती नारायणका एकएक अङ्गको ध्यान गरोस् र जुन-जुन अङ्गहरूको ध्यान गरेर विजयी हुँदै जान्छ, तिनलाई त्यागेर अरू-अरू अवयवलाई ध्यानमा ल्याउँदै र त्याग्दै गरोस् । यो साधना बुद्धि शुद्ध नहुन्जेल गर्नुपर्ने हो ॥१३॥ यस प्रकार जब सम्म नारायणको भक्तियोग प्राप्त नहोउन्, तबसम्म आफ्ना नित्य कर्महरूबाट निवृत्त भएर सधैं महाप्रभुको यस स्थूल शरीरको ध्यान गर्दै रहोस् ॥१४॥ त्यो योगी जब शरीर तथा संसारलाई त्याग्न चाहन्छ तब आनन्दपूर्वक यौटा आसनमा बसोस् र मनलाई देश-कालमा नडुलाएर आफ्नो वशमा गरोस् र मनद्वारा प्राणलाई काबुमा

त्यागोंस् ॥१५॥ त्यसपछि आफ्नो निश्चयात्मिका बुद्धिद्वारा मनलाई वशमा पारेर त्यसलाई क्षेत्रज्ञमा मिलाइदेओस् । त्यस क्षेत्रज्ञलाई शुद्धब्रह्ममा मिलाएर अहं ब्रह्मास्मि—'म स्वयं ब्रह्म हुँ' यस ऐक्यको स्थिति प्राप्त गरेर कर्महरूबाट पृथक् होओस्॥१६॥ जहाँ देवताहरूका परमप्रभु काल,सत्त्व,रज, तम तीनैगुण अहङ्कार महतत्त्व र प्रकृति पनि केही गर्नसक्दैनन् । आत्माबाट पृथक् हुने वस्तु छैन, यस्तो विचारेर सबैलाई त्याग्ने इच्छा राख्ने व्यक्ति देहादिको ममता त्यागेर सर्वपूज्य एकमात्र विष्णुभगवान्‌का चरण नै छिन-छिनमा आफ्नो हृदयमा समाल्दै तथा अन्य हुने वस्तुमित पनि स्नेह नगर्दै केवल नारायणका चरणलाई सर्वश्रेष्ठ मान्दछन्॥१७-१८॥ यसरी ब्राह्मीस्थितिमा प्राप्त भएर मुनिको कर्तव्य हो—की आफ्ना खुट्टाका कुर्कुच्चाले गुदा ( मूलाधार ) लाई बन्द गरेर प्राणवायुका आधार ( चतुर्दल ) भन्दा माथि लगेर क्लेशलाई जितेर नाभि आदि स्थानहरूमा विभक्त गरेर—॥१९॥ त्यस वायुलाई नाभि (मणिपूरकचक्र) मा रोकोस् । फेरि त्यसलाई ब्रह्मनाडीद्वारा हृदय (अनाहतचक्र) मा लगोस् । त्यहाँबाट त्यसलाई पाँटीको तल विद्यमान विशुद्धचक्रमा स्थिर पारोस् । त्यसपछि अनन्तर मनलाई वशमा पारेर आफ्नो बुद्धि द्वारा हुने यस्तो उपाय गरोस्, जसले त्यो वायु विशुद्ध चक्रबाट कतै जान नसकोस् । अनि त्यसलाई विशुद्ध चक्र भन्दा तल रहने तालु प्रदेशमा लैजाओस् ॥२०॥

नमात्मन्यवरुध्य धीरो लब्धोपशान्तिर्विरमेत कृत्यात् ॥ १६ ॥ न यत्र कालोऽनिमिषां परः प्रभुः कुतो नु देवा जगतां य ईशिरे ॥ न यत्र सत्त्वं न रजस्तमश्च न वै विकारो न महान्प्रधानम् ॥ १७ ॥ परं पदं वैष्णवमामनन्ति यन्नेति नेतीत्यतदुत्सिसृक्षवः ॥ विसृज्य दौरात्म्यमनन्यसौहृदा हृदोपगुह्यार्हपदं पदे पदे ॥ १८ ॥ इत्थं मुनिस्तूपरमेद्व्यवस्थितो विज्ञानदृग्वीर्यसुरन्धिताशयः ॥ स्वपार्ष्णिनाऽऽपीड्य गुदं ततोऽनिलं स्थानेषु षट् सून्नमयेज्जितक्लमः ॥१९॥ नाभ्यां स्थितं हृद्यधिरोप्य तस्मादुदानगत्योरसि तं नयेन्मुनिः ॥ ततोऽनुसंधाय धिया मनस्वी स्वतालुमूलं शनकैर्नयेत ॥ २० ॥ तस्माद् भ्रुवोरन्तरमुन्नयेत निरुद्धसप्तायतनोऽनपेक्षः ॥ स्थित्वा मुहूर्तार्धमकुण्ठदृष्टिर्निर्भिद्य मूर्धन्विसृजेत्परं गतः ॥ २१ ॥ यदि प्रयास्यन्नृप पारमेष्ठ्यं वैहायसानामुत यद्विहारम् ॥ अष्टाधिपत्यं गुणसन्निवाये सहैव गच्छेन्मनसेन्द्रियैश्च ॥ २२ ॥ योगेश्वराणां गतिमाहुरन्तर्बहिस्त्रिलोक्याः पवनान्तरात्मनाम् ॥ न कर्मभिस्तां गतिमाप्नुवन्ति विद्यातपोयोगसमाधिभाजाम् ॥ २३ ॥ वैश्वानरं याति विहायसा गतः सुषुम्नया

तालुप्रदेशबाट त्यस वायुलाई आँखीभौंको माझमा विद्यमान आज्ञाचक्रमा लैजाओस् । त्यस बखत दुवै कान, नेत्र, नासिकाका दुवै छिद्र र मुख सातै ढोकाहरू थुनेर आफ्ना मुहूर्त अनिरुद्ध निश्चल परेर र रोकोस् र त्यस वायुलाई ब्रह्मरन्ध्रमा पुऱ्याएर छाडोस्, अनि आफ्नो शरीर र इन्द्रियहरूलाई त्यागोस् ।॥२१॥ साधक यदि ब्रह्मलोक जाने इच्छा राख्दछ वा स्वर्गीय देवताहरूका त्यस लोकमा-जानखोज्दछ,जुन देवताहरूको क्रीडास्थल छ । जहाँ अणिमा महिमा आदि अष्टसिद्धि सर्व विद्यमान रहिरहन्छन् र जुन ब्रह्माण्डमा गुणहरूका समुदाय उपस्थित रहन्छ तब साधकको कर्तव्य हो—त्यो देह त्याग्ने बेलामा आफ्नो मन र इन्द्रियहरूलाई नत्यागोस्, बरु शरीर त्यागेर ती लोकहरूका सुख भोग्नको निम्ति तिनलाई आफ्नो साथ लैजाओस् ॥२२॥ किनकि योगीहरूको गति त्रैलोक्यमा बाहिर-भित्र सर्वत्र छ । तीन महर्लोक आदि लोक तथा ब्रह्माण्डको बाहिर पनि जान सक्दछन् । यसको कारण हो—उनको आत्मा लिङ्ग शरीर धरेर वायुमा मिल्दछन् र उपासना, तप, अष्टाङ्ग योग तथा ज्ञानमा रत रहने योगिहरूलाई जुन गति प्राप्त हुन्छ, त्यो कर्ममार्गीहरू र यज्ञादिमा लागेका

व्यक्तिलाई प्राप्त हुँदैन ॥२३॥ आकाश तथा ज्योतिर्मय ब्रह्मलोकको मार्गबाट सुषुम्ना नाडीद्वारा जाने विशुद्ध प्राणी पहिले अग्नि देवताकहाँ पुग्दछ । त्यसपछि त्यसको माथि विद्यमान भगवान्‌को शिशुमार चक्र ( नाभि ) मा पुग्दछ ॥२४॥ हे राजन्! सूर्य आदि देवताहरूका आश्रय र समस्त विश्वको त्यस नाभिरूप शिशुमार चक्रलाई नाघेर त्यो आफ्नो एक्लो लिङ्ग शरीरले ठूला-ठूला तत्त्वज्ञानीहरूको आदरणीय महर्लोकमा पुग्दछ, जहाँ एक-एक कल्पको आयु भोग्ने दीर्घजीवी भृगु आदि निवास गर्दछन् ॥२५॥ प्रलयकालमा जब त्यो भगवान्‌को मुखको आगोले यो विश्व बलिरहेको देख्दछ, अनि दुई परार्धसम्म स्थिर रहने र सिद्धहरूद्वारा सेवित ब्रह्मलोकमा पुग्दछ ॥२६॥ त्यस लोकमा न शोक रहन्छ, न बुढ्याइँ रहन्छ, न मृत्यु रहन्छ, न कुनै वेदनाले दुःख दिन्छ र न कुनै प्रकारको डर-भय नै रहन्छ, तर त्यहाँ पनि भगवान्‌का ध्यानको महिमालाई नजान्ने प्राणीहरूलाई मानसिक कष्ट त अवश्य हुन्छ । त्यस ब्रह्मलोकमा पुगेका व्यक्तिको तीन गति हुन्छन्—जो आफ्नो पुण्य-बलले त्यहाँ पुगेका हुन्छन्, ती कल्पान्तरमा पुण्यबल-

ब्रह्मपथेन शोचिषा ॥ विधूतकल्कोऽथ हरेरुदस्तात् प्रयाति चक्रं नृप शैशुमारम् ॥ २४ ॥ तद्विश्वनाभिं त्वतिवर्त्य विष्णोरणीयसा विरजेनात्मनैकः ॥ नमस्कृतं ब्रह्मविदामुपैति कल्पायुषो यद्विबुधा रमन्ते ॥ २५ ॥ अथो अनन्तस्य मुखानलेन दन्दह्यमानं स निरीक्ष्य विश्वम् ॥ निर्याति सिद्धेश्वरजुष्टधिष्ण्यं यद्द्वैपरार्ध्यं तदु पारमेष्ठ्यम् ॥२६॥ न यत्र शोको न जरा न मृत्युर्नार्तिर्न चोद्वेग ऋते कुतश्चित् ॥ यच्चित्ततोदः कृपयाऽनिदंविदां दुरन्तदुःखप्रभवानुदर्शनात् ॥ २७ ॥ ततो विशेषं प्रतिपद्य निर्भयस्तेनात्मनाऽऽपोऽनलमूर्तिरत्वरन् ॥ ज्योतिर्मयो वायुमुपेत्य काले वाय्वात्मना खं बृहदात्मलिङ्गम् ॥ २८ ॥ घ्राणेन गन्धं रसनेन वै रसं रूपं तु दृष्ट्या श्वसनं त्वचैव ॥ श्रोत्रेण चोपेत्य नभोगुणत्वं प्राणेन चाकूतिमुपैति योगी ॥ २९ ॥ स भूतसूक्ष्मेन्द्रियसंनिकर्षं मनोमयं देवमयं विकार्यम् ॥ संसाद्य गत्या सह तेन याति विज्ञानतत्त्वं गुणसंनिरोधम् ॥ ३० ॥ तेनात्मनाऽऽ-

द्वारा न्यूनाधिक भोगका अधिकारी हुन्छन् । जो हिरण्यगर्भ आदिका उपासनाको बलले त्यहाँ पुग्दछन्, ती ब्रह्माको संगसंगै मुक्त हुन्छन् । जो नारायणका उपासक हुन्छन्, ती आफ्नो इच्छाले ब्रह्माण्ड भेदन गरेर वैकुण्ठ धाममा पुग्दछन् ॥२७॥ अब यो बताइन्छ कि त्यो भगवद्भक्त ब्रह्माण्डको भेदन कसरी गर्दछ—पहिले त्यो आफ्नो लिङ्ग-शरीरबाट पृथ्वी आदिमा मिसिएर निर्भय भई पृथ्वीरूपबाट जल-तत्त्वमा गएर मिल्दछ । फेरि बिस्तार-बिस्तार त्यो ज्योतिर्मय भई वायुमा मिसिएर बेला भएपछि बृहद् आत्मलिंगमा मिलिजान्छ र उसैद्वारा भोग भोग्दछ* ॥२८॥ यस्तो अवस्थामा योगी आफ्नो घ्राणद्वारा गन्ध, जिब्रोले रस, आँखाले रूप, छालाले पवन, कानद्वारा शब्द र प्राणद्वारा सबै इन्द्रियहरूको कामहरू उपभोग गर्दछ ॥२९॥ यस प्रकार स्थूल तथा सूक्ष्म प्राणिहरूको अतिक्रमणको कुरा बताएर गर्दैरो आवरण-स्वरूप अहङ्कारको प्राप्ति र त्यसै द्वारा महदादिको

* उदाहरण—परमात्माको आश्रित प्रकृतिको कुनै एक अंशद्वारा महत्तत्व बन्दछ । त्यसको केही अंशबाट अहङ्कार, अहङ्कारको केही अंशबाट शब्दतन्मात्रा, त्यसको नै अंशले स्पर्शतन्मात्रा त्यसद्वारा वायु, त्यसको केही अंशबाट रूपतन्मात्रा र त्यसबाट तेज, तेजको केही अंशबाट रस तन्मात्रा र त्यसबाट जल, त्यसको केही अंशबाट गन्ध र गन्ध तन्मात्राबाट पृथ्वीको रचना हुन्छ । पृथ्वीका तत्त्वहरूको मेलबाट चतुर्दश भुवनात्मक विराट् पुरुषको शरीर बन्दछ । त्यो शरीर पचास करोड योजनसम्म फैलिएको रहन्छ । त्यसको एक अंशलाई नै पृथ्वी भन्दछन् । यसको प्रथम आवरण एक करोड योजनको छ । केही व्यक्ति यसलाई पनि पचास करोड योजन नै मान्दछन् । त्यसपछि जल आदिको परिच्छेद भेद त्यसको आवरणलाई दस गुणा बढाइदिन्छन् । ती दस आवरणहरूमा आठौं प्रकृतिको आवरण व्यापक छ । यहाँ यिनै आवरणहरूको भेदन गर्ने प्रकार बताइएको छ ।

प्राप्ति-मार्ग वर्णन गर्दै भन्दछन्—त्यो मार्ग अहङ्कार त्यागेर तीन थरिको मानिएको छ—तामस, राजस र सात्त्विक त्यो तामस अहङ्कारबाट जड तथा सूक्ष्म उत्पन्न हुन्छन्, राजस अहङ्कारबाट बाहिर मुख भएका दसै इन्द्रिय र सात्त्विक अहङ्कारबाट मन र इन्द्रियहरूका देवता उत्पन्न हुन्छन् । ती सौंचा पाएर आकाशमा अहङ्कारहरूमा लीन भएर जान्छन् । यसमा प्राणिहरूको सूक्ष्म इन्द्रियहरूलाई राजस तथा लयस्थान, जुन मनोमय हुन्छ, त्यो सात्त्विक अहम्मा गएर मिल्दछ । यस प्रकारको गतिबाट त्यो प्राणी अहङ्कारको साथ-साथै विज्ञानतत्त्व अर्थात् महत्तत्त्वमा प्राप्त हुन्छ । त्यसपछि मौका पाएर त्यो उस स्थानमा पुग्दछ, जहाँ सबै गुणहरूको लय हुन्छ ॥३०॥ हे राजन् ! यस्तो अवस्थामा प्राप्त भएर प्राणी आफूमै परमानन्द प्राप्त गर्दछ र जब सबै उपाधिहरू नष्ट भइसक्दछन् तब त्यस परमानन्दस्वरूप परमात्मामा नमिनै पुग्दछ—जहाँबाट फेरि फर्कर आउन पर्दैन ॥ ३१ ॥ हे राजन् ! तिमीले सोधेका हुनाले मैले तिमीलाई सनातन मार्गका दुइ बाटोहरू देखाएँ ( यौटा यो हो—जसबाट प्राणी ब्रह्मरन्ध्रबाट प्राणको विसर्जन गरेर मुक्त हुन्छ र अर्को यो हो कि मनुष्य जुनसुकै

त्मानमुपैति शांतमानंदमानंदमयोऽवसाने ॥ एतां गतिं भागवतीं गतो यः स वै पुनर्नेह विषज्जतेऽङ्ग ॥३१॥ एते सृती ते नृप वेदगीते त्वयाऽभिपृष्टे ह सनातने च ॥ ये वै पुरा ब्रह्मण आह पृष्ट आराधितो भगवान्वासुदेवः ॥ ३२ ॥ न ह्यतोऽन्यः शिवः पंथा विशतः संसृताविह ॥ वासुदेवे भगवति भक्तियोगो यतो भवेत् ॥३३॥ भगवान्ब्रह्मा कार्त्स्न्येन त्रिरन्वीक्ष्य मनीषया ॥ तदध्यवस्यत्कूटस्थो रतिरात्मन्यतो भवेत् ॥ ३४ ॥ भगवान्सर्वभूतेषु लक्षितः स्वात्मना हरिः ॥ दृश्यैर्बुद्ध्यादिभिर्द्रष्टा लक्षणैरनुमापकैः ॥३५॥ तस्मात्सर्वात्मना राजन्हरिः सर्वत्र सर्वदा ॥ श्रोतव्यः कीर्तितव्यश्च स्मर्तव्यो भगवान्नृणाम् ॥३६॥ पिबंति ये भगवत आत्मनः सतां कथामृतं श्रवणपुटेषु संभृतम् ॥ पुनंति ते विषयविदूषिताशयं व्रजन्तितच्चरणसरोरुहान्तिकम् ॥३७॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कंधे पुरुष संस्थावर्णनं नाम द्वितीयोऽध्यायः ॥२॥ श्रीशुकउवाच ॥ एवमेतन्निगदितंपृष्टवान्यद्भवान्मम ॥ नृणां यन्म्रि-

लोकलाई प्राप्त गर्न चाहोस्, उसै अनुसार प्रयत्न गरोस् ) यी दुवै बाटो वेदले बताएका हुन् । कुनै समय ब्रह्मदेवले भगवान्को आराधना गरेका थिए । अनि स्वयं भगवान्ले उनलाई यो मार्ग बताउनु भएको थियो ॥३२॥ यद्यपि संसारबाट निस्तार पाउने अनेक उपाय मुनिहरूले बताएका छन् तर यो भन्दा उत्तम मार्ग अरू कुनै छैन, किनकि यस बाटोमा हिंड्नाले भगवान्को भक्तियोग सहजै प्राप्त हुन्छ ॥३३॥ यस्तो म यसनिम्ति भन्दिरहेको छु कि ब्रह्माले एकाग्रचित्तले तीनपल्ट वेदहरूको पर्यालोचन गरेर यही बाटोलाई प्रशस्त पाएका थिए किनकि यसले परमात्मामा श्रद्धा उत्पन्न हुने गर्दछ ॥३४॥ अतएव हे राजन ! प्रत्येक मनुष्यको उद्देश्य हो कि सबै तर्फबाट सबै स्थानमा र सबै समय प्राणिहरूको हृदयमा विराजमान रहने तथा बुद्धि आदि अनुमापक लक्षणहरूले युक्त भगवान्को यश सुनोस् उनको गुणगान गरोस् र एकमात्र उनको ध्यान गरोस् ॥ ३५-३६ ॥ सज्जनहरूको आत्मास्वरूपी अमृत जो आफ्ना श्रवण-पुटद्वारा पिउँदै रहन्छन्, ती आफ्नो विषयरूपी विषबाट दूषित अन्तःकरण र आफूलाई समेत पवित्र पारेर अन्त्यमा भगवान्का चरण प्राप्त गर्दछन्* ॥३७॥ इति

---

* उदाहरण—[ दृढभक्तिले नै भगवान्लाई देख्न सकिन्छ ]—सन्त तुकाराम सदैव ईश्वर-भजनमा विभोर रहन्थे । यो कुरा निश्चित छ कि परमात्माको प्रत्यक्ष या परोक्ष अनुभव प्राप्त भइसकेको हुन्छ, त्यही निरन्तर अन्तर्लीन रहन सक्छ । ] एक दिन ग्रामीणहरूले तिनीसित भने— हामीलाई पनि प्रभुको दर्शन गराइदिनुस् भन्दा हुने थियो ।' तुकारामले भने—'हुन्छ, म भगवान्सित सोधौंला ।' परमात्माको सम्मति लिएर तुकारामले भने—'आज राति तिमीहरूलाई भगवान्को दर्शन मिल्नेछ । यसनिमित्त तमाम मानिसहरू र जबसम्म म नभनेसम्म, तबसम्म आँखा नखोल्नू र भजन गर्दै रहनू ।' तुकारामको कथन सबै मानिसले स्वीकार गरे ।
[illegible]

श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ'कृत नेपाली भाषाटीकायां द्वितीयोऽध्यायः ॥२॥ ( भिन्न-भिन्न कामनाले भिन्न-भिन्न देवताको उपासना र भक्तिको प्रधानता ) श्रीशुकदेवजी भन्नुहुन्छ हे राजन् ! मसित मरणोन्मुख प्राणीको कर्तव्य सोध्नुभयो, त्यो मैले सुनाएँ ॥१॥ अब सकाम मनुष्यहरूको कामना पूर्तिको साधन भन्दछु—जो ब्रह्मवर्चस्वी ( वेद-विषयक विद्वान् ) हुन खोज्दछन् ती ब्रह्माको पूजा गरुन् । जो आफ्ना इन्द्रियहरूलाई निपुण तुल्याउन खोज्दछन्, ती इन्द्रको पूजा गरुन् र जो मानिस सन्तानको इच्छुक छन् ती दक्षप्रजापतिको आराधना गरुन् ॥२॥ यसै गरी शोभाका इच्छुक दुर्गाको, तेजको इच्छा राख्ने अग्निको, धन खोज्नेले वसुहरूको र बल खोज्नेले शंकरजीको पूजा गरुन् ॥३॥ अन्नादि खोज्नेले अदितिको, स्वर्गको इच्छुकले देवताहरूको, राज्यका इच्छुक विश्वेदेवको र प्रजाको कल्याण तथा स्वतन्त्रताका इच्छुक व्यक्ति साध्यहरूको पूजा गरुन् ॥ ४ ॥ लामो आयुका

यमाणानां मनुष्येषु मनीषिणाम् ॥ १ ॥ ब्रह्मवर्चसकामस्तु यजेत ब्रह्मणस्पतिम् ॥ इन्द्रमिन्द्रियकामस्तु प्रजाकामः प्रजापतीन् ॥२॥ देवीं मायां तु श्रीकामस्तेजस्कामो विभावसुम् ॥ वसुकामो वसून्रुद्रान्वीर्यकामोऽथ वीर्यवान् ॥ ३ ॥ अन्नाद्यकामस्त्वदितिं स्वर्गकामोऽदितेः सुतान् ॥ विश्वान्देवान्राज्यकामः साध्यान्संसाधको विशाम् ॥४॥ आयुष्कामोऽश्विनौ देवौ पुष्टिकाम इलां यजेत् ॥ प्रतिष्ठाकामः पुरुषो रोदसी लोकमातरौ ॥५॥ रूपाभिकामो गन्धर्वान्स्त्रीकामोऽप्सरउर्वशीम् ॥ आधिपत्यकामः सर्वेषां यजेत परमेष्ठिनम् ॥ ६ ॥ यज्ञं यजेद्यशस्कामः कोशकामः प्रचेतसम् ॥ विद्याकामस्तु गिरिशं दाम्पत्यार्थ उमां सतीम् ॥७॥ धर्मार्थ उत्तमश्लोकं तन्तुं तन्वन्पितॄन्यजेत् ॥ रक्षाकामः पुण्यजनानोजस्कामो मरुद्गणान् ॥ ८ ॥ राज्यकामो मनून्देवान्निर्ऋतिं त्वभिचरन् यजेत् ॥ कामकामो यजेत्सोममकामः पुरुषं परम् ॥ ९ ॥ अकामः सर्वकामो वा मोक्षकाम उदारधीः ॥ तीव्रेण भक्तियोगेन यजेत पुरुषं परम् ॥१०॥ एतावानेव यजतामिह निःश्रेयसोदयः ॥ भगवत्यचलो भावो यद्भागवतसंगतः ॥ ११ ॥ ज्ञानं यदा

इच्छुकले अश्विनीकुमारको, पुष्टि खोज्नेले भूमिको र प्रतिष्ठाका इच्छुकले आकाश तथा पृथ्वी दुवैको पूजा गरुन् ॥५॥ रूपका इच्छुकले गन्धर्वहरूको, स्त्रीखोज्नेले उर्वशी अप्सराको र सर्वमाथि प्रभुताका इच्छुक ब्रह्माजीको आराधना गरुन् ॥६॥ यश खोज्ने यज्ञको, धन खोज्ने वरुणको, विद्यार्थी शिवको र पत्नीको इच्छुक पार्वतीको पूजा गरुन् छोरो चाहने व्यक्ति पितृहरूको, बाधा टार्न इच्छा भएका व्यक्ति मनुहरूको, शत्रु मार्न इच्छुक निर्ऋति ( राक्षस ) को, भोगका इच्छुक चन्द्रमाको र वैराग्यको इच्छा हुने व्यक्ति परम-पुरुष परमात्माको आराधना गरुन् ॥९॥ वैराग्य अथवा सबै कामनाहरू सबै पूरा पार्न तथा मोक्षको अभिलाषा भएका व्यक्ति प्रबल भक्तियोग द्वारा पूर्ण-पुरुष भगवानको आराधना गरुन् ॥१०॥

---

तिमा परिश्रम गराउनेको दर्शन गर्ने इच्छा समयको होला ? राति प्रशस्त मानिस आए । ठीक समयमा तुकारामको 'विट्ठल' 'विट्ठल' आरम्भ गर्यो । कति-कति समय बित्दै गयो, तर ती मानिस निराश भएर फर्के । तिनमा कोही भन्दथे—'ईश्वर यसरी बाटोमा पालिएको छैन ।' कोही भन्थे—'माई स्वयं निद्रा बिर्सियो ।' यसै गरी आज रात बित्यो । केवल दुई जना मात्र बसिरहे । तिनमा पनि कोहीको भरमा आली आफ्नो भन्ने समाचार आयो । कहाँ ती दुवै पनि उठेर बाहर आँगन भगवान्को आस गर्दा—तुकाराम ! आँगन अघार र दैव ।' तुकारामले आँगन कतातिर हेर्दा त्यहाँ थियो । मानिस पनि छैनन् । आज भगवान्ले आज्ञा गर्यो—'तुका ! तिमी खिन्न नहुन । जो यहाँ सम्म उभ्याइ मलाई देख्न सक्छ ।'

उपर्युक्त अनेक देवताहरूको पूजा गर्ने व्यक्ति हृदयमा भगवद्भक्तहरूको सत्सङ्ग गर्नाले यौटा उत्तम र अटल भाव (अनुराग) उत्पन्न हुन्छ, जुन सबै कल्याणहरूमा [illegible]
॥११॥ जब भगवानको पवित्र कथाहरू सुन्नाले हृदयमा यस्तो ज्ञान उत्पन्न हुन्छ, जसले सत, रज, तम यी तीनै गुणहरूबाट उत्पन्न राग-द्वेषादिका [illegible]
र त्यसको संसर्गले मनलाई प्रसन्न पार्ने विरक्ति उत्पन्न हुन्छ र महात्माहरूद्वारा समर्पित मोक्ष-मार्गको साँचो समान भक्तियोग पनि यसैले उपलब्ध हुन्छ । [illegible]
मिल्ने कुन यस्ता मनुष्य होलान्, जो भगवानको कथामा आस्था नगरून् ॥१२॥ यति सुनेर शौनकले भने—'यसरी शुक मुनिको कुरा सुनेर भरतवंशका [illegible]
परीक्षितले व्यासका पुत्र शुकदेवसित फेरि के सोधे ? ॥१३॥ हे विद्वान् सूत ! सुनने इच्छुक हामी श्रोताहरूलाई तपाईं त्यो गाथा अवश्य सुनाउनोस् । तपाईंका [illegible]
भगवान् सम्बन्धी कथावाहेक अरू कुन कुराको चर्चा हुन सक्छ ? ॥१४॥ पाण्डववंशी, परम वैष्णव र महारथी राजा परीक्षितले बाल्यकालमा संसारका [illegible]

प्रतिनिवृत्तगुणोर्मिचक्रमात्मप्रसाद उत यत्र गुणेष्वसङ्गः ॥ कैवल्यसंमतपथस्त्वथ भक्तियोगः को निर्वृतो हरिकथासु रतिं न कुर्यात् ॥ १२ ॥
शौनक उवाच ॥ इत्यभिव्याहृतं राजा निशम्य भरतर्षभः ॥ किमन्यत्पृष्टवान्भूयो वैयासकिमृषिं कविम् ॥ १३ ॥ एतच्छुश्रूषतां विद्वन्सूत नोऽर्हसि
भाषितुम् ॥ कथा हरिकथोदर्काः सतां स्युः सदसि ध्रुवम् ॥ १४ ॥ स वै भगवतो राजा पाण्डवेयो महारथः ॥ बालक्रीडनकैः क्रीडन्कृष्णक्रीडां
य आददे ॥१५॥ वैयासकिश्च भगवान्वासुदेवपरायणः ॥ उरुगायगुणोदाराः सतां स्युर्हि समागमे ॥ १६ ॥ आयुर्हरति वै पुंसामुद्यन्नस्तं च यन्नसौ ॥
तस्यर्ते तत्क्षणो नीत उत्तमश्लोकवार्तया ॥१७॥ तरवः किं न जीवन्ति भस्त्राः किं न श्वसन्त्युत ॥ न खादन्ति न मेहन्ति किं ग्रामपशवोऽपरे ॥१८॥
श्वविड्वराहोष्ट्रखरैः संस्तुतः पुरुषः पशुः ॥ न यत्कर्णपथोपेतो जातु नाम गदाग्रजः ॥१९॥ बिले बतोरुक्रमविक्रमान्ये न शृण्वतः कर्णपुटे नरस्य ॥
जिह्वासती दार्दुरिकेव सूत न चोपगायत्युरुगायगाथाः ॥२०॥ भारः परं पट्टकिरीटजुष्टमप्युत्तमाङ्गं न नमेन्मुकुन्दम् ॥ शावौ करौ नो कुरुतः सपर्यां
हरेर्लसत्काञ्चनकङ्कणौ वा ॥ २१ ॥ बर्हायिते ते नयने नराणां लिङ्गानि विष्णोर्न निरीक्षतो ये ॥ पादौ नृणां तौ द्रुमजन्मभाजौ क्षेत्राणि नानुव्रजतो

त्यागेर केटाकेटीहरूसित खेल्ने उमेरमा कृष्ण-पूजारूपी खेल नै मनपराएका थिए ॥१५॥ अब व्यासका छोरा तथा कृष्ण भगवान्का अद्वितीय भक्त शुकमुनि उनलाई भेटिए,
जहाँ यस्ता सज्जनहरूको समागम हुन्छ, त्यहाँ भगवद्-गुणहरूको नै कथा हुन्छन् ॥१६॥ प्रातःकालको बेलामा उदय भएर सायंकालमा अस्ताउने सूर्यनारायण दिन-दिन प्राणी-
हरूको आयुष्य हरण गर्दछन् । यस्तो स्थितिमा भगवान्का गुणहरूको चर्चा बाहेक अरू काममा जुन समय बित्छ, त्यो व्यर्थ जान्छ ॥१७॥ यदि भनौं कि बाँचिरहनु नै मानव
जीवनको फल हो, त के वृक्ष बाँचिरहन्नन् ? कामीको खलातीले सास फेर्दैन, गाउँकाप शुले खाँदैनन् ? ॥१८॥ जसका कानमा कहिल्यै नारायणको पवित्र कथाको ध्वनि गुञ्जाय-
मान हुँदैन, त्यसलाई कुकुर, सुँगुर, ऊँट तथा गदहा नै ठान्नुपर्दछ ॥१९॥ जुन कर्णपुट विक्रमशाली नारायणका कथा सुन्दैनन्, तिनलाई कर्णपुट नमानेर मिताको प्वाल मान्नुपर्दछ
जुन जिब्रो भगवान्को यश गान गर्दैन, त्यसलाई भ्यागुतोको जिब्रो हो ठान्नु ॥२०॥ जुन मस्तक नारायणको अघिल्तिर न्युरन्न त्यो किरीट र मुकुटले सुशोभित भएर पनि

त्यो मस्तकको भारिमात्र मान्नुपर्दछ । जुन हात नारायणको पूजाको निम्ति अघि सर्दैनन् ती सुनका कंगनले अलंकृत भए पनि तिनलाई मृतकको हात ठान्नु उचित छ ॥२१॥ जुन आँखा नारायणका पवित्र प्रतिमाहरूको निरीक्षण गर्दैनन्, ती मयूरका प्वाँखको आँखा ठान्नु र जुन खुट्टा भगवान्‌का पवित्र तीर्थहरूको यात्रामा अघि सर्दैनन् तिनलाई खुट्टा नठानेर वृक्ष ठान्नु उचित छ ॥२२॥ जुन व्यक्ति कहिल्यै भगवद्भक्तको चरण-रज आफ्नो निधारमा लगाउँदैन, त्यसलाई जिउँदो लाश ठान्नु । जुन मनुष्य सास फेरेर पनि तुलसीको सुगन्ध अनुभव गर्दैन, त्यसलाई सास फेर्न मुर्दा ठान्नू ॥२३॥ भगवान्‌को नामोच्चारण गर्दा जुन हृदय द्रवीभूत नहोओस्, आँखामा आँसु नआओस् र सारा शरीर गद्‌गद् नहोओस्, त्यसलाई जिउँदो शरीर नमानेर काठको पुतली ठान्नुपर्दछ ॥२४॥ हे सूत ! तपाईंले अहिलेसम्म अनेक हाम्रो मनको अनुकूल कुरा भन्नु भयो, तर अब यो भन्नुहवस्—ती अद्वितीय भगवद्भक्त परीक्षितले के सोधे र व्यासदेवका छोरा आत्मविद्या-विशारद शुकदेवले के उत्तर दिए ।२५॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धे पं० गौरीशंकर

हरेय ॥ २२ ॥ जीवञ्छवो भागवताङ्घ्रिरेणुं न जातु मर्त्योऽभिलभेत यस्तु ॥ श्रीविष्णुपद्या मनुजस्तुलस्याः श्वसञ्छवो यस्तु न वेद गन्धं ॥ २३ ॥ तदश्मसारं हृदयं बतेदं यद्‌गृह्यमाणैर्हरिनामधेयैः ॥ न विक्रियेताथ यदा विकारो नेत्रे जलं गात्ररुहेषु हर्षः ॥ २४ ॥ अथाभिधेह्यङ्ग मनोऽनुकूलं प्रभाषसे भागवतप्रधानः ॥ यदाह वैयासकिरात्मविद्याविशारदो नृपतिं साधु पृष्टः ॥ २५ ॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धे तृतीयोऽध्यायः ॥ ३ ॥ सूत उवाच ॥ वैयासकेरिति वचस्तत्त्वनिश्चयमात्मनः ॥ उपधार्य मतिं कृष्ण औत्तरेयः सतीं व्यधात् ॥ १ ॥ आत्मजाया सुतागारपशुद्रविणबन्धुषु ॥ राज्ये चाविकले नित्यं विरूढां ममतां जहौ ॥ २ ॥ पप्रच्छ चेममेवार्थं यन्मां पृच्छथ सत्तमाः ॥ कृष्णानुभावश्रवणे श्रद्दधानो महामनाः ॥ ३ ॥ संस्थां विज्ञाय संन्यस्य कर्म त्रैवर्गिकं च यत् ॥ वासुदेवे भगवति आत्मभावं दृढं गतः ॥ ४ ॥ राजोवाच ॥ समीचीनं वचो ब्रह्मन्सर्वज्ञस्य तवानघ ॥ तमो विशीर्यते मह्यं हरेः कथयतः कथाम् ॥ ५ ॥ भूय एव विवित्सामि भगवानात्ममायया ॥ यथेदं सृजते विश्वं दुर्विभाव्यमधीश्वरैः ॥ ६ ॥ यथा गोपायति विभुर्यथा संयच्छते पुनः ॥ यां यां शक्तिमुपाश्रित्य पुरुशक्तिः परः पुमान् ॥ आत्मानं क्रीडयन्क्री-

'वसिष्ठ' कृत नेपाली भाषाटीकायां तृतीयोऽध्यायः ॥३॥ ( राजा परीक्षितको सृष्टि सम्बन्धी प्रश्न । ) सूतजी भन्नलागे–हे शौनक ! व्यासदेवका पुत्र शुकमुनिको यो तत्त्वज्ञानात्मक कुरा सुनेर राजा परीक्षितले भगवान् श्रीकृष्णमा नै आफ्नो बुद्धि लगाए । उनले यो निश्चय गरे–भगवान् नारायणको आराधनाले मेरो निस्तार हुन सक्दछ ॥१॥ यो सद्विवेक उत्पन्न भएपछि तिनले आफ्नो शरीर, स्त्री-पुत्र, घर, पशु, धन, भाइ-बन्धु र राज्यमा जुन ममता थियो, त्यसलाई हटाइदिए ॥२॥ हे सज्जन हो ! अहिले यहाँहरूले जुन प्रश्न सोध्नुभयो, यिनै प्रश्न राजा परीक्षितले शुकदेवसित सोधेथे, किनकि ती महामनस्वी राजाको हृदयमा नारायणका गुण सुन्ने श्रद्धा जागिसकेको थियो ॥३॥ परीक्षितले जब आफ्नो मृत्यु नजीक आएको जाने तब तिनले धर्म, अर्थ तथा कामको प्रतिपादन गर्ने कर्महरू त्यागिदिए र आफ्नो बुद्धिलाई सर्वतिरबाट संगेटेर नारायणमा लगाइदिए ॥४॥ त्यसपछि ती शुकदेवसित भन्दछन्—हे अनघ ! हजुर सर्वज्ञ हुनुहुन्छ, हजुरका वचन साँचा छन् र जति-जति हजुर भगवान्‌का दिव्य कथाहरू भन्दै जानुहुन्छ, उति-उति मेरो हृदयको अज्ञानरूपी अन्धकार नष्ट

हुँदै जान्छ ॥ ५ ॥ यस निम्ति म हजुरसित फेरि सोधिरहेछु—ती भगवान् आफ्नो मायाले कुन-कुनालाई पनि जानि नसकिने विश्वको रचना कसरी गर्दछन् ? ॥६॥ ती अनन्त शक्तिशाली नारायण ख्याल गर्दागर्दै कसरी यस विश्वको पालन र संहार गर्दछन् ? फेरि ती यहीँ जगत्‌बाट अनेक जगत् कसरी निर्माण गर्दछन् ? ॥ ६ ॥ हे ब्रह्मन् ! अद्भुतकर्म गर्ने ती नारायणका कर्तव्यहरू जान्न साह्रै कठिन छ, किनकि ठूला-ठूला तत्त्वज्ञानी पनि त्यसलाई जान्ने उपाय गरेर पनि असफल भएका छन् ॥ ती एक्लै परमात्मा प्रकृतिका गुणहरूको अनुसरण गर्दै एकैपल्ट वा यथाक्रम अनेक जन्म लिएर धेरै कर्महरू कसरी सम्पन्न गर्दछन् ? ॥९॥ हजुर कुन यस्तो उपदेश दिनुहवस्—जसले मेरो यो शंका निवारण हुन सकोस्। किनकि हजुर वेदहरूका निपुण ज्ञाता र वेदान्तहरूमा पनि हजुरको असाधारण गति ॥ १० ॥ सूतजी भन्दछन्—यस प्रकार राजा परीक्षितले सोधेपछि शुकदेव मनमनै श्रीकृष्ण भगवान्‌को स्मरण गरेर उनको गुण-गान गर्न प्रारम्भ गरिदिए ॥११॥ शुकदेव भन्दछन्—"पञ्च प्रपञ्चात्मक संसारको उत्पत्ति, पालन र संहार गर्नका लागि सत्त्वादि तीनै गुणहरूबाट

द्भ्करोति विकरोति च ॥७॥ नूनं भगवतो ब्रह्मन्हरेरद्भुतकर्मणः ॥ दुर्विभाव्यमिवाभाति कविभिश्चापि चेष्टितम् ॥ ८ ॥ यथा गुणांस्तु प्रकृतेर्युगपत्क्रमशोऽपि वा ॥ बिभर्ति भूरिशस्त्वेकः कुर्वन्कर्माणि जन्मभिः ॥ ९ ॥ विचिकित्सितमेतन्मे ब्रवीतु भगवान् यथा ॥ शब्दे ब्रह्मणि निष्णातः परस्मिंश्च भवान्खलु ॥१०॥ सूत उवाच ॥ इत्युपामन्त्रितो राज्ञा गुणानुकथने हरेः ॥ हृषीकेशमनुस्मृत्य प्रतिवक्तुं प्रचक्रमे ॥११॥ श्रीशुक उवाच ॥ नमः परस्मै पुरुषाय भूयसे सदुद्भवस्थाननिरोधलीलया ॥ गृहीतशक्तित्रितयाय देहिनामन्तर्भवायानुपलक्ष्यवर्त्मने ॥ १२ ॥ भूयो नमः सद्वृजिनच्छिदेऽसतामसंभवायाखिलसत्त्वमूर्तये ॥ पुंसां पुनः पारमहंस्य आश्रमे व्यवस्थितानामनुमृग्यदाशुषे ॥ १३ ॥ नमो नमस्तेऽस्त्वृषभाय सात्वतां विदूरकाष्ठाय मुहुः कुयोगिनाम् ॥ निरस्तसाम्यातिशयेन राधसा स्वधामनि ब्रह्मणि रंस्यते नमः ॥ १४ ॥ यत्कीर्तनं यत्स्मरणं यदीक्षणं यद्वंदनं यच्छ्रवणं यदर्हणम् ॥ लोकस्य सद्यो विधुनोति कल्मषं तस्मै सुभद्रश्रवसे नमो नमः ॥ १५ ॥ विचक्षणा यच्चरणोपसादनात् संगं व्युदस्योभयतोऽन्तरात्मनः ॥ विदन्ति हि ब्रह्मगतिं गतक्लमास्तस्मै सुभद्रश्रवसे नमो नमः ॥ १६ ॥ तपस्विनो दानपरा यशस्विनो मनस्विनो मन्त्रविदः सुमङ्गलाः ॥ क्षेमं न

तीन शक्ति ( ब्रह्मा, विष्णु र महेश ) रूपग्रहण गर्ने, अन्तर्यामी र अज्ञेय पन्थ भएका ती परमपुरुष परमात्मालाई नमस्कार गर्दछु ॥१२॥ जुन नारायण सज्जनहरूका पाप नष्ट पारिदिन्छन्, दुष्टहरूको संहार गर्दछन् र जो जुन रूपमा उनको पूजा गर्दछ, त्यसलाई उही रूपमा सिद्धि प्रदान गर्दछन् परमहंसाश्रममा स्थित रहने मनुष्य बारंबार तत्त्वको खोजी गर्दछन्, ती भगवान् ती खोजकर्तालाई त्यो तत्त्व स्वयं प्रदान गर्दछन्। यस्ता नारायणलाई म एकपल्ट फेरि नमस्कार गर्दछु ॥१३॥ भक्तहरूका प्रतिपालक, भक्तिबाट विमुख व्यक्तिहरूको निम्ति दुर्लभ र सम्पत्तिमा जसको बराबर वा जोभन्दा श्रेष्ठ अरू कोही छैन, यस्ता स्वयं प्रकाशमान र तेजमा रमण गर्ने भगवान्‌लाई नमस्कार छ ॥१४॥ जसका नामको कीर्तन, जसका रूपको स्मरण, जसको वन्दना, जसको यश श्रवण र जसको पूजा तुरुन्त पापहरू नष्ट पारिदिन्छ ती मङ्गलमयी कीर्ति भएका नारायणलाई मेरो पुनः पुनः नमस्कार छ ॥ १५ ॥ विवेकशील मनुष्य जसका चरणको भजन गरेर आफ्नो अन्तरात्मा द्वारा इहलोक र परलोक दुवै लोकलाई त्यागेर अनायास ब्रह्मगति प्राप्त गरिदिन्छन् ती मङ्गलमय कीर्ति भएका नारायणलाई मेरो नमस्कार

छ ॥१६॥ ठूला-ठूला दानी, यशस्वी, मनस्वी र मङ्गलमय मन्त्रहरूका ज्ञाता पनि आफ्नू शुभाऽशुभ कर्मफल उनलाई अर्पण नगरेर सुखी हुन्नन्, ती मङ्गलमय चरित्र भएका नारायणलाई मेरो नमस्कार छ ॥१७॥ किरात भील, हूण नैदेहक पुरुषबाट पुल्कामी स्त्रीमा उत्पन्न ), आन्ध्र ( ब्राह्मणीमा वैश्यको संसर्गबाट आयमान पुत्र वैदेहक कहिन्छ, त्यस वैदेहकको छोरो आन्ध्र कहिन्छ ), पुलिन्द ( निष्ठबाट किरातीमा उत्पन्न सन्तान ) पुल्कस ( चाण्डालको छोरो ), आभीर ( ब्राह्मणद्वारा आम्बष्ठी कन्याबाट उत्पन्न सन्तान ), कंक, यवन तथा खस यी बाहेक अन्य नीच जातिका पुरुष पनि जसको शरणमा गएर पवित्र हुन्छन्, ती सर्वसमर्थ भगवान्‌लाई बारम्बार प्रणाम छ ॥१८॥ आत्मज्ञानीहरूका प्रभु त्रयीमय र ब्रह्मा तथा शिव आदिको किन्कस भावले आराधना गर्दा पनि जसको रूप जान्न सकिन्न, ती नारायण ममाथि प्रसन्न होऊन् ॥१९॥ ती लक्ष्मीपति, यज्ञपति, अन्धक-वृष्णि तथा सत्पुरुषका स्वामी, प्रजापति, बुद्धिपति, लोकपति, पृथ्वीपति र सबै सज्जनहरूका अधिपति नारायण ममाथि प्रसन्न होऊन् ॥ २० ॥ जसका चरणको ध्यान गरेर ज्ञानीजन आफ्नो बुद्धि शुद्ध पार्दछन् र

विन्दन्ति विना यदर्पणं तस्मै सुभद्रश्रवसे नमो नमः ॥१७॥ किरातहूणान्ध्रपुलिन्दपुल्कसा आभीरकङ्काः यवनाः खसादयः ॥ येऽन्ये च पापा यदुपाश्रयाश्रयाः शुद्ध्यन्ति तस्मै प्रभविष्णवे नमः ॥ १८ ॥ स एष आत्माऽऽत्मवतामधीश्वरस्त्रयीमयो धर्ममयस्तपोमयः ॥ गतव्यलीकैरजशङ्करादिभिर्वितर्क्यलिङ्गो भगवान्प्रसीदताम् ॥ १९ ॥ श्रियः पतिर्यज्ञपतिः प्रजापतिर्धियां पतिर्लोकपतिर्धरापतिः ॥ पतिर्गतिश्चान्धकवृष्णिसात्वतां प्रसीदतां मे भगवान्सतां पतिः ॥२०॥ यदङ्घ्र्यनुध्यानसमाधिधौतया धियाऽनुपश्यन्ति हि तत्त्वमात्मनः ॥ वदन्ति चैतत्कवयो यथारुचं स मे मुकुन्दो भगवान्प्रसीदताम् ॥ २१ ॥ प्रचोदिता येन पुरा सरस्वती वितन्वताऽजस्य सतीं स्मृतिं हृदि ॥ स्वलक्षणा प्रादुरभूत्किलास्यतः स मे ऋषीणामृषभः प्रसीदताम् ॥२२॥ भूतैर्महद्भिर्य इमाः पुरो विभुर्निर्माय शेते यदमूषु पूरुषः ॥ भुङ्क्ते गुणान्षोडश षोडशात्मकः सोऽलंकृषीष्ट भगवान्वचांसि मे ॥२३॥ नमस्तस्मै भगवते व्यासायामिततेजसे ॥ पपुर्ज्ञानमयं सौम्या यन्मुखाम्बुरुहासवम् ॥ २४ ॥ एतदेवात्मभू राजन्नारदाय विपृच्छते ॥ वेदगर्भोऽभ्य-

त्यो शुद्ध बुद्धिले आत्मतत्त्वलाई प्राप्त गरेर आफ्नो रुचि अनुसार सगुण-निर्गुण आदि भेदद्वारा जसको विविध गुण गाइन्छन्, त्यस्ता गोविन्द भगवान् ममाथि प्रसन्न होऊन् ॥२१॥ कल्पको आदिमा ब्रह्माको हृदयमा जसले सृष्टि गर्न पवित्र बुद्धि उत्पन्न गरे र ब्रह्माको मुखबाट जुन नारायण द्वारा प्रेरित सरस्वती ( वेदको रूपमा ) प्रकट भइन्, ज्ञान प्रदान गर्नेहरूमा श्रेष्ठ ती भगवान् ममाथि प्रसन्न होऊन् ॥२२॥ जो ठूला-ठूला प्राणीहरूको शरीर बनाएर सबैको हृदयमा निवास गर्दछन् र जो षोडशात्मा भएर सोह्र ( एघार इन्द्रिय र पाँच तन्मात्रा ) यी गुणहरूको उपभोग गर्दछन्, ती नारायण मेरो वाणीलाई अलंकृत गरिदिऊन् अर्थात् म जे भनूँ त्यो सरस र भावमय होओस् जसले श्रोतागण प्रेमपूर्वक भगवत्कथा सुनुन् ॥२३॥ ती अमित तेजस्वी व्यास मुनिलाई पनि नमस्कार छ, जसको मुख-कमलबाट निस्केको पवित्र ज्ञानमय आसवलाई वैशम्पायन आदि सौम्य भक्तहरूले ठूलो प्रेमले पिएका थिए ॥ २४ ॥ हे राजन् ! तिमीले जुन प्रश्न गर्‍यौ, यही कुरा नारद मुनिले आफ्ना पिता ब्रह्माजीसित सोधेका थिए । चारै वेदहरूलाई हृदयङ्गम गरिसक्नेका ब्रह्माले यही भागवत ( महापुराण ) [illegible]

गर्ने र ब्रह्मालाई साक्षात् विष्णुले सुनाउनुभएको ॥२५॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धे पं॰ गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषा-टीकायां चतुर्थोऽध्यायः ॥४॥ (सृष्टिको क्रम) पछिल्लो अध्यायमा भनिसकिएको छ कि नारदले ब्रह्माजीसित प्रश्नगरे र चतुराननले उनका प्रश्नहरूको उत्तर दिएका थिए । प्रस्तुत प्रश्न गर्दै नारद आफ्ना पिता ब्रह्मासंग भन्दछन्– हे देवदेव ! हे भूतनाथ र सबैका पूर्वज ! हजुरलाई प्रणाम छ । हजुर मलाई ज्ञानको साधन भन्नुहवस् र त्यो साधन यस्तो हुनुपर्दछ–जसले आत्मतत्व जान्न सकियोस् ॥ १ ॥ प्रत्यक्षमा त यो विश्व नै आत्मज्ञानको साधन हुनसक्छ । यस निम्ति यसैको विषयमा प्रश्न गर्दै म भन्दछु–त्यो तत्वको जुन रूप हो, जसले त्यसको रचना गरेको होस्, जसमा त्यसको लय भएर जाने हो, त्यो जसको अधीन होस् र त्यो जुन प्रकारको होस्, हजुर मलाई यथार्थरूपमा त्यो तत्व भन्नुहवस् ॥२॥ हजुर यो त भन्नै सक्नु हुन्न कि 'म जान्दिन' किनभने हजुर सबै कुरा जान्नु हुन्छ । हजुर नै भूत, भविष्य र वर्तमानका स्वामी हुनुहुन्छ । यो समस्त विश्व हातमा राखेका अमला झैं हजुरलाई स्पष्ट देखिरहेको छ र हजुरले नै आफ्नो विशेष ज्ञानद्वारा यसको निर्णय गर्नुभएको छ ॥३॥ अस्तु, अरु कुरा छाडिदिएर पहिले हजुर यही भन्नुहवस् कि हजुरलाई यो ज्ञान कहाँबाट प्राप्त भयो ? हजुर कसको भरमा अडिनु भएको छ ? कसको अधीन

धात्साक्षाद्यदाह हरिरात्मनः ॥२५॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धे चतुर्थोऽध्यायः ॥ ४ ॥ नारद उवाच ॥ देवदेव नमस्तेऽस्तु भूतभावन पूर्वज ॥ तद्विजानीहि यज्ज्ञानमात्मतत्त्वनिदर्शनम् ॥ १ ॥ यद्रूपं यदधिष्ठानं यतः सृष्टमिदं प्रभो ॥ यत्संस्थं यत्परं यच्च तत्तत्त्वं वद तत्त्वतः ॥ २ ॥ सर्वं ह्येतद्भवान्वेद भूतभव्यभवत्प्रभुः ॥ करामलकवद्विश्वं विज्ञानावसितं तव ॥ ३ ॥ यद्विज्ञानो यदाधारो यत्परस्त्वं यदात्मकः ॥ एकः सृजसि भूतानि भूतैरेवात्ममायया ॥ ४ ॥ आत्मन्भावयसे तानि न पराभावयन्स्वयम् ॥ आत्मशक्तिमवष्टभ्य ऊर्णनाभिरिवाक्लमः ॥ ५ ॥ नाहं वेद परं ह्यस्मिन्नावरं न समं विभो ॥ नामरूपगुणैर्भाव्यं सदसत्किञ्चिदन्यतः ॥ ६ ॥ स भवानचरद्घोरं यत्तपः सुसमाहितः ॥ तेन खेदयसे नस्त्वं परां शङ्कां प्रयच्छसि ॥ ७ ॥ एतन्मे पृच्छतः सर्वं सर्वज्ञ सकलेश्वर ॥ विजानीहि तथैवेदमहं बुद्ध्येऽनुशासितः ॥ ८ ॥ ब्रह्मोवाच ॥ सम्यक्कारुणिकस्येदं वत्स

रहनु हुन्छ ? हजुरको स्वरूप कुन हो ? मेरो विचारमा त हजुर नै स्वतन्त्र परमेश्वर हुनुहुन्छ र हजुर एक्लै पनि आफ्नो शक्तिद्वारा यो चराचर जगत्को रचना गर्नुहुन्छ ॥ ४ ॥ हजुर आफ्नै शक्तिले त्यसको पालन पनि गर्नुहुन्छ, तर निरन्तर सृष्टि र पालनको कार्य गर्दागर्दै पनि हजुर थाक्नुहुन्न जसै–माकुरो आफ्नो शक्तिले सबैकुरा गर्दछ– त्यहाँ दशा हजुरको छ ॥५॥ हे विभो ! म त यो विश्वमा हजुरभन्दा उत्तम, मध्यम तथा अधम अरु कसैलाई पनि देख्दिन । यस जगत्मा कैयौं जीव सत्, असत्, स्थूल तथा सूक्ष्म रूपमा देखिएरहेछन् । हजुरबाहेक तिनका स्वामित्व अरुनि कोही हुन सक्छन् भन्नेकुरा मेरो बुद्धिमा आइरहेको छैन॥६॥ यस प्रकार स्मर्वगुणसम्पन्न भएरपनि हजुरले जुन घोर तपस्या गर्नुभयो, यसले मलाई भ्रम भइरहेछ र हृदयमा यो शङ्का उब्जिरहेको छ कि के हजुरबाहेक अर्को ईश्वर पनि छ–जो हजुरभन्दा पनि ठूलो छ ? ॥७॥ हे सर्वज्ञ ! तथा हे सर्वेश्वर ! मैले हजुरसित जे अति सोधें छ, त्यसको यस्तो उत्तर दिएर मेरो चित्त बुझाउनु हवस् जसमा म हजुरले बताउनुभएका सबै कुरा बुझ्नसकूं ॥८॥ परोपकारी नारदका कुराले प्रसन्न भएर ब्रह्मा भन्नु हुन्छ–हे वत्स ! तिमी

© उदाहरण– महाराज भीष्मको धाम्नो समरीमा एक्कासि आगो लाग्यो । त्यसमा धेरै व्यक्ति डटेर मरे पनिसकेको पश्चात्कयार मानिस महाहतामा मिलिस करार करार राखिरहेका थिए । शेष सामला दुःख ना–हे राजा र धेरै जमिनका नोकरहरूलाई आगोले पिलायो । तिनको मालिक गनिरहेको थियो–"यो ती दुवैलाई बचाउँछ, त्यसलाई म दुइ हजार मोहर पुरस्कार दिनेछु!" तर आगो यति भयङ्कर थियो कि कोही पनि साहस

सन्देह र प्रश्न सान्है राम्रो छ । यस निम्ति पनि यो सान्है राम्रो कुरा छ कि मलाई नारायणको गुण-गान गर्न उत्तम पथमा प्रवृत्त गरिरहेका छौ ॥ ९ ॥ हे नारद ! जस्तो कि तिमी भनिरहेका छौ, त्यो तिम्रो कथन झूटो होइन, म भन्दा पर पनि अर्को कुनै महाशक्ति छ र त्यसैद्वारा मलाई कर्म गर्ने सामर्थ्य प्राप्त हुन्छ, यो तिमीलाई थाहा छैन ।.१०॥ जसले आफ्नो तेज द्वारा यस विश्वलाई प्रकाशित पारेको छ, म त्यसैको प्रकाशद्वारा यसलाई सृष्टिरूपमा अभिव्यक्त गर्दछु । जस्तै–सूर्य,चन्द्र ताराहरू अन्य कसैको तेजले तेजोमय देखिन्छन्–त्यसै प्रकार म पनि छु । यसमा मेरो पुरुषार्थ केही पनि छैन । वेद पनि भन्दछन्–न तत्र सूर्यो भाति न चन्द्रतारकं नेमा विद्युतो भान्ति कुतोऽयमग्निः । तमेव भान्तमनुभाति सर्वं तस्यैव भासा सर्वमिदं विभाति ॥ अर्थात्–न सूर्य टल्कन्छन् न चन्द्रमा र न तारा त्यो बिजुली र आगो पनि टल्कन्छन । यी सबै उनै तेजोमय नारायणका तेजद्वारा टल्कन्छन् ॥११॥ ती भगवान्लाई नमस्कार गरेर म उनै वासुदेवको ध्यान गर्दछु–जसको त्रिगुणमयी मायाले गर्दा सबै मलाई जगद्गुरु भन्दछन्, तिनलाई पुनः पुनः नमस्कार छ । यो पहिले नै भनिसकिएको छ

ते विचिकित्सितम् ॥ यदहं चोदितः सौम्य भगवद्वीर्यदर्शने ॥ ९ ॥ नानृतं तव तच्चापि यथा मां प्रब्रवीषि भोः ॥ अविज्ञाय परं मत्त एतावत्त्वं यतो हि मे ॥ १० ॥ येन स्वरोचिषा विश्वं रोचितं रोचयाम्यहम् ॥ यथार्कोऽग्निर्यथा सोमो यथर्क्षग्रहतारकाः ॥ ११ ॥ तस्मै नमो भगवते वासुदेवाय धीमहि ॥ यन्मायया दुर्जयया मां ब्रुवन्ति जगद्गुरुम् ॥ १२ ॥ विलज्जमानया यस्य स्थातुमीक्षापथेऽमुया ॥ विमोहिता विकत्थन्ते ममाहमिति दुर्धियः ॥ १३ ॥ द्रव्यं कर्म च कालश्च स्वभावो जीव एव च ॥ वासुदेवात्परो ब्रह्मन्न चान्योऽर्थोऽस्ति तत्त्वतः ॥ १४ ॥ नारायणपरा वेदा देवा नारायणाङ्गजाः ॥ नारायणपरा लोका नारायणपरा मखाः ॥ १५ ॥ नारायणपरो योगो नारायणपरं तपः ॥ नारायणपरं ज्ञानं नारायणपरा गतिः ॥ १६ ॥ तस्यापि द्रष्टुरीशस्य कूटस्थस्याखिलात्मनः ॥ सृज्यं सृजामि सृष्टोऽहमीक्षयैवाभिचोदितः ॥ १७ ॥ सत्त्वं रजस्तम इति निर्गुणस्य

कि जब भगवान्को इच्छा हुन्छ तब आफ्नो मायाको वशवर्ती भएर संसारको रचनाभन्दा अगाडि नारायणको नाभि-कमलबाट ब्रह्मा उत्पन्न हुन्छन् र ब्रह्माबाट नै सृष्टि आरम्भ हुन्छ । यसैले म जगद्गुरु कहिन्छु ॥१२॥ यद्यपि माया स्वयं केही गर्दिनन् तापनि ती नारायणसित लज्जित हुँदै माया हामीहरूलाई मोहित पार्दछिन् । यसैले हामी दुर्बुद्धि व्यक्तिहरू स्वयं कर्ता बनेर 'मपाईं' कहिनखोज्दछौं र भन्दछौं–'यो मेरो हो, 'यो तिम्रो हो । 'मैले यो गरें–त्यो गरें' ॥१३॥ यस प्रकार–'हामी भन्दा पनि ठूलो अर्को कुनै ईश्वर छ' यो कुरा बताएर नारदको 'यदधिष्ठानं' आदि प्रश्नहरूको उत्तर दिँदै भन्दछन्–द्रव्य ( उपादानरूप महाभूत ), कर्म (जन्मको निमित्त), काल स्वभाव र जीव, यी सबै नारायण नै हुन् । तीदेखि पृथक् अरू कोही पनि छैन ॥१४॥ सबै वेद नारायण स्वरूप छन् । सबै देवता नारायणका अंशबाट उत्पन्न भएका हुन् । स्वर्ग आदि सबै लोक नारायणपरक छन् र यी सबै नारायणलाई प्राप्त गर्ने साधक हुन् ॥१५॥ योग-प्राणायाम आदि चित्त एकाग्र पारेर नारायण प्राप्तिका साधक हुन् । ज्ञान साध्य हुनाले नारायणपरक हो र अन्य मोक्षादि स्वयम् ज्ञानका फल हुन् ।

---

भइरहेको थियन । आफ्नो ध्यान आर्पणिया पारेर यो आगोमा हात्कालस्यो ? तर भाग्य यीगले उस बखत थोरा अवधूत सन्त त्यहाँ आइपुगे । त्यो दृश्य देखेर–'ॐ नमो भगवते वासुदेवाय' भन्दै त्यो आगोमा हात फाले र ती दुवै लोकलाई सकुशल निकेर ल्याए । त्यो व्यापारीले तुरुन्त दुइ हजार असर्फी उनलाई भेटी स्वरूप दिनलागे । त्यो देखेर सन्तले भने–'यी असर्फी फकीरर सेवाका र ईश्वरलाई धन्यवाद देऊ । जाउ, पर लोक सधार्नेका लागि मैले यस संसारका सुखहरूलाई छाडिदिएको छु भने तिम्रो सम्पत्ति लिएर के गर्ने ?

यसै निम्ति पनि नारायण नै हुन् ॥१६॥ ती सर्वदर्शी निर्विकार सबैका आत्मास्वरूप तथा भजन गर्न योग्य नारायणको दृष्टि-संकेतले नै यस विश्वको रचना गरेको हुँ, किनकि पहिले स्वयं उनले नै मेरो सृष्टि गरेका हुन् ॥१७॥ यदि यो भन्दछौ कि 'तब ईश्वर र जीवको विभाग कसरी भयो ?' त्यो पनि सुन—निर्गुण भएर पनि सर्वव्यापक ती नारायणमा सत्व, रज र तम यी तीनै गुण छन् । तिनलाई नारायणको माया स्थिति, सृष्टि र संहार कार्य गर्नको निम्ति आफूसित लिने गर्दछन् ॥ १८ ॥ तीनै तीन गुण, पाँच-पाँच महाभूत र इन्द्रिय-देवताहरूको आश्रय बनेर वास्तवमा सर्वदा मुक्त रहने जीवलाई देह तथा इन्द्रिय आदिको अभिमानी तुल्याएर बाँधिदिने गर्दछन् ॥ १९ ॥ हे ब्रह्मन् ! मेरा नारायण इनै तीन गुणहरूद्वारा सबैलाई छुक्याउने र आफ्नो गतिलाई स्वयं हेर्दै समस्त विश्व र मेरो प्रभुपदमा आसीन छन् ॥२०॥ अब सृष्टि गर्ने किसिम वर्णन गर्दै भन्दछन्—ती मायाका ईश आफ्नो मायाकै बलमा यौटाको अनेक रूप धारण गर्दै काल, कर्म र स्वभावलाई स्वीकार गर्दै र इनैको अनुकूल चल्दछन् ॥२१॥ ती परम पुरुषको अधीनतामा रहने कालसित गुणहरूको भेदभाव उत्पन्न भयो । तिनको स्वभावबाट परिणाम ( यौटा रूप त्यागेर रूपान्तर प्राप्त गर्नु ) उत्पन्न भयो र जीवको अदृष्ट कर्महरूबाट महत्तत्त्वको उत्पत्ति भयो ॥२२॥ महत्तत्त्वको

गुणात्रयः ॥ स्थितिसर्गनिरोधेषु गृहीता मायया विभोः ॥ १८ ॥ कार्यकारणकर्तृत्वे द्रव्यज्ञानक्रियाश्रयाः ॥ बध्नन्ति नित्यदा मुक्तं मायिनं पुरुषं गुणाः ॥१९॥ स एष भगवाँल्लिङ्गैस्त्रिभिरेभिरधोक्षजः ॥ स्वलक्षितगतिर्ब्रह्मन्सर्वेषां मम चेश्वरः ॥ २० ॥ कालं कर्म स्वभावं च मायेशो मायया स्वया ॥ आत्मनि स्वेच्छया प्राप्तं विबुभूषुरुपाददे ॥ २१ ॥ कालाद्गुणव्यतिकरः परिणामः स्वभावतः ॥ कर्मणो जन्म महतः पुरुषाधिष्ठितादभूत् ॥२२॥ महतस्तु विकुर्वाणाद्रजःसत्त्वोपबृंहितात् ॥ तमःप्रधानस्त्वभवद्द्रव्यज्ञानक्रियात्मकः ॥ २३ ॥ सोऽहंकार इति प्रोक्तो विकुर्वन्समभूत्त्रिधा ॥ वैकारिकस्तैजसश्च तामसश्चेति यद्भिदा ॥ द्रव्यशक्तिः क्रियाशक्तिर्ज्ञानशक्तिरिति प्रभो ॥ २४ ॥ तामसादपि भूतादेर्विकुर्वाणादभून्नभः ॥ तस्य मात्रा गुणः शब्दो लिङ्गं यद्द्रष्टृदृश्ययोः ॥ २५ ॥ नभसोऽथ विकुर्वाणादभूत्स्पर्शगुणोऽनिलः ॥ परान्वयाच्छब्दवांश्च प्राण ओजः सहो बलम् ॥२६॥ वायोरपि विकुर्वाणात्कालकर्मस्वभावतः ॥ उदपद्यत तेजो वै रूपवत्स्पर्शशब्दवत् ॥ २७ ॥ तेजसस्तु विकुर्वाणादासीदम्भो रसात्मकम् ॥

विकारबाट रजोगुण तथा सत्वगुणको वृद्धि हुन्छ र त्यसबाट तमोगुण-प्रधान द्रव्य-ज्ञान-क्रियात्मक जगत्को सृष्टि हुन्छ ॥ २३ ॥ यसैलाई अहङ्कार भन्दछन् । यस अहङ्कारका तीन भेद छन्—वैकारिक, तैजस र राजस । यी तीनै थरिमा तीन प्रकारका शक्तिहरू अन्तर्हित रहन्छन् । जस्तै—द्रव्यशक्ति, क्रियाशक्ति र ज्ञानशक्ति । द्रव्यशक्ति पृथ्वी-जल आदि पञ्च-महाभूतको सञ्चालन गर्दछन् । क्रियाशक्ति इन्द्रियहरूमा प्रभुत्व राख्दछन् र ज्ञानशक्ति प्राणिहरूलाई देवताहरूतिर लैजान्छन् ॥२४॥ तिनीहरूबाट तामस अहङ्कारको विकाररूप आकाश-को सृष्टि भयो । आकाशको मात्रा गुण शब्द हो । त्यही शब्द द्रष्टा र दृश्यका लक्षण बताउँछ ;—जस्तै—कसैले कसैसित 'हात्ती हात्ती' भन्यो । अब अर्को व्यक्ति जसले कहिल्यै पनि हात्ती देखेको छैन, त्यो त्यसले 'हात्ती-हात्ती' भनेको कुनै अर्थ हृदयङ्गम गर्न सक्दैन, जबसम्म कि हात्तीलाई आफ्नो आँखाले देख्दछ,अनि त्यसलाई हात्तीको लक्षण ज्ञात हुनेछ ॥२५॥ अनि फेर गएर आकाशको विकारबाट स्पर्श-गुण युक्त वायुको उत्पत्ति भयो । आकाशको संयोगबाट वायुमा शब्द उपज्यो । त्यही प्राण र ओजयुक्त बलरो लक्षणहरूले अधिक हुनलाग्यो ॥ २६ ॥ फेरि वायुको विकार काल, कर्म तथा स्वभावबाट रूपवान् एवं शब्द र स्पर्श गुणयुक्त तेजको उत्पत्ति भयो ॥ २७ ॥ तेजको विकारबाट रसात्मक जलको

उत्पत्ति भयो । त्यो जल आकाश आदिको संयोगबाट रूप, रस, स्पर्श र शब्द-गुण सम्पन्न भयो ॥२८॥ त्यस जलको विकारबाट गन्धवती पृथ्वी उत्पन्न भइन् । आकाशादिको संसर्ग गर्नाले रस, स्पर्श र रूप यी तीन गुण आए ॥२९॥ वैकारिक ( सात्त्विक अहङ्कार ) बाट मन तथा दस वैकारिक देवता उत्पन्न भए । जस्तै—दिशा, वायु, सूर्य, प्रचेता, अश्विनीकुमार ( यी पाँचै क्रमशः श्रोत्र, त्वचा, नेत्र, जिह्वा र घ्राणेन्द्रियका स्वामी बने । ) अग्नि, इन्द्र, उपेन्द्र ( विष्णु ), मित्र र प्रजापति ( यी पाँच क्रमशः वाणी, हात, पाउ, गुदा र लिङ्गका अधिष्ठाता भए । ) ॥३०॥ तेजको विकारबाट दस इन्द्रिय उत्पन्न भए, किनकि ज्ञानशक्ति (बुद्धि ) र क्रिया शक्ति ( प्राण ) यी दुवै तैजस अहङ्कारका नै कार्य हुन् । यही तैजस अहङ्कार-बाट ज्ञानरूपाको विशेषरूपा इन्द्रियहरू जायमान भए । ती इन्द्रिय हुन्—कान, त्वचा, चक्षु, जिह्वा, घ्राण, वाक्य, हात, पाउ, गुदा र लिंग ॥ ३१ ॥ जब यी महदादि भाव भिन्न-भिन्न रहेर शरीरको रचना गर्न सकेनन् ॥३२॥ तब भगवान्‌को शक्तिबाट प्रेरित भएर सत् र असत् यी दुवै प्रधान गुणका भाव यीँदमा मिसिएर समष्टि र व्यष्टि र व्यष्टिको भेदबाट आत्मा-

रूपवत्स्पर्शवच्चाम्भो घोषवच्च परान्वयात् ॥ २८ ॥ विशेषस्तु विकुर्वाणादम्भसो गन्धवानभूत् ॥ परान्वयाद्रसस्पर्शशब्दरूपगुणान्वितः ॥ २९ ॥ वैकारिकान्मनो जज्ञे देवा वैकारिका दश ॥ दिग्वातार्कप्रचेतोऽश्विवह्नीन्द्रोपेन्द्रमित्रकाः ॥ ३० ॥ तैजसात्तु विकुर्वाणादिन्द्रियाणि दशाभवन् ॥ ज्ञानशक्तिः क्रियाशक्तिर्बुद्धिः प्राणस्तु तैजसौ ॥ श्रोत्रं त्वग्घ्राणदृग्जिह्वावाग्दोर्मेढ्राङ्घ्रिपायवः ॥ ३१ ॥ यदैतेऽसङ्गता भावा भूतेन्द्रियमनोगुणाः ॥ यदायतननिर्माणे न शेकुर्ब्रह्मवित्तम ॥ ३२ ॥ तदा संहत्य चान्योन्यं भगवच्छक्तिचोदिताः ॥ सदसत्त्वमुपादाय चोभयं ससृजुर्ह्यदः ॥ ३३ ॥ वर्षपूगसहस्रान्ते तदण्डमुदकेशयम् ॥ कालकर्मस्वभावस्थो जीवोऽजीवमजीवयत् ॥ ३४ ॥ स एव पुरुषस्तस्मादण्डं निर्भिद्य निर्गतः ॥ सहस्रोर्वङ्घ्रिबाह्वक्षः सहस्राननशीर्षवान् ॥ ३५ ॥ यस्येहावयवैर्लोकान्कल्पयन्ति मनीषिणः ॥ कट्यादिभिरधः सप्त सप्तोर्ध्वं जघनादिभिः ॥ ३६ ॥ पुरुषस्य मुखं ब्रह्म क्षत्रमेतस्य बाहवः ॥ ऊर्वोर्वैश्यो भगवतः पद्भ्यां शूद्रोऽभ्यजायत ॥ ३७ ॥ भूर्लोकः कल्पितः पद्भ्यां भुवर्लोकोऽस्य नाभितः ॥ हृदा स्वर्लोक उरसा महर्लोको महात्मनः ॥ ३८ ॥ ग्रीवायां जनलोकश्च तपोलोकः स्तनद्वयात् ॥ मूर्धभिः सत्यलोकस्तु ब्रह्मलोकः सनातनः ॥ ३९ ॥

द्ब देह बनें ॥३३॥ अनि हजारौं वर्षपछि जलमा रहिरहेको त्यो अचेतन अण्डलाई काल, कर्म स्वभावको प्रधानता दिएर परमात्माले सजीव पारे ॥३४॥ अनि स्वयं परमात्मा त्यस अण्डलाई फोरेर त्यसबाट बाहिर निस्कयो तिनका हजारौं ऊरु, हजारौं आँखा, मुख र हजारौं मस्तक थिए ॥३५॥ त्यसपछि विद्वान्‌हरूले त्यसैको अंगबाट सबै लोकको कल्पना गरे । ऊरु भन्दा तर खुट्टासम्मका अंगबाट अतलदेखि पातालसम्मका सात लोक र तिघ्रादेखि माथिका अवयवबाट पृथ्वी आदि सात लोकको उत्पत्ति मानियो ॥ ३६ ॥ ती परम पुरुषका मुखबाट ब्राह्मण, बाहुदण्डबाट क्षत्रिय, दुई ऊरुबाट वैश्य र दुवै पाउबाट शूद्र उत्पन्न भए ॥ ३७ ॥ ती महात्माका दुवै पाउबाट भूर्लोक, नाभिबाट भुवर्लोक, हृदयबाट स्वर्लोक र छातीबाट महर्लोकको रचना भयो ॥ ३८ ॥ त्यसको ग्रीवाबाट जनलोक, दुवै स्तनबाट तपोलोक र मस्तकबाट सत्यलोकको रचना भयो । यी लोकहरूको अपेक्षा ब्रह्मलोक ( वैकुण्ठ ) सनातन छ । त्यसको कहिल्यै पनि विनाश हुँदैन ॥ ३९ ॥ ती परम पुरुषको कम्मरबाट अतललोक, दुई ऊरुबाट वितललोक, दुवै घुँडबाट सुतलोक र उनै परम पुरुष परमात्मा

तिघाबाट तलातल लोकको सृष्टि भयो । दुवै गुल्फबाट महातल लोक एवं कुर्कुचा र पैतालाबाट पाताललोक बन्यो ॥४०॥४१॥ पाउले भूर्लोक, नाभिबाट भुवर्लोक र मस्तकबाट स्वर्लोकको कल्पना भयो ॥४२॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषा-टीकायां पंचमोऽध्यायः ॥५॥ ब्रह्माले भन्नुभयो–विराट्रूपधारी ती महापुरुषका मुखबाट वचन, अग्नि त्वचा आदि अवयवहरूबाट गायत्री आदि छन्द, सात धातु तथा तिनको जिह्वाबाट हव्य र देवताहरूको अन्न, कव्य (पितृहरूको अन्न), अमृत देवतागण तथा पितृहरूलाई अर्पण गरेर शेष रहेको अन्न ) र सबै रसहरूको उत्पत्ति भयो ॥१॥ तिनको घ्राणेन्द्रियबाट जगत्‌का समस्त प्राणिहरूको प्राण, सामान्य तथा विशेष प्रकारका गन्ध र दुवै अश्विनीकुमार उत्पन्न भए ॥२॥ तिनका नेत्रबाट रूप, तेज, द्युलोक र सूर्य उत्पन्न भए । तिनका कान दशै दिशाहरू, नक्षत्र, आकाश र शब्दहरूका जनक भए । तिनको शरीर समस्त वस्तुहरूको सारांश र सौन्दर्यको केन्द्र बन्यो ॥३॥ तिनको त्वचा स्पर्श, वायु र सबै यज्ञहरूको उत्पत्ति स्थान बन्यो । तिनका रौं सबै वृक्षजातिका जनक भए, जसले कि यज्ञकार्यहरू

तलकर्ष्यां पातलं फलक्षमूरुभ्यां वितलं विभोः ॥ जानुभ्यां सुतलं शुद्धं जङ्घाभ्यां तु तलातलम् ॥४०॥ महातलं तु गुल्फाभ्यां प्रपदाभ्यां रसातलम् ॥ पातालं पादतलत इति लोकमयः पुमान् ॥ ४१ ॥ भूर्लोकः कल्पितः पद्भ्यां भुवर्लोकोऽस्य नाभितः ॥ स्वर्लोकः कल्पितो मूर्ध्ना इति वा लोककल्पना ॥ ४२ ॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धे पञ्चमोऽध्यायः ॥ ५ ॥ ब्रह्मोवाच ॥ वाचां वह्नेर्मुखं क्षेत्रं छन्दसां सप्त धातवः ॥ हव्यकव्यामृतान्नानां जिह्वा सर्वरसस्य च ॥ १ ॥ सर्वासूनां च वायोश्च तन्नासे परमायने ॥ अश्विनोरोषधीनां च घ्राणो मोदप्रमोदयोः ॥ २ ॥ रूपाणां तेजसां चक्षुर्दिवः सूर्यस्य चाक्षिणी ॥ कर्णौ दिशां च तीर्थानां श्रोत्रमाकाशशब्दयोः ॥ तद्गात्रं वस्तुसाराणां सौभगस्य च भाजनम् ॥ ३ ॥ त्वगस्य स्पर्शवायोश्च सर्वमेधस्य चैव हि ॥ रोमाण्युद्भिज्जजातीनां यैर्वा यज्ञस्तु संभृतः ॥ ४ ॥ केशश्मश्रुनखान्यस्य शिलालोहाभ्रविद्युताम् ॥ बाहवो लोकपालानां प्रायशः क्षेमकर्मणाम् ॥ ५ ॥ विक्रमो भूर्भुवः स्वश्च क्षेमस्य शरणस्य च ॥ सर्वकामवरस्यापि हरेश्चरण आस्पदम् ॥ ६ ॥ अपां वीर्यस्य सर्गस्य पर्जन्यस्य प्रजापतेः ॥ पुंसः शिश्न उपस्थस्तु प्रजात्यानन्दनिर्वृतेः ॥ ७ ॥ पायुर्यमस्य मित्रस्य परिमोक्षस्य नारद ॥ हिंसाया निरृतेर्मृत्योर्निरयस्य गुदः स्मृतः ॥ ८ ॥ पराभूतेरधर्मस्य तमसश्चापि पश्चिमः ॥ नाड्यो नदनदीनां तु गोत्राणामस्थिसंहतिः ॥ ९ ॥ अव्यक्तरस-

सम्पन्न हुन्छन् ॥ ४ ॥ तिनका केश मेघको, उनको दाह्री जुँगा बिजुलीको, हात-पाउका नङ शिला र फलामको उत्पत्ति स्थान भए । तिनका हात सबैको कल्याण गर्न र लोकपालहरूका जन्मदाता भए ॥५॥ भगवान्‌को विक्रम ( हिड्नु-डुल्नु ) बाट भूः भुवः स्वः यी तीन लोक, क्षेम ( पाएका धनादिको सुरक्षा ) र शरण (भयबाट रक्षा गर्न) का आश्रय बने । ती नारायणका चरण सबै कामना र वरदानका आधार बने ॥६॥ भगवान्‌को उपस्थ ( लिंग, ) जल, वीर्य, सृष्टि, मेघ, प्रजापति तथा सन्तान प्राप्तिका निम्ति गरिने सम्भोगबाट जायमान आनन्दको जनक बन्यो ॥७॥ तिनको गुदा यम, मित्र ( देवता विशेष ), मल-त्याग, हिंसा, अकल्याण र नरकको उत्पत्ति स्थान भयो ॥८॥ ती भगवान्‌को पृष्ठभाग पराजय, अधर्म र तमोगुणको आश्रय भयो । तिनका नाडीहरू नदीहरू र नदहरूको आश्रय बने । तिनका हाड्हरू संसारका पर्वतहरूको आश्रय बने ॥ ९ ॥ तिनको उदर अन्न आदि प्रधान

रस, सबै समुद्र र प्राणिहरूको पालनको उत्पत्ति स्थान बन्यो ! तिनको हृदय मनको जन्मदाता भयो ॥१०॥ ती परब्रह्मको आत्मा धर्म, मेरो ( ब्रह्माको ), तिम्रो ( नारदको ), सनकादि चार कुमार, शिव, तत्त्वज्ञान र सत्वगुणको आश्रय बन्यो ॥११॥ यहाँसम्म 'सहस्र शीर्षा पुरुषः' यस पुरुष सूक्तको वैदिक मन्त्रको अर्थ बताइसकियो। अब 'पुरुष एवेदं' को अर्थ बुझाउँदै ब्रह्माजी नारदसित भन्नुहुन्छ—'म, तिमी, शिव, तिम्रा दाजू सनकादि मुनि, देवता, दैत्य, मनुष्य, हात्ती, पक्षी, मृग आदि वनजन्तु सर्प ॥१२॥ गन्धर्व, अप्सरा, यक्ष, राक्षसगण, भूतगण, सर्प, पशु, पितर, सिद्ध, विद्याधर, चारण र वृक्ष आदि ॥१३॥ विविध प्रकारका जल-स्थल तथा आकाशचारी ग्रह, नक्षत्र, विद्युत् तथा मेघ आदि ॥१४॥ यी सबै र भूत, भविष्य तथा वर्तमान नारायणकै अधीन छन् । तिनले आफ्नो विशाल रूपद्वारा सम्पूर्ण विश्वलाई घेरिराखेको छ ॥१५॥ जस्तै—सूर्यमण्डल आफ्नो भित्र-बाहिर सबैतिर प्रकाश फिंजाउँछ, त्यसै गरेर त्यो विराट् पुरुष स्वयं आफूलाई प्रकाशित पार्दै संसारका सबै प्राणिहरूसम्म प्रकाश पुर्‍याउँछ ॥१६॥ अब ईश्वरको नित्यता बुझाउँदै पुरुषसूक्तको 'उतामृतत्वस्येशानो' यस वैदिक

सिन्धूनां भूतानां निधनस्य च ॥ उदरं विदितं पुंसो हृदयं मनसः पदम् ॥ १० ॥ धर्मस्य मम तुभ्यं च कुमाराणां भवस्य च ॥ विज्ञानस्य च सत्त्वस्य परस्यात्मा परायणम् ॥ ११ ॥ अहं भवान्भवश्चैव त इमे मुनयोऽग्रजाः ॥ सुरासुरनरा नागाः खगा मृगसरीसृपाः ॥ १२ ॥ गन्धर्वाप्स-रसो यक्षा रक्षोभूतगणोरगाः ॥ पशवः पितरः सिद्धा विद्याध्राश्चारणा द्रुमाः ॥ १३ ॥ अन्ये च विविधा जीवा जलस्थलनभौकसः ॥ ग्रहर्क्ष-केतवस्तारास्तडितः स्तनयित्नवः ॥ १४ ॥ सर्वं पुरुष एवेदं भूतं भव्यं भवच्च यत् ॥ तेनेदमावृतं विश्वं वितस्तिमधितिष्ठति ॥ १५ ॥ स्वधिष्ण्यं प्रतप-न्प्राणो बहिश्च प्रतपत्यसौ ॥ एवं विराजं प्रतपंस्तपत्यन्तर्बहिः पुमान् ॥१६॥ सोऽमृतस्याभयस्येशो मर्त्यमन्नं यदत्यगात् ॥ महिमैष ततो ब्रह्मन्पुरुषस्य दुरत्ययः ॥ १७ ॥ पादेषु सर्वभूतानि पुंसः स्थितिपदो विदुः ॥ अमृतं क्षेममभयं त्रिमूर्ध्नोऽधायि मूर्धसु ॥ १८ ॥ पादास्त्रयो बहिश्चासन्नप्रजानां य आश्रमाः ॥ अंतस्त्रिलोक्यास्त्वपरो गृहमेधोऽबृहद्व्रतः ॥ १९ ॥ सृती विचक्रमे विष्वक् साशनानशने उभे ॥ यदविद्या च विद्या च पुरुषस्तूभयाश्रयः ॥२०॥ यस्मादण्डं विराड् जज्ञे भूतेन्द्रियगुणात्मकः ॥ तद्द्रव्यमत्यगाद्विश्वं गोभिः सूर्य इवातपन् ॥२१॥ यदास्य नाभ्यान्नलिनादहमासं महात्मनः ॥

मन्त्रको अर्थ बुझाउँछन् । त्यो विराट् पुरुष मृत्यु र अन्त अर्थात् कर्मफलबाट परे छ । यसै कारण त्यो अमृतत्व ( मोक्षरूप निजानन्द ) र अभय यी दुवैका स्वामी हुन् । यसै कारण उनका उलंघनीय महिमा गान गरिन्छन् ॥१७॥ जो व्यक्ति उनको अधीन रहन्छन् तिनलाई ती परम पुरुष बन्धन र मोक्ष दुवै नै बेला-बेलामा प्रदान गर्दै रहन्छ । यो बुझाउनको निमित्त पुरुषसूक्तको 'पादोऽस्य विश्वाभूतानि' यो वैदिकमन्त्रको अर्थ स्पष्ट पार्दै भन्छन्—यी भूर्लोक आदि सबै लोक र यहाँका निवासी उनका पाउमा स्थित छन् र उनको तीन मस्तकहरूमा क्रमशः अमृत, क्षेम र अभय विद्यमान रहिरहन्छन् ॥१८॥ पूर्वकल्पमा पनि सन्तानहीन नैष्ठिक ब्रह्मचारी, वानप्रस्थ र यति, यिनका आश्रम तीनै लोकको बाहिर थिए र ब्रह्मचर्य व्रत हीन गृहस्थाश्रमी तीनैलोकका भित्र विद्यमान थिए ॥१९॥ ती जगत्पूज्य परमात्मा दक्षिण र उत्तर ती दुवै बाटोबाट हिड्दथे । दक्षिण मार्गको अर्थ हो—अविद्या र स्वार्थमय कर्म मार्ग । विद्या ( साधन र उपासनारूपी ) मार्ग यस्तो छ कि त्यसमा हिड्नाले सांसारिक भोग प्राप्ति हुन्छ र यहाँ मार्ग ( विद्या ) बाट मोक्ष पाइन्छ । त्यसमा हर्ने दुवै बाटो

लाई नाघिसकेको थियो ॥२०॥ त्यही परमात्माबाट यो ब्रह्माण्ड उत्पन्न भयो र उसैबाट इन्द्रियहरू तथा सत्त्वादि तीनै गुणले युक्त यौटा विराट् पुरुष उत्पन्न भयो। त्यही ईश्वर कहियो। त्यो ईश्वर त्यो विश्व, आफ्नो शरीर र अण्डबाट पनि अगाडि उसै गरी निस्केर गयो, जस्तै—मङ्गल ग्रहमा स्थित सूर्य आफ्ना किरण द्वारा सर्वत्र प्रकाश पुर्‍याउँदै अन्त्यमा मण्डल र विश्वलाई नाघिसक्दछ ॥२१॥ जब म त्यस महात्माको नाभिबाट जायमान कमलको गर्भबाट उत्पन्न भएँ, अनि ती विराट् पुरुषको शरीर बाहेक मैले केही देखिन। त्यस बखत मलाई पशु-युप आदि यज्ञका सामान पनि देखिएन ॥ २२ ॥ अरु केही नपाएर मैले ती परम पुरुषका अवयवहरूबाट नै यज्ञ-पशु (छाग आदि), युपको निम्ति वृक्ष, कुश जसमाथि म बसेको छु यो यज्ञस्थान र विविध गुणयुक्त कालको गरें ॥२३॥ यी बाहेक अनेक वस्तु, जस्तै—पात्र, ब्रीहि आदि औषधि, घिउ आदि स्नेह, मधुर, अम्ल आदि रस, फलाम, माटो, जल, यजुर्वेद तथा सामवेदका ऋचाहरू र चातुर्होत्र (अध्वर्यु आदि चार होताहरूबाट सम्पन्न हुने) कर्मको सृष्टि गरें ॥ २४ ॥ आनि मैले यज्ञहरूको ज्योतिष्टोम आदि नाम, स्वाहाकार आदि मन्त्र, दक्षिणा, ब्रह्मचर्य आदि व्रत, अग्नि आदि देवताहरूका अनुक्रम, बौधायन आदि कर्मपद्धतिका ग्रन्थ र अनुष्ठान गर्ने प्रकारहरूको सृष्टि गरे ॥ ५॥ विष्णु-

नाविदं यज्ञसंभारान्पुरुषावयवादृते ॥२२॥ तेषु यज्ञस्य पशवः सवनस्पतयः कुशाः ॥ इदं च देवयजनं कालश्चोरुगुणान्वितः ॥ २३ ॥ वस्तून्योषधयः स्नेहा रसलौहमृदो जलम् ॥ ऋचो यजूंषि सामानि चातुर्होत्रं च सत्तम ॥२४॥ नामधेयानि मन्त्राश्च दक्षिणाश्च व्रतानि च ॥ देवतानुक्रमः कल्पः संकल्पस्तन्त्रमेव च ॥२५॥ गतयो मतयश्चैव प्रायश्चित्तं समर्पणम् ॥ पुरुषावयवैरेते सम्भाराः संभृता मया ॥२६॥ इति संभृतसंभारः पुरुषावयवैरहम् ॥ तमेव पुरुषं यज्ञं तेनैवायजमीश्वरम् ॥२७॥ ततस्ते भ्रातर इमे प्रजानां पतयो नव ॥ अयजन्व्यक्तमव्यक्तं पुरुषं सुसमाहिताः ॥ २८ ॥ ततश्च मनवः काले ईजिरे ऋषयोऽपरे ॥ पितरो विबुधा दैत्या मनुष्याः क्रतुभिर्विभुम् ॥ २९ ॥ नारायणे भगवति तदिदं विश्वमाहितम् ॥ गृहीतमायोरुगुणः सर्गादावगुणः स्वतः ॥३०॥ सृजामि तन्नियुक्तोऽहं हरो हरति तद्वशः ॥ विश्वं पुरुषरूपेण परिपाति त्रिशक्तिधृक् ॥३१॥ इति तेऽभिहितं तात यथेदमनुपृच्छसि ॥ नान्यद्भगवतः किंचिद्भाव्यं सदसदात्मकम् ॥३२॥ न भारती मेऽङ्ग मृषोपलक्ष्यते न नै क्वचिन्मे मनसो मृषा गतिः ॥ न मे हृषीकाणि

को गति, देवताहरूको ध्यान, प्रायश्चित्त (यज्ञमा आउने विघ्नहरू हटाउने कर्म) र गरिएका समस्त कर्मलाई भगवदर्पण गर्ने विधान यी सबैलाई मैले उनै परम पुरुषको अवयवद्वारा बनाएँ ॥२६॥ जब यी सबै सामग्रीहरूलाई बनाइसकें, तब मैले तिनै सामग्रीद्वारा यज्ञस्वरूप परम पुरुष ईश्वरको पूजा गरें ॥२७॥ मपछि तिम्रा दाजु (मरीचि, अत्रि, अङ्गिरा, पुलस्त्य, पुलह, क्रतु, भृगु, वसिष्ठ र दक्ष) नौ जना प्रजापतिहरूले इन्द्र आदि देवताहरूको रूपमा व्यक्त र अव्यक्त अर्थात् इन्द्रियातीत नारायणको पूजा गरे ॥२८॥ त्यसपछि बेला-बेलामा अन्य ऋषि, पितृ, देवता, दैत्यहरू र मनुष्यहरूले पनि उनै यज्ञादिद्वारा ती महापुरुषको आराधना गरे ॥२९॥ ती नारायणमा नै यो समस्त विश्व विद्यमान छ, जसले स्वयं त्रिगुणातीत भएर पनि सृष्टिको आदिमा मायाका अगणित गुणहरू स्वीकार गरेका थिए ॥३०॥ उनैको आज्ञाले म सृष्टि गर्दछु, उनैको इच्छाले शिवजी सृष्टिको संहार गर्दछन् र ती मायापति स्वयं विष्णुरूप धारण गरेर यस सृष्टिको पालन गर्दछन् ॥३१॥ हे तात! ती परम पुरुषको विषयमा तिमीले मसित जे जति सोध्यौ, त्यो मैले सुनाएँ। कार्य-कारणात्मक यो संसार अथवा

भावी संसार पनि ती नारायणदेखि पृथक् हुँदैन जे जति छ, सबै उनैबाट छ ॥३२॥ मैले नारायणलाई आफ्नो उत्कण्ठापूर्ण हृदयमा बसालिराखेको छु । यसैतिम्ति हे अंग ! मेरो कुरा मिथ्या हुँदैन । मेरो मन दुष्ट मार्गमा जाँदैन मेरा इन्द्रियहरू असत्य मार्गमा जाँदैनन् ॥३३॥ तर यद्यपि म वेदमय, पूर्ण तपस्वी, सबै प्रजापतिको पूज्य तथा अधिपति छु । योगपथको अवलम्बन गरेर मैले ठूलो निपुणताका साथ चित्तलाई स्थिर पारेर ती परम पुरुषलाई खोजें, तर ती परम पितालाई पाउन सकीन—जसमा मेरो जन्म भएको छ ॥३४॥ शरणागत जनहरू-को भव-बन्धन काटिदिने, मङ्गलदायक र सुसेव्य ती नारायणका चरणलाई म प्रणाम गर्दछु । जो स्वयं आफ्नो मायाको वैभवलाई त्यसै गरी जान्न सक्तैनन्, जसरी आकाश स्वयं आफ्नो विस्तारलाई जान्न सक्तैन । अनि हामी जस्ता व्यक्ति उनलाई र तिनको मायाको प्रपंचलाई कसरी जान्न सक्छौं ? ॥ ३५ ॥ तिनको वास्तविक गतिलाई न तिमीहरू, न शिवजी नै जान्न सक्छन्, भने अरु देवता कसरी जान्न सक्थे ? उनको मायाद्वारा विमुग्ध बुद्धि भएर हामीहरू आफ्नो-आफ्नो बुद्धि अनुसार उनको वर्णन गर्दछौं ॥ ३६ ॥ हामी जसका

पतन्त्यसत्पथे यन्मे हृदौत्कण्ठ्यवता धृतो हरिः ॥३३॥ सोऽहं समाम्नायमयस्तपोमयः प्रजापतीनामभिवंदितः पतिः ॥ आस्थाय योगं निपुणं समाहि-तस्तं नाध्यगच्छं यत आत्मसंभवः ॥३४॥ नतोऽस्म्यहं तच्चरणं समीयुषां भवच्छिदं स्वस्त्ययनं सुमंगलम् ॥ यो ह्यात्ममायाविभवं स्म पर्यगाद्यथा नभः स्वान्तमथापरे कुतः ॥३५॥ नाहं न यूयं यदृतां गतिं विदुर्न वामदेवः किमुतापरे सुराः ॥ तन्मायया मोहितबुद्धयस्त्विदं विनिर्मितं चात्मसमं विचक्ष्महे ॥३६ ॥ यस्यावतारकर्माणि गायन्ति ह्यस्मदादयः ॥ न यं विदंति तत्त्वेन तस्मै भगवते नमः ॥३७॥ स एष आद्यः पुरुषः कल्पे कल्पे सृजत्यजः ॥ आत्माऽऽत्मन्यात्मनाऽऽत्मानं संयच्छति च पाति च ॥ ३८ ॥ विशुद्धं केवलं ज्ञानं प्रत्यक्सम्यगवस्थितम् ॥ सत्यं पूर्णमनाद्यन्तं निर्गुणं नित्यमद्वयम् ॥३९॥ ऋषे विदन्ति मुनयः प्रशान्तात्मेन्द्रियाशयाः ॥ यदा तदेवासत्तर्कैस्तिरोधीयेत विप्लुतम् ॥ ४० ॥ आद्योऽवतारः पुरुषः परस्य कालः स्वभावः सदसन्मनश्च ॥ द्रव्यं विकारो गुण इन्द्रियाणि विराट् स्वराट् स्थास्नु चरिष्णु भूम्नः ॥ ४१ ॥ अहं भवो यज्ञ इमे प्रजेशा दक्षादयो ये भवदादयश्च ॥ स्वर्लोकपालाः खगलोकपाला नृलोकपालास्तललोकपालाः ॥ ४२ ॥ गन्धर्वविद्याधरचारणेशा ये यक्षरक्षोरगनागनाथाः ॥ ये

अवतारहरूको गाथा गान गर्दछौं, तर राम्रो प्रकारले जान्न सक्तैनौं ती नारायणलाई नमस्कार छ ॥३७॥ उनै आदिपुरुष कल्प-कल्पमा आफ्नो मायाद्वारा नै सृष्टि, पालन र संहार कार्य गर्दै रहन्छन् ॥३८॥ त्यो ईश्वर विशुद्ध ज्ञानस्वरूप छ, त्यो सबैको अन्तरात्मामा विद्यमान रहन्छ र सन्देह आदिबाट रहित भएर स्थिर छ अर्थात् त्यसमा चञ्चलता छैन । त्यो सत्य-स्वरूप, आदि अन्त्यबाट रहित निर्गुण, नित्य र अद्वैत छ ॥३९॥ हे नारद ! मुनिजन पनि उसलाई देह, इन्द्रिय, मन शान्त पारेर मात्र जान्न सक्छन् । अशान्त पुरुषको हृदय-मा पनि यद्यपि ती महापुरुषको ज्योति जागिरहन्छ तथापि ती दुष्टहरूको विविध तर्कनाहरूद्वारा त्यो प्रकाश लुप्त भएर जान्छ ॥४०॥ त्यसको प्रथम अवतार 'पुरुष' हो । काल, स्वभाव, सद्, असत् ( अर्थात् कार्यकारणात्मिका प्रकृति ) यी तिनका शक्तिहरू हुन् । द्रव्य (महाभूत),अहङ्कार, सत्वादि गुण, इन्द्रियहरू, समष्टि शरीर तथा विराट् स्थावर र जङ्गम यी व्यष्टि शरीर नै ती परमपुरुषका कार्य हुन् ।४१॥ म (ब्रह्मा), शिव,विष्णु,दक्षादि प्रजापति,नारदादि देवर्षि,स्वर्गलोकपालक, खगोलपालक, नरलोकपालक, पातालपालक ॥४२॥ गन्धर्व, विद्याधर

र चारणहरूका रक्षक, यक्ष-राक्षस र सर्वलोकका पालक तथा समस्त श्रेष्ठ ऋषि, पितृ, दैत्यपति, सिद्धहरूका स्वामी तथा प्रेत-पिशाच-भूत-कूष्माण्ड ( भुङ्गी आदि ), जल-जन्तु, मृग तथा पक्षिहरूका अधिपति तिनका विभूति हुन् ॥४३॥ हे भगवन् ! संसारमा अति तेजयुक्त, ओजस्वी, बलवान्, सुन्दर, लज्जावान्, क्षमावान्, विभूतिसम्पन्न, बुद्धिमान, अद्भुत वर्णयुक्त, रूपवान् तथा अरू जीव छन्, ती सबै उनै परमात्माका विभूतिहरू हुन् ॥४४॥ हे ऋषे ! म ती महापुरुषका ती प्रधान-प्रधान गुणहरूको वर्णन गर्दछु, जसलाई ठूला-ठूला ऋषि गान गर्दछन् । तिमी ती उत्तम चरित्रहरू प्रेमपूर्वक सुन, किनकि त्यो सुन्नाले नजाति कुरा सुन्दा-सुन्दा कानमा जुन दोष आएको रहन्छ, त्यो नष्ट भएर *ईश्वरमा दृढ विश्वास हुन्छ ॥४५॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषा-टीकायां षष्ठोऽध्यायः ॥६॥ ब्रह्माजी भन्नु हुन्छ—जब भगवानले

वा ऋषीणामृषभाः पितृणां दैत्येन्द्रसिद्धेश्वरदानवेन्द्राः ॥ अन्ये च ये प्रेतपिशाचभूतकूष्माण्डयादोमृगपक्ष्यधीशाः ॥ ४३ ॥ यत्किञ्च लोके भगवन्महस्वदोजःसहस्वद्बलवत्क्षमावत् ॥ श्रीह्रीविभूत्यात्मवदद्भुतार्णं तत्त्वं परं रूपवदस्वरूपम् ॥ ४४ ॥ प्राधान्यतो यानृषय आमनन्ति लीलावतारान्पुरुषस्य भूम्नः ॥ आपीयतां कर्णकषायशोषाननुक्रमिष्ये त इमान्सुपेशान् ॥ ४५ ॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धे षष्ठोऽध्याय ॥ ६ ॥ ब्रह्मोवाच ॥ यत्रोद्यतः क्षितितलोद्धरणाय बिभ्रत्क्रौडीं तनुं सकलयज्ञमयीमनन्तः ॥ अन्तर्महार्णव उपागतमादिदैत्यं तं दंष्ट्रयाऽद्रिमिव वज्रधरो ददार ॥ १ ॥ जातो रुचेरजनयत्सुयमान्सुयज्ञ आकूतिसूनुरमरानथ दक्षिणायाम् ॥ लोकत्रयस्य महतीमहरद्यदार्तिं स्वायंभुवेन मनुना हरिरित्यनूक्तः ॥ २ ॥ जज्ञे च कर्दमगृहे द्विज देवहूत्यां स्त्रीभिः समं नवभिरात्मगतिं स्वमात्रे ॥ ऊचे ययाऽऽत्मशमलं गुणसङ्गपङ्कमस्मिन्विधूय कपिलस्य

पृथ्वीको उद्धार गर्न स्रुक्-स्रुवा आदि यज्ञका उपकरणयुक्त वाराह (सुकर) को रूप धारण गरे । उनले समुद्रमा त्यो आदिदैत्य हिरण्याक्षलाई पक्रेर आफ्ना दुवै हातले यसरी छुटाइदिए, जसरी इन्द्रले आफ्नो वज्रद्वारा पर्वतहरू टुक्रा-टुक्रा पारिदिएका थिए ॥१॥ जब तो रुचि नामका प्रजापतिको पत्नी आकूतिको उदरबाट उत्पन्न भए, तब तिनको नाम सुयज्ञ भयो । उनले आफ्नी दक्षिणा नामकी भार्याद्वारा सुयम नामक देवताहरूलाई उत्पन्न गरे । त्यसपछि अनेकानेक प्रयत्नद्वारा तिनले त्रैलोक्यको संकट हरण गरे, तब स्वायंभुवमनुले तिनको नाम 'हरि' राखिदिए ॥२॥ हे द्विज ! जब ती कर्दम प्रजापतिकी पत्नी देवहूतिको गर्भबाट नौ बहिनीसहित उत्पन्न भए, तब तिनको नाम 'कपिल' भयो । आफ्नी आमा ( देवहूति ) लाई ब्रह्मविद्या ( सांख्यशास्त्र ) को उपदेश दिए । त्यो सुनेर उनले आफ्नो आत्माको ती पापहरूलाई नष्ट पारिन्, जसले आत्मामा गुणहरूको संगरूपी हिलो लागिरहन्छ । तिनले आफ्नो शरीरबाट नौ

* उदाहरण ( ईश्वरमा विश्वास )—थोरै अंग्रेज अफिसर आफ्नी नववधूसित जहाजमा बसेर यात्रा गरिरहेका थिए । अकस्मात् समुद्रमा ठूलो तूफान आयो । यात्रीहरू व्याकुल भए । तर त्यो अफिसर आत्तिएन पनि आत्तिएन । उसकी पत्नीले साह्रै व्याकुल भएर सोधी—'तिमी यसरी शान्त भएर किन बसेका ?' अफिसरले दायबाट तरवार झिकेर पत्नीको घाँटीमा तेर्स्याएर सोध्यो—'तिमीलाई डर लाग्दछ ?' पत्नीले भनी—'तिमीले यो के को स्वाँग पारेका ? तिम्रो हातमा तरवार भएपछि मलाई कसको डर ? तिमी त मलाई सार्‍है नै मनपराउँछौ, होइन ?' अफिसरले भन्यो—'भयो, मेरो मनमा पनि यसै प्रकारको भाव छ । यो तूफान जब भगवानका हातमा छ, तब मलाई कुन कुराको भय हुन सक्छ ! यो त उनको अगाध प्रेमको प्रमाण हो । ऊ जे गर्दै गर्छ, मेरो निम्ति आनन्ददायक नै सिद्ध हुनेछ ।'

विकारहरू हटाइदिए, जसले ती सद्गतिमा प्राप्त भइन् ॥३॥ कुनै समय महर्षि अत्रिले भगवान्‌सित पुत्र मागे। भगवान्‌ले प्रसन्न भएर आज्ञा भयो–'म आफूलाई नै हजुरलाई सुम्पन्छु।' त्यसपछि उनको घरमा जब भगवान् जन्मनु भयो, जब तिनको नाम 'दत्त' रह्यो। तिनका चरण-कमलको धूलोले पवित्र भएर यदु र हैहय (कार्तवीर्य) आदि अनेक राजाहरूले इहलौकिक कामनाहरू पूर्ण पार्न योगरूपिणीसम्पत्ति प्राप्त गरेका थिए ॥४॥ लोक-सृष्टिको अभिलाषाले मैले जुन अघि उग्रतपस्या गरें, त्यो भगदर्पण गरिदिएँ, जसले ती सनक, सनन्दन, सनत्कुमार र सनातन यी चार रूपबाट अवतरित भए र पूर्वकल्पमा नष्ट आत्मज्ञान फेरि यस कल्पमा जागृत पार्दै उपदेश दिए ॥५॥ दक्षकी पत्नी र यमराजकी पत्नी मूर्तिको गर्भबाट भगवान् नर-नारायण यी दुइ स्वरूपमा अवतरित भए। ती नर-नारायणको तपस्या भङ्ग पार्न कामदेवका सेना रूपमा उर्वशी आदि अप्सराहरू गए, किन्तु उनको तपस्याको प्रभावबाट उत्पन्न आफ्नै सदृश स्त्रीहरूलाई देखेर ती उनको तपस्या भङ्ग पार्न सकेनन् ॥६॥ कुशल इन्द्रिय-निग्रही शिव आफ्नो रोषपूर्ण दृष्टिले कामदेवलाई पोल्नमा समर्थ भए, तर स्वयं आफूलाई नै

गतिं प्रपेदे ॥ ३ ॥ अत्रेरपत्यमभिकाङ्क्षत आह तुष्टो दत्तो मयाऽहमिति यद्भगवान्स दत्तः ॥ यत्पादपङ्कजपरागपवित्रदेहा योगर्द्धिमापुरुभयीं यदुहै-हयाद्याः ॥ ४ ॥ तप्तं तपो विविधलोकसिसृक्षया मे आदौ सनात्स्वतपसः स चतुःसनोऽभूत् ॥ प्राक्कल्पसंप्लवविनष्टमिहात्मतत्त्वं सम्यग्जगाद मुनयो यदचक्षतात्मन् ॥ ५ ॥ धर्मस्य दक्षदुहितर्यजनिष्ट मूर्त्यां नारायणो नर इति स्वतपःप्रभावः ॥ दृष्ट्वाऽऽत्मनो भगवतो नियमावलोपं देव्यस्त्वनङ्गपृतना घटितुं न शेकुः ॥ ६ ॥ कामं दहन्ति कृतिनो ननु रोषदृष्ट्या रोषं दहन्तमुत ते न दहन्त्यसह्यम् ॥ सोऽयं यदन्तरमलं निविशन्बिभेति कामः कथं नु पुनरस्य मनः श्रयेत ॥ ७ ॥ विद्धः सपत्न्युदितपत्रिभिरन्ति राज्ञो बालोऽपि सन्नुपगतस्तपसे वनानि ॥ तस्मा अदाद्ध्रुवगतिं गृणते प्रसन्नो दिव्याः स्तुवन्ति मुनयो यदुपर्यधस्तात् ॥ ८ ॥ यद्वेनमुत्पथगतं द्विजवाक्यवज्रविप्लुष्टपौरुषभगं निरये पतन्तम् ॥ त्रात्वाऽर्थितो जगति पुत्रपदं च लेभे दुग्धा वसूनि वसुधा सकलानि येन ॥ ९ ॥ नाभेरसावृषभ आस सुदेविसूनुर्यो वै चचार समदृग्जडयोगचर्याम् ॥ यत्पारमहंस्यमृषयः पदमाम-नन्ति स्वस्थः प्रशान्तकरणः परिमुक्तसङ्गः ॥ १० ॥ सत्रे ममास भगवान्हयशीरषाथो साक्षात्स यज्ञपुरुषस्तपनीयवर्णः ॥ छन्दोमयो मखमयोऽखिल-

भस्म पार्न क्रोधलाई भस्म पार्नमा ती पनि असमर्थ नै रहे। त्यो क्रोध पनि ती नारायणको अन्तरात्मामा पस्न डराउँथ्यो, अनि कामदेव शिवमा आफ्नो प्रभाव कसरी पार्न सक्थ्यो ? ॥७॥ राजा उत्तानपादका छोरा ध्रुव बाल्यकालमा नै आफ्नी विमाताका वाग्बाणले छेडिएर तपस्या गर्नको निम्ति वनमा गएका थिए। ती नारायणले भजनानन्दी बालकलाई त्यो ध्रुव-पद प्रदान गरे–जसले माथिका भृगु आदि र तलका सप्तर्षि आज पनि उनको स्तुति गर्न गर्दछन् ॥८॥ ऋषिहरूले प्रार्थना गर्दा जब भगवान् कुमार्गगामी राजा वेनका पुत्र पृथु भएर अवतरित भए, तब उनले ब्राह्मणहरूको वचनरूपी वज्रद्वारा नष्ट-पौरुष र नष्ट सम्पत्ति हुने तथा नरकका अधिकारी ती राजा वेनको रक्षा गरेर आफ्नो पुत्र र पुंनामक नरकबाट रक्षा गर्ने नाम सार्थक पारे र जगत्‌को कल्याणार्थ उनले पृथ्वीबाट विविध प्रकारका अन्न आदि द्रव्यहरू दुहे ॥९॥ उनै नारायण राजा नाभिकी मेरु नामकी पत्नीको गर्भबाट समदर्शी ऋषभ भएर अवतार लिए र आत्मदर्शनद्वारा इन्द्रियहरू आफ्नो वशीभूत पारी सबै विषयवासनाहरूको परित्याग गरिदिए, त्यो जडयोग (नित्य समाधि) को साधना गरे,

जपलाई ठूला-ठूला ऋषि 'परमहंसपद' भन्दछन् ॥१०॥ उनै भगवान् मेरो ( ब्रह्माको ) यज्ञमा सुवर्ण सदृश हयग्रीवको रूपमा प्रकट भएका थिए। त्यस समय तिनको नासिकाबाट छन्दोमय, यज्ञमय, यज्ञद्वारा पूजित हुने समस्त देवता र तिनको आत्माहरू उत्पन्न भए ॥११॥ युगको अन्त्य समयमा भावी वैवस्वत मनुले मत्स्य-रूपमा प्रकट भगवानको दर्शन गरे। मत्स्य-भगवान् पृथ्वीका अवलम्बन र जगत्का समस्त जीवहरूको आश्रयस्वरूप थिए र मेरो मुखबाट निस्केका वेदहरू लिएर त्यस महाभयङ्कर प्रलय-जलधिमा आनन्दपूर्वक विचरण गर्दथे ॥१२॥ जब देवता र दानव अमृत प्राप्तिको निम्ति क्षीर समुद्रलाई मथिरहेका थिए, तब भगवानले कूर्म ( कच्छप ) अवतार लिएर मन्दर पर्वतलाई आफ्नो पिठिउँमा बोकेका थिए। तिनको पिठिउँमा अडिएको त्यो विशाल पर्वत जब देवताहरू र दैत्यहरूको हातबाट बेसरी घुमाइरहेको बेला त्यसको घोटाइले मानो उनको चिलाई मरिरहेको थियो॥१३॥ देवताहरूको महान् भय नष्ट पार्ने भएका नारायण जब नृसिंह अवतार लिए। त्यस बखत रिसले उनको भृकुटी नाचिरहेको थियो र तिनको मुख साह्रै डरलाग्दो देखिइरहेथ्यो। दैत्य-पति हिरण्यकशिपु गदा लिएर प्रभुमाथि झम्टिएको मात्र थियो—नृसिंह भगवानले त्यसलाई आफ्नो तिघ्राको माझमा थिचिलिए र आफ्ना तीखा नङ्ग्राले त्यसको छाती फोरिदिए।

देवतात्मा वाचो बभूवुरुशतीः श्वसतोऽस्य नस्तः ॥ ११ ॥ मत्स्यो युगान्तसमये मनुनोपलब्धः क्षोणीमयो निखिलजीवनिकायकेतः ॥ विस्रंसिता मुरुभये सलिले मुखान्मे आदाय तत्र विजहार ह वेदमार्गान् ॥ १२ ॥ क्षीरोदधावमरदानवयूथपानामुन्मथ्नताममृतलब्धय आदिदेवः ॥ पृष्ठेन कच्छपवपुर्विदार गोत्रं निद्राक्षणोऽद्रिपरिवर्तकषाणकण्डूः ॥ १३ ॥ त्रैविष्टपोरुभयहा स नृसिंहरूपं कृत्वा भ्रमद्भ्रुकुटिदंष्ट्रकरालवक्त्रम् ॥ दैत्येन्द्र-माशु गदयाऽभिपतन्तमारादूरौ निपात्य विददार नखैः स्फुरन्तम् ॥ १४ ॥ अन्तःसरस्युरुबलेन पदे गृहीतो ग्राहेण यूथपतिरम्बुजहस्त आर्तः ॥ आहेदमादिपुरुषाखिललोकनाथ तीर्थश्रवः श्रवणमङ्गलनामधेय ॥ १५ ॥ श्रुत्वा हरिस्तु मरणार्थिनमप्रमेयश्चक्रायुधः पतगराजभुजाधिरूढः ॥ चक्रेण नक्रवदनं विनिपाट्य तस्माद्धस्ते प्रगृह्य भगवान्कृपयोज्जहार ॥ १६ ॥ ज्यायान्गुणैरवरजोऽप्यदितेः सुतानां लोकान्विचक्रम इमान् यदथाधियज्ञः ॥ क्ष्मां वामनेन जगृहे त्रिपदच्छलेन याञ्चामृते पथि चरन्प्रभुभिर्न चाल्यः ॥ १७ ॥ नार्थो बलेरयमुरुक्रमपादशौचमापः शिखा धृतवतो विबुधाधि-

त्यसैले त्यो छटपटाएर मऱ्यो ॥१४॥ कुनै समय यौटा बलवान् ग्राहले यौटा गजराजको खुट्टा समातेर तान्यो। त्यस बखत साह्रै व्यथित भावले त्यो आफ्नो सूँडमा यौटा कमलको फूल लिएर करुणा पूर्ण वाणीमा बोल्यो—हे आदिपुरुष ! हे सम्पूर्ण जीवहरूका स्वामी ! हे मङ्गलमय ! हजुर मेरो रक्षा गर्नुहवस् ॥१५॥ त्यो शरणार्थीको आर्तवाणी सुनेर श्रीहरिभगवान् गरुडमाथि चढेर दगुर्दै पाल्नुभयो र चक्रले ग्राहको मुख फोरेर तथा हातले समाती गजराजलाई बचाउनु भयो ॥१६॥ द्वादश सबैहरूमा यज्ञका अधिष्ठाता नारायण यद्यपि अवस्थामा सबै भन्दा साना थिए, तर गुणमा श्रेष्ठ थिए। किनकि उनले वामन अवतारमा राजा बलिसित तीन पाउ पृथ्वी मागेर तीनै लोक र चौथै भुवन ढाकेका थिए। ( यदि सोध्यौं कि यति ठूला र पराक्रमी र यशस्वी भएर पनि स्वयं भगवान् याचक बनेर त्यस्तो दुर्बलताको काम किन गरे—त्यसको उत्तर यो हो कि ) धर्ममार्गमा हिंड्ने राजा माग्ने बाहेक अरु कुनै उपायले पनि पदच्युत गर्न सकिन्न यसको अतिरिक्त कुनै उपाय पनि थिएन ॥१७॥ बलिका कुलगुरु शुक्राचार्यले यद्यपि राजा बलिलाई त्यस्तो दान दिनबाट रोके, किन्तु ती मनस्वी राजाले

गुरुको कुरा पनि मानेनन् र दान दिएर वामन-भगवान्‌का चरण-जल आफ्नो शिरमा लगाए । जब भगवान्‌ले तीनै लोक र चौथै भुवन ढाक्नुभयो, तैपनि मागेको तीन पाउ भूमि पुग्न सकेन । अनि राजा बलिले त्यो पूर्ण पार्न शिर निहुराएर आफ्नू शरीरले उनलाई अर्पण गरिदिए । त्यस अलौकिक त्यागको फलमा बलि देवताहरूका पनि स्वामी मानिन लागे ॥१८॥ हे नारद ! तिनै भगवान् एक पल्ट तिम्रो उज्ज्वल भक्तिभाव देखेर प्रसन्न भई हंस रूपमा अवतरित भएका थिए र तिमीलाई उनले आत्मज्ञान र भक्तियोग प्रदान गरेका थिए त्यो केवल उनका अनन्य भक्त नै पाउन सक्छन्, अरु होइन ॥१९॥ अन्य मन्वन्तरमा भगवान् दसै दिशामा आफ्नो प्रभावरूपी सुदर्शन चक्रको तेज फिंजाउँदै र आफ्ना पवित्र कार्यहरूद्वारा राम्रो कीर्तिको विस्तार गर्दै मनुको रूपमा विराजमान हुन्थे र तीनैलोक—सत्यलोकका दुष्ट राजाहरूलाई पनि दण्ड दिन्थे ॥२०॥ तिनै भगवान् आफ्नो नामले नै संसारका महारोगी-हरूको रोग निवारण गर्दै धन्वन्तरी रूपमा अवतरित भएका थिए । तीन कीर्तिका मूर्तिमान् स्वरुप थिए र तिनको धेरैलामू आयु थियो । कुनै समय दैत्यहरूले तिनको यज्ञभाग खोसेका थिए, तर आफ्नो प्रबल प्रताप द्वारा उनले त्यो फेरि प्राप्त गरे र आयुर्वेद शास्त्रका त उनी प्रवर्तक नै ठहरिए ॥ २१ ॥ जब जगत्‌को विनाश विनाश गर्नको निम्ति विधाताले नरक

पत्यम् ॥ यो वै प्रतिश्रुतमृते न चिकीर्षदन्यदात्मानमङ्ग शिरसा हरयेऽभिमेने ॥ १८ ॥ तुभ्यं च नारद भृशं भगवान्विवृद्धभावेन साधु परितुष्ट उवाच योगम् ॥ ज्ञानं च भागवतमात्मसतत्त्वदीपं यद्वासुदेवशरणं विदुरञ्जसैव ॥ १९ ॥ चक्रं च दिक्ष्वविहतं दशसु स्वतेजो मन्वन्तरेषु मनुवंशधरो बिभर्ति ॥ दुष्टेषु राजसु दमं व्यदधात्स्वकीर्तिं सत्ये त्रिपृष्ठ उशतीं प्रथयंश्चरित्रैः ॥ २० ॥ धन्वन्तरिश्च भगवान्स्वयमेव कीर्तिर्नाम्ना नृणां पुरुरुजां रुज आशु हन्ति ॥ यज्ञे च भागममृतायुरवावरुन्ध आयुश्च वेदमनुशास्त्यवतीर्य लोके ॥ २१ ॥ क्षेत्रं क्षयाय विधिनोपभृतं महात्मा ब्रह्मध्रुगुज्झि-तपथं नरकार्तिलिप्सुः ॥ उद्धन्त्यसाववनिकण्टकमुग्रवीर्यस्त्रिः सप्तकृत्व उरुधारपरश्वधेन ॥ २२ ॥ अस्मत्प्रसादसुमुखः कलया कलेश इक्ष्वाकुवंश अवतीर्य गुरोर्निदेशे ॥ तिष्ठन् वनं सदयितानुज आविवेश यस्मिन्विरुध्य दशकन्धर आर्तिमार्च्छत् ॥ २३ ॥ अस्मा अदादुदधिरूढभयाङ्गवेपो मार्गं सपद्यरिपुरं हरवद्दिधक्षोः ॥ दूरे सुहृन्मथितरोषसुशोणदृष्ट्या तातप्यमानमकरोरगनक्रचक्रः ॥ २४ ॥ वक्षःस्थलस्पर्शरुग्णमहेन्द्रवाहदन्तैर्विडम्बितक-

यातनाका अधिकारी राजाहरूको वृद्धि गरिदिए—जसले राम्रो बाटो छाडेर ब्राह्मणहरूलाई पनि कष्ट दिन थालेथे, त्यस समय ती अतुलित बलशाली भगवान् परशुरामको रूपमा अवतरित भए र तिनले तीखो धार हुने आफ्नो खुँडाले एक्काइस पल्ट पृथ्वीलाई क्षत्रिय विहीन पारे ॥२२॥ हामीहरू प्रति कृपालु ती मायापति नारायण आफ्ना कलाहरू सहित इक्ष्वाकु वंशमा राम भएर अवतार लिनेछन् । त्यस बखत पिताको आज्ञा मानेर भाई लक्ष्मण र पत्नी सीता सहित वनमा जानेछन् र दशकन्धर रावणसित वैरत्व पर्नेछ ॥ २३ ॥ जब ती रावणसित युद्ध गर्न लङ्कामा जान लाग्दा माझमा समुद्र आउने छ । त्यस समय राम सीतालाई सम्झेर कुपित शङ्कर भगवान् जस्तै आफ्ना राता-राता आँखाले समुद्रतिर हेर्नछन् त्यसले समुद्रको जल उम्लन लाग्नेछ—समुद्रका जन्तुहरू डढ्न लाग्नेछन् र समुद्र थर-थर काम्न लाग्नेछ । अनि निकै विनीत भावले प्रत्यक्ष उपस्थित भएर रामलाई बाटो छाडिदिने छ ॥ २४ ॥ भगवान् रामचन्द्र विशाल वानरी सेनाका माझमा उभिएर जसै आफ्नो धनुषको टङ्कार गर्नेछन्, त्यस रावणको जयले आफ्नो कठोर तपस्याको

आफ्नो पराक्रम द्वारा इन्द्रको ऐरावतको दाँत टुका-टुका पारिदिए। ती टुक्राहरू चारैतिर छरिएर सबै दिशाहरू उज्जवल पारिदियो। अतः जो बर्ता अभिमानी रावण गर्भलाई देखेर गर्दथ्यो र हाँस्दथ्यो, त्यसको हाँसो समेत राम त्यसको प्राण पनि लिनेछन् ॥२५॥ उनै नारायण राक्षस सदृश राजाहरूका सेनाको अत्याचारले दुःखी पृथ्वीको दुःख निवारण गर्न आफ्ना दाजु बलराम सहित अवतार लिनेछन् र साधारण जनबाट अज्ञेय यस्ता-यस्ता काम गर्नेछन्—जसले तिनका महिमाको विस्तार हुनेछ। त्यसैले स्पष्ट हुनेछ—यी ईश्वर हुन् ॥२६॥ यदि ती ईश्वर नभए केवल तीन महिनाका बालक पूतना जस्ती विकराल राक्षसीलाई कसरी मार्दथे, यौटा खुट्टा उफारेर शकटासुरलाई कसरी पल्टाइदिन्थे र धुँडाले हिड्दै गएर अग्लो यमलार्जुनलाई ओखलमा अल्झाएर कसरी उखेल्दथे ॥२७॥ यमुनाको विषयुक्त जल पिएर मृत व्रजका ८गाईहरू र ग्वाल-बाललाई

कुञ्जुष उद्धहासम् ॥ मद्यौऽसुभिः सह विनेष्यति दारहर्तुर्विस्फूर्जितैर्धनुष उचरतोऽधिसैन्ये ॥ २५ ॥ भूमेः सुरेतरवरूथविमर्दितायाः क्लेशव्ययाय कलयाऽसितकृष्णकेशः ॥ जातः करिष्यति जनानुपलक्ष्यमार्गः कर्माणि चात्ममहिमोपनिबन्धनानि ॥ २६ ॥ तोकेन जीवहरणं यदुलूकिकायास्त्रैमासिकस्य च पदा शकटोऽपवृत्तः ॥ यद्रिङ्गताऽन्तरगतेन दिविस्पृशोर्वा उन्मूलनं त्वितरथाऽर्जुनयोर्न भाव्यम् ॥२७॥ यद्वै व्रजे व्रजपशून्विषतोयपीतान् पालांस्त्वजीवयदनुग्रहदृष्टिवृष्ट्या ॥ तच्छुद्धयेऽतिविषवीर्यविलोलजिह्वमुच्चाटयिष्यदुरगं विहरन् ह्रदिन्याम् ॥२८॥ तत्कर्म दिव्यमिव यन्निशि निःशयानं दावाग्निना शुचिवने परिदह्यमाने ॥ उन्नेष्यति व्रजमतोऽवसितान्तकालं नेत्रे पिधाय सबलोऽनधिगम्यवीर्यः ॥ २९ ॥ गृह्णीत यद्यदुपबन्धममुष्य माता शुल्वं सुतस्य न तत्तदमुष्य माति ॥ यज्जृम्भतोऽस्य वदने भुवनानि गोपी संवीक्ष्य शङ्कितमनाः प्रतिबोधिताऽऽसीत् ॥ ३० ॥ नन्दं च मोक्ष्यति भयाद्वरुणस्य पाशाद्गोपान्बिलेषु पिहितान्मयसूनुना च ॥ अह्न्यापृतं निशि शयानमतिश्रमेण लोकं विकुण्ठ उपनेष्यति गोकुलं स्म ॥३१॥

आफ्नो कृपापूर्ण दृष्टिले हेरेर नै कसरी जीवित पार्दथे! तिनै कृष्ण जलशुद्ध पार्न खेल्दा खेल्दै यमुनामा हाम्फालेर लामा-लामा जिब्रो र महाविष हुने कालीय नागलाई त्यहाँबाट धपाएर नै छाड्नेछन् ॥२७॥ उनका ती कार्यहरूलाई सबैले दिव्य (अमानवीय) कार्य भन्ने छन्। एक पल्ट ग्रीष्म ऋतुमा वनमा आगो लाग्नेछ र सबै व्रजवासीको प्राण संकटमा पर्नेछ। त्यस बखत बलराम सहित श्रीकृष्ण सबैलाई आँखा चिम्लन लगाई एक क्षणमै त्यो संकट टारेर व्रजको उद्धार गर्नेछन् ॥२९॥ एक पल्ट यशोदा कृष्णलाई बाँध्न खोज्दछिन्। त्यस बखत ती जुन जुन डोरीले बाँध्न खोज्नेछन् ती सबै छोटो हुनेछन्। एक पल्ट कृष्णले 'हाई' गर्दा यशोदा तिनको मुखमा तीनै लोक र चौधै भुवन-

---

८ उदाहरण—यौटा गाई नदी किनारमा पानी पिउन गई र त्यहाँ हिलोमा गाडिई र बेसरी चिच्याउन लागी। यौटा चोर हावा र चोरी गरेर त्यतैबाट भइरहेको थियो। गाईको चकार सुनेर त्यसको मन पग्लियो र गइ दगुर्दै नजीकै पुग्यो। त्यसले निकै परिश्रम गरेर गाईलाई झिक्यो र सुरक्षित स्थानमा पुऱ्यायो। यस-परबाट पनि ज्यादर त्यसको अभिलिखित गन्तिदिएर त्यहाँबाट हिंड्यो। राती सुती सुती त्यसले विचार गर्यो—'आज मैले दुइ काम गरें—यौटा चोर पाप र अर्को महापुण्य। अब ती पापपुण्य चोरको हृदयमा युद्ध गर्नलागे। चोरले प्रतिज्ञा गर्यो—यस पापबाट बाँचें भने फेरि कहिल्यै चोरी गर्नेछैन र यी जन्मभरि गाईहरूको सेवा गर्दै रहनेछु।' भोलिपल्ट बिहानै त्यो पक्रियो र फाँसीको सजाय पायो। जब त्यो फाँसीको तख्तामा उभियो, तब त्यही गाई त्यसको तल आएर उभिई। त्यसलाई दुइ-तीन पल्ट फाँसीमा चढाए तर त्यो चोर मरेन। त्यसले त्यो चोर दंग लाग्यो। राजाले चोरसित हाँस्नि कारण सोधे, उसले भन्यो—'यौटी गाई तल आएर उभिइन्छिन् र मलाई बचाउँछिन्।' त्यसपछि चोरले राती को सारा वृत्तान्त सुनाइदियो। अनि राजाले त्यसलाई छाडिदिए र गाईहरूको सेवामा सहायता दिने आश्वासन दिए।

परका ग्वाल बालहरूका रक्षा गर्नेछन् र दिनभरि कठोर परिश्रम गरेर राती सुतेका सबै गोकुल-निवासीहरूलाई वैकुण्ठ-धाममा पुन्याइदिने छन् ॥३१॥ जब व्रजका गोपालहरू इन्द्रका वार्षिक यज्ञको विरोध गरेर गोवर्धनको पूजामा लाग्नेछन्, तब इन्द्र, समस्त व्रजलाई बगाइदिन घनघोर वर्षा गर्नेन् । त्यस बखत केवल सातवर्षको उमेरमा भगवान् श्रीकृष्णचन्द्र ती ग्वाल-बाल र व्रजका पशुहरूलाई बचाउन गोवर्धन पर्वतलाई गोब्रे छाता जस्तै आफ्नो औंलामा उचाल्ने छन् र सात दिनसम्म त्यसै गरी बोकिराख्ने छन् ॥३२॥ एक दिन आधा रातको बेलामा जब चन्द्रमा आफ्ना उज्ज्वल किरणले सारा संसारलाई गौरवर्णको छाता झैं ओढाउने छन्, त्यसै बखत श्रीकृष्ण रासक्रीडा गर्ने विचारले सुन्दर पद-विन्यास युक्त एवं हृदयस्पर्शी आलाप लिएर गीत गाउनन्, त्यो सुनेर कामले विह्वल भई सम्पूर्ण व्रजसुन्दरी दगुर्दै पुग्नेछन् । त्यसै अवसरमा कुबेरको अनुचर शंखचूड ती गोपिनीहरूलाई चोर्ने विचारले त्यहाँ पुग्ने छ र भगवान् त्यसको शिर काट्नेछन् ॥३३॥ त्यो बाहेक प्रलम्ब, खर ( धेनुकासुर ), बकासुर, केशी, अरिष्ट, कंसका पहलवान,

गोपैर्मखे प्रतिहते व्रजविप्लवाय देवेऽभिवर्षति पशून्कृपया रिरक्षुः ॥ धर्तोच्छिलीन्ध्रमिव सप्त दिनानि सप्तवर्षो महीध्रमनघैककरे सलीलम् ॥ ३२ ॥ क्रीडन् वने निशि निशाकररश्मिगौर्यां रासोन्मुखः कलपदायतमूर्च्छितेन ॥ उद्दीपितस्मररुजां व्रजभृद्वधूनां हर्तुर्हरिष्यति शिरो धनदानुगस्य ॥३३॥ ये च प्रलम्बखरदर्दुरकेश्यरिष्टमल्लेभकंसयवनाः कुजपौण्ड्रकाद्याः ॥ अन्ये च शाल्वकपिबल्वलदन्तवक्त्रसप्तोक्षशम्बरविदूरथरुक्मिमुख्याः ॥ ३४ ॥ ये वा मृधे समितिशालिन आत्तचापाः काम्बोजमत्स्यकुरुकैकयसृञ्जयाद्याः ॥ यास्यन्त्यदर्शनमलं बलभीमपार्थव्याजाह्वयेन हरिणा निलयं तदीयम् ॥ ३५ ॥ कालेन मीलितधियामवमृश्य नृणां स्तोकायुषां स्वनिगमो बत दूरपारः ॥ आविर्हितस्त्वनुयुगं स हि सत्यवत्यां वेदद्रुमं विटपशो विभजिष्यति स्म ॥ ३६ ॥ वेदद्विषां निगमवर्त्मनि निष्ठितानां पूर्भिर्मयेन विहिताभिरदृश्यतूर्भिः ॥ लोकान् घ्नतां मतिविमोहमतिप्रलोभं वेषं विधाय बहु भाष्यत औपधर्म्यम् ॥३७॥ यर्ह्यालयेष्वपि सतां न हरेः कथाः स्युः पाखण्डिनो द्विजजना वृषला नृदेवाः ॥ स्वाहा स्वधा वषडिति स्म गिरो न यत्र

कुवलयापीड हात्ती, कंस, यवन, कुज ( नरकासुर ), पौण्ड्रक, शाल्व, कपि ( द्विविद बानर ), दन्तवक्त्र, सप्तोक्ष, शम्बर, विदूरथ, रुक्मी ॥३४॥ काम्बोज, मत्स्य, कुरु केकय र सृञ्जयादि जुन पनि राजा धनुष-बाण लिएर संग्राममा तत्पर हुनन्, ती सबैलाई बलराम, भीम, अर्जुन द्वारा र कतिलाई आफैले पनि मारी श्रीकृष्ण आफ्नो वैकुण्ठधाम पठाइदिनन् ॥३५॥ कालान्तरमा जब संसारका अल्पायु मनुष्यको बुद्धि कुण्ठित हुनेछ र तिनको निम्ति वेद बुझ्न कठिन हुनेछ, तब उनै नारायण सत्यवतीको गर्भबाट व्यास रूपमा जन्म लिएर वेदरूपी वृक्षका अनेक शाखाहरू र उपशाखाहरू बनाएर त्यसको अनेक भाग गरिदिनन् ( त्यसले त्यो सरल हुनेछ ) ॥३६॥ वेदमार्गमा आस्था राखेर दैत्यहरूद्वारा गरिएका सत्कर्म र मयदानवको प्रयत्नले जब राक्षसहरूको बल बढ्ला तब ती सबै लोकालोक नष्ट पार्न थाल्ने छन् । त्यस अवस्थामा भगवान् तिनको बुद्धि भ्रममा पार्न सार्है उत्तम वेष बनाएर बुद्ध अवतार लिनेछन् र अनेक उपधर्महरूको वर्णन गर्नन् । त्यसो गर्नाले दैत्यगण वैदिक-धर्म त्यागेर अधर्मको बाटोमा हिंड्ने छन् र स्वयं तिनको नाश हुनेछ । ॥३७॥ जब सज्जनहरूका घरमा पनि नारायणका यश गाइने छैनन्–ब्राह्मण, क्षत्रिय, वैश्य यी तीनै वर्ण पाखण्डी र संसारका सबै राजा शूद्र हुने छन् र स्वाहा स्वधा

वषट्कारका शब्द पनि सुनिने छैनन्, तब युगको अन्त्यका भगवान् कल्किरूपमा अवतरित हुनन् र भयानक कलिको दमन गर्नन् ॥ ३८ ॥ सृष्टिकार्यमा तप, म ( ब्रह्मा ) कर्दम आदि ऋषि र मरीचि आदि नौ प्रजापति यी सबै नारायणका विभूति नै हुन् । यसै गरी पालन कार्यमा—विष्णु, धर्म, यज्ञ, मनु,देवता र राजागण उनकै विभूति हुन् । संहार कार्यमा—अधर्म, शिव, सर्प र दैत्यगण, यी महाशक्तिशालिनी विभूतिहरू हुन् ॥३९॥ गुन विद्वान परमाणुहरूलाई गन्न समर्थ भइसकेका थिए, ती पनि नारायणका गुणहरूको गणना गर्न असमर्थ नै रहे । जसले प्रबल वेगले कम्पायमान सत्यलोकसम्म आफ्नो वशमा पारिसकेका थिए र जो सत्त्व, रज, तम तीनै गुणमा विजय प्राप्त गरेर त्रिगुणातीत भइसकेका थिए तिनका गुणहरू गन्नु कुनै साधारण कुरा थिएन ॥४०॥ ती महाबली महापुरुषको अन्त न मैले भेटें, न तिमीभन्दा पनि ठूला-ठूला मुनिजनले नै पाउन सके । कतिसम्म भने हजार मुख भएका शेषनाग दिन-रात गुणगाउँदै रहे पनि पार पाउन सक्तैनन् ॥४१॥ यदि तपाईं भन्नोस्—अब कसैले पार पाउन सक्तैन भने मानिस मुक्त कसरी हुन्छन् । सुन्नुहवस्—ती करुणा

शास्ता भविष्यति कलेर्भगवान् युगान्ते ॥ ३८ ॥ सर्गे तपोऽहमृषयो नव ये प्रजेशाः स्थाने च धर्ममखमन्वमरावनीशाः ॥ अन्ते त्वधर्महरमन्युवशासुराद्या मायाविभूतय इमाः पुरुशक्तिभाजः ॥३९॥ विष्णोर्नु वीर्यगणनां कतमोऽर्हतीह यः पार्थिवान्यपि कविर्विममे रजांसि ॥ चस्कम्भ यः स्वरभसा स्खलता त्रिपृष्ठं यस्मात्त्रिसाम्यसदनादुरुकम्पयानम् ॥ ४० ॥ नान्तं विदाम्यहममी मुनयोऽग्रजास्ते मायाबलस्य पुरुषस्य कुतोऽपरे ये ॥ गायन्गुणान्दशशतानन आदिदेवः शेषोऽधुनापि समवस्यति नास्य पारम् ॥ ४१ ॥ येषां स एव भगवान्दययेदनन्तः सर्वात्मनाश्रितपदो यदि निर्व्यलीकम् ॥ ते दुस्तरामतितरन्ति च देवमायां नैषां ममाहमिति धीः श्वशृगालभक्ष्ये ॥ ४२ ॥ वेदाहमङ्ग परमस्य हि योगमायां यूयं भवश्च भगवानथ दैत्यवर्यः ॥ पत्नी मनोः स च मनुश्च तदात्मजाश्च प्राचीनबर्हिर्ऋभुरङ्ग उत ध्रुवश्च ॥ ४३ ॥ इक्ष्वाकुरैलमुचुकुन्दविदेहगाधिरघ्वम्बरीषसगरा गयनाहुषाद्याः ॥ मान्धात्रलर्कशतधन्वनुरन्तिदेवा देवव्रतो बलिरमूर्त्तरयो दिलीपः ॥ ४४ ॥ सौभर्युतङ्कशिबिदेवलपिप्पलादसारस्वतोद्धवपराशरभूरिषेणाः ॥ येऽन्ये विभीषणहनूमदुपेन्द्रदत्तपार्थार्ष्टिषेणविदुरश्रुतदेववर्याः ॥ ४५ ॥ ते वै विदन्त्यतितरन्ति च देवमायां स्त्रीशूद्रहूणशबरा अपि

सागर नारायण जसमाथि दया गर्दछन् ती दयाभाजन भक्त यदि कपट शून्य मन, वचन कर्मले एक मात्र नारायणका वन्दछन् तब भगवान्को तरिनसक्नु मायालाई तर्न सक्तछन् । अनि कुकुर र स्यालको भोजनस्वरूप यस तुच्छ शरीरमा तिनको ममत्व रहन्न ॥ ४२ ॥ मायाको भित्री रहस्यबाट अनभिज्ञ भए पनि धेरै व्यक्ति यति त जान्दछन्—माया के हो ? ती जान्नेहरूमा म, तिमी, शिव, प्रह्लाद, स्वायंभुव मनु, तिनकी पत्नी शतरूपा, तिनका छोरा-छोरीहरू, प्राचीनबर्हि, राजा वेनका पिता, अंग र ध्रुव ॥४३॥ इक्ष्वाकु, ऐल ( पुरूरवा ), मुचुकुन्द, जनक गाधी, रघु, अम्बरीष, सगर,गय, नहुषका छोरा ययाति, मान्धाता, अलर्क, शतधनु, अनु, रन्तिदेव, देवव्रत ( भीष्म ) बलि अमूर्तरय र दिलीप ॥४४॥ सौभरि, उत्तंक, शिवि, देवल, पिप्पलाद, सारस्वत,उद्धव, पराशर भूरिषेण र यी बाहेक विभीषण, हनुमान, उपेन्द्रदत्त (शुक),पार्थ, आर्ष्टिषेण र श्रुतदेव ॥४५॥यिनीहरू भगवान्को मायालाई जान्दछन् ।

यी बाहेक अशिक्षित स्त्री, शूद्र, शबर र तिर्यक्जातिका पापी जीव पनि अद्भुत गति हुने नारायणले बताएका मार्गमा हिँडेर उनको भक्ति गर्दछन् भने यस विकराल देवमायालाई तार्न सक्दछन्, अनि तिनको विषयमा के भन्नु—जो भगवान्का यश सुन्दछन् र मनलाई सर्वतिरबाट बटुलेर भगवानमा लगाई राख्दछन् ॥ ४६ ॥ तब भगवान्को त्यो कुन स्वरूप हो—जसमा मन लगाएर व्यक्ति देवमायाबाट निस्तार पाउँछन् ! सुन—त्यो स्वरूप यस्तो छ कि जहाँ पुगेपछि मनलाई परमशान्ति प्राप्त हुन्छ, त्यहाँ कुनै प्रकारको भय रहन सक्तैन, त्यहाँ एकमात्र ज्ञानरसको स्वाद पाइन्छ, त्यो ज्ञान सधैं शुद्ध रहन्छ, त्यहाँ जाति-नजाति कामको भेदभाव रहन्न, त्यहाँ केवल आत्मतत्त्वको दर्शन हुँदै रहन्छ, त्यहाँ धेरै थरि कारकहरू (काम गर्नेहरू) द्वारा गरिने न काम छन् न तिनको फल नै छ । इन्द्रियहरूबाट केवल ज्ञानको अभिव्यक्ति हुन्छ । त्यहाँ पुगेपछि माया लज्जित भएर स्वतः सुटुक्क निस्कर जान्छिन् ॥४७॥ ती परम पुरुषको त्यही स्थान हो जसलाई ठूला-ठूला मुनिजन नित्य सुख-स्वरूप र शोकरहित ब्रह्म भन्दछन् । जो जन तिनमा मन लगाएर कृतार्थ हुन्छन्, तिनले फेरि गर्नु केही शेष रहन्न । ती उनमै मन लगाएर आफ्नो [illegible] नै त्यागिदिन्छन् । जस्तै—इनार खनेर तयार भएपछि कुटो-कोदालो आदिको आवश्यकता केही रहन्न ॥ ४८ ॥ किनकि ती

पापजीवाः ॥ यद्यद्भुतक्रमपरायणशीलशिक्षास्तिर्यग्जना अपि किमु श्रुतधारणा ये ॥ ४६ ॥ शश्वत्प्रशांतमभयं प्रतिबोधमात्रं शुद्धं समं सदसतः परमात्मतत्त्वत् ॥ शब्दो न यत्र पुरुकारकवान्क्रियार्थो माया परैत्यभिमुखे च विलज्जमाना ॥ ४७ ॥ तद्वै पदं भगवतः परमस्य पुंसो ब्रह्मेति यद्विदुरजस्रसुखं विशोकम् ॥ सध्र्यङ् नियम्य यतयो यमकर्त हेतिं जह्युः स्वराडिव निपानखनित्रमिन्द्रः ॥४८॥ स श्रेयसामपि विभुर्भगवान्यतोऽस्य भावस्वभावविहितस्य सतः प्रसिद्धिः ॥ देहे स्वधातुविगमेऽनुविशीर्यमाणे व्योमेव तत्र पुरुषो न विशीर्यतेऽजः ॥ ४९ ॥ सोऽयं तेऽभिहितस्तात भगवान्विश्वभावनः ॥ समासेन हरेर्नान्यदन्यस्मात्सदसच्च यत् ॥ ५० ॥ इदं भागवतं नाम यन्मे भगवतोदितम् ॥ संग्रहोऽयं विभूतीनां त्वमेतद्विपुलीकुरु ॥५१॥ यथा हरौ भगवति नृणां भक्तिर्भविष्यति ॥ सर्वात्मन्यखिलाधार इति संकल्प्य वर्णय ॥ ५२ ॥ मायां वर्णयतोऽमुष्य ईश्वरस्यानुमोदतः ॥ शृण्वतः श्रद्धया नित्यं मायायात्मा न मुह्यति ॥५३॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धे ब्रह्मनारदसंवादे सप्तमोऽध्यायः ॥७॥ राजोवाच ॥ ब्रह्मणा चो-

नारायण त सबै प्राणिहरूका शुभाशुभ कर्मको फल दिन्छन् र ती नै सबैको स्वभाव तथा सबै सत्कर्महरूका पर्यालोचन गरेर त्यसैको अनुसार निर्णय गर्दछन् । संसारका साधारण प्राणी धातुहरू क्षीण भएपछि देह त्यागिदिन्छन्, तापनि आकाश-तत्त्वलाई त्याग्न सक्तैनन् । यस प्रकार ती अजन्मा पुरुष देह सहित, जन्म लिन्छन्, तर देहपनि नष्ट भएर [illegible] सत्कर्मको फल दिँदै रहन्छन् ॥४९॥ हे तात ! ती विश्वभावन भगवान् यस प्रकारका छन् । मैले त रूप बताएँ—त्यो संक्षेपमा छ । भगवान्को सामुन्ने सत्-असत् अथवा कार्य कारण केही पनि रहन्न ॥५०॥ यो भागवत शास्त्र भगवान्ले मलाई सुनाउनुभएको थियो, त्यही म आज तिमीलाई सुनाइरहेछु । यो विभूतिहरूको विशाल संग्रह छ । तिमी यसलाई [illegible] गरेर यसको लोकमा विस्तार गर ॥५१॥ जसरी यसलाई भन्ना-सुन्नाले मनुष्य भगवान्को भक्ति गर्नन् यस्तो दृढ निश्चय गरेर तिमी ती महाप्रभुको लीलाहरू राम्रो [illegible] वर्णन गर । किनकि भक्ति-रस नभई त्यो परमतत्त्वको परिज्ञान हुन सक्तैन ॥५२॥ जो व्यक्ति श्रद्धापूर्वक ईश्वरका लीलाका संगसंगै मायाको वर्णन गर्दै वा सुन्दै रहन्छन्, तिनको आत्मा मायाको चक्करमा पर्न सक्तैन ॥५३॥ इति श्रीमद्भागवते महापुराणे द्वितीय स्कन्धे नेपाली भाषाटीकायां सप्तमोऽध्यायः ॥७॥ ( राजा परीक्षितद्वारा श्रीमद्भागवतसम्बन्धी प्रश्न ) राजा

शुक मुनिसित भने—'हे भगवन् ! ब्रह्माजीको प्रेरणले देवर्षि नारदले जस-जसको समक्ष ती गुणातीत प्रभुका गुणहरू गान गरे ॥१॥ हे वेदज्ञानीहरूमा श्रेष्ठ मुनिराज ! म यस कुरालाई जान्न खोजिरहेको छु, किनकि अद्भुत पराक्रमशाली नारायणका कथाहरू कल्याण गर्दछन् ॥२॥ हे महाभाग ! हजुर मलाई कुनै यस्तो उपाय भन्नुहवस्—जसले म निखिल विश्वका आत्मा स्वरूप भगवान्मा आफ्नो निःसंग मन लगाएर यस कलेवरलाई त्यागिदिऊँ ॥३॥ जो व्यक्ति श्रद्धापूर्वक नित्य भगवान्का लीलाहरू सुन्दै रहन्छन्, भने थोरै दिनमा पनि नारायण तिनको हृदयमन्दिरमा आएर विराजमान हुन्छन् ॥४॥ ती प्रेमी श्रोताहरूको कर्ण-पथबाट हृदय कमलमा गएर तिनका सबै पापहरू त्यसै गरी नष्ट गरिदिन्छन्, जसरी शरद्ऋतु पानीको धमिलो पन नष्ट गरिदिन्छ ॥५॥ यसरी जसका पाप पखालिन्छन्, त्यो फेरि कहिल्यै पनि श्रीकृष्णभगवान्का चरण छाड्दैन, तथा त्यसलाई उस्तै गरी कुनै क्लेश हुँदैन, जस्तै कुनै बटुवा लामो बाटो छिचोलेर घर पुगेपछि सुखी हुन्छ ॥६॥ हे ब्रह्मन् ! वास्तवमा यस जीवनको पृथ्वी-जल आदि पाँच महाभूत हरूसँग कुनै सम्बन्ध छैन, अपितु तिनै द्वारा

दितो ब्रह्मन्गुणाख्यानेऽगुणस्य च ॥ यस्मै यस्मै यथा प्राह नारदो देवदर्शनः ॥ १ ॥ एतद्वेदितुमिच्छामि तत्त्वं वेदविदां वर ॥ हरेरद्भुतवीर्यस्य कथा लोकसुमङ्गलाः ॥ २ ॥ कथयस्व महाभाग यथाऽहमखिलात्मनि ॥ कृष्णे निवेश्य निःसङ्गं मनस्त्यक्ष्ये कलेवरम् ॥ ३ ॥ शृण्वतः श्रद्धया नित्यं गृणतश्च स्वचेष्टितम् ॥ कालेन नातिदीर्घेण भगवान् विशते हृदि ॥ ४ ॥ प्रविष्टः कर्णरन्ध्रेण स्वानां भावसरोरुहम् ॥ धुनोति शमलं कृष्णः सलिलस्य यथा शरत् ॥ ५ ॥ धौतात्मा पुरुषः कृष्णपादमूलं न मुञ्चति ॥ मुक्तसर्वपरिक्लेशः पान्थः स्वशरणं यथा ॥ ६ ॥ यदधातुमतो ब्रह्मन्देहारम्भोऽस्य धातुभिः ॥ यदृच्छया हेतुना वा भवन्तो जानते यथा ॥ ७ ॥ आसीद्यदुदरात्पद्मं लोकसंस्थानलक्षणम् ॥ यावानयं वै पुरुष इयत्तावयवैः पृथक् ॥ तावानसाविति प्रोक्तः संस्थावयववानिव ॥ ८ ॥ अजः सृजति भूतानि भूतात्मा यदनुग्रहात् ॥ ददृशे येन तद्रूपं नाभिपद्मसमुद्भवः ॥ ९ ॥ स चापि यत्र पुरुषो विश्वस्थित्युद्भवाप्ययः ॥ मुक्त्वाऽऽत्ममायां मायेशः शेते सर्वगुहाशयः ॥ १० ॥ पुरुषावयवैर्लोकाः सपालाः पूर्वकल्पिताः ॥ लोकैरमुष्यावयवाः सपालैरिति शुश्रुम ॥ ११ ॥ यावान्कल्पो विकल्पो वा यथा कालोऽनुमीयते ॥ भूतभव्यभवच्छब्द आयुर्मानं च यत्सतः ॥ १२ ॥

देहको नै रचना हुन्छ । यो काम विना कुनै प्रयोजनकै हुन्छ वा कर्मादिको कारणले हुन्छ, यस कुरालाई हजुर राम्ररी जान्नु हुन्छ, अतः मलाई पनि भन्नुहवस् ॥७॥ जसको उदरबाट सबै लोकको रचनाका मूल कारण उत्पन्न भयो, ती परमेश्वरले आफ्नै परिमित अवयवहरू द्वारा संयुक्त लौकिक पुरुषहरूको रचना गरे वा तिनमा केही अन्तर थियो । यदि दुवै ( परम पुरुष र लौकिक पुरुष ) एकै प्रकारका हुन् भने ईश्वर लौकिक पुरुषमा विशेषता नै के रह्यो ? ॥ ८ ॥ जसको कृपाले समस्त प्राणिहरूका नियन्ता ब्रह्माजी सबै जीवहरूको सृष्टि गर्दछन् । उनै नारायणको कृपारूपी नाभि कमलबाट जायमान ब्रह्माजीले तिनको सच्चा स्वरूप देख्नपाएका थिए ॥९॥ विश्वको सृष्टि, पालन र संहार गर्ने ती मायापति भगवान् आफ्नो मायालाई त्यागेर जहाँ र जुन रूपमा रहँदा हुन्, त्यो बताउनोस् ॥१०॥ मैले सुनेको छु कि उही परम-पुरुषका अवयवबाट सबैलोक र लोकपालहरूको सृष्टि भएको हो र तिनै लोकहरू र लोकपालहरूबाट उनका अवयव बनेका हुन् ॥११॥ यसै निम्ति हजुर मलाई बताउनोस्—कल्प के वस्तु हो र विकल्प कसलाई भन्दछन् ? कालको अनुमान कसरी गरिन्छ ?

भूत, भविष्य र वर्तमान कालको अनुमान कसरी हुन्छ र स्थूल देहधारी मनुष्य, पितृ र देवताहरूका आयुको के परिमाण छ ? ॥१२॥ हे द्विज श्रेष्ठ ! मलाई हजुर कालको सूक्ष्म गति र स्थूल गति बताउनु हवस् । साथै यो पनि बताउनोस् कि कर्मका गति कति छन् र तिनको स्वरूप के हो ? ॥१३॥ जो जन सत्वादि गुणहरूको फलबाट देवादिरूप प्राप्त गर्न चाहन्छन् त्यस्ता गुणी जीवहरूमा कुन जीव कति पुण्य वा पापका फलबाट, कुन कर्मका समुदाय द्वारा र कस्ता देवादि भाव प्राप्त हुन्छन् ॥१४॥ पृथ्वी, पाताल, दिशाहरू, आकाश, ग्रह, नक्षत्र, पर्वत, नदी, समुद्र, द्वीप आदि कसरी उत्पन्न भएर र उत्पत्ति भन्दा अघि ती कहाँ थिए ? ॥१५॥ यस महान् अण्डकोशका बाहिर भित्रबाट कति विस्तार छ ? मरीचि, कर्दम आदि ठूला-ठूला ऋषिहरूको आचार-व्यवहार कस्तो थियो र वर्ण धर्मको तत्त्व-निर्धारण कसरी गरिन्छ ? ॥१६॥ हजुर मलाई अतिशय विस्मयजनक भगवान्का अवतारहरूको चरित्र, युग र युगका परिमाण भन्नुहवस् र यो पनि भन्नोस्—कुन युगमा कुन धर्मको मान हुन्छ ॥१७॥ जनसाधारणको सामान्य र विशेष धर्म, विविध प्रकारका व्यवसाय गर्नेहरूको धर्म, उत्तम

कालस्यानुगतिर्या तु लक्ष्यतेऽण्वी बृहत्यपि ॥ यावत्यः कर्मगतयो यादृशीर्द्विजसत्तम ॥ १३ ॥ यस्मिन्कर्मसमाहारो यथा येनोपगृह्यते ॥ गुणानां गुणिनां चैव परिणाममभीप्सताम् ॥ १४ ॥ भूपातालककुब्व्योमग्रहनक्षत्रभूभृताम् ॥ सरित्समुद्रद्वीपानां संभवश्चैतदोकसाम् ॥ १५ ॥ प्रमाणमण्डकोशस्य बाह्याभ्यन्तरभेदतः ॥ महतां चानुचरितं वर्णाश्रमविनिश्चयः ॥ १६ ॥ अवतारानुचरितं यदाश्चर्यतमं हरेः ॥ युगानि युगमानं च धर्मो यश्च युगे युगे ॥ १७ ॥ नृणां साधारणो धर्मः सविशेषश्च यादृशः ॥ श्रेणीनां राजर्षीणां च धर्मः कृच्छ्रेषु जीवताम् ॥ १८ ॥ तत्त्वानां परिसंख्यानं लक्षणं हेतुलक्षणम् ॥ पुरुषाराधनविधिर्योगस्याध्यात्मिकस्य च ॥ १९ ॥ योगेश्वरैश्वर्यगतिलिङ्गभङ्गस्तु योगिनाम् ॥ वेदोपवेदधर्माणामितिहासपुराणयोः ॥२०॥ सम्प्लवः सर्वभूतानां विक्रमः प्रतिसंक्रमः ॥ इष्टापूर्तस्य काम्यानां त्रिवर्गस्य च यो विधिः ॥२१॥ यश्चानुशायिनां सर्गः पाखण्डस्य च संभवः ॥ आत्मनो बन्धमोक्षौ च व्यवस्थानं स्वरूपतः ॥ २२ ॥ यथाऽऽत्मतन्त्रो भगवान्विक्रीडत्यात्ममायया ॥ विसृज्य वा यथा मायामुदास्ते साक्षिवद्विभुः ॥ २३ ॥ सर्वमेतच्च भगवन्पृच्छते मेऽनुपूर्वशः ॥ तत्त्वतोऽर्हस्युदाहर्तुं प्रपन्नाय महामुने ॥२४॥ अत्र प्रमाणं हि भगवान्परमेष्ठी यथा...

राजाहरूको धर्म र आपत्तिमा गाएिका व्यक्तिहरूको जुन धर्म हुन्, सो मलाई आज्ञा हवस् ॥१८॥ प्रकृति आदि समस्त तत्त्वहरूको संख्या, तिनको स्वरूप र कार्य-कारणवश तिनमा आउने परिवर्तन हुन्छन् त्यो पनि भन्नुहवस् । देवपूजनको विधि, आध्यात्मिक योग र अष्टाङ्ग योगको विधि बताउनुहोस् ॥ १९॥ ठूला-ठूला योगीहरूको अणिमा-महिमादि सिद्धिहरूको महत्व अर्चिष्मान् आदि लोकहरूको गति, योगीहरूका लिङ्गदेहको नाश, ऋग्-यजुःआदि वेद, आयुर्वेद, धर्मशास्त्र, इतिहास र पुराणहरूको जुन स्वरूप हो, त्यो पनि कृपा गरेर हजुर आज्ञा हवस् ॥२०॥ जगत्का सर्व प्राणीहरूका प्रलय, तिनको स्थिति, महाप्रलय, वैदिक कर्म, स्मार्त ( स्मृति शास्त्रोक्त ) कर्म र धर्म, अर्थ तथा कामको पूर्तिका निमित्त गरिने कर्महरूका के विधि हो ? ॥२१॥ उपाधि रहित जीवहरूको कर्म, तिनको सृष्टि, पाखण्डीहरूको उत्पत्ति, आत्माको बन्धन एवं मोक्ष र जीवको बन्धन र मोक्षबाट पृथक् स्थिति कस्तो हुन्छ ? ॥२२॥ हजुर मलाई यो पनि भन्नुहवस् कि ती स्वतन्त्र भगवान् आफ्नो मायाबाट कस्ता प्रकारको खेलवाड् गर्दछन् र प्रलयकालमा ती सर्वव्यापक नारायण यौटा साक्षी जस्तै एकलै कसरी

दोष रहित्छन ॥२३॥ हे भगवन् ! म शरणागतको शंकाहरू हजुर समाधान गर्नुहवस्, किनकि हे महामुने ! हजुर नै यी सबै कुराहरू राम्ररी बुझाउन सक्नुहुन्छ ॥२४॥ जसरी ब्रह्माजी सबै शास्त्रहरूका ज्ञाता हुनुहुन्छ, उसै गरी हजुर पनि सर्वज्ञ हुनुहुन्छ । हजुरबाहेक अरु व्यक्ति त 'गतानुगतिकोलोके'भन्ने पूर्वजले बनाएका पुराना पद्धतिहरूमा नै हिंड्दछन् ॥२६॥ यदि हजुर यो भन्नुहुन्छ कि तिमी केही खान-पान गर्दैनौ, त्यसैले दुर्बलता बढेको होला—फेरि ब्राह्मणको श्रापको चिन्ताले व्यग्र पारेको होला । यस स्थितिमा यतिका प्रश्नहरूको विस्तृत उत्तर कसरी सुन्न सक्छौ—त्यसमा हे ब्रह्मन् ! भगवानका गुणानुवादरूपी अमृत पान गर्दैरहनाले अनशनद्वारा मेरो प्राण निस्कन्न* । अँ, कुपित ब्राह्मणको श्रापद्वारा मेरो प्राण निस्कन सक्दछ —म त्यो पनि डराउन्न ॥२६॥ सूतजी भन्दछन्—यस प्रकार विष्णुभक्त राजा परीक्षितले सोधेपछि ब्रह्मपरायण महर्षि शुकदेव प्रसन्न भए र भन्न लागे—राजन् ! म तपाईंका प्रश्नको उत्तर

त्मभूः ॥ परे चेह्रानुतिष्ठन्ति पूर्वेषां पूर्वजैः कृतम् ॥ २५ ॥ न मेऽसवः परायन्ति ब्रह्मन्ननशनादमी ॥ पिबतोऽच्युतपीयूषमन्यत्र कुपिताद् द्विजात् ॥ २६ ॥ सूत उवाच ॥ स उपामन्त्रितो राज्ञा कथायामिति सत्पतेः ॥ ब्रह्मरातो भृशं प्रीतो विष्णुरातेन संसदि ॥ २७ ॥ प्राह भागवतं नाम पुराणं ब्रह्मसम्मितम् ॥ ब्रह्मणे भगवत्प्रोक्तं ब्रह्मकल्प उपागते ॥ २८ ॥ यद्यत्परीक्षिदृषभः पाण्डूनामनुपृच्छति ॥ आनुपूर्व्येण तत्सर्वमाख्यातुमुपचक्रमे ॥ २९ ॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धे प्रश्नविधिर्नामाष्टमोऽध्यायः ॥ ८ ॥ श्रीशुक उवाच ॥ आत्ममायामृते राजन्परस्यानुभवात्मनः ॥ न घटेतार्थसम्बन्धः स्वप्नद्रष्टुरिवाञ्जसा ॥ १ ॥ बहुरूप इवाभाति मायया बहुरूपया ॥ रममाणो गुणेष्वस्या ममाहमिति मन्यते ॥ २ ॥ यर्हि वाव महिम्नि स्वे परस्मिन्कालमाययोः ॥ रमेत गतसंमोहस्त्यक्त्वोदास्ते तदोभयम् ॥ ३ ॥ आत्मतत्त्वविशुद्ध्यर्थं यदाह भगवान्नृतम् ॥

दिन्छु ॥२७॥ त्यसपछि उनले भागवत नामक महापुराण भन्न प्रारम्भ गरे, जसलाई ब्रह्मकल्पमा भगवानले ब्रह्माजीलाई भन्नु भएको थियो ॥२८॥ पाण्डववंशमा श्रेष्ठ राजा परीक्षितले जे-जे सोधेका थिए, ती सबै प्रश्नको उत्तर क्रमशः बुझाउन लागे ॥२९॥ इति श्रीमद्भागवते महापुराणे द्वितीय स्कन्धे पं० गौरीशंकर वसिष्ठ कृत नेपाली भाषा-टीकायामष्टमोऽध्यायः ॥८॥ (श्रीमद्भागवतको आरम्भ) शुकदेवजी भन्दछन्—हे राजन् ! आत्मा अनुभव-स्वरूप छ । जीवको देहसित सम्बन्ध त्यस आत्माको मायाविना हुनसक्तैन । जसरीमा न देख्ने मनुष्य-जबसम्म जागृत अवस्थाका सबै कुराहरू बिर्सेर मायामा गाडिन्न, तबसम्म त्योसित सपनामा देहादिको सम्बन्ध हुन सक्तैन ॥१॥ त्यो बहुरूपिणी मायाले गर्दा यो संसार पनि अनेक प्रकारको देखिन्छ, जसले गर्दा प्राणी सत्वादि गुणहरूको चक्रमा अल्झेर शरीरलाई नै 'म' र संसारलाई नै 'मेरो' भनेर मान्न थाल्दछ ॥२॥ तर जब त्यो प्राणी आफू-आफूमै मस्त

* उदाहरण—विगत जर्मन-युद्धको बेलामा जर्मनीलाई जब आफ्नो पराजय नजीकै देखिन लाग्यो तब पराजित हुँदै उसले अनेक नगरहरू नष्ट पारिदियो । तिनको डरले दुःखी भएर गाउँका सबै [illegible] छाडेर भागे । बमको प्रहारले नष्ट भ्रष्ट यौटा नगरमा पुगेर अंग्रेज सैनिकहरूले— यौटा सरल र लक्क मस्त निद्रामा सुतिरहेको छ— भन्ने देखे । त्यो सारा शहर नष्ट भइसकेको थियो । त्यहाँका सबै निवासी मारिएका थिए र त्यो एकलै दूध [illegible] बालक सकुशल बाँचिरहेको थियो । दयालु अंग्रेज सैनिकहरूले उसलाई बोकेर कैम्पमा लगी निकै स्नेहले [illegible] सपनामा सुताए । त्यसै दिन रातिको तेस्रो प्रहरमा जर्मनीले त्यस कैम्पमा पनि [illegible] गरे जसले गर्दा सबै अंग्रेज सैनिक टुक्रा-टुक्रा [illegible] मारिए तर त्यो बालक अझ पनि आनन्दले घोर निद्रामा सुतिरहेको थियो । बिहान अरू सैनिक [illegible] आए र तिनले बालकलाई लगेर [illegible] पालन पोषण गरे । यो भगवानको विचित्र लीला नभएर अरु के हुन सक्छ !

भएर परमानन्दको अनुभव गर्न थाल्दछ, तब प्रकृति र पुरुष भन्दा भिन्न भएर 'म' र 'मेरो' भन्ने अज्ञान त्यागेर मुक्त भएर जान्छ ।।३।। तपाईंको प्रश्न छ कि परमेश्वर जब स्वयं पनि देह-सम्बन्ध धारण गरेर साधारण देही बन्दछ, तब त्यसको भक्ति गर्नाले कसरी मोक्ष प्राप्त हुन सक्छ ।।३।।सुन्नोस्–त्यो परमात्मा जीवलाई तत्वज्ञान प्राप्त गराउन देही बन्दछ । त्यो संसारबाट असत्यको आवरण हटाएर मानिसलाई सत्यको दर्शन गराउँदछ र आफ्नो नित्य स्वरूप प्रकट गर्दछ । अतएव मानिसहरू व्रत र तपस्या गरेर उसको आराधना गर्दछन् । जीव त अज्ञानरूपले देहको सम्बन्ध पाई नै रहन्छ । यसै कारणले गर्दा त्यो ईश्वरको समता गर्न सक्तैन र देहधारी ईश्वरको भजन गरेर उसलाई मुक्ति प्राप्त हुन्छ ।।४।। आदिदेव ब्रह्माजी सबैका गुरु थिए, जब भगवान्‌को नाभि-कमलबाट ती उत्पन्न भए तब धेरै कालसम्म कमल माथि नै बसिरहे । त्यसपछि कमलको जरो खोज्न पानीमा डुबुल्की लगाएर निकै उद्योग गरेर पनि जब जरोको पत्ता लागेन, तब फेरि आफ्नै स्थानमा आएर बसे, अनि विचार गर्नलागे–अब कसरी सृष्टि गरौं, तर उनले कुनै निधो गर्न सकेनन् ।।५।। त्यसै बखत उनले जलमा दुइ अक्षरको एक शब्द दुइपल्ट उच्चरित भएको सुने । जसको अर्थ थियो–'तप गर ।' किन भने हे राजन् ! तपस्या नै निर्धनहरूको धन हो ।।६।। यो शब्द सुनेर ब्रह्माजी

ब्रह्मणे दर्शयन्रूपमव्यलीकव्रतादृतः ॥ ४ ॥ स आदिदेवो जगतां परो गुरुः स्वधिष्ण्यमास्थाय सिसृक्षयैक्षत ॥ तां नाध्यगच्छद्दृशमत्र सम्मतां प्रपञ्चनिर्माणविधिर्यया भवेत् ॥ ५ ॥ स चिन्तयन्द्व्यक्षरमेकदाऽम्भस्युपाशृणोद्द्विर्गदितं वचो विभुः ॥ स्पर्शेषु यत्षोडशमेकविंशं निष्किञ्चनानां नृप यद्धनं विदुः ॥ ६ ॥ निशम्य तद्वक्तृदिदृक्षया दिशो विलोक्य तत्रान्यदपश्यमानः ॥ स्वधिष्ण्यमास्थाय विमृश्य तद्धितं तपस्युपादिष्ट इवादधे मनः ॥ ७ ॥ दिव्यं सहस्राब्दममोघदर्शनो जितानिलात्मा विजितोभयेन्द्रियः ॥ अतप्यत स्माखिललोकतापनं तपस्तपीयांस्तपतां समाहितः ॥ ८ ॥ तस्मै स्वलोकं भगवान्सभाजितः संदर्शयामास परं न यत्परम् ॥ व्यपेतसंक्लेशविमोहसाध्वसं स्वदृष्टवद्भिर्विबुधैरभिष्टुतम् ॥ ९ ॥ प्रवर्तते यत्र रजस्तमस्तयोः सत्त्वं च मिश्रं न च कालविक्रमः ॥ न यत्र माया किमुतापरे हरेरनुव्रता यत्र सुरासुरार्चिताः ॥ १० ॥ श्यामावदाताः शतपत्रलोचनाः पिशङ्गवस्त्राः सुरुचः सुपेशसः ॥ सर्वे चतुर्बाहव उन्मिषन्मणिप्रवेकनिष्काभरणाः सुवर्चसः ॥ प्रवालवैदूर्यमृणालवर्चसः परिस्फुरत्कुण्डलमौलिमालिनः

त्यो वाक्य बोल्नेलाई चारैतिर खोज्न लागे,तर त्यसलाई देख्न पाएनन् । अनि आफ्नो स्थान (कमल) मा बसेर त्यस वाक्यमा विचार गरे र कसैको आज्ञा पालन गरे झैं अनुभव भएर ती तपस्यामा लीन भए।।७।।उनले वायुको वेग र मनलाई रोकेर ज्ञानेन्द्रियहरू र कर्मेन्द्रियहरूलाई वशमा पारे अनि महान् तपस्वी ब्रह्माजी समस्त लोकहरूलाई तप्त पार्ने खालको उग्रतम तपस्या गर्नलागे । यसरी देवतागणको एक हजार वर्षसम्म तपस्या गर्दै रहे ।।८।। धेरै दिनसम्म तपस्या गरिसकेपछि ब्रह्माजीलाई भगवान्‌ले वैकुण्ठलोक देखाउनु भयो । त्यस लोकमा न कसैलाई कुनै प्रकारको क्लेश थियो, न भय थियो, न अज्ञानने थियो । त्यहाँका सबै आत्मज्ञानी थिए र देवताहरु पनि त्यस लोकको सन्तुती गरिरहेका थिए ।।९।। भगवान्‌को त्यस वैकुण्ठ-लोकमा रजोगुण र तमोगुणको कुनै प्रभाव थिएन । त्यहाँ एकमात्र सत्त्वगुण विराजमान थियो । त्यहाँका निवासी माथि समयको पनि प्रभाव थिएन । कहाँसम्म भने भगवान्‌की माया पनि त्यहाँ विवश परेकी थिई । यो सबै यस निम्ति थियो कि त्यहाँ प्रभुका असाधारणभक्त र पार्षद निवास गर्दथे ।१०।। त्यहाँका सबै निवासी श्यामवर्णका थिए । कमलसदृश

राम्रा तिनका नेत्र थिए । तिनले पीताम्बर पहिरेका थिए । तिनका अनुहारको कान्ति सान्है नै मनोहर थियो । ती सबैका चार बाहु थिए । सबैका घाँटीमा टल्कने मणिहरूको हार थियो । सबै जना असाधारण तेजस्वी थिए । सबैका कानमा कुण्डल झुलिरहेका थिए र सबैका मस्तकमा देदीप्यमान किरीट झल्किरहेथे । त्यो लोक बिजुली र बादलहरूले परिपूर्ण आकाश जस्तै सुशोभित थियो, किनकि अगणित महात्माहरूका तेजस्वी विमान त्यस लोकमा चारैतिर डुलिरहन्थे तथा अनेक सुन्दरीहरू यता-उता भ्रमण गरिरहेका देखिन्थे ।।११-१२।। त्यस लोकमा श्री (सम्पत्ति ) रूपवती भएर विविध विभूतिहरू द्वारा नारायणका चरणको पूजा गर्दै पीडमा बसी-बसी भगवानका उत्तम गुणहरू गान गरिरहेका थिए र बसन्त ऋतुका मित्र भ्रमर भगवती लक्ष्मीको घाँटीमा रहेको पुष्पमालाको सुगन्धको लोभवश चारैतिर उड्दै गुञ्जायमान गरेर हरि-प्रिय भक्तहरूको गायनका अनुसरण गरिरहेका थिए ।।१३।। ब्रह्माजी त्यहाँ पुगेर श्रीपति, जगत्पति नारायणका दर्शन गरे । त्यस बखत नन्द-सुनन्दादि उनका मुख्य-मुख्य पार्षद सुन्दर सामग्रीहरूले प्रभुको पूजा गरिरहेका थिए ।।१४।। स्वयं नारायण

॥ ११ ॥ भ्राजिष्णुभिर्यः परितो विराजते लसद्विमानावलिभिर्महात्मनाम् ॥ विद्योतमानः प्रमदोत्तमाद्युभिः सविद्युदभ्रावलिभिर्यथा नभः ॥१२॥ श्रीर्यत्र रूपिण्युरुगायपादयोः करोति मानं बहुधा विभूतिभिः ॥ प्रेङ्खं श्रिता या कुसुमाकरानुगैर्विगीयमाना प्रियकर्म गायती ॥ १३ ॥ ददर्श तत्राखिलसात्वतां पतिं श्रियः पतिं यज्ञपतिं जगत्पतिम् ॥ सुनन्दनन्दप्रबलार्हणादिभिः स्वपार्षदमुख्यैः परिसेवितं विभुम् ॥ १४ ॥ भृत्यप्रसादाभिमुखं दृगासवं प्रसन्नहासारुणलोचनाननम् ॥ किरीटिनं कुण्डलिनं चतुर्भुजं पीताम्बरं वक्षसि लक्षितं श्रिया ॥ १५ ॥ अध्यर्हणीयासनमास्थितं परं वृतं चतुःषोडशपञ्चशक्तिभिः ॥ युक्तं भगैः स्वैरितरत्र चाध्रुवैः स्व एव धामं रममाणमीश्वरम् ॥ १६ ॥ तद्दर्शनाह्लादपरिप्लुतान्तरो हृष्यत्तनुः प्रेमभराश्रुलोचनः ॥ ननाम पादाम्बुजमस्य विश्वसृक् यत्पारमहंस्येन पथाऽधिगम्यते ॥ १७ ॥ तं प्रीयमाणं समुपस्थितं तदा प्रजाविसर्गे निजशासनार्हणम् ॥ बभाष ईषत्स्मितशोचिषा गिरा प्रियः प्रियं प्रीतमनाः करे स्पृशन् ॥ १८ ॥ श्रीभगवानुवाच ॥ त्वयाऽहं तोषितः सम्यग्वेदगर्भ सिसृक्षया ॥

आफ्ना सेवकहरूको प्रसन्न अनुहार हेर्दै आफ्नो कमनीय नयनहरूको सुधा छरिरहेका थिए । उनको मस्तकमा किरीट र कानमा कुण्डल झल्किरहेका थिए । उनका चार भुजाहरू थिए । र भगवती लक्ष्मी तिनको छातीमा टाँसिएकी थिइन् ।।१५।। नारायण यौटा उत्तम आसनमा आसीन थिए । पचीसै तत्त्व आफ्ना अतुलित ऐश्वर्य र आफ्ना अतिथिहरूसित बसेका थिए । तिनी भिन्न-भिन्न आफू-आफूमै आनन्दित भइरहेका थिए ।।१६।। तिनलाई देख्नासाथ आनन्दातिरेकले ब्रह्माजीको अन्तरात्मा निमुक्त भयो, शरीर रोमाञ्चित भएर आयो र बता प्रेमले गर्दा आनन्दाश्रु उर्लेर आयो । यस्तो स्थितिमा आत्मविभोर हुँदै उनले भगवानका ती चरणारविन्दको वन्दना गरे, जो परमहंस व्रत धारण गरेर ज्ञान-मार्गद्वारा प्राप्त हुन सक्छन् ।।१७।। आफ्नै इच्छानुसार सृष्टिकार्यको निम्ति नियुक्त ब्रह्माजीले त्यसरी स्तुति गर्न लागेको देखेर भगवान् निकै प्रसन्न हुनुभयो र आफ्ना हातले तिनको हात स्पर्श गर्दै तथा आफ्नो मन्द हास्यद्वारा सबै दिशाहरूलाई प्रकाशित पार्दै भन्नुभयो ।।१८।। भगवानले आज्ञा भयो—हे वेदगर्भ ब्रह्मन् ! तिमीले सृष्टिको इच्छा गरेर धेरै कालसम्म उग्र तपस्या गरेर

मलाई प्रसन्न तुल्यायौं । दूषित विचार भएका व्यक्ति मलाई यसरी प्रसन्न पार्न सक्तैनन् ॥१९॥ अब मसित आफ्नो इच्छित वर माग, किनकि योगीहरूले पनि मेरो दर्शन पर्यन्त नै प्रयास गर्नुपर्दछ । मेरो दर्शन पाइसकेपछि तिनलाई कुनै कुराको अभाव रहन सक्तैन ॥२०॥ यो मेरो इच्छाको नै प्रभाव हो कि तिमी यो लोक देखिरहेका छौ, मेरो घोषणा सुनेर नै तिमीले यस्तो दुष्कर तपस्या गरेका थियौ ॥२१॥ त्यस वेला जब तिमी सृष्टि कार्यको योजना बनाउनमा व्यग्र भएका थियौ, तब मैले नै तिमीलाई तपस्या गर्ने उपदेश दिएँ । किन हे नष्पाप ! तप मेरो हृदय हो म तपस्याको आत्माको आत्मा हुँ ॥२२॥ तपले नै म जगत्को सृष्टि गर्दछु, तपले नै संहार गर्दछु र तपले नै विश्वको पालन पनि गर्दछु । तप मेरो सब भन्दा प्रबल पराक्रम हो ॥२३॥ ब्रह्मा भन्छन्–हे भगवन् ! यद्यपि हजुर प्रधानरूपले सबैको बुद्धिमा बसी-बसी आफ्नो अकुण्ठित ज्ञानद्वारा सबैका मनको कुरा जान्नुहुन्छ ॥ २४ ॥ तापनि हे नाथ ! म हजुरसित यही वर माग्दछु कि म कुनै प्रकार हजुर अरूपको स्थूल र सूक्ष्म रूपलाई जान्न सकूँ ॥२५॥ विविध प्रकारका शक्तिहरूद्वारा संवलित जसरी जसरी हजुर संहार सृजन र पालन गर्ने क्रीडात्मक गर्नुहुन्छ ॥२६॥ हे अमोघ-सङ्कल्प ! जस्तै माकुरो जालो फैलाउँछ, त्यसैमा क्रीडा गर्दछ र जब इच्छा गर्छ जालो पेटमा समेटेर राखिलिन्छ । यस्तै

चिरं भृतेन तपसा दुस्तोषः कूटयोगिनाम् ॥ १९ ॥ वरं वरय भद्रं ते वरेशं माऽभिवाञ्छितम् ॥ ब्रह्मञ्छ्रेयः परिश्रामः पुंसो मद्दर्शनावधि ॥ २० ॥ मनीषितानुभावोऽयं मम लोकावलोकनम् ॥ यदुपश्रुत्य रहसि चकर्थ परमं तपः ॥ २१ ॥ प्रत्यादिष्टं मया तत्र त्वयि कर्मविमोहिते ॥ तपो मे हृदयं साक्षादात्माऽहं तपसोऽनघ ॥२२ सृजामि तपसैवेदं ग्रसामि तपसा पुनः ॥ बिभर्मि तपसा विश्वं वीर्यं मे दुश्चरं तपः ॥ २३ ॥ ब्रह्मोवाच ॥ भगवन्सर्वभूतानामध्यक्षोऽवस्थितो गुहाम् ॥ वेद ह्यप्रतिरुद्धेन प्रज्ञानेन चिकीर्षितम् ॥ २४ ॥ तथापि नाथमानस्य नाथ नाथय नाथितम् ॥ परावरे यथा रूपे जानीयां ते त्वरूपिणः ॥२५॥ तथात्ममायायोगेन नानाशक्त्युपबृंहितम् ॥ विलुम्पन्विसृजन्गृह्णन्बिभ्रदात्मानमात्मना ॥ २६ ॥ क्रीडस्य-मोघसंकल्प ऊर्णनाभिर्यथोर्णुते ॥ तथा तद्विषयां धेहि मनीषां मयि माधव ॥ २७ ॥ भगवच्छिक्षितमहं करवाणि ह्यतन्द्रितः ॥ नेहमानः प्रजासर्गं बध्येयं यदनुग्रहात् ॥२८॥ यावत्सखा सख्युरिवेश ते कृतः प्रजाविसर्गे विभजामि भो जनम् ॥ अविक्लवस्ते परिकर्मणि स्थितो मा मे समुन्नद्धम-दोऽजमानिनः ॥२९॥ श्रीभगवानुवाच ॥ ज्ञानं परमगुह्यं मे यद्विज्ञानसमन्वितम् ॥ सरहस्यं तदङ्गं च गृहाण गदितं मया ॥ ३० ॥ यावानहं यथा

कार्य हजुरको पनि छ । हे माधव ! हजुर मलाई त्यो ज्ञान दिनुहवस् जुन ज्ञान पाएर म हजुरका यी कामहरूका यी काम गर्न सकूँ ॥ २७ ॥ हे भगवन् ! हजुरले मलाई जसरी सिकाउनु भयो उसै अनुसार म सतर्कताले प्रजाको सृष्टि गर्नेछु । हजुरका तत्वहरूको ज्ञान यस निम्ति प्राप्त गर्न खोजिरहेको छु—जसले सृष्टि कार्य गर्दागर्दै म अहङ्कार आदि बन्धनमा नबाँधिउँ ॥२८॥ हे स्वामिन् ! हजुरले सांसारिक मित्रहरूके समान आफ्नो मित्र रहने मेरो सम्मान गर्नुभयो । अतः म प्रजाको सृष्टि गर्दा नआत्तिइकन कर्मानुसार उत्तम, मध्यम र निकृष्ट आदि भेदहरूले जबसम्म सृष्टि कार्य गरूँ, तबसम्म ममा यो मद उत्पन्न नहोस्– म अजहुँ ॥ २९ ॥ नारायणले भन्नुभयो––मेरो विज्ञान ( अनुभवात्मक ज्ञान ) र ज्ञान ( शास्त्रीय ज्ञान ) सहजै जाग्न सकिन्न र त्यो निकै गूढ र गोपनीय छ । भक्ति र तिनका अंगहरूको साथ म त्यो तिमीलाई आज एक-एक वर्णन गरेर बताउँछु ॥ ३० ॥ म जुन

हुँ, मेरो जुन सत्ता छ, मेरा जुन गुण र कर्म छन्—मेरो कृपाले ती सबै तत्त्वज्ञान तिमीलाई प्राप्त हुनेछ ॥३१॥ सृष्टि भन्दा पूर्व एकमात्र म नै थिएँ। त्यस बेला स्थूल वा सूक्ष्म कुनै पनि वस्तु थिएन। सृष्टिको संहार भइसकेपछि जो शेष रहन्छ, त्यो पनि म नै हुँ ॥३२॥ जसले जगत्‌को वास्तविक अर्थको ज्ञान प्राप्त हुन्छ र जसको कृपा विना हृदयमा रहेर पनि त्यस ज्ञानको साक्षात्कार हुन सक्तैन, त्यसैलाई तिमी मेरो माया जान। जस्तै जल आदिमा चन्द्रमा यौटै भए पनि अनेक देखिन्छन् र जस्तै राहु ग्रहमण्डलमा रहेर पनि देखिन्न, त्यो त्यस बेला देखिन्छ, जब ग्रहण लाग्दछ। त्यसै गरी माया पनि दृष्टिगोचर हुन्न। त्यो त काम परेपछि मात्र देखिन्छ ॥३३॥ जस्तै भौतिक पदार्थहरू र नाना हुना सबै प्राणीहरूमा पञ्चमहाभूत प्रविष्ट हुन्छन् अथवा पहिले देखि नै विद्यमान रहनाले प्रविष्ट हुँदैनन्। यसै गरी जगत्‌का सबै जीवनहरूमा म रहन्छु र रहन्न पनि। यस्तो मेरो सत्ता हो ॥३४॥ तत्त्वज्ञानको अभिलाषा गर्नेहरूको आत्माको विषयमा पनि जान्नु पर्दछ कि अन्वय (कार्यमा कारणरूपले विद्यमान रहने) र व्यतिरेक (कारणको अवस्थादेखि

भावो यद्रूपगुणकर्मकः ॥ तथैव तत्त्वविज्ञानमस्तु ते मदनुग्रहात् ॥ ३१ ॥ अहमेवासमेवाग्रे नान्यद्यत्सदसत्परम् ॥ पश्चादहं यदेतच्च योऽवशिष्येत सोऽस्म्यहम् ॥ ३२ ॥ ऋतेऽर्थं यत्प्रतीयेत न प्रतीयेत चात्मनि ॥ तद्विद्यादात्मनो मायां यथाभासो यथा तमः ॥ ३३ ॥ यथा महान्ति भूतानि भूतेषूच्चावचेष्वनु ॥ प्रविष्टान्यप्रविष्टानि तथा तेषु न तेष्वहम् ॥३४॥ एतावदेव जिज्ञास्यं तत्त्वजिज्ञासुनाऽऽत्मनः ॥ अन्वयव्यतिरेकाभ्यां यत्स्यात्सर्वत्र सर्वदा ॥ ३५ ॥ एतन्मतं समातिष्ठ परमेण समाधिना ॥ भवान्कल्पविकल्पेषु न विमुह्यति कर्हिचित् ॥ ३६ ॥ श्रीशुक उवाच ॥ संप्रदिश्यैवमजनो जनानां परमेष्ठिनम् ॥ पश्यतस्तस्य तद्रूपमात्मनो न्यरुणद्धरिः ॥ ३७ ॥ अन्तर्हितेन्द्रियार्थाय हरये विहिताञ्जलिः ॥ सर्वभूतमयो विश्वं ससर्जेदं स पूर्ववत् ॥ ३८ ॥ प्रजापतिर्धर्मपतिरेकदा नियमान् यमान् ॥ भद्रं प्रजानामन्विच्छन्नातिष्ठत्स्वार्थकाम्यया ॥ ३९ ॥ तं नारदः प्रियतमो रिक्थादानामनुव्रतः ॥ शुश्रूषमाणः शीलेन प्रश्रयेण दमेन च ॥४०॥ मायां विविदिषन्विष्णोर्मायेशस्य महामुनिः ॥ महाभागवतो राजन्पितरं पर्यतोषयत् ॥४१॥ तुष्टं निशाम्य पितरं लोकानां प्रपितामहम् ॥ देवर्षिः परिपप्रच्छ भवान् यन्माऽनुपृच्छति ॥ ४२ ॥ तस्मा इदं भागवतं पुराणं दशलक्षणम् ॥ प्रोक्तं

पृथक् रहने भएको) भावले सर्वत्र सबैमा विद्यमान रहने भएको परमतत्त्व नै ईश्वर हो ॥३५॥ तिमी आफ्नो मन एकाग्र पारेर मेरो मतको अनुसरण गर। यस्तो गर्नाले तिमी कुनै पनि कल्पका विविध सृष्टिहरूको उत्पादन गर्दै यस कुराको अभिमान गर्न सक्ने छैनौ—'सबैथोक गर्ने गराउने म नै हुँ' ॥३६॥ शुकदेवजी भन्नुहुन्छ—हे राजन्! ती अजन्मा नारायण समस्त प्राणीहरूका स्रष्टा ब्रह्मालाई यस प्रकार उपदेश दिएर उनले हेर्दाहेर्दै अन्तर्धान भए ॥३७॥ त्यसरी उपदेश दिएर अन्तर्धान हुने भएका जनार्दनलाई ब्रह्माले हात जोरेर प्रणाम गरे। अनि जसरी अघ-अघ कल्पहरूमा सृष्टि गर्दा थिए, उसै गरी त्यस कल्पमा पनि सृष्टि गरे ॥३८॥ समस्त प्रजाका शुभचिन्तक ब्रह्मा सबैको कल्याण गर्ने इच्छाले अहिंसा-तप आदि यम-नियमहरूको पालन गर्नलागे ॥३९॥ तिनका छोराहरूमा सर्वश्रेष्ठ नारद आफ्ना पिताको सेवा गर्ने सदाचार र इन्द्रियदमनले युक्त ती महामुनि र परम भगवद्भक्त नारद ती मायापति विष्णुको मायालाई जान्ने इच्छाले आफ्ना पिताको सेवा गरेर उनलाई बराबर प्रसन्न पार्दै रहे ॥४०-४१॥ कुनै समय समस्त जगत्‌का प्रपितामह र मेरा पिताजी

ब्रह्माजीसित नारदले यही कुरा सोधेका थिए, जुन तिमी आज मसित सोधिरहेका छौ ॥४२॥ अत्यन्त प्रसन्न ब्रह्माजीले छोरा नारदलाई भगवान्‌को मुखबाट निस्केका र दस लक्षणहरूले युक्त श्रीमद्भागवत महापुराण सुनाए ॥४३॥ उसपछि ती नारदले सरस्वती नदीका तटमा बसेर ध्यान गर्न भएका असाधारण तेजस्वी व्यासजीलाई सोही कथा सुनाए ॥४४॥ तिम्रो प्रश्न पनि यही नै हो—त्यस विराट् पुरुषबाट यस जगत्‌को रचना कसरी भयो ? म तिम्रो यो र अरू-अरू प्रश्नहरूको पनि उत्तर सोही श्रीमद्भागवत द्वारा नै दिनेछु ॥ ४५ ॥ इति श्रीमद्भागवते महापुराणे द्वितीय स्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषा-टीकायां नवमोऽध्यायः ॥९॥ ( अब भागवतका दस लक्षण )—पहिल्लो अध्यायमा कहियो कि ब्रह्माजीले नारदलाई दस लक्षणले युक्त भागवत पुराण सुनाए। तिनै दस लक्षणको प्रतिपादन गर्दछन्। ती दस लक्षणहरू- सर्ग, विसर्ग, स्थान, पोषण, ऊति, मन्वन्तर, ईशको अनुकथा, निरोध, मुक्ति र आश्रय ॥१॥ दशौं लक्षण आश्रयलाई विशेषशुद्धिको निम्ति नै यहाँ नौ लक्षण कहिएका छन्। महात्मा पनि श्रुतिका अर्थद्वारा वेलावेलामा यसको पुष्टि गर्दैआएका छन् ॥२॥ भूत अर्थात् आकाश, पृथ्वी, जल, वायु, गन्ध, शब्द, स्पर्श, रूप तथा रस र तिनको मात्रा अर्थात् शब्द एवं इन्द्रिय आदि 'धी' अर्थात् महान एवं अहङ्कार तथा गुणहरूको

भगवता प्राह प्रीतः पुत्राय भूतकृत् ॥ ४३ ॥ नारदः प्राह मुनये सरस्वत्यास्तटे नृप ॥ ध्यायते ब्रह्म परमं व्यासायामिततेजसे ॥ ४४ ॥ तदुताहं त्वया पृष्टो वैराजात्पुरुषादिदम् ॥ यथासीत्तदुपाख्यास्ते प्रश्नानन्यांश्च कृत्स्नशः ॥ ४५ ॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धे नवमोऽध्यायः ॥ ९ ॥ श्रीशुक उवाच ॥ अत्र सर्गो विसर्गश्च स्थानं पोषणमूतयः ॥ मन्वन्तरेशानुकथा निरोधो मुक्तिराश्रयः ॥ १ ॥ दशमस्य विशुद्ध्यर्थं नवानामिह लक्षणम् ॥ वर्णयन्ति महात्मानः श्रुतेनार्थेन चाञ्जसा ॥ २ ॥ भूतमात्रेन्द्रियधियां जन्म सर्ग उदाहृतः ॥ ब्रह्मणो गुणवैषम्याद्विसर्गः पौरुषः स्मृतः ॥ ३ ॥ स्थितिर्वैकुण्ठविजयः पोषणं तदनुग्रहः ॥ मन्वन्तराणि सद्धर्म ऊतयः कर्मवासना ॥ ४ ॥ अवतारानुचरितं हरेश्चास्यानुवर्तिनाम् ॥ पुंसामीशकथाः प्रोक्ता नानाख्यानोपबृंहिताः ॥ ५ ॥ निरोधोऽस्यानुशयनमात्मनः सह शक्तिभिः ॥ मुक्तिर्हित्वाऽन्यथा रूपं स्वरूपेण व्यवस्थितिः ॥ ६ ॥ आभासश्च निरोधश्च ततश्चाध्यवसीयते ॥ स आश्रयः परं ब्रह्म परमात्मेति शब्द्यते ॥७॥ योऽध्यात्मिकोऽयं पुरुषः सोऽसा-

क्षोभ-वैषम्य अनुसार ब्रह्माजीले जुन सृष्टि गर्नुभयो, त्यो 'सर्ग' कहियो। त्यो विराट् पुरुषको पुरुषार्थद्वारा जुन चराचर जगत्‌को सृष्टि भयो, 'विसर्ग' रह्यो ॥ ३ ॥ भगवान् विजयी भएर बस रहनु नै 'स्थान' कहियो। उनको कृपा 'पोषण' कहियो। जसमाथि ती कृपा गर्दछन् ती मन्वन्तराधिपतिहरूको धर्म 'मन्वन्तर' कहिन्छ। कर्महरूको विस्तार 'ऊति' कहिन्छ ॥४॥ भगवान्का अवतारहरूको चरित्र र तिनको अनुसरण गर्न भएका असंख्यित प्राणीहरूका विविध प्रकारले जुन गाथाहरू गान गरिएका छन्, तिनलाई 'ईशानुकथा' भन्दछन् ॥५॥ आफ्ना समस्त शक्तिहरूका साथ परमात्मालाई योग निद्रामा लीन भएपछि जब लीन भइरहन्छ तब त्यस अवस्थालाई मानिस 'लय' वा 'निरोध' भन्दछन्। प्राणी जब ज्ञानलाई पनि त्यागेर ब्रह्मको समान भइरहन्छ, त्यस दशालाई 'मुक्ति' भन्दछन् ॥६॥ जसद्वारा यस जगतको सृष्टि हुन्छ, अन्त्यमा जहाँ गएर यो लय भएर जान्छ र जसद्वारा यो प्रकाशित भइरहन्छ त्यस परब्रह्मलाई, जो परमात्मा नामले प्रसिद्ध छ—'आश्रय' भन्दछन् ॥७॥ त्यो आश्रयस्वरूप आध्यात्मिक परमात्मा नै जब नेत्र, हात-खुट्टा आदि इन्द्रियले युक्त रहन्छ तब आधिदैविक

पुरुष अर्थात् जीव कहिन्छ । त्यही परमात्मा जब नेत्र आदिका अधिष्ठाता सूर्य आदिका रूपमा परिणत भएर यौटाबाट अनेक बन्दछ, तब त्यो अधिभौतिक अर्थात् देह कहिन्छ ॥८॥ यी तीनमध्ये कुनै यौटाविना अर्कोलाई जान्न सकिन्न यस्तो स्थितिमा जुन तीनै अर्थात् आध्यात्मिक,आधिदैविक आधिभौतिक आश्रयको भेद जान्दछ,त्यसलाई स्वाश्रय आत्मा भन्दछन् ॥९॥ अब त्यस विराट् पुरुषबाट ब्रह्माण्डको उत्पत्तिको प्रकार भन्दछन् । त्यस अण्डलाई फोरेर जब त्यो परम पुरुष बाहिर आयो, तब आफ्नो बस्ने स्थानको निम्ति सबै भन्दा पहिले उसले आफ्नो आत्माबाट नै जल सृष्टि गर्‍यो ॥१०॥ त्यस जलमा हजारौं वर्ष बस्नाले त्यसको 'नारायण' ( नर अर्थात् पुरुषबाट उत्पन्न जल नार कहियो । त्यो नार जसको घर भयो, त्यो नारायण ) कहियो ॥ ११॥ द्रव्य ( उपादान कारण ), कर्म ( निमित्त ), काल, स्वभाव र यी सबैको उपभोग गर्ने जीव, यी सब ती परम पुरुष नारायणका नै अनुग्रहबाट विद्यमान रहन्छन, ( तिनकि तिनमा केही गर्ने शक्ति नारायणबाट नै आउँछ ) र जब उनको कृपा रहन्न, तब यी रहँदैनन् भएर जान्छन् ॥ १२ ॥ त्यही एक पुरुषले अब एकबाट

वेवाधिदैविकः ॥ यस्तत्रोभयविच्छेदः पुरुषो ह्याधिभौतिकः ॥ ८ ॥ एकमेकतराभावे यदा नोपलभामहे ॥ त्रितयं तत्र यो वेद स आत्मा स्वाश्रयाश्रयः ॥ ९ ॥ पुरुषोऽण्डं विनिर्भिद्य यदाऽसौ स विनिर्गतः ॥ आत्मनोऽयनमन्विच्छन्नपोऽस्राक्षीच्छुचिः शुचीः ॥ १० ॥ तास्ववात्सीत्स्वसृष्टासु सहस्रपरिवत्सरान् ॥ तेन नारायणो नाम यदापः पुरुषोद्भवाः ॥११॥ द्रव्यं कर्म च कालश्च स्वभावो जीव एव च ॥ यदनुग्रहतः सन्ति न सन्ति यदुपेक्षया ॥१२ ॥ एको नानात्वमन्विच्छन् योगतल्पात्समुत्थितः ॥ वीर्यं हिरण्मयं देवो मायया व्यसृजत्त्रिधा ॥ १३ ॥ अधिदैवमथाध्यात्ममधिभूतमिति प्रभुः ॥ यथैव पौरुषं वीर्यं त्रिधाऽभिद्यत तच्छृणु ॥१४॥ अन्तःशरीर आकाशात्पुरुषस्य विचेष्टतः ॥ ओजःसहो बलं जज्ञे ततः प्राणो महानसुः ॥१५॥ अनुप्राणन्ति यं प्राणाः प्राणन्तं सर्वजन्तुषु ॥ अपानन्तमपानन्ति नरदेवमिवानुगाः ॥ १६ ॥ प्राणेन क्षिपता क्षुत्तृडन्तराऽ-

अनेक हुने इच्छा गरे, तब उनले आफ्नो गर्भरूप शरीरलाई नै जीव, इन्द्रिय र देवता यी तीन रूपमा विभक्त गरिदिए ॥१३॥ त्यस एक पुरुषको नै शक्ति अधिभूत, अध्यात्मक र अधिदैव--यी तीन रूपहरूमा कसरी विभक्त भए, यसको विवरण सुन्नुहवस् ॥१४॥ त्यस पुरुषले जब अरु पनि चेष्टा गरे तब उनको शरीरस्थ आकाशबाट ओज ( इन्द्रिय-शक्ति ) का साथै मनःशक्ति र देहशक्ति अर्थात् दैहिक बल उत्पन्न भयो त्यस शक्त्यात्मक सूक्ष्मरूपबाट सूत्र नामको प्राणको उत्पत्ति भयो ॥ १५ ॥ उही प्राण जब प्राणीहरूको शरीरमा रहेर चेष्टा गर्दछ, तब शरीरका इन्द्रियहरू पनि राजाको ॐस्वामिभक्त सेवक जस्तै त्यसको अनुसरण गर्दछ । जब प्राण आफ्नो चेष्टालाई त्यागिदिन्छ तब इन्द्रियहरू पनि निश्चेष्ट

ॐ उदाहरण ( स्वामिभक्ति )—कुनै धनी मानिसको यौटा नोकर थियो । त्यसलाई साथै लिएर एक दिन बगैंचामा गयो र आफ्नै हातले यौटा काँक्रो तोडेर खान दियो । नोकर प्रेमले खान लाग्यो, त्यो देखेर धनीको पनि मन लोभियो र लोभित एक टुका लिएर चाख्यो तर त्यो धर्ती तीतो थियो कि मुख धुञ्याएर थुकि दियो र नोकरसित भन्यो—'हैं यो काँक्रो पनि मीठो मानेर कसरी खाइरहेको छस् !' नोकरले उत्तर दियो —'मालिको हातबाट मैले अनेक स्वादिष्ट खाने रा खाइसकेको छु, उहाँको हातले दिएको यौटो फलमा मुख बिगार्नु र उसले दिएको तिरस्कार गर्नु उचित हो ।' धनी त्यो कुरा सुनेर निकै प्रसन्न भयो र यति धन दियो कि त्यसले फेरि कसैको पनि नोकरी गर्नु परेन ।

हुन्छन् ॥१६॥ ती परम पुरुषले जब प्राणको संचालन गरे तब भोक-प्यास उत्पन्न भयो । त्यो उत्पन्न भएपछि जब त्यसलाई खाने-पिउने इच्छा भयो, तब मुख बन्यो ॥१७॥ मुखबाट जिब्रोको अधिष्ठान तालु उत्पन्न भयो । त्यसपछि जिब्रो बन्यो । जिब्रोबाट रस बन्यो र त्यसका देवता वरुण बने । उपर्युक्त तालु, जिब्रो आदिका अधिष्ठाता चार देवता भए ॥१८॥ जब ती परम पुरुषले बोल्ने इच्छा गरे तब वचन र उसका देवता अग्नि उत्पन्न भए र ती नारायण धेरै समयसम्म त्यस जलमा नै रहिरहे ॥१९॥ जब वायु (प्राणवायु) हुलो वेगले चल्न लाग्यो र जलबाट बाहिर उसले निस्कन कुनै बाटो पाएन अनि उसलाई कष्ट हुन लाग्यो, अनि नासिका उत्पन्न भए । गन्ध वहन गर्न भएका वायु यसका देवता मानिए र गन्ध आदि विषयलाई ग्रहण गर्ने भएको घ्राण इन्द्रिय बन्यो ॥२०॥ जब त्यसले आफ्नो चारैतिर घोर अन्धकारको साम्राज्य देख्यो र उसलाई स्वयं आफूलाई नै हेर्ने इच्छा भयो, तब नेत्र उत्पन्न भए । यसबाट सूर्य देवता उत्पन्न भए र रूप-दर्शन तिनको विषय बन्यो ॥२१ ॥ जब ऋषिगण वैदिक मन्त्र द्वारा यसलाई सम्बोधन गर्न लागे र ती वाक्यहरू सुन्नको निमित्त

जायत प्रभोः ॥ पिपासतो जक्षतश्च प्राङ्मुखं निरभिद्यत ॥१७॥ मुखतस्तालु निर्भिन्नं जिह्वा तत्रोपजायते ॥ ततो नानारसो जज्ञे जिह्वया योऽधिगम्यते ॥ १८ ॥ विवक्षोर्मुखतो भूम्नो वह्निर्वाग्व्याहृतं तयोः ॥ जले वै तस्य सुचिरं निरोधः समजायत ॥ १९ ॥ नासिके निरभिद्येतां दोधूयति नभस्वति ॥ तत्र वायुर्गन्धवहो घ्राणो नसि जिघृक्षतः ॥ २० ॥ यदात्मनि निरालोकमात्मानं च दिदृक्षतः ॥ निर्भिन्ने ह्यक्षिणी तस्य ज्योतिश्चक्षुर्गुणग्रहः ॥२१॥ बोध्यमानस्य ऋषिभिरात्मनस्तज्जिघृक्षतः ॥ कर्णौ च निरभिद्येतां दिशः श्रोत्रं गुणग्रहः ॥ २२ ॥ वस्तुनो मृदुकाठिन्यलघुगुर्वोष्णशीतताम् ॥ जिघृक्षतस्त्वङ्निर्भिन्ना तस्यां रोममहीरुहाः ॥ तत्र चान्तर्बहिर्वातस्त्वचा लब्धगुणो वृतः ॥ २३ ॥ हस्तौ रुरुहतुस्तस्य नानाकर्मचिकीर्षया ॥ तयोस्तु बलमिन्द्रश्च आदानमुभयाश्रयम् ॥ २४ ॥ गतिं जिगीषतः पादौ रुरुहातेऽभिकामिकाम् ॥ पद्भ्यां यज्ञः स्वयं हव्यं कर्मभिः क्रियते नृभिः ॥ २५ ॥ निरभिद्यत शिश्नो वै प्रजानन्दामृतार्थिनः ॥ उपस्थ आसीत्कामानां प्रियं तदुभयाश्रयम् ॥ २६ ॥ उत्सिसृक्षोर्धातुमलं निरभिद्यत वै गुदम् ॥ ततः पायुस्ततो मित्र उत्सर्ग उभयाश्रयः ॥ २७ ॥ आसिसृप्सोः पुरः पुर्या नाभिद्वारमपानतः ॥ तत्रापानस्ततो

त्यसको इच्छा भयो, तब त्यसका कान उत्पन्न भए । तिनैद्वारा त्यसलाई शब्द सुनिन लागे ॥२२॥ सबै जगत्‌का वस्तुहरूको कोमलता, कठिनता, हलुका र गह्रौं, गर्मी र ठण्डा जान्ने इच्छा भयो, अनि ती परम पुरुषको त्वचा उत्पन्न भयो र उसमा रौंहरू उम्रे । तिनका देवता वृक्ष त्यस त्वचाको बाहिर उत्पन्न भए र भित्र स्पर्श गुणलाई लिएर वायु देवता विराजमान भए ॥२३॥ अब त्यसलाई अनेक थरिका गर्न इच्छा भयो, अनि त्यसका दुइ भुजाहरू उत्पन्न भए । इन्द्र त्यसका देवता बने र आदान ( लिनु ) तथा प्रदान ( दिनु ) तिनको गुण भयो ॥२४॥ जब त्यसलाई गतिको अभिलाषा भयो, तब खुट्टा उत्पन्न भए ! ती खुट्टाका साथै अधिष्ठाता रूपबाट विष्णु भगवान् स्वयं बस्न लागे । तिनका यज्ञको निमित्त हव्य आदि उत्पन्न भए ॥२५॥ जब त्यसलाई प्रजा ( सन्तान प्राप्ति ) रूपी अमृत समान आनन्द प्राप्त गर्ने इच्छा भयो, तब शिश्न (लिङ्ग) उब्ज्यो र त्यसका देवता प्रजापति भए । यो शिश्न र उपस्थ (प्रजापति) मा स्त्री-सम्भोगको गुण विद्यमान थियो॥२६॥जब त्यसलाई धातु (अन्नादि) को मल त्याग गर्न अभिलाषा भयो, तब वायुइन्द्रियभयो । त्यस पायुका देवता मित्र भए

त्यसको उत्सर्ग कार्य भयो ॥२७॥ अब त्यस परम पुरुषको यो देहबाट देहान्तरमा जाने अभिलाषा भयो, तब नाभि उत्पन्न भयो र त्यहीं नै अपानवायुको निवास भयो। [illegible] कलेवर-त्याग अर्थात् मृत्यु उत्पन्न भइन्। ( अनेक विद्वानहरूको कथन छ—यदि नाभिमा प्राण र अपान दुवै वायु जब बाँधिन्छन् तब मृत्यु हुन्छ। यो कुरा सर्व प्रसिद्ध छ। ) ॥२८॥ अब त्यसलाई अन्न-पानको अभिलाषा भयो तब उदर र आन्द्राहरू, नाडीहरू, उत्पन्न भए। यिनमा उदर अधिष्ठाता छ, आन्द्राहरू इन्द्रियरूपले अन्न संग्रह गर्दछन् र नाडीहरू [illegible] पदार्थको संग्रह गर्दछन्। तिनैबाट नदी, समुद्र, तुष्टि र पुष्टि पनि उत्पन्न भए ॥२९॥ अब त्यसलाई आफ्नी मायाको विशेष पर्यालोचनको आवश्यकता प्रतीत भयो, तब हृदय उत्पन्न भयो। त्यसै हृदयबाट मन, चन्द्रमा, सङ्कल्प र काम ( विषय ) उत्पन्न भए ॥३०॥ त्वक् ( मोटो छाला ) चर्म ( त्वचाको माथि रहने पातलो छाला ) मांस, रक्त, मेद, मज्जा र हाड यी सात धातुहरू तथा पृथ्वी, जल, अग्नि र वायु यी आकाशात्मक हुन् अर्थात् पृथ्वी, जल आदि द्वारा नै यिनको पोषण हुन्छ ॥ ३१ ॥ सबै इन्द्रियहरू *गुणात्मक छन्

मृत्युः पृथक्त्वमुभयाश्रयम् ॥२८॥ आदित्सोरन्नपानानामासन्कुक्ष्यन्त्रनाडयः ॥ नद्यः समुद्राश्च तयोस्तुष्टिः पुष्टिस्तदाश्रये ॥ २९ ॥ निदिध्यासोरात्ममायां हृदयं निरभिद्यत ॥ ततो मनस्ततश्चन्द्रः संकल्पः काम एव च ॥ ३० ॥ त्वक्चर्ममांसरुधिरमेदोमज्जास्थिधातवः ॥ भूम्यप्तेजोमयाः सप्त प्राणो व्योमाम्बुवायुभिः ॥ ३१ ॥ गुणात्मकानीन्द्रियाणि भूतादिप्रभवा गुणाः ॥ मनः सर्वविकारात्मा बुद्धिर्विज्ञानरूपिणी ॥ ३२ ॥ एतद्भगवतो रूपं स्थूलं ते व्याहृतं मया ॥ मह्यादिभिश्चावरणैरष्टभिर्बहिरावृतम् ॥ ३३ ॥ अतः परं सूक्ष्मतममव्यक्तं निर्विशेषणम् ॥ अनादिमध्यनिधनं नित्यं वाङ्मनसः परम् ॥ ३४ ॥ अमुनी भगवद्रूपे मया ते अनुवर्णिते ॥ उभे अपि न गृह्णन्ति मायासृष्टे विपश्चितः ॥ ३५ ॥ स वाच्यवाचकतया भगवान् ब्रह्मरूपधृक् ॥ नामरूपक्रिया धत्ते सकर्माकर्मकः परः ॥ ३६ ॥ प्रजापतीन्मनून्देवानृषीन्पितृगणान्पृथक् ॥ सिद्धचारणगन्धर्वान्विद्याध्रासुर

अर्थात् गुणनै यिनको स्वभाव हो र विषयहरूतिर यिनको वर्ता झुकाउ रहन्छ। शब्दादि गुण अहङ्कार आदिबाट उत्पन्न हुन्छन्। मन सबै प्रकारका विकारहरूको स्वरूप हो र बुद्धि विशेष ज्ञानको स्वरूप हो ॥३२॥ हे राजन्! यो मैले तौ विराट् पुरुषको स्थूलरूप बताएँ। यो रूप बाहिर-बाहिर पृथ्वी, जल, वायु, अग्नि, आकाश, अहङ्कार, महत्तत्त्व र प्रकृति यी आठ आवरणद्वारा आवृत्त छ ॥३३॥ त्यसपछि म तिमीलाई भगवान्को त्यो अतिशय सूक्ष्म स्वरूप भन्नेछु, जुन अव्यक्त, विशेषण शून्य, आदि-मध्य-अन्त्यरहित ( सधैं एकनासे रहने ) र मन तथा वाणीभन्दा पनि पर छ ॥ ३४ ॥ ( केवल भक्तिको निम्ति ) भगवान्का यी दुवै रूपको वर्णन मैले गरिसकेँ। ठूला-ठूला विद्वान् यी दुवैलाई मायामय जानेर तिनलाई भगवान्को स्वरूप मान्दैनन् ॥३५॥ वास्तवमा भन्नौं भने भगवान् त इन्द्रियातीत र सूक्ष्म तिसूक्ष्म छन्, तर तौ नारायण नै ब्रह्मा आदि बनेर वाच्य-वाचक भावबाट यस जगत्को सृष्टि गर्दछन्। तौ वाचक-भावबाट रूप पनि ग्रहण गर्दछन्। तौ आफ्नी मायाद्वारा प्रेरित भएर नै सकर्मक बन्दछन्, वास्तवमा अकर्मक नै हुन् ॥३६॥ तौ नै प्रजापति,

*उदाहरण ( इन्द्रियहरूको उपद्रव )—यौटा श्रद्धालु भक्त परमहंस रामकृष्णलाई आफ्नो घर भोजन गर्नेका लागि डाकेर लगे। तिनले थोरै खाएको देखेर [illegible] आग्रह गरे। त्यसमा उनले भने—महाशय! इन्द्रियहरू [illegible] जस्तै छन्। तौ न मौका खोजिरहन्छन्। यसै निम्ति म सधैं आफ्नो [illegible] [illegible] पर्छ सम्झन्छु। यदि लगाम खुकुलो पारिदिने हो र एकक्षण कोर्राले हिर्काइदिने हो भने [illegible] [illegible] कहाँ लगेर कुन खाडलमा खसालिदिने हो, जान्न सकिन्न।

मनु, देवता, ऋषि, पितर, सिद्ध, चारण, गन्धर्व, विद्याधर, असुर, यक्ष, ॥३७॥ किन्नर, अप्सरा, नाग, सर्प, किम्पुरुष, उरग, सप्तमातृ, राक्षस, पिशाच, भूत-प्रेत, विनायक ॥३८॥ कूष्माण्ड, उन्मादकारी ग्रह, वेताल, यातुधान ( दैत्य ), ग्रह, पक्षी, सिंह आदि वनजन्तु, पशु, अश्व आदि पशु, वृक्ष-पर्वत आदि ॥ ३९ ॥ स्थावर-जङ्गमात्मक प्राणी तथा जरायुज, अण्डज, स्वेदज र उद्भिज, यी चार थरिका जीव तथा जल-स्थल एवं आकाशमा विचरण गर्ने जीव तथा पुण्य-पाप मिश्रित कर्महरूको अनुरूप तिनका उत्तम नीच-मध्य गतिहरू हुन्छन्, ती सबैलाई उनै परम पुरुष स्वयं बनाउँछन् ॥ ४० ॥ तिनमा पनि एक-एक गरेर सत्त्व, रज तम यी तीनै गुणहरूको भेदानुसार देवी, मानुषी र

गुह्यकान् ॥३७॥ किन्नराप्सरसो नागान्सर्पान्किंपुरुषोरगान् ॥ मातृरक्षःपिशाचांश्च प्रेतभूतविनायकान् ॥ ३८ ॥ कूष्माण्डोन्मादवेतालान्यातुधानान्ग्रहानपि ॥ खगान्मृगान्पशून्वृक्षान्गिरीन्नृप सरीसृपान् ॥ ३९ ॥ द्विधाश्चतुर्विधा येऽन्ये जलस्थलनभौकसः ॥ कुशलाकुशला मिश्राः कर्मणां गतयस्त्विमाः ॥४०॥ सत्त्वं रजस्तम इति तिस्रः सुरनृनारकाः ॥ तत्राप्येकैकशो राजन्भिद्यन्ते गतयस्त्रिधा ॥ यदैकैकतरोऽन्याभ्यां स्वभाव उपहन्यते ॥ ४१ ॥ स एवेदं जगद्धाता भगवान् धर्मरूपधृक् ॥ पुष्णाति स्थापयन्विश्वं तिर्यङ्नरसुरात्मभिः ॥ ४२ ॥ ततः कालाग्निरुद्रात्मा यत्सृष्टमिदमात्मनः ॥ संनियच्छति कालेन घनानीकमिवानिलः ॥ ४३ ॥ इत्थंभावेन कथितो भगवान्भगवत्तमः ॥ इत्थंभावेन हि परं द्रष्टुमर्हन्ति

नारकी यी तीन गतिहरू विभक्त हुन्छन् । यी तीनैमध्ये जब दुइ गुण प्रबल हुन्छन् तब स्वभाव साटिदिन्छन् । जस्तै—कुनै मनुष्यको राक्षसी स्वभाव छ, तर यदि सत्त्वगुण वा तमोगुण प्रबल भयो भने त्यो मनुष्य आफ्नो राजस स्वभावलाई त्यागेर सत्त्वगुणी या तामसी हुन सक्छ ॥४१॥ तिनै भगवान् तिर्यगादि रूपबाट यस विश्वको स्थापना र यसको पालन गर्दै धर्मरूप द्वारा त्यसको पोषण गर्दछन् ॥४२॥ त्यसपछि जब ती इच्छा गर्दछन् तब कालाग्निरूप धारण गरेर आफैंले बनाएका यस सृष्टिको त्यसै गरी संहार गरिदिन्छन्, जसरी वायु

उदाहरण ( त्याग महिमा )—बुनान देशमा मलिक दीनार नामको थोरै दुलो त्यागी र ठूलो भगवद्भक्त भएका थिए । मलिक दीनार निकै वर्षदेखि सुक्खा-रोटी मात्र खान्थे । थोरै बजारबाट रोटी ल्याउन र त्यही खाएर पानी पिउँथे । यसले तिनको स्वास्थ्य ठीक रहन्थ्यो । संयोगले एक पटक ती बिमारी परे । त्यसै बखत तिनलाई मिठाइ खान मन लाग्यो । धेरै दुःखपूर्वक रोक्दा पनि जब मनले मानेन तब ती थोरै पसल बाट केही सामान किनेर ल्याए । दिनहुँ सुक्खारोटी दीनार आज यस सामानको के गर्दा रहेछन्, यो जान्नको निम्ति पसलेले थोरै मानिस तिनको पछि-पछि लगाइदियो । अलि पर पुगेपछि मलिक दीनारले तिनको वस्तुतिर हेर्दै मनमनै भने—'हे मन ! तेरो निम्ति मनि भोग नै बर्तो हो, कस चाहिन्न ।' पछि त्यो सामान थोरै गरीबलाई दिएर तिनले फेरि मनमनै भने—'ए मेरो निर्धो मन ! तिमीमा धैर्य म तँलाई कष्ट ... कुनै पनि उपायले दोहन-मित्रभावले धैर्य राख, एक दिन तेरो सब दुःखको अन्त अवश्य आउने छ र तँलाई यस्तो सुख प्राप्त हुनेछ— जसको कहिल्यै अन्त हुने छैन ।' एक दिनपछि फेरि ती मनमनै भन्दछन्—'मानिसको भनाइ छ—लगातार चालीस दिनसम्म पौष्टिक आहार नपाए बुद्धि भ्रष्ट हुन्छ । मैले बीस वर्षदेखि पौष्टिक कुनै वस्तु पनि पाएको छैन, तापनि मेरो बुद्धि त प्रतिदिन बढ्दै गएको लागिरहेछ ।' मलिक दीनार चालीस वर्षसम्म बसरामा बसे, तर एक पटक पनि तिनले खजूर खाएका थिएनन् । खजूरको मौसम आए पछि ती भन्दथे—'हेर, खजूर नखानाले पनि मेरो शरीरलाई केही हानि भएन र बसावर खजूर खानेहरूको शरीरलाई केही लाभ भएको देखिन ।' चालीस वर्षपछि एक दिन तिनलाई खजूर खाने प्रबल इच्छा भयो, अनि तनले मनमनै भने—'हे लोभी मन ! म तेरो वासना कहिल्यै पूर्ण गर्दिन पक्का जान ।'

बाधकहरूलाई उखेलेर नष्ट गरिदिन्छ ॥४३॥ ती सर्वश्रेष्ठ नारायणको यो स्वरूप मैले तिमीलाई बताएँ, तर ठूला-ठूला विद्वान् ती पुरुष भगवान्‌को यस स्वरूपलाई सही मान्दैनन् ॥४४॥ किन भने यस विश्वको जन्म र कर्म ती ईश्वरको कार्य मान्दैनन् र श्रुति पनि ईश्वरलाई जगत्‌का कर्ता भन्दैनन् किनकि त्यसलाई ती परम पुरुषमा कर्तृत्व ल्याउनु अभीष्ट छैन, उनको विचार त यस्तो छ कि ईश्वरको मायाले नै यो जगत्‌लाई प्रकट गरेको छ ॥४५॥ यो मैले ब्रह्मकल्प उदाहरणको निम्ति संक्षेपमा भनिदिएँ। कल्पमा प्राकृत महदादि तत्त्वहरूको सृष्टि हुन्छ र अवान्तर कल्पमा वैकृत स्थावर आदिको सृष्टि हुन्छ। यो साधारण विधान हो ( अर्थात् सबै कल्पमा यसै गरी सृष्टिको कार्य चलिरहन्छ। ) ॥ ४६ ॥ कालको स्थूल र सूक्ष्मरूप, कल्पको लक्षण र अवान्तर कल्प म अगाडि ( तृतीय स्कन्धमा ) वर्णन गर्नेछु ! अब तिमी पद्मकल्पको कुरा सुन ॥ ४७ ॥ यति कथा सुनिसकेर शौनक भन्दछन्—हे सूत !

सूरयः ॥ ४४ ॥ नास्य कर्मणि जन्मादौ परस्यानुविधीयते कर्तृत्वप्रतिषेधार्थं माययाऽऽरोपितं हि तत् ॥ ४५ ॥ अयं तु ब्रह्मणः कल्पः सविकल्प उदाहृतः ॥ विधिः साधारणो यत्र सर्गाः प्राकृतवैकृताः ॥ ४६ ॥ परिमाणं च कालस्य कल्पलक्षणविग्रहम् ॥ यथा पुरस्ताद्व्याख्यास्ये पाद्मं कल्पमथो शृणु ॥४७॥ शौनक उवाच ॥ यदाह नो भवान्सूत क्षत्ता भागवतोत्तमः ॥ चचार तीर्थानि भुवस्त्यक्त्वा बन्धून्सुदुस्त्यजान् ॥ ४८ ॥ कुत्र कौषारवेस्तस्य संवादोऽध्यात्मसंश्रितः ॥ यद्वा स भगवांस्तस्मै पृष्टस्तत्त्वमुवाच ह ॥ ४९ ॥ ब्रूहि नस्तदिदं सौम्य विदुरस्य विचेष्टितम् ॥ बन्धुत्यागनिमित्तं च तथैवागतवान् पुनः ॥ ५० ॥ सूत उवाच ॥ राज्ञा परीक्षिता पृष्टो यदवोचन्महामुनिः ॥ तद्वोऽभिधास्ये शृणुत राज्ञः प्रश्नानुसारतः ॥५१ ॥ इति श्रीमद्भागवते महापुराणे द्वितीयस्कन्धेऽष्टादशसाहस्र्यां संहितायां पुरुषसंस्थानुवर्णनं नाम दशमोऽध्यायः ॥१०॥

तपाईंले हामीसित भन्नुभएको थियो—भगवद्भक्त विदुर आफ्ना प्रिय र कष्टसित छाड्ने योग्य बन्धुहरूलाई त्यागेर पृथ्वीका विविध तीर्थस्थानको भ्रमण गर्दै रहे ॥ ४८ ॥ अनि तीसित मैत्रेयको साक्षात्कार कहाँ भयो, जहाँ यी आध्यात्मिक विषयहरूको दुवैले चर्चा गरे ? अथवा विदुरले सोधेपछि मैत्रेयले कसरी तिनलाई ज्ञानोपदेश दिए ॥४९॥ हे सौम्य ! तपाईं हामीलाई विदुरको चरित्र सुनाउनोस् र यो पनि भन्नुहवस्—तिनले आफ्ना दाजुहरूलाई किन त्यागिदिएका थिए ? त्यागिदिएर पनि ती फेरि उनैकहाँ किन फर्केर गए ॥५०॥ सूतजी भन्दछन्—राजा परीक्षितले यो सोधेपछि महामुनि शुकले जुन उत्तर दिएका थिए, यो म तिमीलाई सुनाउँला। राजाको प्रश्नानुसार ती कुराहरूलाई ध्यानपूर्वक सुन ॥५१॥ इति श्रीमद्भागवते महापुराणे द्वितीय स्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषा-टीकायां दशमोऽध्यायः ॥१०॥ द्वितीय स्कन्ध समाप्त भयो।



॥ समाप्तोऽयं द्वितीयः स्कन्धः ॥

—:०:—

इति 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते द्वितीयः स्कन्धः समाप्तः ।

श्रीहरिः ( विदुरोद्धव समागम ) श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! सर्व सम्पत्तिले परिपूर्ण घर त्यागेर वनमा हिंडेर विदुरले मैत्रेयसित केही प्रश्न गरेथे ॥१॥ सर्व प्राणिहरूका प्रभु, षड्गुणैश्वर्यधारी भगवान् श्रीकृष्ण तिम्रा पूर्वज पाण्डवहरूका मन्त्री थिए। एक पल्ट प्रसंगवश उनले हस्तिनापुर जान पर्‍यो, ती पौरवेन्द्र दुर्योधनकहाँ नगएर दरिद्र विदुरका घर गएका थिए, किनकि उनले विदुरलाई आफ्नो ठानिसकेका थिए ॥२॥ परीक्षितले सोधे–हे भगवन् ! विदुरसित महर्षि मैत्रेय कहाँ भेटिए र ती दुवैको कहाँ कुराकानी भयो ? त्यो मलाई भन्नुहवस् ॥३॥ ती जान्ने मैत्रेयसित विदुरको कुनै साधारण प्रश्न अवश्य पनि भएन होला। ती दुवैको प्रश्नोत्तर अवश्य कुनै विशेषता राख्ने होला ॥४। सूतजी भन्दछन्–हे शौनक ! राजा परीक्षितले त्यसरी सोधेपछि सर्वज्ञ शुकदेव निकै प्रसन्न भएर र तिनले राजासित भने–लौ त, सुन्नुहवस् ॥ ५ ॥ श्रीकृष्णले दुर्योधनको घर

ॐ नमो भगवते वासुदेवाय ॥ श्रीशुक उवाच ॥ एवमेतत्पुरा पृष्टो मैत्रेयो भगवान्किल ॥ क्षत्त्रा वनं प्रविष्टेन त्यक्त्वा स्वगृहमृद्धिमत् ॥ १ ॥ यद्वा अयं मन्त्रकृद्वो भगवानखिलेश्वरः ॥ पौरवेन्द्रगृहं हित्वा प्रविवेशात्मसात्कृतम् ॥ २ ॥ राजोवाच ॥ कुत्र क्षत्तुर्भगवता मैत्रेयेणास संगमः ॥ कदा वा सह संवाद एतद्वर्णय नः प्रभो ॥ ३ ॥ न ह्यल्पार्थोदयस्तस्य विदुरस्यामलात्मनः ॥ तस्मिन्वरीयसि प्रश्नः साधुवादोपबृंहितः ॥ ४ ॥ सूत उवाच ॥ स एवमृषिवर्योऽयं पृष्टो राज्ञा परीक्षिता ॥ प्रत्याह तं सुबहुवित्प्रीतात्मा श्रूयतामिति ॥ ५ ॥ श्रीशुक उवाच ॥ यदा तु राजा स्वसुतानसाधून्पुष्णन्नधर्मेण विनष्टदृष्टिः ॥ भ्रातुर्यविष्ठस्य सुतान्विबन्धून्प्रवेश्य लाक्षाभवने ददाह ॥ ६ ॥ यदा सभायां कुरुदेवदेव्याः केशाभिमर्शं सुतकर्म गर्ह्यम् ॥ न वारयामास नृपः स्नुषायाः स्वास्रैर्हरन्त्याः कुचकुङ्कुमानि ॥ ७ ॥ द्यूते त्वधर्मेण जितस्य साधोः सत्यावलम्बस्य वनागतस्य ॥ न याचतोऽदात्समयेन दायं तमोजुषाणो यदजातशत्रोः ॥ ८ ॥ यदा च पार्थप्रहितः सभायां जगद्गुरुर्यानि जगाद कृष्णः ॥ न तानि पुंसाम-

किन त्यागेका थिए, पहिले यसैको उत्तर दिन्छु । अन्धा राजा धृतराष्ट्रले जब अधर्मवश आफ्ना छोराहरूलाई त प्रोत्साहन दिए, भाइका असहाय छोराहरूलाई लाक्षागृह र लाक्षले बनाइएको घरमा पठाएर पोलिदिन खोजे ॥६॥ जब कुरुपति युधिष्ठिरकी धर्मपत्नी र त्यस राज्यकी अभिषिक्त राजमहिषी द्रौपदीलाई तिनका छोराहरूले सभामा ल्याएर नाङ्गी पार्न खोजे त्यस बेला पनि अन्धा राजाले दुष्टहरूलाई रोकेनन् । यद्यपि तिनकी बुहारी द्रौपदी करुण-स्वरले विलाप पार्दै आँसुले आफ्ना कुचमा लगाएको केशर पखालिरहेकी थिइन् ॥७॥ जब सत्य प्रतिज्ञ युधिष्ठिरको कपट-द्यूतमा सर्वस्व खोसिएको थियो र ती घर-द्वार त्यागेर वनवासी भए । त्यसको धेरै दिनपछि पूर्वनिश्चित योजनानुसार जब तिनले धृतराष्ट्रसित आफ्नो भाग मागे तब ती अज्ञानी र छोराका पक्षपाती राजाले ती सरल युधिष्ठिरलाई केही दिएननू* ॥८॥ युधिष्ठिरले पठाइएका जगद्गुरु कृष्णले कौरवी सभामा अमृतमय उपदेश दिए,

* दृष्टान्त ( एक टक्की माटो )—कोही जिमिदार थियो, त्यसले सरकारी कर्मचारीलाई घूस दिएर कोही गरीब विधवाको खेत खोस्यो । त्यो बिचरी रोई-कराई तर कसैले सुनेन । जमीदारको अन्याय हो भन्ने सबै जान्दथे तर को भनोस् ! अन्त्यमा साह्रै दुःखी भएर त्यो जमींदार कहाँ गई । उसले आँखा तरेर भन्यो—'यहाँ किन आइकी ? गइहाल !' विधवाले भनी—'महाशय !' तिमीले मेरो खेत खोस्यौ, केही भएन । म अर्को कुनै गाउँमा गएर माँडा-पानी गरेर गुजारा गर्नेछु । तर मलाई आफ्नो खेतबाट एक टक्की माटो लिन दिए राम्रो हुने थियो, किनकि माटो देखेर मलाई धैर्य हुनेछ—यो मेरो खेतको माटो हो ।' जमींदारले माटो दिन स्वीकार गर्‍यो, तापनि उसलाई त्यो विधवामा विश्वास भएन । त्यो संगसँगै गयो । विधवाले खँदे माटो लगी र टक्की मा माथिसम्म भरी । तैपनि जमींदारको कुन्हा ले कठोर हृदय पग्लेन

तर ती स्वार्थी राजाले उनका कुरालाई महत्त्व दिएनन् किनकि तिनको पुण्य नष्ट भइसकेको थियो ॥९॥ जब धृतराष्ट्रले सल्लाह गर्नको निम्ति विदुरलाई आफ्नो महलमा डाके तब ती गए। मन्त्रणा-विचक्षण विदुरले त्यहाँ जे जति भनेका थिए, त्यसलाई मन्त्रणा जान्नेहरू 'विदुरनीति' भन्दछन् ॥१०॥ उनले भने—ती त्यागी, हजुरका असह्य अपराधहरू सहन गर्ने र शत्रुहीन युधिष्ठिरलाई तिनको भाग दिनुहोस्, किनकि भीमरूपी सर्प आफ्ना दाजु-भाइसित बसेर गम्भीर राग फेरिरहेको छ, हजुर त्योसित पक्का डर मान्नु हुन्छ ॥११॥ यदि हजुर भीम जस्ता मेरा धेरै छोराहरू छन् भने ठान्नुहुन्छ भने यो पनि नबिर्सनु होला—भगवान् श्रीकृष्णले पाण्डवहरूलाई आफ्नै मानिसकेका छन्। श्रीकृष्ण साधारण मनुष्य होइनन् ती ब्राह्मणहरूका पनि देवता हुन्। ती आफ्नो द्वारकापुरीमा यदुवंशीहरूका पूज्य मानिन्छन्। तिनले आफ्नो पराक्रम द्वारा भूमण्डलका सबै राजाहरूलाई जितिसकेका छन् ॥१२॥ यदि हजुर दुर्योधन मान्दैन भन्नुहुन्छ भने परम पुरुष श्रीकृष्णको द्वेषी दुर्योधनलाई हजुर आफ्नो घरमा पसेको ठूलो दोष मान्नुहोस्। यस्ता अभागीलाई आफ्नो छोरा

सुतायनानि राजोरु मेने क्षतपुण्यलेशः ॥ ९ ॥ यदोपहूतो भवनं प्रविष्टो मन्त्राय पृष्टः किल पूर्वजेन ॥ अथाह तं मन्त्रदृशां वरीयान् यन्मन्त्रिणो वैदुरिकं वदन्ति ॥ १० ॥ अजातशत्रोः प्रतियच्छ दायं तितिक्षतो दुर्विषहं तवागः ॥ सहानुजो यत्र वृकोदराहिः श्वसन् रुषा यत्त्वमलं बिभेषि ॥ ११ ॥ पार्थांस्तु देवो भगवान्मुकुन्दो गृहीतवान्सः क्षितिदेवदेवः ॥ आस्ते स्वपुर्यां यदुदेवदेवो विनिर्जिताशेषनृदेवदेवः ॥ १२ ॥ स एष दोषः पुरुषद्विडास्ते गृहान्प्रविष्टो यमपत्यमत्या ॥ पुष्णासि कृष्णाद्विमुखो गतश्रीस्त्यजाश्वशैवं कुलकौशलाय ॥ १३ ॥ इत्यूचिवांस्तत्र सुयोधनेन प्रवृद्धकोपस्फुरिताधरेण ॥ असत्कृतः सत्स्पृहणीयशीलः क्षत्ता सकर्णानुजसौबलेन ॥ १४ ॥ क एनमत्रोपजुहाव जिह्मं दास्याः सुतं यद्बलिनैव पुष्टः ॥ तस्मिन्प्रतीपः परकृत्य आस्ते निर्वास्यतामाशु पुराच्छ्वसानः ॥ १५ ॥ स इत्थमत्युल्बणकर्णबाणैर्भ्रातुः पुरो मर्मसु ताडितोऽपि ॥ स्वयं धनुर्द्वारि निधाय मायां गतव्यथोऽयादुरु मानयानः ॥ १६ ॥ स निर्गतः कौरवपुण्यलब्धो गजाह्वयात्तीर्थपदः पदानि ॥ अन्वाक्रमत्पुण्यचिकीर्षयोर्व्यां

मानेर यसको पालन गर्नुहुन्छ ? भगवान्‌देखित द्वेष गर्नाले त्यसको 'श्री' नष्ट भइसकेको छ। आफ्नो कुलको कल्याण गर्नका लागि हजुर यो साक्षात् अमंगल-मूर्तिलाई तत्काल त्यागिदिनुस् ॥१३॥ विदुरले त्यस्तो भनेको सुनेर दुर्योधन रातो-पीरो भयो र त्यसका ओंठ फरफराउन लागे। त्यसका भाइ र मित्र कर्ण, दुःशासन र शकुनी पनि रिसाए। ती सबैले विदुरको घोर तिरस्कार गरे ॥१४॥ दुर्योधनले भने—'यो कुटिल दासी-पुत्रलाई यहाँ कसले डाक्यो ? यो जसको खाएर पालिएको छ, त्यसैको विरुद्ध षड्यन्त्र रच्दै शत्रुहरूलाई सहयोग दिन्छ। यसको सर्वस्व खोसेर यो अभागीलाई रित्तो हातले यस देशबाट निर्वासित गरिदिनु पर्दछ' ॥१५॥ आफ्ना दाजु धृतराष्ट्रको समक्ष यस्तो कठोर वाणी बाणबाट ज्ञानी विदुरको हृदयमा गएर बाण झैं लागे, तैपनि भगवान्‌को मायाको महत्त्व ठानेर उनले स्वयं आफ्नो धनुष-बाण उसको ढोकामा राखिदिए र प्रसन्नतासाथ निकालिनु भन्दा पहिले नै निस्कन

र त्यो विधवाले भनी—'दक्षी ब्याउन नदयोग देक !' जमींदार त्यो भन्दै उफ्रालि दिएर बोल्यो—'यति ठूलो माटो बोकिस् भने गर्न पेर छैन !' विधवाले भनी—'म सब आफ्नो खेतको एक टक्को माटो उठाउन सक्दिनँ भने तिमी अर्काको खेत खोसेर त्यो भारी पचाउन सकौला !' यति सुनेर जमींदारलाई आफ्नो भूल ज्ञात भयो र त्यो विधवाको पाउमा पर्‍यो। त्यसैले माफी मागी खेत फर्काइदियो।

हिंडे ॥१६॥ हस्तिनापुरबाट हिंडेर कौरवहरूका पुण्यस्थल प्राप्त गरेका विदुर नारायणका ती पवित्र तीर्थहरूको भ्रमण गर्न हिंडे, जहाँ भगवान् ब्रह्मा, रुद्रादि हजारौं रूपमा विद्यमान थिए ॥१७॥ अनेक नगर पवित्र उपवन, पहाड, लताकुञ्ज, पंकहीन जल, नदी सरोवर र अगणित आकारका मूर्ति हुने तीर्थहरूमा ती डुल्न लागे। यस प्रकार भूमण्डलमा भ्रमण गर्दै र पवित्र रीतिले आफ्नो जीविका सम्पादन गर्दै प्रत्येक तीर्थमा स्नान गर्दै, भूमिमा सुतेर शरीरको कुनै साज-सज्जा नगरी, अवधूत समान तिनको वेष-भूषा थियो, यसै कारण तिनलाई कसैले चिन्दैनथे र ती बराबर नारायणलाई प्रसन्न पार्नको लागि अनेक प्रकारका व्रतोपवास गर्दै रहन्थे ॥ १८-१९ ॥ त्यसरी भारतवर्षमा भ्रमण गर्दागर्दै जब विदुर प्रभास क्षेत्रमा पुगे त्यस बेलासम्म महाराज युधिष्ठिर शत्रुहरूलाई जितेर भगवान् श्रीकृष्णको मन्त्रणा अनुसार भूमण्डल भरिको शासन गर्न लागेका थिए ॥ २० ॥ त्यहाँ नै उनले सुने—उनका सबै सम्बन्धीहरू स्पर्धावश आपसमै त्यसै गरी लडेर मरे—जसरी बाँसको वनमा बाँसहरू घोटिएर उत्पन्न भएको आगोले सारा वन पोलिदिन्छ। यो दुःखद समाचार सुनेर

स्वधिष्ठितो यानि सहस्रमूर्तिः ॥१७॥ पुरेषु पुण्योपवनाद्रिकुंजेस्वपङ्कतोयेषु सरित्सरःसु ॥ अनंतलिंगैः समलंकृतेषु चचार तीर्थायतनेष्वनन्यः ॥१८॥ गां पर्यटन्मेध्यविविक्तवृत्तिः सदाप्लुतोऽधःशयनोऽवधूतः ॥ अलक्षितः स्वैरवधूतवेषो व्रतानि चेरे हरितोषणानि ॥ १९ ॥ इत्थं व्रजन्भारतमेव वर्षं कालेन यावद्गतवान्प्रभासम् ॥ तावच्छशास क्षितिमेकचक्रामेकातपत्रामजितेन पार्थः ॥ २० ॥ तत्राथ शुश्राव सुहृद्विनष्टिं वनं यथा वेणुजवह्निसंश्रयम् ॥ संस्पर्धया दग्धमथानुशोचन्सरस्वतीं प्रत्यगियाय तूष्णीम् ॥ २१ ॥ तस्यां त्रितस्यौशनसो मनोश्च पृथोरथाग्नेरसितस्य वायोः ॥ तीर्थं सुदासस्य गवां गुहस्य यच्छ्राद्धदेवस्य स आसिषेवे ॥२२॥ अन्यानि चेह द्विजदेवदेवैः कृतानि नानायतनानि विष्णोः ॥ प्रत्यङ्गमुख्याङ्कितमन्दिराणि यद्दर्शनात्कृष्णमनुस्मरन्ति ॥ २३ ॥ ततस्त्वतिव्रज्य सुराष्ट्रमृद्धं सौवीरमत्स्यान्कुरुजांगलांश्च ॥ कालेन तावद्यमुनामुपेत्य तत्रोद्धवं भागवतं ददर्श ॥२४॥ स वासुदेवानुचरं प्रशान्तं बृहस्पतेः प्राक्तनयं प्रतीतम् ॥ आलिंग्य गाढं प्रणयेन भद्रं स्वानामपृच्छद्भगवत्प्रजानाम् ॥ २५ ॥ कच्चित्पुराणौ पुरुषौ स्वनाभ्यपाद्मानुवृत्त्येह किलावतीर्णौ ॥ आसात उर्व्याः कुशलं विधाय कृतक्षणौ कुशलं शूरगेहे ॥ २६ ॥ कच्चित्कुरूणां परमः सुहृन्नो भीमः

तिनलाई अत्यन्त खेद भयो र नबोलिकन ती सरस्वती नदीतर्फ हिंडिदिए ।।२१।। त्यहाँ पुगेर उनले त्रित शुक्र, मनु, पृथु, अग्नि, असित, वायु, सुदास, गाई, स्वामी कार्तिकेय र श्राद्धदेव यी पुनीत तीर्थहरूमा अवगाहन गरे ॥२२॥ त्यो बाहेक अरु पनि अनेक ब्राह्मण, देवता र ऋषिहरू द्वारा निर्मित नारायणका ती मन्दिरहरूको पनि अवलोकन गरे, जसका माथि चक्रचिन्ह विराजमान थियो त्यनको दर्शन गर्नाले भगवान् कृष्णको स्मरण भएर आउँथ्यो ॥२३॥ त्यसपछि सौराष्ट्र ( गुजरात ), समृद्ध सौवीर, मत्स्य, कुरु-जाङ्गल आदि देशहरूमा डुल्दै ती यमुनातटमा पुगे र त्यहाँ विदुरले परमभक्त उद्धवलाई देखे ॥२४॥ भगवान कृष्णका अनुचर, परम शान्त र देवताका गुरु बृहस्पतिका पुराना नीति शास्त्रीय शिष्य उद्धवलाई विदुरले बर्ता स्नेह भएर छातीमा टाँसे र तिनीसित आफ्ना बन्धुहरूको र प्रजाको, श्रीकृष्णको कुशल-क्षेम सोधे—॥ २५ ॥ ती श्रीकृष्ण र बलराम त रामरी छोलान्, जो ब्रह्माजीको प्रार्थनाले मनुष्यरूपमा अवतरित छन्। ती आफ्नो प्रतिज्ञानुसार पृथ्वीको उद्धार गरेर आनन्दपूर्वक राजा शूरसेनकै घरमा रहन्छन् ? ॥२६॥ हाम्रा र कुरुवंशीहरूका पूज्य

सुहृद् वसुदेव त रामसँ होलान् ? जो आफ्ना बहिनीहरूलाई बाबुले झैं तृप्त पार्दै विविध प्रकारका वर दिंदै रहन्छन् ॥२७॥ हे प्रिय उद्धव ! यादवहरूका सेनापति प्रद्युम्न कुशल छन् ? जुन पूर्वजन्मका कामदेवलाई रुक्मिणीले ब्राह्मणहरूको आराधना गरेर कृष्ण द्वारा पुत्ररूपमा पाएकी छन् ॥२८॥ सात्वत, वृष्णि, भोज र दाशार्हवंशी यादवहरूका स्वामी महाराज उग्रसेन त कुशल छन् ? तिनले उस बेला दुष्ट कंसको डरले राज्यसिंहासन पाउने आशा त्यागिसकेका थिए । तर भगवान् कृष्णले फेरि तिनको अभिषेक गरेका थिए ॥ २९ ॥ हे सौम्य ! भगवान् जस्तै राम्रा र रथिहरूका अग्रगामी साम्बलाई सँचैछ ? जो पहिले पार्वतीका छोरा स्वामी कार्तिकेय थिए र यस जन्मना व्रतधारिणी जाम्बवतीको उदरबाट जन्मेका हुन् ॥३०॥ ती युयुधान ( सात्यकि ) त कुशल छन् ? जसले अर्जुनसित धनुर्वेदको रहस्य जानेका हुन् र भगवान् श्रीकृष्णको सेवा गरेर उनको रीति-नीतिलाई राम्ररी बुझेका छन् ॥ ३१ ॥ श्वफल्कका छोरा विद्वान्, पुतात्मा र भगवद्भक्त ती अक्रूर त सानन्द छन् ? जो कंसद्वारा श्रीकृष्णलाई ल्याउन व्रजमा पठाइएका थिए, ती वहाँ प्रेमले अधैर्य भएर श्रीकृष्णका चरणले

स आस्ते सुखमङ्ग शौरिः ॥ यो वै स्वसृणां पितृवद्ददाति वरान्वदान्यो वरतर्पणेन ॥ २७ ॥ कच्चिद्वरूथाधिपतिर्यदूनां प्रद्युम्न आस्ते सुखमङ्ग वीरः ॥ यं रुक्मिणी भगवतोऽभिलेभे आराध्य विप्रान्स्मरमादिसर्गे ॥ २८ ॥ कच्चित्सुखं सात्वतवृष्णिभोजदाशार्हकाणामधिपः स आस्ते ॥ यमभ्यषिञ्चच्छतपत्रनेत्रो नृपासनाशां परिहृत्य दूरात् ॥२९॥ कच्चिद्धरेः सौम्य सुतः सदृक्ष आस्तेऽग्रणी रथिनां साधु साम्बः ॥ असूत यं जाम्बवती व्रताढ्या देवं गुहं योऽम्बिकया धृतोऽग्रे ॥३०॥ क्षेमं स कच्चिद्युयुधान आस्ते यः फाल्गुनाल्लब्धधनूरहस्यः ॥ लेभेऽञ्जसाऽधोक्षजसेवयैव गतिं तदीयां यतिभिर्दुरापाम् ॥३१॥ कच्चिद्बुधः स्वस्त्यनमीव आस्ते श्वफल्कपुत्रो भगवत्प्रपन्नः ॥ यः कृष्णपादाङ्कितमार्गपांसुष्वचेष्टत प्रेमविभिन्नधैर्यः ॥ ३२ ॥ कच्चिच्छिवं देवकभोजपुत्र्या विष्णुप्रजाया इव देवमातुः ॥ या वै स्वगर्भेण दधार देवं त्रयी यथा यज्ञवितानमर्थम् ॥ ३३ ॥ अपस्विदास्ते भगवान्सुखं वो नः सात्वतां कामदुघोऽनिरुद्धः ॥ यमामनन्ति स्म ह शब्दयोनिं मनोमयं सत्त्वतुरीयतत्त्वम् ॥ ३४ ॥ अपिस्विदन्ये च निजात्मदैवमनन्यवृत्त्या समनुव्रता ये ॥ हृदीकसत्यात्मजचारुदेष्णगदादयः स्वस्ति चरन्ति सौम्य ॥ ३५ ॥ अपि स्वदोर्भ्यां विजयाच्यु-

अंकित व्रजभूमिको पवित्र धूलोमा लुटपुटिन थालेथे ॥ ३२ ॥ देवक नामका भोजवंशी राजाकी छोरी समान आराधनीया भगवान् कृष्णकी माता देवकी सुखी छन् ? जसले आफ्नो गर्भमा श्रीकृष्णलाई त्यसै गरी धारण गरिन् जसरी साम, ऋक् र यजु यी तीनै वेदहरूकर्ता त्रयी यज्ञलाईका अर्थहरूलाई आफ्नो उदरमा धारण गरिराख्दछन् ॥३३॥ ती अनिरुद्ध राम्ररी होलान्, जो सात्वतवंशी यादवहरूका कामधेनु हुन् र जसलाई मानिस योग र शब्दशास्त्र ( व्याकरण ) का आचार्य मान्दछन् । जसले चित्त, अहङ्कार र बुद्धिका चौथो अपिदल ब्रह्मको तत्त्व जानिसकेका छन् । चित्त, अहङ्कार, बुद्धि र मन अन्तःकरणका यी चारै भेदहरू क्रमशः वसुदेव संकर्षण, प्रद्युम्न र अनिरुद्ध अधिष्ठाता मानिन्छन् ॥३४॥ यी बाहेक हृदीक, सत्यभामाका छोरा चारुदेष्ण र गद आदि त सुखपूर्वक होलान् ? जसले अरू सबै कुराहरू बिर्सेर एकमात्र श्रीकृष्णमा आफ्नो मन लगाइराखेका छन् ॥ ३५ ॥ अब पाण्डवहरूको यथाक्रम सबैको र दुःखी कुन्तीको पनि कुशल-क्षेम सोध्दै विदुर खिन्न र उत्साहहीन मनले उद्धवसित भन्दछन्—जुन अर्जुन र श्रीकृष्णको सहायताले धर्म-सेतुको परिपालन गरेर

रहन्छन् जसको राजसभामा पुगेर र तिनको विजयश्री देखेर दुर्योधन मनमनै डढेको थियो, ती युधिष्ठिर छन् ? ॥ ३६ ॥ जुन भीम अपराधी माथि सर्प झैं क्रोध गर्न गर्दथे, के तिनले त्यो वैरभाव बिर्सिदिए ? जब ती आफ्नो गदा उचालेर विचित्र प्रकारले खुड्डा चाल्दै युद्धभूमिमा उभिन्थे तब भूमि पनि तिनको भारी सहन गर्न असमर्थ हुन्थिन् ॥ ३७ ॥ रथिहरू र सेनापतिहरूमा यशस्वी, पार्थका सबै शत्रु समाप्त भए, जसले किरात वेषधारी शंकर भगवान्‌लाई आफ्ना तीक्ष्ण बाणवर्षा द्वारा ढाकेर प्रसन्न पारेका थिए ॥३८॥ पृथाका दुवै छोरा नकुल र सहदेव त राम्ररी होलान् ? जसलाई युधिष्ठिर, भीम र अर्जुन आँखाको नानी झैं सुरक्षा गर्दथे। ती दुष्ट दुर्योधनसित आफ्नो भाग त्यसै गरी खोसेर खेल कूद गर्दछन्—जसरी गरुडले इन्द्रको मुखबाट अमृत खोसेका थिए ॥३९॥ ती पतिव्रता* कुन्ती पनि अझ बाँचेकै छन् ? जसले आफ्ना पति स्वर्गवासी भएपछि पनि छोराहरूको निम्ति आफ्नो प्राणरक्षा गरिराखेकी थिइन्। तिनका पति पाण्डु पनि असाधारण वीर थिए, उनले रथमा चढेर केवल धनुष बाण लिई चारै दिशालाई एक्लै जितेका थिए ॥ ४० ॥ हे सौम्य ! म त अब ती पतित

ताभ्यां धर्मेण धर्मः परिपाति सेतुम् ॥ दुर्योधनोऽतप्यत यत्सभायां साम्राज्यलक्ष्म्या विजयानुवृत्या ॥ ३६ ॥ किं वा कृताघेष्वघमत्यमर्षी भीमोऽहिवद्दीर्घतमं व्यमुञ्चत् ॥ यस्याङ्घ्रिपातं रणभूर्न सेहे मार्गं गदायाश्चरतो विचित्रम् ॥ ३७ ॥ कच्चिद्यशोधा रथयूथपानां गाण्डीवधन्वोपरतारिरास्ते ॥ अलक्षितो यच्छरकूटगूढो मायाकिरातो गिरिशस्तुतोष ॥ ३८ ॥ यमावुतस्वित्तनयौ पृथायाः पार्थैर्वृतौ पक्ष्मभिरक्षिणीव ॥ रेमात उद्दाय मृधे स्वरिक्थं परात्सुपर्णाविव वज्रिवक्त्रात् ॥ ३९ ॥ अहो पृथाऽपि ध्रियतेऽर्भकार्थे राजर्षिवर्येण विनापि तेन ॥ यस्त्वेकवीरोऽधिरथो विजिग्ये धनुर्द्वितीयः ककुभश्चतस्रः ॥४०॥ सौम्यानुशोचे तमधः पतन्तं भ्रात्रे परेताय विदुद्रुहे यः ॥ निर्यापितो येन सुहृत्स्वपुर्या अहं स्वपुत्रान्समनुव्रतेन ॥ ४१ ॥ सोऽहं हरेर्मर्त्यविडम्बनेन दृशो नृणां चालयतो विधातुः ॥ नान्योपलक्ष्यः पदवीं प्रसादाच्चरामि पश्यन्गतविस्मयोऽत्र ॥ ४२ ॥ नूनं

धृतराष्ट्रको विषयमा बढ्ता दुःखी छु—जसले मरिसकेका महाराज पाण्डुका छोराहरूसित शत्रुता गर्न खोजेर मृतात्मासित द्रोह गरे र तिनले म जस्तो शुभचिन्तक भाइलाई पनि छोराहरूको पक्ष लिएर आफ्नो नगरबाट निर्वासित गरिदिए ॥४१॥ तिनको क्रूरतालाई जानेर पनि तिमी बिन दुःखी हुन्छौ—भन्नुहुन्छ भने—मुख्य कुरा यो हो कि मनी भगवान्‌को कृपाद्वारा उनको महिमा हेर्दै निश्चिन्त भएर अज्ञातरूपबाट आनन्दपूर्वक डुलिरहेको छु, जो आफ्नी मायाले मनुष्यहरूको चित्तवृत्तिलाई भ्रममा पारिदिन्छन् ॥ ४३ ॥ यदि त्यस्तो

---

*उदाहरण—बौटा ब्राह्मण थियो। तिनकी पत्नी निकै पतिव्रता थिइन्। ती दुवै तीर्थगर्न हिंडे। बाटोमा बौटा राजा आफ्ना सेनासहित विश्राम गरिरहेका थिए। तिनले ती ब्राह्मण दम्पतीलाई देखे र सी रूपवती ब्राह्मणीमाथि मोहित भए। तिनले विप्रलाई आरू नगीचै डाकेर भने—'तपाईं' सुपात्र ब्राह्मण हुनुहुन्छ। यसनिम्ति मेरो राज्यमा हिंड्नुहोस् र मेरो देशको शोभा बढाउनोस्। म आफ्ना माता पिता झैं तपाईंहरूको सेवा गर्नेछु। साठी स्त्रीले राजाको मनको कुरा बुझी। त्यसले पतिलाई राजाकहाँ जान हुन्न भनेर छेकी तर सोझा ब्राह्मण, जान तयार भए। अनि पतिव्रताले पनि जान करै लाग्यो। स्त्रीले राजासित भनिन्—'हजुरले आफ्नो वचन पालन गर्नु भएन भने त्यसको साक्षी को रहनेछ ?' राजाले भने—'सबैका हृदयमा निवास गर्ने भगवान् राम !' त्यसपछि राजासित ती दुवै जना गए। राजाले बाटोमा ब्राह्मणलाई मार्न लगाए र तिनकी पत्नीसित बलात्कार गर्न उद्यत भए। पतिव्रता भन्दछिन्—'हे मूर्ख ! हामी दुवैको माझमा रामजी साक्षी छन्, यो कुरा बिर्सिसक्यौ ! अब तिमी आफ्नो विनाश नै गर्न खोजिरहेछौ !' तर कामासक्त राजा मानेन। यतिमै रामचन्द्र प्रकट भए, तिनले सेना समेत राजालाई मारेर पतिव्रताको धर्म रक्षा गरे।

थियो भने भगवान्ले पाण्डवहरूलाई वनवास र आफू धुनिने आदिको मौका नै किन दिनुभयो ? ती कौरवहरूलाई पहिले नै किन मारिदिनु भएन भन्नुहुन्छ भने कुरा हो ) कौरवहवाहेक पनि विद्यामद, धनमद र कुलमदले मतवाला जुन राजा आफ्ना विशाल सेनाको संचालन गर्दै पृथ्वी कम्पित पारिरहेका थिए, तिनको नाश गरेर मर्छ उष्ट समाप्त पार्ने अभिप्रायले नारायण कौरवहरूको अपराधको उपेक्षा गरिरहेका थिए ॥४३॥ यदि त्यस्तो नहुँदो हो त अजन्माले पनि जन्म लिनु र कर्तापनबाट पृथक् भएर पनि काम गर्नु किन अभीष्ट हुन्थ्यो ? उनले कुमार्गीहरूको नाश र संसारका प्राणीहरूलाई काममा लगाउने विचारले नै अवतार लिनुभएको थियो ॥४४॥ हे मित्र ! आफ्नो शरणमा आएका लोकपालहरू तथा अनुशासन मान्ने प्राणिहरूको कल्याणको निम्ति नै उनले यदुकुलमा जन्म लिएका थिए। तिमी ती पवित्र कीर्ति हुने श्रीकृष्णको हाल भन किनकि मेरो त तीनै सबभन्दा ठूला तीर्थ हुन् ॥४५॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषा-टीकायां प्रथमोऽध्यायः ॥१॥ ( उद्धवले भगवान्का बाललीलाको वर्णन गर्नु ) शुकदेव

नृपाणां त्रिमदोत्पथानां महीं मुहुश्चालयतां चमूभिः ॥ वधात्प्रपन्नार्तिजिहीर्षयेशोऽप्युपेक्षताघं भगवान्कुरूणाम् ॥ ४३ ॥ अजस्य जन्मोत्पथनाशनाय कर्माण्यकर्तुर्ग्रहणाय पुंसाम् ॥ नन्वन्यथा कोऽर्हति देहयोगं परो गुणानामुत कर्मतन्त्रम् ॥ ४४ ॥ तस्य प्रपन्नाखिललोकपानामवस्थितानामनुशासने स्वे ॥ अर्थाय जातस्य यदुष्वजस्य वार्तां सखे कीर्तय तीर्थकीर्तेः ॥ ४५ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे विदुरोद्धवसंवादे प्रथमोऽध्यायः ॥ १ ॥ श्रीशुक उवाच ॥ इति भागवतः पृष्टः क्षत्त्रा वार्तां प्रियाश्रयाम् ॥ प्रतिवक्तुं न चोत्सेह औत्कण्ठ्यात्स्मारितेश्वरः ॥ १ ॥ यः पञ्चहायनो मात्रा प्रातराशाय याचितः ॥ तन्नैच्छद्रचयन्यस्य सपर्यां बाललीलया ॥ २ ॥ स कथं सेवया तस्य कालेन जरसं गतः ॥ पृष्टो वार्तां प्रतिब्रूयाद्भर्तुः पादावनुस्मरन् ॥ ३ ॥ स मुहूर्तमभूत्तूष्णीं कृष्णाङ्घ्रिसुधया भृशम् ॥ तीव्रेण भक्तियोगेन निमग्नः साधुनिर्वृतः ॥ ४ ॥ पुलकोद्भिन्नसर्वाङ्गो मुञ्चन्मीलद्दृशा शुचः ॥ पूर्णार्थो लक्षितस्तेन स्नेहप्रसरसंप्लुतः ॥५॥ शनकैर्भगवल्लोकान्नृलोकं पुनरागतः ॥ विमृज्य नेत्रे विदुरं प्रत्या

भन्दछन्—हे राजन् ! यसरी आफ्ना परम स्नेही भगवान्को वृत्तान्त सोधेपछि असाधारण भक्त उद्धवले तत्काल कुनै उत्तर दिन सकेनन् । किनकि भगवान्को स्मरण हुनाले तिनको घाँटी अवरुद्ध भएको थियो ॥१॥ पाँच वर्षको अवस्थामै एकपल्ट विहानै आमाले खाजा खान उद्धवलाई डाकिन्, बाल-लीला परायण भगवान्को पूजामा लागेका उनले खान मनपराएनन् ॥२॥ अनि जीवनभरि उनकै साक्षात् सेवामा रहेर श्रीकृष्णको वृत्तान्त सोधेपछि तुरुन्त कसरी उत्तर दिन सक्थे ? उनका चरणको सम्झना हुनासाथ उद्धव विह्वल हुनु स्वाभाविक नै थियो ॥३॥ भगवान्का चरणारविन्द्ररूपी अमृतमा डुबुल्की मारेर ती एक क्षण चुपलागे र तिनको मन तीव्र भक्तिको अगाध समुद्रमा डुबुल्की मार्दै रह्यो ॥४॥ तिनलाई रोमाञ्च भयो, आँखा चिम्लिए र नेत्रबाट अविरल अश्रुधारा बग्नलागे । बरो स्नेहले गर्दा ती मित्रमित्रै आनन्दित भइरहेथे । यस्तो दशामा विदुरले उद्धवलाई कृतकृत्य ठाने ( किनकि यो महानन्द प्राप्तिकै निम्ति त यो, जप-तप र तीर्थाटन आदि गरिन्छन् । त्यसपछि बिस्तार-बिस्तार भगवान्को लोकबाट आफ्नो मन मानव-लोकमा ल्याए र आँखा पुछेर

केही विस्मित जस्ता भएर विदुरसित भन्नलागे ॥ ६ ॥ उद्धव भन्दछन्—जब श्रीकृष्णरूपी सूर्य अस्तायां र कालरूपी अजिंगले हामी र हाम्रा घर-द्वार निलिसक्यो, तब ती शून्य घर-द्वारहरूको हालत के भनौं ॥७॥ म त भन्दछु कि सारा संसार अभागी हो र यदुवंशी त झन् बढी अभागी हुन् किनकि ती निरय उनैसंग बसेर पनि उनलाई चिह्न सकेनन् (तिनको बुद्धिमा यो आएन—यी साक्षात् नारायण हुन्) । जस्तै क्षीर समुद्रबाट उत्पन्न चन्द्रमलाई त्यहाँका माछाहरूले यौटा जल-जन्तु नै ठानिरहे, तिनलाई ज्ञात हुन सकेन—ती अमृत-का राशि हुन् ॥८॥ ( दुर्भाग्यले यदुवंशी तिनलाई चिह्न समर्थ-भएनन् । ज्ञानसामग्रीको अभाव तिनमा थिएन किनकि ती अरुका मनको कुरा जान्दथे सबै काममा निपुण थिए । तिनका चित्तवृत्तिहरू शान्त थिए । यति भएर पनि ती लीलाधारी नारायणलाई केवल यदुवंशीहरूमा श्रेष्ठ मनुष्य नै जान्नसके ॥९॥ ती मध्ये धेरैले तिनलाई आफ्ना स्वजन-सम्बन्धी यादव मात्र ठाने र शिशुपाल आदि दुष्टहरूले दुष्टतावश तीर्सित शत्रुता ठानेर जन्मभरि तिनको निन्दा गरे । यो राम्रो भयो—ती दुष्टहरूको कुराबाट भगवान्मा मन लगाएका हामी भक्तहरूका मन भ्रममा गाडिन सकेन, तर तिनका सहवासी नै एकदम मूढ भए ॥१०॥ (उसो भए ती भगवान् के थिए, त्यो सुन्नोस्) जसले कुनै प्रकारको तपस्या गरेका थिएनन्, तिनलाई पनि

होद्धव उत्स्मयन् ॥ ६ ॥ उद्धव उवाच ॥ कृष्णद्युमणिनिम्लोचे गीर्णेष्वजगरेण ह ॥ किं नु नः कुशलं ब्रूयां गतश्रीषु गृहेष्वहम् ॥ ७ ॥ दुर्भगो बत लोकोऽयं यदवो नितरामपि ॥ ये संवसन्तो न विदुर्हरिं मीना इवोडुपम् ॥ ८ ॥ इङ्गितज्ञाः पुरुप्रौढा एकारामाश्च सात्वताः ॥ सात्वतामृषभं सर्वे भूतावासममंसत ॥९॥ देवस्य मायया स्पृष्टा ये चान्यदसदाश्रिताः ॥ भ्राम्यते धीर्न तद्वाक्यैरात्मन्युप्तात्मनो हरौ ॥१०॥ प्रदर्श्याततपसामवितृप्तदृशां नृणाम् ॥ आदायान्तरधाद्यस्तु स्वबिम्बं लोकलोचनम् ॥ ११ ॥ यन्मर्त्यलीलौपयिकं स्वयोगमायाबलं दर्शयता गृहीतम् ॥ विस्मापनं स्वस्य च सौभगर्द्धेः परं पदं भूषणभूषणाङ्गम् ॥ १२ ॥ यद्धर्मसूनोर्बत राजसूये निरीक्ष्य दृक्स्वस्त्ययनं त्रिलोकः ॥ कार्त्स्न्येन चाद्येह गतं विधातुरर्वाक्सृतौ कौशलमित्यमन्यत ॥ १३ ॥ यस्यानुरागप्लुतहासरासलीलावलोकप्रतिलब्धमानाः ॥ व्रजस्त्रियो दृग्भिरनुप्रवृत्तधियोऽवतस्थुः किल कृत्यशेषाः ॥ १४ ॥ स्वशान्तरूपेष्वितरैः स्वरूपैरभ्यर्द्यमानेष्वनुकम्पितात्मा ॥ परावरेशो महदंशयुक्तो ह्यजोऽपि जातो भगवान्यथाग्निः ॥ १५ ॥

त्यतिका दिनसम्म ती आफ्नो उत्तम शोभा देखाएर अन्तर्धान भए र सबैका नेत्रको ज्योति पनि लगे झैं भयो ॥११॥ मनुष्य झैं लीला गर्न, स्वयं आफूनै आफूलाई विस्मयमा पार्न, सौभाग्य तथा समृद्धिका परमपद-स्वरूप, भूषणलाई पनि भूषित पार्न एवं योगमायाको बलले कल्पित कमनीय अवयवहरूलाई उनले जगत्का प्राणीहरूलाई देखाएका थिए॥१२॥राजा युधिष्ठिरको राजसूय यज्ञमा जस-जसले तिनको अनूप रूप देखेका थिए, तिनका नेत्र तृप्त भएका थिए । आज तीनैलोकका प्राणी विधातामा त्यस बिम्ब-सदृश यौटा नवीन संसारको निर्माण गर्ने कौशल देखेनन् ( तिनको विश्वास छ—ब्रह्माजी आफ्नो निपुणता कति नै खर्च गरुन् तर त्यो भव्य आकृति अब हामीहरूलाई दृष्टिगोचर गराउन सक्तैनन्—बनाउनै सक्तैनन् ) ॥१३॥ जसको सौन्दर्य र अनुरागमा डुबुल्की मारेर हास्य-विनोद युक्त अनेक थरिका कौतुकपूर्ण दृश्य अवलोकन गरेर व्रजवधूटीहरू एक प्रकारको गर्व अनुभव गरिरहेका थिए, आज ती आफ्ना प्रियतम जानाले आफ्नो सुद्धि-बुद्धि हराएर बसेका छन् । यसनिम्ति तिनको काम अपूरोनै रहेको छ॥१४॥ तब तिनले यस्तो रूप

किन देखाए (यो सुन्नुहोस्–) ती दयालु परम पुरुषले जब आफ्नै शान्त स्वरूपलाई अशान्त स्वरूप (दैत्य) द्वारा दमन हुनलागेको देखेर ती अजन्मा भएर पनि आफ्नो महान् अंशबाट त्यसै गरी उत्पन्न भए, जसरी वनमा काठबाट आगो उत्पन्न हुन्छ ॥१५॥ मलाई त यो विचारेर कष्ट हुन्छ–यति प्रबल पराक्रमी नारायणले अजन्मा भएर पनि वसुदेवको घरमा जन्म लिए, शत्रु ( कंस ) को भयले व्रजमा गएर बसे र कालयवन आदि शत्रुगणको डरले आफ्नो नगर छाडेर भागे ॥१६॥ जब म भगवान्‌को त्यस कुराको स्मरण गर्दछु तब मेरो चित्त अझ बढ्ता दुःखी भएर आउँछ, जब तिनले आफ्ना माता-पितालाई प्रणाम गरेर भनेका थिए–हे पिता, हे माता ! हामीले कंसद्वारा भयभीत हजुरहरूको अभिलषित सेवा गर्न सकेनौं, अतः हजुर हामीप्रति रुष्ट नहुने होला' ॥१७॥ संसारमा यस्तो कुन प्राणी छ–जो तिनका चरण-कमलको धूलोको सुगन्ध पाएर पनि तिनलाई बिर्सोस् । जसको आगो झैं बल्दो भृकुटीले नै काल बनेर भूमिको भार हटाइदिएका थिए ॥१८॥ यो कुरा त तपाईंहरूले पनि देख्नु भएको थियो–धर्मराजको राजसूय यज्ञमा शिशुपालले कृष्णको कति द्वेष गरेको थियो, तैपनि श्रीकृष्णले त्यसलाई त्यो गति दिनुभयो, जसलाई ज्ञानद्वारा प्राप्त गर्न योगीजन पनि लालयित रहन्छन् । यस्ता महापुरुषको वियोग को सहन गर्न सक्छ ? ॥१९॥

मां खेदयत्येतदजस्य जन्म विडम्बनं यद्वसुदेवगेहे ॥ व्रजे च वासोऽरिभयादिव स्वयं पुराद्व्यवात्सीद्यदनन्तवीर्यः ॥ १६ ॥ दुनोति चेतः स्मरतो ममैतद्यदाह पादावभिवन्द्य पित्रोः ॥ तातम्ब कंसादुरुशङ्कितानां प्रसीदतं नोऽकृतनिष्कृतीनाम् ॥ १७ ॥ को वा अमुष्याङ्घ्रिसरोजरेणुं विस्मर्तुमीशीत पुमान्विजिघ्रन् ॥ यो विस्फुरद्भ्रूविटपेन भूमेर्भारं कृतान्तेन तिरश्चकार ॥१८॥ दृष्टा भवद्भिर्ननु राजसूये चैद्यस्य कृष्णं द्विषतोऽतिसिद्धिः ॥ यां योगिनः संस्पृहयन्ति सम्यग्योगेन कस्तद्विरहं सहेत ॥ १९ ॥ तथैव चान्ये नरलोकवीरा य आहवे कृष्णमुखारविन्दम् ॥ नेत्रैः पिबन्तो नयनाभिरामं पार्थास्त्रपूताः पदमापुरस्य ॥२०॥ स्वयं त्वसाम्यातिशयस्त्र्यधीशः स्वाराज्यलक्ष्म्याऽऽप्तसमस्तकामः ॥ बलिं हरद्भिश्चिरलोकपालैः किरीटकोट्येडितपादपीठः ॥ २१ ॥ तत्तस्य कैङ्कर्यमलङ्कृतान्नो विग्लापयत्यङ्ग यदुग्रसेनम् ॥ तिष्ठन्निषण्णं परमेष्ठिधिष्ण्ये न्यबोधयद्देव निधारयेति ॥२२॥ अहो बकी यं स्तनकालकूटं जिघांसयाऽपाययदप्यसाध्वी ॥ लेभे गतिं धात्र्युचितां ततोऽन्यं कं वा दयालुं शरणं व्रजेम ॥ २३ ॥ मन्येऽसुरान्भा·

त्यसै गरी महाभारतको संग्राममा जो वीर भगवान्‌को मुखारविन्द अवलोकन गर्दै पाण्डवहरूका शस्त्रास्त्रले मारिए, ती पनि भगवान्‌को परम पदमा प्राप्त भए ॥२०॥ ती त्रिलोकीनाथ यस्ता थिए कि विश्वभरिमा न कोही तिनको समान थियो, न कोही तीभन्दा बढ्ता नै थियो । परमानन्द सम्पत्ति पाएर ती पूर्ण कामम इसकेका थिए र प्राचीन राजाहरू पनि तिनका चरणमा मस्तक निहुराईरहन्थे त्यस बखत तिनका मुकुटको किरीट टक्करखानाले जुन एकप्रकारको ध्वनि निस्कन्थ्यो, त्यसले ज्ञातहुन्थ्यो कि मानो ती कीरीटहरू उनै जनार्दनको स्तुति गरिरहेका छन् ॥२१॥ यस्ता महापुरुष यौंटा सेवकजस्तै जब सिंहासनासीन उग्रसेनलाई–'हे देव ! यो कुरा यस्तो हो, यसमा विचार गर्नोस् ।' भन्दथे, यो कुरा विचार गरेर मलाई त ठूलो ग्लानि हुन्छ ( यति ठूलो सामर्थ्यशाली व्यक्ति जो आफ्नो भृकुटीको संकेतले अनेक राजाहरूलाई बनाउन-बिगार्न सक्थे, ती यौंटा राजाको यसरी चाकरीगर्दथे ॥२२॥ ( तर मेरो त विश्वास छ कि नारायणले आफ्नो कृपालुतावश नै त्यस्तो गरेका थिए, तिनका कृपालुताको कुनै हद छ ? ) हरे न, त्यो दुष्टा बकी ( पूतना ) उनलाई मार्नको निम्ति आफ्ना स्तनमा कालकूट विष लगाएर पुगी र उनलाई आफ्नो दूध पिउन दिई । त्यस्तो दुष्टता गरेर पनि त्यसलाई ( केवल आमाको वेष धारण गरेकी हुनाले ) माताको योग्य गति

प्राप्त भयो । यस्तो दशामा त्यस्ता दयालु प्रभुलाई छाडेर हामी अरु कसको शरणमा जाने ? ॥२३॥ मत असुरहरूलाई पनि भगवद्भक्त नै मान्दछु, किनकि ती पनि रिसले सदैव उनैको ध्यान गरिरहन्छन् । फेरि संग्राम-भूमिमा ती पनि त गरुडमा चढेर आइरहेका नारायणको दर्शन गर्दथे ( जब तिनको दर्शन प्राप्त भयो तब असुर पापीको रहिरहन सक्छ ? ) ॥२४॥ ( अब भगवान् अन्तर्धान भएको गाथा गान गर्दै संक्षेपमा उनको चरित्र वर्णन गर्दछु—) कंसले जब वसुदेव र देवकीलाई झ्यालखानमा थुनिदियो, तब ब्रह्माको प्रार्थनामा नारायण पृथ्वीको भार उतार्नको निम्ति त्यस कारागारमै जन्मे ॥२५॥ अनि कंसको डरले भयभीत पितासित ती व्रजमा गए । त्यहाँ आफ्नो तेज लुकाएर एघार वर्षसम्म बसे ॥२६॥ ती त्यस यमुना-तटमा-जहाँ विविध प्रकारका पक्षी बोल्दथे, ती वन र उपवनहरूमा ग्वाल-बालसित अनेक प्रकारका कौतुक गर्न गर्दथे ॥२७॥व्रजमा बाल-लीला देखाउँदै ती कहिले रुन्थे र कहिले हाँस्तथे अनि कहिले वीर बनेर सिंहको समान गर्जन गर्दथे ॥२८॥ जब आले ठूला भए तब शोभा आदि सम्पत्तिहरूकी खानीस्वरूप त्यहाका गाईहरू चराउँदै वंशी बजाइ-बजाइक सबै

गवतांस्त्र्यधीशो संरम्भमार्गाभिनिविष्टचित्तान् ॥ ये संयुगेऽचक्षत तार्क्ष्यपुत्रमंसे सुनाभायुधमापतन्तम् ॥ २४ ॥ वसुदेवस्य देवक्यां जातो भोजेन्द्रबन्धने ॥ चिकीर्षुर्भगवानस्याः शमजेनाभियाचितः ॥२५॥ ततो नन्दव्रजमितः पित्रा कंसाद्वि बिभ्यता ॥ एकादश समास्तत्र गूढार्चिः सबलोऽवसत् ॥२६॥परीतो वत्सपैर्वत्सांश्चारयन्व्याहरद्विभुः ॥ यमुनोपवने कूजद्द्विजसंकुलिताङ्घ्रिपे ॥२७॥ कौमारीं दर्शयंश्चेष्टां प्रेक्षणीयां व्रजौकसाम् ॥ रुदन्निव हसन्मुग्धबालसिंहावलोकनः ॥२८॥ स एव गोधनं लक्ष्म्या निकेतं सितगोवृषम् ॥ चारयन्ननुगान्गोपान्रणद्वेणुररीरमत् ॥२९॥ प्रयुक्तान्भोजराजेन मायिनः कामरूपिणः ॥ लीलया व्यनुदत्तांस्तान्बालः क्रीडनकानिव ॥३०॥ विपन्नान्विषपानेन निगृह्य भुजगाधिपम् ॥ उत्थाप्यापाययद्गवस्तत्तोयं प्रकृतिस्थितम् ॥३१॥ अयाजयद्गोसवेन गोपराजं द्विजोत्तमैः ॥ वित्तस्य चोरुभारस्य चिकीर्षन्सद्व्ययं विभुः ॥३२॥ वर्षतीन्द्रे व्रजः कोपाद्भग्नमानेऽतिविह्वलः ॥ गोत्रलीलातपत्रेण त्रातो भद्रानुगृह्णता ॥३३॥ शरच्छशिकरैर्मृष्टं मानयन्रजनीमुखम् ॥ गायन्कलपदं रेमे स्त्रीणां मण्डलमण्डनः ॥३४॥ इति श्रीमद्भागवते तृतीयस्कन्धे विदुरोद्धवसंवादे द्वितीयोऽध्यायः॥२॥ उद्धव उवाच ॥ ततः स आगत्य पुरं स्वपित्रोश्चिकीर्षया शं बलदेवसंयुतः ॥ निपात्य

ग्वाल-बाललाई आनन्दित पार्न लागे ॥२९॥ राजा कंसले पठाएका अनेक दैत्यहरूलाई तिनले स-साना बालकले खेलाउने खेलै झैं गरेर मारिदिए ॥३०॥ कालीय नागको विष मिसिएको पानी पिएर मरेका गाई र गोपालहरूलाई जीवन दिए । कालीयलाई भगाएर जब त्यो जल विषविहीन पारिदिए अनि गाईहरूले जल पिए ॥३१॥ इन्द्रको पूजामा व्रजको निकै धन खर्च हुन्थ्यो, त्यसलाई गोवर्धनको पूजामा लगाएर नन्द तथा अन्यान्य ब्राह्मणहरूद्वारा गाईको पूजा गराए । यसरी त्यस धनको उनले सदुपयोग गराए ॥३२॥ हे भद्र ! जब इन्द्र रिसाएर घोर वर्षा गर्दै व्रजवासीहरूलाई व्यथित पार्न लागे, तब उनले इन्द्र र ग्वाल-बालमाथि अनुग्रह गरेर त्यस गोवर्धन पर्वतलाई छाता जस्तै उठाएर समस्त व्रजवासीहरूलाई बचाए ॥३३॥ शरदकालीन चन्द्रमाका किरणद्वारा जब रात्रि सफा र उज्ज्वल भइरहेको थियो, तब राम्रो गीत गाउँदै उनले व्रजवधूटीहरूसित रास रचाएर आनन्दको वर्षा गरे ॥३४॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषा-टीकायां द्वितीयोऽध्यायः ॥२॥ उद्धव भन्नलागे—आफ्ना माता-पिताको कल्याण गर्नका लागि

फर्केर मोहन तो मथुरापुरी आए र शत्रुसमुदायका स्वामी कंसलाई वेगपूर्वक सिंहासनबाट पछारी घिसारेर मारे ॥१॥ त्यसपछि गुरु सान्दिपिनीकहाँ गएर विद्या पढ्नलागे। ती यति प्रतिभावान् थिए कि गुरु एकपल्ट जुन कुरा भन्दथे, त्यो उनका हृदयमा बसिरहन्थ्यो। यसरी विस्तारपूर्वक उनले वेदहरूको अध्ययन गरे र गुरुका मरेका छोराहरूलाई यमराजकहाँबाट ल्याएर गुरु-दक्षिणा दिए ॥२॥राजा भीष्मककी छोरी रुक्मिणी सौन्दर्यमा आकर्षित भएर शिशुपाल आदि जो राजा विवाहको निम्ति त्यहाँ गएका सबैका मस्तकहरूमा टेकेर गान्धर्व रीति अनुसार रुक्मिणीलाई हरेर लगे ॥३॥ ठूला ठूला सातोटा गोरुहरू नाथेर तिनको दमन गरे र त्यहाँका सबै राजाहरूको मान भङ्ग गर्दै इनले स्वयंवरमा नाग्नजितीलाई प्राप्त गरे। अनि लोभवश जो राजा उनीसित लडाइँ गर्न आए ती अज्ञानीहरूलाई शस्त्रास्त्रले मारेर ढसाए र आफ्नो शरीरमा अलिकति पनि चोट लाग्नदिएनन् ॥ ४ ॥ ती यद्यपि परम स्वतन्त्र थिए आफ्नी प्रियतमा सत्यभामाभाई प्रसन्न पार्नका लागि स्वर्गलोक गए र त्यहाँबाट पारिजातको वृक्ष ल्याए। नारीका अधीन इन्द्र जब रिसाएर आफ्ना दल-बल सहित युद्ध गर्न

तुङ्गाद्रिपुरथनाथं हतं व्यकर्षद्व्यसुमोजमोर्व्याम् ॥१॥ सान्दीपनेः सकृत्प्रोक्तं ब्रह्माधीत्य सविस्तरम् ॥ तस्मै प्रादाद्वरं पुत्रं मृतं पञ्चजनोदरात् ॥ २ ॥ समाहुता भीष्मककन्यया ये श्रियः सवर्णेन बुभूषयैषाम् ॥ गान्धर्ववृत्त्या मिषतां स्वभागं जह्रे पदं मूर्ध्नि दधत्सुपर्णः ॥ ३ ॥ ककुद्मतोऽविद्धनसो दमित्वा स्वयंवरे नाग्नजितीमुवाह ॥ तद्भग्नमानानपि गृध्यतोऽज्ञाञ्जघ्नेऽक्षतः शस्त्रभृतः स्वशस्त्रैः ॥ ४ ॥ प्रियं प्रभुर्ग्राम्य इव प्रियाया विधित्सुरार्च्छद्द्युतरुं यदर्थे ॥ वज्र्याद्रवत्तं सगणो रुषाऽन्धः क्रीडामृगो नूनमयं वधूनाम् ॥ ५ ॥ सुतं मृधे खं वपुषा ग्रसन्तं दृष्ट्वा सुनाभोन्मथितं धरित्र्या ॥ आमन्त्रितस्तत्तनयाय शेषं दत्त्वा तदन्तःपुरमाविवेश ॥ ६ ॥ तत्राहृतास्ता नरदेवकन्याः कुजेन दृष्ट्वा हरिमार्तबन्धुम् ॥ उत्थाय सद्यो जगृहुः प्रहर्षव्रीडानुरागप्रहितावलोकैः ॥ ७ ॥ आसां मुहूर्त एकस्मिन्नानागारेषु योषिताम् ॥ सविधं जगृहे पाणीननुरूपः स्वमायया ॥ ८ ॥ तास्वपत्यान्यजनयदात्मतुल्यानि सर्वतः ॥ एकैकस्यां दश दश प्रकृतेर्विबुभूषया ॥ ९ ॥ कालमागधशाल्वादीननीकैः रुन्धतः पुरम् ॥ अजीघ-

आए तब श्रीकृष्णले तिनलाई चुटेर भगाए ॥५॥ जब भौमासुर आफ्नो शारीरिक बलले आकाशलाई पनि निल्न खोजिरहेथ्यो, तब उनले त्यसलाई संग्राममा मारिदिए। आफ्ना मरेका छोराहरू देखेर पृथ्वीले श्रीकृष्णलाई आफ्नो घर डाकिन्। त्यस बखत उनले राज्यको शेषभाग भौमासुरको छोरो भगदत्तलाई दिए ! अनि अन्तःपुरमा गए। त्यहाँ भौमासुरले हरण गरेर ल्याएका धेरै मनुष्य र देवताका कन्याहरू थुनामा थिए। ती कन्याहरूले जब दुःखीहरूका सहायक भगवान्को त्यो मनोहर मूर्ति देखे तब सबै प्रथमाथि मोहित भए। भगवान्ले पनि आफ्नो हर्ष, लज्जा र अनुराग-मिश्रित हेराइले तिनलाई आनन्दित पार्दै ती सबैको उद्धार गरे ॥ ६॥७ ॥ भगवान् केवल एक मुहूर्त ती स्त्रीहरूको घरमा बसे। त्यसपछि आफ्नो माया द्वारा अनेक रूप भएर उनले ती सबैसित विधिवत् विवाह गरे ॥८॥ प्रकृतिको विस्तार गर्न इच्छाले उनले एकेक स्त्रीबाट दस-दस बालक उत्पन्न गरे। ती पनि श्रीकृष्ण जस्तै राम्रा र बलवान् थिए ॥९॥ बेला-बेलामा कालयवन जरासन्ध आदिले तीमाथि आक्रमण गरे, तर उनले आफ्नो कौशलले अन्य ( मुचुकुन्द-भीम आदि ) द्वारा तिनलाई मार्न लगाए,

किनकि भगवान्ले आफ्नो तेज तिनलाई दिएका थिए ॥१०॥ शम्बर द्विविद, लवणासुर मुर, बल्वल एवं दन्तवक्र आदि दुष्टहरूमध्ये अनेकलाई अरूद्वारा समाप्त गराए र कतिलाई आफ्नै हातले मारे ॥११॥ तिनको वध गरिसकेपछि कुरु क्षेत्रमा भतीजाहरूको पक्षमा एकपक्ष भएका ती अनेक राजाहरूको संहार, जसका प्रबल सेनाले भूमि हल्लिरहेकी थिइन् ॥१२॥ त्यसपछि कर्ण, दुःशासन, शकुनी आदिको कुमन्त्रणाले नष्ट श्री र नष्ट आयु भएको दुर्योधन र त्यसका मित्रहरूलाई समाप्त गराए। दुर्योधनको तिघ्रा भाँचिएको थियो र त्यो मरेर पृथ्वीमा ढलेको थियो तापनि प्रभुलाई सन्तोष भएन ॥१३॥ ती विचार्दै थिए—द्रोणाचार्य भीष्मपितामह र अर्जुन जस्ता वीरले भरिएको पाण्डव र कौरवको विशाल सेनाको संहार गराएर मात्र भूमिको भारी हलुको भयो ? अहिले त यदुवंशीहरूको अठार अक्षौहिणी सेना टाउकोमा बसिरहेकै छन् ॥१४॥ म त केवल यिनको बुद्धि भ्रष्ट पारिदिन मात्र सक्छु—जसले यी मदिरा पान गरेर मतवाला होउन र राता-राता आँखा पारेर दुर्वाच्य बोल्दै परस्परमै लडेर मरुन्। त्यसपछि म स्वयं पनि अन्तर्धान भएर जाऊँ। यो बाहेक अरु कुनै उपाय छैन

नत्स्वयं दिव्यं स्वपुंसां तेज आदिशत् ॥ १० ॥ शम्बरं द्विविदं बाणं मुरं बल्वलमेव च ॥ अन्यांश्च दन्तवक्त्रादीनवधीत्कांश्च घातयन् ॥ ११ ॥ अथ ते भ्रातृपुत्राणां पक्षयोः पतितान्नृपान् ॥ चचाल भूः कुरुक्षेत्रं येषामापततां बलैः ॥ १२ ॥ सकर्णदुःशासनसौबलानां कुमन्त्रपाकेन हतश्रि-यायुषम् ॥ सुयोधनं सानुचरं शयानं भग्नोरुमूर्व्यां न ननन्द पश्यन् ॥ १३ ॥ कियान्भुवोऽयं क्षपितोरुभारो यद्द्रोणभीष्मार्जुनभीममूलः ॥ अष्टादशाक्षौहिणिको यदंशैरास्ते बलं दुर्विषहं यदूनाम् ॥ १४ ॥ मिथो यदैषां भविता विवादो माध्व्या मदाताम्रविलोचनानाम् ॥ नैषां वधोपाय इयानतोऽन्यो मय्युद्यतेऽन्तर्दधते स्वयं स्म ॥ १५ ॥ एवं सञ्चित्यभगवान्स्वराज्ये स्थाप्य धर्मजम् ॥ नन्दयामास सुहृद साधूनां वर्त्म दर्श-यन् ॥ १६ ॥ उत्तरायां धृतः पूरोर्वंशः साध्वभिमन्युना ॥ स वै द्रौण्यस्त्रसंछिन्नः पुनर्भगवता धृतः ॥ १७ ॥ अयाजयद्धर्मसुतमश्वमेधैस्त्रिभिर्विभुः ॥

॥१५॥ यस्तो योजना बनाएर उनले आफ्नो राज्यसिंहासनमा धर्मराज युधिष्ठिरलाई बसालिदिए र आफ्ना मित्र एवं सुहृदलाई सन्मार्ग देखाएर आनन्दित पार्दै रहे ॥१६॥ अभिमन्युले उत्तराको गर्भमा पुरुवंशको जुन पुत्र स्थापित गरेका थिए त्यसलाई अश्वत्थामाले नष्ट पार्न खोजे, तर *भगवानले त्यसको रक्षा गरे ॥१७॥ त्यसपछि उनले युधिष्ठिर द्वारा तीन अश्वमेध यज्ञ गर्न लगाए। युधिष्ठिर भगवान् कृष्णका मन्त्रणा अनुसरण गरेर आफ्ना भाइहरूसित पृथ्वीको रक्षा गर्दै सुखपूर्वक बस्न लागे ॥१८॥ ती श्रीकृष्ण विश्वात्मा भएर पनि लौकिक र

* दृष्टान्त 'भगवान् सबैको रक्षा गर्दछन्'—एक सिपाही धेरै वर्षसम्म नोकरी गरेर आफ्नो घर फर्क्यो। त्यसले स्त्रीको निम्ति नयाँ रंगको साडी किनियो, केटोको निम्ति रोटीका र मिठाई लियो। आउँदा बाटोमा निकै पानी पर्‍यो, त्यसले साडी र खेलौनाको संग चिरिन्डो र मिठाई पखाल गर्‍यो। अतः त्यो ईश्वरलाई गाली गर्न लाग्यो— यति वर्षपछि घर जाँदैछु, त्यो पनि भगवानले देखिसहेनन्!' सिपाही निकै पैसा कमाएर आइरहेको छ—यो कुरा पहिलेदेखि नै थाहा पाएर चार जना चोर बन्दुक लिएर बाटो बचाइरहेका थिए। अकस्मात पानी परिदिनाले ती सबै रहे। बीसो टाढा चलिरहेको थियो। सिपाही त्यो बाटोबाट भन्-सिकेर चोरहरू पछि लागे। सिपाही तिनलाई देखेर डरायो। अनि चोर पछाडिबाट बन्दुक छोड्न लागे तर बारुदमा पानी परिदिनाले गोली चलेन। अनि सिपाही विचार गर्न थाल्यो—'भगवान् नै गर्दछन् त्यो राम्रै गर्दछन्। यदि पानी नपरेको भए धन लुटिने थियो र मेरो ज्यान पनि जाने थियो। अब म सकुशल घर गएर आफ्ना बाल बच्चा भेट्न पाउँछु, यो भगवानकै कृपा हो।' भगवान् सबैको रक्षा गर्दछन् यो कुरा सर्वथा सत्य छ!

वैदिक कथाहरूको अनुसरण गरेर अनासक्तभावले सांख्यशास्त्रोक्त नियमहरूको अनुसार द्वारकापुरीमा बसेर आफ्ना इच्छाहरू ॥१९॥ ती स्नेह र मन्द हास्य मिसिएका हेराइ, अमृत समान मीठा वाणी, आफ्नो पवित्र आचरण र शोभाधाम शरीरले यादवहरूको इहलोक र परलोक सबाने काम गरिरहन्थे । ती रात्रिमा एक क्षणको निम्ति आफ्ना स्त्रीहरूलाई पनि आनन्दित पार्न अवसर निकालि हाल्दथे ॥२०-२१॥ धेरै वर्षसम्म यसै गरी आनन्द गर्दागर्दै विस्तार-विस्तार तिनको मन गृहस्थीको झ्याउलोबाट हट्न लाग्यो र हृदयमा वैराग्यको उदय भयो ॥२२॥ जुन भगवान् सबै प्रकारबाट स्वतन्त्र छन् र तिनका इच्छाहरू पनि उनकै वशीभूत रहन्छन्, तिनला पनि जब वैराग्यको आवश्यकता प्रतीत भयो, तब सबै प्रकारबाट परतन्त्र र भाग्याधीन कामहरू हुने संसारी व्यक्तिमा अन्य कुन पुरुष होला, जो भगवान्को भजन गर्दै वैराग्यसम्पादन गर्ने चेष्टा नगर्ला ॥२३॥ एक समय सबै यादव र भोजवंशी

सोऽपि क्ष्मामनुजै रक्षन्रेमे कृष्णमनुव्रतः ॥ १८ ॥ भगवानपि विश्वात्मा लोकवेदपथानुगः ॥ कामान्सिषेवे द्वार्वत्यामसक्तः सांख्यमास्थितः ॥ १९ ॥ स्निग्धस्मितावलोकेन वाचा पीयूषकल्पया ॥ चरित्रेणानवद्येन श्रीनिकेतेन चात्मना ॥ २० ॥ इमं लोकममुं चैव रमयन्सुतरां यदून् ॥ रेमे क्षणदया दत्तक्षणस्त्रीक्षणसौहृदः ॥ २१ ॥ तस्यैवं रममाणस्य संवत्सरगणान् बहून् ॥ गृहमेधेषु योगेषु विरागः समजायत ॥ २२ ॥ दैवाधीनेषु कामेषु दैवाधीनः स्वयं पुमान् ॥ को विस्रम्भेत योगेन योगेश्वरमनुव्रतः ॥ २३ ॥ पुर्यां कदाचित्क्रीडद्भिर्यदुभोजकुमारकैः ॥ कोपिता मुनयः शेपुर्भगवन्मतकोविदाः ॥२४॥ ततः कतिपयैर्मासैर्वृष्णिभोजान्धकादयः ॥ ययुः प्रभासं संहृष्टा रथैर्देवविमोहिताः ॥ २५ ॥ तत्र स्नात्वा पितृन्देवानृषींश्चैव तदम्भसा ॥ तर्पयित्वाऽथ विप्रेभ्यो गावो बहुगुणा ददुः ॥ २६ ॥ हिरण्यं रजतं शय्यां वासांस्यजिनकम्बलान् ॥ यानं रथानिभान्कन्यां धरां वृत्तिकरीमपि ॥२७॥ अन्नं चोरुरसं तेभ्यो दत्त्वा भगवदर्पणम् ॥ गोविप्रार्थासवः शूराः प्रणेमुर्भुवि मूर्धभिः ॥ २८ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे विदुरोद्धवसंवादे तृतीयोऽध्यायः ॥ ३ ॥ उद्धव उवाच ॥ अथ ते तदनुज्ञाता भुक्त्वा पीत्वा च वारुणीम् ॥ तया विभ्रंशितज्ञाना

बालक द्वारकापुरीमा खेलिरहेका थिए । उसै बेला ती बालकहरूले केही मुनिहरूलाई क्रोधित पारिदिए । अतः भगवानको अभिप्राय जान्ने मुनिहरूले ती बालकलाई श्राप दिए ॥२४॥ त्यसको केही महीनापछि सबै यादव दैवद्वारा प्रेरित भएर खुसीले आफाफ्ना रथमा चढी प्रभास-क्षेत्रमा पुगे ॥२५॥ त्यहाँ तिनले स्नान गरे र त्यही तीर्थको जलले पितृहरूको तर्पण गरी ब्राह्मणहरूलाई भोजन गराए र धेरै गाईहरू दान दिए ॥२६॥ त्यो बाहेक तिनले धेरै सुन चाँदी, वस्त्र, शय्या, कम्बल, मृगचर्म, अनेक वाहन—रथ, हात्ती कन्याहरू र जीविका सम्पादन गर्ने योग्य भूमि पनि दान दिए ॥२७॥ त्यसपछि तिनले अनेक स्वादिष्ट अन्न भगवदर्पण गरेर ती सबैलाई खान दिए र भूमिमा टाउको टेकेर ती वीरहरूले गाई र ब्राह्मणहरूलाई प्रणाम गरे ॥२८॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे नेपाली भाषा-टीकायां तृतीयोऽध्यायः ॥३॥ उद्धव भन्दछन्—हे विदुर ! यसरी दान-धर्म गरिसकेपछि ब्राह्मणहरूको

वारुणी मदिरा पिए। त्यसले ती सबै नशामा चूर भए, तिनको ज्ञान नष्ट भयो र ती आपुसमा यौटा अर्कोलाई मर्मघाती कुरा बोल्दै पोल खोल्न लागे ॥१॥ मदिराको मातमा ती सबै परस्परमै लड्न लागे र जस्तै वनमा बाँसहरू घोटिएर आगो उत्पन्न भई सारा वन भस्म पार्दछ, त्यसै गरी सायंकालसम्म सबै यादव परस्पर काटिएर मरे ॥२॥ भगवान्ले जब मायाको त्यस्तो गति देख्नुभयो तब सरस्वती नदीको किनारमा जानुभयो र नदीको जलले आचमन गरेर यौटा पीपलको वृक्षमुनि बस्नुभयो ॥३॥ मलाई त शरणागत-भयहारी प्रभुले द्वारकामा आज्ञा भएको थियो—'तिमी अब बदरिकारण्य जाऊ।' हे अरिन्दम! म तिनको कुल-संहारात्मक अभिप्राय बुझ्दथें, अतएव उनका चरणदेखि वियोग सहन मनमा असमर्थ भई म उनको पछि-पछि हिंडे ॥४-५॥ पछि उनलाई खोज्दै-खोज्दै म सरस्वती नदीको तटमा पुगेर देखें—ती नदीको किनारमा एक्लै पद्मासन लगाएर बसिरहेका छन् ॥ ६ ॥ त्यस बेला पनि उनको पहिले जस्तै श्याम तर तेजस्वी र चतुर्भुज शरीर थियो, राता आँखा, सत्वगुणमयी आकृति र उनको शरीरमा पीताम्बर शोभित थियो। उनै वस्तुहरू देखेर नै मैले

दुरुक्तैर्मर्म पस्पृशुः ॥ १ ॥ तेषां मैरेयदोषेण विषमीकृतचेतसाम् ॥ निम्लोचति रवावासीद्वेणूनामिव मर्दनम् ॥ २ ॥ भगवान् स्वात्ममायाया गतिं तामवलोक्य सः ॥ सरस्वतीमुपस्पृश्य वृक्षमूलमुपाविशत् ॥ ३ ॥ अहं चोक्तो भगवता प्रपन्नार्तिहरेण ह ॥ बदरीं त्वं प्रयाहीति स्वकुलं संजिहीर्षुणा ॥ ४ ॥ अथापि तदभिप्रेतं जानन्नहमरिन्दम ॥ पृष्ठतोऽन्वगमं भर्तुः पादविश्लेषणाक्षमः ॥ ५ ॥ अद्राक्षमेकमासीनं विचिन्वन् दयितं पतिम् ॥ श्रीनिकेतं सरस्वत्यां कृतकेतमकेतनम् ॥ ६ ॥ श्यामावदातं विरजं प्रशान्तारुणलोचनम् ॥ दोर्भिश्चतुर्भिर्विदितं पीतकौशाम्बरेण च ॥ ७ ॥ वाम ऊरावधिश्रित्य दक्षिणाङ्घ्रिसरोरुहम् ॥ अपाश्रितार्भकाश्वत्थमकृशं त्यक्तपिप्पलम् ॥ ८ ॥ तस्मिन् महाभागवतो द्वैपायनसुहृत्सखा ॥ लोकाननुचरन् सिद्ध आससाद यदृच्छया ॥ ९ ॥ तस्यानुरक्तस्य मुनेर्मुकुन्दः प्रमोदभावानतकन्धरस्य ॥ आशृण्वतो मामनुरागहाससमीक्षया विश्रमयन्नुवाच ॥ १० ॥ श्रीभगवानुवाच ॥ वेदाहमन्तर्मनसीप्सितं ते ददामि यत्तद्दुरवापमन्यैः ॥ सत्रे पुरा विश्वसृजां वसूनां मत्सिद्धिकामेन वसो त्वयेष्टः ॥ ११ ॥ स एष साधो चरमो भवानामासादितस्ते मदनुग्रहो यत् ॥ यन्मां नृलोकान्रह उत्सृजन्तं दिष्ट्या ददृश्वान्विशदानुवृत्त्या ॥ १२ ॥

उनलाई चिन्न सकें ॥७॥ त्यहाँ ती बायाँ तिघ्रामा दाहिने खुट्टा राखेर त्यस पीपलको नवीन वृक्षमा अडेस लागेर बसेका थिए। उनमा न कुनै प्रकारको दुर्बलता थियो, न विषयसुखको अभिलाषा ॥८॥ त्यसै बेला व्यासजीका सम्बन्धी अथवा मित्र मैत्रेय ऋषि पनि आफ्नो मनले डुल्दै-फिर्दै त्यहाँ पुगे ॥९॥ त्यस बेला भगवान् मेरो क्लेश हरण गर्दै तथा प्रेम र मन्द-हास्य मिसिएको नयनले हेर्दै भन्नुभयो—आनन्दातिरेकले गर्दा घाँटी निहुराएका प्रभुका प्रेमी भक्त मैत्रेय र म तिनका कुरा सुन्न लाग्यौं ॥१०॥ नारायणले हामीसित आज्ञा भयो—'उद्धव! तिम्रो मनका कुरा जान्दछु। पूर्वजन्ममा तिमी वसु थियौ र मलाई प्राप्त गर्नेविश्व-सृजनात्मक यज्ञद्वारा तिमीले मेरो आराधना गरेका थियौ। यसै निमित्त म तिमीलाई त्यो वस्तु दिन्छु—जसलाई अन्य व्यक्ति ठूलो परिश्रमले प्राप्त गर्न सक्दछन् ॥११॥ अहिलेसम्म तिम्रा जति जन्म भए, तिनमा तिम्रो यो जन्म अन्तिम हो, किनकि यस जन्ममा तिमीले मेरो कृपा प्राप्त गरिसक्यौ। यस निमित्त तिमी अत्र बडो भाग्यशाली छौ कि जब म यस लोकलाई त्याग्ने इच्छाले यहाँ एकान्तमा आएर बसेको छु, तबप्रबल भक्तिवश मेरो दर्शन पायौ ॥ १२ ॥

आज भन्दा धेरै दिन पहिले–जब सृष्टिको आरम्भ भइरहेको थियो–तब मैले आफ्नो नाभिको कमलबाट उत्पन्न ब्रह्माजीलाई सुनाएको थिएँ, त्यसैले मेरा लीलाहरूको ज्ञान प्राप्त गरेर मेरो महिमा बुझ्न सकेका थिए ॥१३॥ जब श्रीकृष्णले त्यसरी मेरो आदर गर्दै कृपादृष्टिले हेर्दै ठूलो दया गरे तब स्नेहातिरेकले गर्दा मेरा रौं ठाडिए, घाँटी अवरुद्ध भएर आयो र मेरा आँखामा आँसु टलटलाएर आएर अनि हात जोरेर मैले बिन्ती गरें–॥१४॥ हे ईश ! हजुरका चरणको सेवा गर्ने प्राणीहरूको धर्म अर्थ, काम र मोक्ष इनमा कुन पदार्थ रहन सक्छ ? तापनि हे भूमन् ! मलाई सबैमा केही चाहिन्न, किनकि म त एकमात्र हजुरका चरणको सेवा गर्ने इच्छा राख्दछु ॥१५॥ जसको कुनै अभिलाषा छैन, त्यो अनेक थरिका काम गरिरहेको छ। जो अजन्मा भएर पनि जन्म लिन्छ। जो आफ्नो प्राण बचाउनको निति किल्लामा लुक्छ र शत्रुको भयले भाग्दछ। जो कालको पनि प्रभु भएर पनि हजारौं स्त्रीहरूसित विवाह गर्दछ, यस्ता हजुर कृष्णका लीला देखेर ठूला-ठूला विद्वानहरूको पनि बुद्धि भ्रमित हुन्छ ॥१६॥ यति विलक्षण र आत्मज्ञानी भएर पनि हजुर जब कुनै कुरा आई-

पुरा मया प्रोक्तमजाय नाभ्ये पद्मे निषण्णाय ममादिसर्गे ॥ ज्ञानं परं मन्महिमावभासं यत्सूरयो भागवतं वदन्ति ॥ १३ ॥ इत्यादृतोक्तः परमस्य पुंसः प्रतिक्षणानुग्रहभाजनोऽहम् ॥ स्नेहोत्थरोमा स्खलिताक्षरस्तं मुञ्चञ्छुचः प्राञ्जलिराबभाषे ॥ १४ ॥ को न्वीश ते पादसरोजभाजां सुदुर्लभोऽर्थेषु चतुर्ष्वपीह ॥ तथापि नाहं प्रवृणोमि भूमन् भवत्पदाम्भोजनिषेवणोत्सुकः ॥ १५ ॥ कर्माण्यनीहस्य भवोऽभवस्य ते दुर्गाश्रयोऽथारिभयात्पलायनम् ॥ कालात्मनो यत्प्रमदायुताश्रयः स्वात्मन्रतेः खिद्यति धीर्विदामिह ॥ १६ ॥ मन्त्रेषु मां वा उपहूय यत्त्वमकुण्ठिताखण्डसदात्मबोधः ॥ पृच्छेः प्रभो मुग्ध इवाप्रमत्तस्तन्नो मनो मोहयतीव देव ॥ १७ ॥ ज्ञानं परं स्वात्मरहःप्रकाशं प्रोवाच कस्मै भगवान्समग्रम् ॥ अपि क्षमं नो ग्रहणाय भर्तर्वदाञ्जसा यद्वृजिनं तरेम ॥ १८ ॥ इत्यावेदितहार्दाय मह्यं स भगवान्परः ॥ आदिदेशारविन्दाक्ष आत्मनः परमां स्थितिम् ॥ १९ ॥ स एवमाराधितपादतीर्थादधीततत्त्वात्मविबोधमार्गः ॥ प्रणम्य पादौ परिवृत्य देवमिहागतोऽहं विरहातुरात्मा ॥ २० ॥ सोऽहं तद्दर्शनाह्लादवियोगार्तियुतः प्रभो ॥ गमिष्ये दयितं तस्य बदर्याश्रममण्डलम् ॥२१॥ यत्र नारायणो देवो नरश्च भगवानृषिः ॥ मृदु तीव्रं तपो दीर्घं तेपाते लोकभावनौ ॥२२॥

पर्दथ्यो तब मसित सल्लाह गर्न एकान्तमा डाक्थे र भ्रान्त बुद्धि भएका यौटा साधारण मनुष्य झैं सोध-पूछ गर्दथे। हे देव ! यी कुराहरू विचार गरेर मेरो मन मोहमा गाडिन्छ ॥१७॥ हे स्वामिन् ! आफ्नो रहस्यलाई प्रकाशित पार्ने त्यो उत्तम ज्ञान सम्पूर्ण रूपले हजुरले कसरी ब्रह्माजीलाई भन्नुभयो ? यदि सम्भव भए त्यो मलाई पनि आज्ञा हवस्, जसलाई सुनेर म सांसारिक बन्धबाट छुटकारा पाउन सकूँ ॥१८॥ यसरी मान्छे व्याकुलतासाथ जब मैले भगवान्सित प्रार्थना गरें, तब प्रभुले मलाई आफ्नो परमस्थितिको हाल बताउनुभयो॥१९॥ यसरी जब मैले तिनका चरणको आराधना गरें, तब उनले मलाई आफ्नो तत्त्वज्ञानको बाटो बताइदिए। त्यसपछि मैले उनका चरणमा प्रणाम गरें। उनको प्रदक्षिणा गरें र उनको वियोगमा विरहातुर भएर यहाँ आइपुगें ॥२०॥ हे प्रभो ! अन्त समयमा तिनको दर्शन पाउनाले म प्रसन्न र वियोग संझेर दुःखी छु। अब म उनको प्रियधाम बदरिकाश्रमतिर हिंडी जान्छु ॥२१॥ जहाँ साक्षात् नर-नारायण ऋषिको रूपमा रहेर लोक-कल्याणार्थ धेरै दिनसम्म सरल र कठोर दुवै थरिका तपस्याहरू गरेका थिए ॥२२॥ शुकदेवजी भन्नुहुन्छ–यस प्रकार

उद्धवको मुखबाट स्वजनको संहार वृत्तान्त सुनेर विदुरलाई ठूलो विषाद भयो, किन्तु उनले आफ्नो ज्ञानबल द्वारा त्यसलाई शान्त पारे ॥२३॥ हे कौरव श्रेष्ठ ! जब उद्धव बदरिकाश्रम जान तयार भए, तब विदुरले विश्वस्तभावले तिनलाई कृष्णका परिवारका मुख्य सदस्य ठानेर भने–॥२४॥ हे उद्धव ! भगवानले त्यस बखत तिमीलाई आफ्नो रहस्य प्रकाशित गरिदिने ज्ञान दिएको थियो, त्यो मलाई भन्न सक्नुहुन्छ ? किनकि भगवान्का सेवकको कामनै यही रहन्छ । ती भगवद्भक्तहरूको प्रयोजन साधन गर्नको निम्ति नै डुलिरहन्छन् ॥२५॥ उद्धव भन्दछन्–हे विदुर ! जब भगवान् यस मर्त्यलोकलाई त्याग्ने इच्छाले सरस्वती नदीको तटमा बसेका थिए, तब उनले तिम्रा आराध्यगुरु मैत्रेयको मासुन्ने मलाई उपदेश दिएथे । यसै निम्ति तिमी जे जान्न खोजिरहेछौ त्यो मैत्रेयसित नै बुझिलिन् ॥२६॥ शुकदेवजी भन्नुहुन्छ—यसरी विदुरसित कुराकानी गर्नाले उद्धवको सन्ताप बढ्यो । ती विश्वमूर्ति नारायणकी कथारूपिनी अमृतले तिनको हृदय आप्लावित भयो र त्यस रातमा यमुना तटमा एक क्षण समान बिताई उद्धव सबेरै बदरिकारण्यतिर हिंडे ॥ २७ ॥ यति सुनेर

श्रीशुक उवाच ॥ इत्युद्धवादुपाकर्ण्य सुहृदां दुःसहं वधम् ॥ ज्ञानेनाशमयत्क्षत्ता शोकमुत्पतितं बुधः ॥ २३ ॥ स तं महाभागवतं व्रजन्तं कौरवर्षभः ॥ विश्रम्भादभ्यधत्तेदं मुख्यं कृष्णपरिग्रहे ॥ २४ ॥ विदुर उवाच ॥ ज्ञानं परं स्वात्मरहःप्रकाशं यदाह योगेश्वर ईश्वरस्ते ॥ वक्तुं भवान्नोऽर्हति यद्धि विष्णोर्भृत्याः स्वभृत्यार्थकृतश्चरन्ति ॥ २५ ॥ उद्धव उवाच ॥ ननु ते तत्त्वसंराध्य ऋषिः कौषारवोऽन्तिमे ॥ साक्षाद्भगवतादिष्टो मर्त्यलोकं जिहासता ॥२६॥ श्रीशुक उवाच ॥ इति सह विदुरेण विश्वमूर्तेर्गुणकथया सुधयाऽऽप्लावितोरुतापः ॥ क्षणमिव पुलिने यमस्वसुस्तां समुषित औपगविर्निशां ततोऽगात् ॥ २७ ॥ राजोवाच ॥ निधनमुपगतेषु वृष्णिभोजेष्वधिरथयूथपयूथपेषु मुख्यः ॥ स तु कथमवशिष्ट उद्धवो यद्धरिरपि तत्यज आकृतिं त्र्यधीशः ॥ २८ ॥ श्रीशुक उवाच ॥ ब्रह्मशापापदेशेन कालेनामोघवाञ्छितः ॥ संहृत्य स्वकुलं नूनं त्यक्ष्यन्देहमचिन्तयत् ॥ २९ ॥ अस्माल्लोकादुपरते मयि ज्ञानं मदाश्रयम् ॥ अर्हत्युद्धव एवाद्धा संप्रत्यात्मवतां वरः ॥ ३० ॥ नोद्धवोऽण्वपि मन्न्यूनो यद्गुणैर्नार्दितः प्रभुः ॥ अतो मद्वयुनं लोकं ग्राहयन्निह तिष्ठतु ॥ ३१ ॥ एवं त्रिलोकगुरुणा सन्दिष्टः शब्दयोनिना ॥ बदर्याश्रममासाद्य हरिमीजे समाधिना

राजा परीक्षित सोध्दछन्–हे भगवन् ! त्यस्ता ठूला-ठूला महारथी वृष्णि र भोजवंशी यादव वीर परस्पर लडेर मरे अनि ब्रह्मा, विष्णु तथा शिवका स्वामी कृष्ण भगवानले पनि आफ्नो मानव कलेवर त्याग्नु पर्‍यो भने ती उद्धव कसरी बाँचिरहे ? ॥२८॥ श्रीशुकदेवजी राजा परीक्षितका प्रश्नको उत्तर दिंदै भन्नलागे–हे राजन् ! मैले त पहिले नै यो कुरा भनिसकेको छु कि स्वयं भगवान् कृष्णको यो इच्छा थियो–कुनै प्रकारले भए पनि पृथ्वीको सम्पूर्ण भारी बिसाइयोस् । उनले आफ्नो इच्छाले ब्रह्मशापद्वारा सारा कुलको संहार गराइदिए र आफ्नो शरीरलाई पनि त्यागिदिने कुरामा विचार गर्नलागे ॥२९॥ पछि उनले विचार गरे—म नभएपछि मेरो ज्ञानको प्रसार गर्न शक्ति आत्मज्ञानीहरूमा श्रेष्ठ उद्धवमा नै छ, अरु कसैले पनि त्यसको सदुपयोग गर्न सक्तैन ॥३०॥ उद्धव मभन्दा अलिकति पनि कम छैनन्, किनकि कामिनी–काञ्चन आदि विषयहरूमा तिनको मन चलायमान हुँदैन । यस निम्ति यही असल हुनेछ कि ती मेरो उपदेशको प्रचार-प्रसार गर्दै यहीं रहून् ॥३१॥ यसै अभिप्रायले तीनै लोकका गुरु र शब्द-ब्रह्मका परम प्रभु नारायणले विदुरलाई

आफ्नो सबै मन्तव्य भनिदिएको छ। भगवान्‌को आदेशानुसार उद्धव बदरिकाश्रममा गई समाधि लगाएर भगवान्‌को आराधना गर्नलागे ॥३२॥ विदुर पनि उद्धव द्वारा परमात्मा श्रीकृष्णका ती लीला-विग्रह द्वारा गरिएका स्तुत्य कार्यहरूको वर्णन सुनेर धैर्यलाई बढाउने तथा पाशविक प्रवृत्ति हुने साधारण प्राणिहरूको निम्ति अत्यन्त दुष्कर कार्यहरूका विचार गरेर विफल भए ॥३३-३४॥ जब भगवद्भक्त उद्धव गए तब भगवान् कृष्णका मुखबाट निस्केका तिनका आत्मज्ञान-सम्बन्धी उपदेशहरूको सम्झना गरेर विदुर रुन लागे ॥३५॥ त्यसपछि ती सिद्धभक्त विदुर पनि यमुना तटबाट हिंडे र निकै दिनपछि गङ्गाको तटमा त्यस स्थानमा पुगे—जहाँ मित्र ऋषिका छोरा महर्षि मैत्रेय निवास गर्दथे ॥३६॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाटा-टीकायां चतुर्थोऽध्यायः ॥४॥ श्रीशुकदेवजी भन्नुहुन्छ–हे राजन्! कुरुवंशीहरूमा श्रेष्ठ विदुर गङ्गाको द्वारमा विराजमान ती अगाध ज्ञान भएका महर्षि मैत्रेयकहाँ गएर भगवान्‌को ध्यान द्वारा आफ्नो भाव शुद्ध पारेर सुशीलता आदिले युक्त भएर सोध्नलागे

॥ ३२ ॥ विदुरोऽप्युद्धवाच्छ्रुत्वा कृष्णस्य परमात्मनः ॥ क्रीडयोपात्तदेहस्य कर्माणि श्लाघितानि च ॥ ३३ ॥ देहन्यासं च तस्यैवं धीराणां धैर्यवर्धनम् ॥ अन्येषां दुष्करतरं पशूनां विक्लवात्मनाम् ॥ ३४ ॥ आत्मानं च कुरुश्रेष्ठ कृष्णेन मनसेक्षितम् ॥ ध्यायन्गते भागवते रुरोद प्रेमविह्वलः ॥३५॥ कालिन्द्याः कतिभिः सिद्ध अहोभिर्भरतर्षभः ॥ प्रापद्यत स्वःसरितं यत्र मित्रसुतो मुनिः ॥ ३६ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे विदुरोद्धवसंवादे चतुर्थोऽध्यायः ॥ ४ ॥ श्रीशुक उवाच ॥ द्वारि द्युनद्या ऋषभः कुरूणां मैत्रेयमासीनमगाधबोधम् ॥ क्षत्तोपसृत्याच्युतभावशुद्धः पप्रच्छ सौशील्यगुणाभितृप्तः ॥ १ ॥ विदुर उवाच ॥ सुखाय कर्माणि करोति लोको न तैः सुखं वाऽन्यदुपारमं वा ॥ विन्देत भूयस्तत एव दुःखं यदत्र युक्तं भगवान् वदेन्नः ॥ २ ॥ जनस्य कृष्णाद्विमुखस्य दैवादधर्मशीलस्य सुदुःखितस्य ॥ अनुग्रहायेह चरन्ति नूनं भूतानि भव्यानि जनार्दनस्य ॥ ३ ॥ तत्साधुवर्यादिश वर्त्म शं नः संराधितो भगवान् येन पुंसाम् ॥ हृदि स्थितो यच्छति भक्तिपूते ज्ञानं सतत्त्वाधिगमं पुराणम् ॥ ४ ॥ करोति कर्माणि कृतावतारो यान्यात्मतन्त्रो भगवांस्त्र्यधीशः ॥ यथा ससर्जाग्र इदं निरीहः संस्थाप्य वृत्तिं जगतो विधत्ते ॥ ५ ॥

॥१॥ विदुर भन्दछन्–हे भगवन्! यस संसारका सबैजन सुख प्राप्त गर्न वा आइलागेको कष्टनिवारण गर्नको निम्ति थरि-थरिका कर्महरू गर्दछन्, तर कहिलेबाहीं त यस्तो हुन्छ—तिनै सुखका निम्ति गरिने कर्महरूबाट अरु दुःख भोग्नुपर्दछ। यस निम्ति यस संसारमा जुन उचित कर्म हो, त्यो मलाई भन्नु हवस्। सौभाग्यले जो मानिस भगवान् श्रीकृष्णचन्द्रदेखि विमुख भएर थरि-थरिका अधर्म गर्दछन् र अनेक कष्ट भोग्दछन्, त्यस्ता व्यक्तिमाथि कृपा गर्नका निम्ति नै भगवान्‌का भक्त यस संसारमा डुलिरहन्छन् ॥३॥ यस निम्ति हे साधुवर्य! हजुर मलाई त्यो मार्ग आज्ञा हवस्, जसले भगवान् प्राणिहरूको भक्तियुक्त हृदयमा आएर बसुन् र उनलाई वेद र पुराणहरू द्वारा प्रमाणित आत्मज्ञान प्रदान गर्नुहवस् ॥४॥ जसरी ब्रह्मा, विष्णु, शिवका पनि परम प्रभु र स्वतन्त्र भगवान्‌ले पुरुष रूपमा अवतार लिएका हो, उनले जुन-जुन कार्य गरेका हुन्, जसरी उनले निरीह भावबाट यस संसारको सृष्टि गरेका हुन्,

फेरि त्यसको मिल्ति आजीविकाको जुन प्रबन्ध गरिएको छ, त्यो सबै वृत्तान्त तपाईं मलाई बताउनोस् ॥५॥ अन्त्यमा ती योगेश्वर जसरी विश्वलाई समेटेर आफ्नो हृदयरूपी आकाशमा राखी तथा कर्म त्याग गरेर आफ्नो योगमायाको काखमा शयन गर्दा हुन् र फेरि यस जगत्को सृष्टि गरेर जसरी एकबाट अनेक बन्दछन् त्यो सबै वृत्तान्त तपाईं मलाई बुझाउनु हवस् ॥६॥ ती मत्स्य, कच्छप तथा वाराह आदि अवतार धारण गरेर लीलाहरू गर्दै देवता, गाई र ब्राह्मणहरूको कल्याणार्थ जुन कार्य गर्दछन्, त्यो पनि भन्नुहवस, किनकि पुण्यात्माहरूका शिरोमणिस्वरूप ती भगवान्का चरित्ररूपी अमृत सदासर्वदा पान गर्दै रहे पनि मेरो मन कहिल्यै तृप्त हुँदैन ॥७॥ लोकपतिहरूका पति यी महाप्रभुले जुन जुन तत्त्वहरूको भेदद्वारा लोकालोक पर्वतको अघिल्लो भागहरू निर्माण गरेका हुन् र जहाँ जस्तो प्रकारका जीव बस्तछन्, ती जीवहरूको जुन भेद-उपभेद हुन्, ती त्यहाँ जुन कार्य गर्दा हुन् र जो जसको आश्रित छन्, मलाई त्यो सबै वृत्तान्त आज्ञाहवस् ॥८॥ उनले जुन प्रकार जीवहरूको स्वभाव, तिनका कर्म, तिनको स्वरूप, तिनको नाम-भेद बताएका छन्, हे विप्रवर्य ! तपाईं त्यो सबै कुरा

यथा पुनः स्वे ख इदं निवेश्य शेते गुहायां स निवृत्तवृत्तिः ॥ योगेश्वराधीश्वर एक एतदनुप्रविष्टो बहुधा यथाऽऽसीत् ॥ ६ ॥ क्रीडन् विधत्ते द्विजगो-सुराणां क्षेमाय कर्माण्यवतारभेदैः ॥ मनो न तृप्यत्यति शृण्वतां नः सुश्लोकमौलेश्चरितामृतानि ॥ ७ ॥ यैस्तत्त्वभेदैरधिलोकनाथो लोकानलो-कान्सह लोकपालान् ॥ अचीक्लृपद्यत्र हि सर्वसत्त्वनिकायभेदोऽधिकृतः प्रतीतः ॥ ८ ॥ येन प्रजानामुत आत्मकर्मरूपाभिधानां च भिदां व्यधत्त ॥ नारायणो विश्वसृडात्मयोनिरेतच्च नो वर्णय विप्रवर्य ॥ ९ ॥ परावरेषां भगवन् व्रतानि श्रुतानि मे व्याससुखादभीक्ष्णम् ॥ अतृप्नुम क्षुल्लसुखाव-हानां तेषामृते कृष्णकथामृतौघात् ॥ १० ॥ कस्तृप्नुयात्तीर्थपदोऽभिधानात् सत्रेषु वः सूरिभिरीड्यमानात् ॥ यः कर्णनाडीं पुरुषस्य यातो भवप्रदां गेहरतिं छिनत्ति ॥ ११ ॥ मुनिर्विवक्षुर्भगवद्गुणानां सखाऽपि ते भारतमाह कृष्णः ॥ तस्मिन्नृणां ग्राम्यसुखानुवादैर्मतिर्गृहीता नु हरेः कथायाम् ॥ १२॥ सा श्रद्दधानस्य विवर्धमाना विरक्तिमन्यत्र करोति पुंसः ॥ हरेः पदानुस्मृतिनिर्वृतस्य समस्तदुःखात्ययमाशु धत्ते ॥ १३ ॥ ताञ्छोच्यशोच्यानविदोऽनुशोचे हरेः कथायां विमुखानघेन ॥ क्षिणोति देवोऽनिमिषस्तु येषामायुर्वृथावादगतिस्मृतीनाम् ॥१४॥ तदस्य कौषारव शर्म-

भन्नुहवस् ॥९॥ हे भगवन् ! मैले ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्रको व्रत व्यासदेवको मुखबाट बारम्बार सुनेको छु । अब तिनले मलाई थोरै आनन्द प्राप्त हुन्छ र तिनलाई सुनेर म तृप्त पनि भइसकेको छु, तर कृष्ण भगवान्को कथारूपी अमृत बारम्बार पान गरेर पनि मलाई तृप्ति भइरहेको छैन ॥१०॥ ती पवित्र चरण हुने भगवान् कृष्णचन्द्रको कथा सुनेर कसलाई तृप्ति हुन सक्छ ? जसको नारद आदि पनि तपाईंहरूको समाजमा गहनी गर्न गर्दछन् । जुन पुरुषका कानमा त्यो कथा पुग्दछ, त्यसको घर-द्वार सम्बन्धी सम्पूर्ण आसक्ति स्वयं हराएर जान्छ ॥११॥ तपाईंका मित्र कृष्णद्वैपायन व्यासले भगवान्का गुणहरू वर्णन गर्नको निम्ति नै महाभारतको रचना गरेका थिए । त्यसमा सांसारिक सुखहरूको कुरा वर्णन गर्दै उनले भगवत्कथातिर नै सबै व्यक्तिको बुद्धि तानेको छ ॥१२॥ जुन श्रद्धालु पुरुषको बुद्धि भगवत्कथामा रात्री लागिसक्दछ तब स्वतः त्यस्ता व्यक्तिको हृदयमा वैराग्य उत्पन्न भएर आउँछ।

भगवानका चरणको स्मरण हुन्छ, उसले तत्काल त्यसका सबै कष्ट हराएर जान्छन् ॥१३॥ म ती अज्ञानीहरू र नारायणको महिमा जानेर पनि उनको कथाबाट विमुख भएर रहने समस्त प्राणीहरूको विषयमा विचार्दै रहन्छु । किनकि विकराल काल–व्यर्थका बकवाद गर्दा, यता-उता डुल्दा र थरि-थरिका कुरा विचार गर्दै प्राणिहरूको आयुष्य क्षीण पार्दै रहन्छ ॥१४॥ अतएव हे मैत्रेयजी ! यो विश्वको कल्याण गर्नका निम्ति तपाईं मलाई समस्त कथाहरूको सारस्वरूप नारायणको कथा सुनाउनु हवस्–जस्तै भ्रमरा सबै फूलहरूको रस पिउँछ उसै प्रकार सबै शास्त्र र कथाहरूको रस पान गरेर अब मलाई कृष्ण-कथाको रस पान गराउनोस् ॥१५॥ ती नारायणले यस विश्वको पालन आदि कार्य सम्पन्न गर्नको निम्ति नै अवतार लिएका थिए । त्यसपछि उनले साधारण पुरुषको शक्तिदेखि बाहिरको जुन कार्य गरेका हुन, ती पनि मलाई भन्नुहवस् ॥१६॥ श्रीशुकदेव भन्नुहुन्छ—यस प्रकार विदुरले सोधेपछि मैत्रेय

दातुर्हरेः कथामेव कथासु सारम् ॥ उद्धृत्य पुष्पेभ्य इवार्तबन्धो शिवाय नः कीर्तय तीर्थकीर्तेः ॥ १५ ॥ स विश्वजन्मस्थितिसंयमार्थे कृतावतारः प्रगृहीतशक्तिः ॥ चकार कर्माण्यतिपूरुषाणि यानीश्वरः कीर्तय तानि मह्यम् ॥१६॥ श्रीशुक उवाच ॥ स एवं भगवान्पृष्टः क्षत्त्रा कौषारविर्मुनिः ॥ पुंसां निःश्रेयसार्थेन तमाह बहु मानयन् ॥१७॥ मैत्रेय उवाच ॥ साधु पृष्टं त्वया साधो लोकान्साध्वनुगृह्णता ॥ कीर्तिं वितन्वता लोके आत्मनोऽधोक्षजात्मनः ॥ १८ ॥ नैतच्चित्रं त्वयि क्षत्तर्बादरायणवीर्यजे ॥ गृहीतोऽनन्यभावेन यत्त्वया हरिरीश्वरः ॥ १९ ॥ माण्डव्यशापाद्भगवान्प्रजासंयमनो यमः ॥ भ्रातुः क्षेत्रे भुजिष्यायां जातः सत्यवतीसुतात् ॥ २० ॥ भवान्भगवतो नित्यं संमतः सानुगस्य च ॥ यस्य ज्ञानोपदेशाय

मुनिले यिनका प्रश्नहरूको निकै सम्मान गरे, किनकि यी प्रश्नोत्तरहरूले संसारका जीवको ठूलो उपकार हुन सक्थ्यो ॥१७॥ मैत्रेय भन्दछन्—हे महानुभाव हजुरले संसारी जनहरूमा दया गरेर असल राम्रो कुरा सोध्नुभयो । यस्तो गरेर हजुरले आफ्नो र भगवद्भक्तहरूको कीर्ति विस्तार गर्नुभयो ॥१८॥ हे व्यास-पुत्र विदुर ! हजुरको निम्ति यो कुनै विस्मयको कुरा होइन, यो जुन हजुरले सर्वतोभावेन भगवान् श्रीकृष्णलाई आफ्नो तुल्याउनु भयो । हजुरसित यस्तै आशा गर्न सकिन्छ ॥१९॥ (यदि हजुर भन्नोस्—यदि यस्तो हो भने म शूद्र किन भए र अरूको दयामा मैले किन निर्भर रहनु पर्‍यो-कुरा हो कि ) महर्षि माण्डव्यको श्रापले पूर्वकालका यमराज तथा यस बखतका सत्यवती-पुत्र व्यासदेवको वीर्यबाट हजुर दासीको

---

उदाहरण ( कष्ट निवारण गर )—हजरत अली जब मुसलमानहरूका खलीफा थिए तब ती एक दिन नमाज पढेर घरको उद्देश्य लिइरहेका थिए । त्यसै बखत थोटा अरब निवासी आएर तिनलाई गाली गर्दै भन्न लाग्यो—'ए पाखण्डी ! यसरी जनतालाई किन ठग्दै छस् ? तँले दोजख ( नरकमा जानु पर्नेछ । अझ पनि नाटक गर्न छाडिदे ।' हजरत अली मुहम्मद साहेबका ज्वाईं थिए । अतएव तिनले अपमानित भएको देखेर तिनका पार्श्ववर्ती निकै रिसाएर या त्यस अरबलाई मारिदिन तयार भए । तिनको उपदेश सकिएपछि हजरत अली प्रसन्न-मुख र गद्गद् कण्ठले बोले—'तिमीहरू यसलाई नमार । यस मनुष्यमित सोध—यसको कुनै आफ्नो नजीकको सम्बन्धी मारिएको वा मरेको हो ? यसको टाउकोमा कसैको ऋण छ कि ? यसलाई पेटभरि खानमा त थाना छैन ? मानिसहरूका बाँचा-भूखले पाहा भयो—यसमाथि ऋणको ठूलो भारी छ । गाढ्ढ त्यसलाई ख्याल गरेर पठाउन तयार छ । यस्तै कारण यो आपत्तिको छ । त्यसपछि हजरत अलीले आफ्नो घरबाट थतियो ल्याएर दिई त्यसलाई ऋणमुक्त पारिदिए । त्यस बेलादेखि त्यो अरब तिनको मनपरेको भएर बस्यो । साधारण मनुष्य जब आफूलाई बिर्सेर कुनै महापुरुषप्रति कोही नचाहिंदो काम गर्न थाल्यो भने—त्यस गरीबलाई कुनै कष्ट छ भन्ने कुरा बुझ्नुपर्दछ । त्यस्तो जनतामा ठूलो मानिसको प्रमुख कर्तव्य हुन जान्छ कि ती त्यस बिचराको कष्ट निवारण गरून्, त्यसलाई अरू कष्टमा पार्ने चेष्टा नगरून् ।

अर्बबाट जन्मनुभयो । वास्तवमा हजुर शूद्र हुनुहुन्न, बरू प्रजाका शासक साक्षात् यमराज हुनुहुन्छ ॥२०॥ हजुर भगवान् देवकीनन्दन कृष्ण र तिनका भक्तहरूका परमप्रिय हुनुहुन्छ । त्यसैले त गोलोक जाने बेलामा भगवान मलाई हजुरलाई उपदेश दिने आदेश दिनुभएको थियो ॥२०॥ अब म हजुरलाई भगवान्‌का लीला र उनको योगमाया द्वारा रचित यस विश्वको उत्पत्ति र स्थितिको सारा वर्णन गर्दछु ॥२२॥ सृष्टिभन्दा पूर्व विश्वरूप परमपिता परमेश्वर तथा जीवहरूको आत्मास्वरूप ती सर्वव्यापी भगवान् एक्लै थिए । त्यस बखत न कोही दर्शक थियो, न कुनै दृश्य । जगत्‌का विविध बुद्धि पनि त्यसमा निराकरण गर्न समर्थ हुन सक्तैनथे । ती आफ्नै इच्छाको अनुसरण गर्दथे ॥२३॥ त्यस समय एक्लै उनी नै द्रष्टा थिए, एक्लै रहनाले तिनलाई कुनै पनि दृश्य देखापर्दैनथ्यो । तिनका सबै शक्तिहरू निदाएका थिए । यसै कारण तिनले आफ्नो अस्तित्व बुझ्न सकेका थिएनन्, तर उस बखत पनि ती सबै कुरा देख्दथे । नारायणको यो तथा जगत्‌लाई देख्ने भएका दृष्टिशक्ति नै माया कहियो र उही मायाले यस जगत्‌को रचना गर्‍यो ॥२४-२५॥ त्यसपछि ती सर्वव्यापी परमात्माले

माऽऽदिशद्भगवान्व्रजन् ॥ २१ ॥ अथ ते भगवल्लीला योगमायोपबृंहिता ॥ विश्वस्थित्युद्भवान्तार्था वर्णयाम्यनुपूर्वशः ॥ २२ ॥ भगवानेक आसेदमग्र आत्माऽऽत्मनां विभुः ॥ आत्मेच्छानुगतावात्मा नानामत्युपलक्षणः ॥ २३ ॥ स वा तदा द्रष्टा नापश्यद्दृश्यमेकराट् ॥ मेनेऽसन्तमिवात्मानं सुप्तशक्तिरसुप्तदृक् ॥२४॥ सा वा एतस्य संद्रष्टुः शक्तिः सदसदात्मिका ॥ माया नाम महाभाग ययेदं निर्ममे विभुः ॥ २५ ॥ कालवृत्त्या तु मायायां गुणमय्यामधोक्षजः ॥ पुरुषेणात्मभूतेन वीर्यमाधत्त वीर्यवान् ॥ २६ ॥ ततोऽभवन्महत्तत्त्वमव्यक्तात्कालचोदितात् ॥ विज्ञानात्माऽऽत्मदेहस्थं विश्वं व्यञ्जंस्तमोनुदः ॥२७॥ सोऽप्यंशगुणकालात्मा भगवद्दृष्टिगोचरः ॥ आत्मानं व्यकरोदात्मा विश्वस्यास्य सिसृक्षया ॥२८॥ महत्तत्त्वाद्विकुर्वाणादहंतत्त्वं व्यजायत ॥ कार्यकारणकर्तात्मा भूतेन्द्रियमनोमयः ॥ २९ ॥ वैकारिकस्तैजसश्च तामसश्चेत्यहं त्रिधा ॥ अहंतत्त्वाद्विकुर्वाणान्मनो वैकारिकादभूत् ॥ वैकारिकाश्च ये देवा अर्थाभिव्यञ्जनं यतः ॥ ३० ॥ तैजसानीन्द्रियाण्येव ज्ञानकर्ममयानि च ॥ तामसो भूतसूक्ष्मा-

त्यस गुणमयी मायामा आफ्नो अंशस्वरूप चिदाभासरूपी वीर्य राखिदिए ॥२६॥ कालको प्रेरणावश त्यस अव्यक्त मायाबाट महत्तत्त्वको उत्पत्ति भयो । त्यसपछि त्यो विज्ञानात्मा आफ्नो देहमा बीजरूपबाट विद्यमान विश्वलाई प्रकट एवं अंकुरित पारे ॥२७॥ पछि त्यही अंश ( चिदाभास ), गुण (उपादान) र तिनलाई क्षुब्ध पार्ने कालस्वरूप भगवान् त्यही महत्तत्त्वको दृष्टिगोचर भए र तिनले यस विश्वको सृष्टि गर्नका निमित्त आफ्नो अर्को रूप बनाए ॥२८॥ त्यसपछि त्यो तत्त्व विकृत हुनाले अहंतत्त्व ( अहङ्कार ) को रचना भयो । त्यो अहंतत्त्व कार्य ( अध्यात्म ) र कारण ( अधिदैव ) को आधार बन्यो, किनकि त्यो भूतेन्द्रिय तथा मनोमय थियो अर्थात् यिनका विकार त्यसमा विद्यमान थिए ॥२९॥ यसैले त्यो अहङ्कार तीन प्रकारको मानियो—वैकारिक, तैजस र तामस । यिनैबाट वैकारिक अहंतत्त्वद्वारा मन बन्यो । यसैकारण सबै देवता पनि वैकारिक ( सात्त्विक अहङ्कारको कार्य ) कहिए तिनै देवता इन्द्रियहरूका अधिष्ठाता भए र उनैद्वारा शब्द आदिका अर्थ प्रकट भए ॥३०॥ सबै ज्ञानेन्द्रिय र कर्मेन्द्रियहरू तैजस् ( राजस अहङ्कार युक्त ) नै मानिए र तामस अहङ्कार